

विस्तृत शान्ति सम्झौतामा हस्ताक्षर गर्नुहुँदै तत्कालीन प्रधानमन्त्री गिरिजाप्रसाद कोइराला र ने.क.पा. माओवादी अध्यक्ष पुष्पकमल दाहाल 'प्रचण्ड', २०६३ मङ्सिर ५ गते । तस्बिरः सूचना तथा प्रसारण विभाग

# नेपाल
द्वैमासिक

# Nepal
Bi-Monthly

वर्ष ५३ अङ्क २ पूर्णाङ्क २४३ असोज/कात्तिक २०८०/०८१





**प्रकाशक**

नेपाल सरकार

सञ्चार तथा सूचना प्रविधि मन्त्रालय

सूचना तथा प्रसारण विभाग

काठमाडौं, फोनः ०१-५९१९८९२

E-mail: photosuchana@gmail.com

Website: www.doib.gov.np

# सम्पादकीय... ✍

नेपालको संविधान जारी भएको दिन असोज ३ गतेलाई हामी संविधान दिवसका रुपमा भव्यताकासाथ मनाउने गर्दछौं । यो दिन सबै नेपालीको लागि विशेष महत्त्वको दिन भएकोले 'नेपाल द्वैमासिक'को यस अङ्कलाई 'संविधान दिवस विशेषाङ्क'का रुपमा पाठकसामु पस्केका छौं । सामान्यतया नेपाल द्वैमासिकमा विभिन्न विषयका लेख रचना समेट्ने गरिएकोमा 'संविधान दिवस विशेषाङ्क'लाई भने अन्तर्वार्ता खण्ड, लेख रचना खण्ड र प्रदेश तथा स्थानीय उपलब्धि खण्ड गरी तीन खण्डमा प्रस्तुत गरेका छौं । संविधानको अन्तर्वार्ता खण्डमा नेपालका उच्च नेतृत्त्वका अनुभव समेटेका छौं । त्यस्तै लेख रचना खण्डमा मुलुकको राजनीतिक, प्रशासनिक तथा विभिन्न क्षेत्रका पेशा व्यवसायमा संलग्न व्यक्तित्त्वको दृष्टिकोण समेटेका छौं । प्रदेश र स्थानीय तहका गतिविधि एवम् विवरणमा नेपालको संविधान जारी भएपछि प्राप्त उपलब्धिलाई समेट्ने प्रयास गरेका छौं ।

संविधान देशको मूल कानुन मात्र नभई राष्ट्रको गन्तव्य मार्गदर्शन गर्ने प्रमुख दस्तावेज पनि भएकोले यसको महत्त्वलाई ध्यान दिँदै यो अङ्कमा नेपालको संविधानका विशेषता, यसको महत्त्व र विभिन्न पक्षहरू समेटिएका छन् । संविधानको कार्यान्वयनपश्चात् विभिन्न वर्ग र क्षेत्रमा देखिएका परिवर्तनहरू, कार्यान्वयनका क्रममा भएका उपलब्धि र देखिएका कमीकमजोरी तथा चुनौती एवम् भावी कार्यदिशालगायतका विषयमा लेखकहरूका दृष्टिकोणलाई यस अङ्कले समेटेको छ । संविधान एउटा जीवन्त र गतिशील दस्तावेजसमेत भएकोले यसका विविध पक्षको विश्लेषण आवश्यक हुन्छ । लेखकहरूबाट प्राप्त विश्लेषणले पाठक वर्गलाई संविधानलाई विभिन्न कोणबाट बुझ्न सहयोग पुग्ने विश्वास गरेका छौं ।

संविधान दिवस विशेषाङ्कलाई विशेष महत्त्व दिई आवश्यक निर्देशन समन्वय र हौसला प्रदान गर्नुहुने सञ्चार तथा सूचना प्रविधिमन्त्री माननीय रेखा शर्माज्यूप्रति हार्दिक आभार व्यक्त गर्दछौं । त्यसैगरी मन्त्रालयका सचिवज्यूलगायत पदाधिकारी एवम् कर्मचारी वर्ग, अन्तर्वार्तामा सहयोग पुर्‍याउनुहुने राष्ट्रिय समाचार समिति परिवार, लेख रचना उपलब्ध गराउनु हुने सम्पूर्ण विशिष्ट व्यक्तित्त्वहरू, प्रदेश तथा स्थानीय तहका विवरण उपलब्ध गराउने पदाधिकारीहरू तथा सम्पादन तथा डिजाइनका काममा अहोरात्र खट्ने सूचना तथा प्रसारण विभागका कर्मचारीहरूलगायत सबैमा हार्दिक धन्यवाद ज्ञापन गर्दछौं ।

सम्पादक मण्डल



राष्ट्रपति

राष्ट्रपति भवन
महाराजगञ्ज, काठमाडौं, नेपाल ।

## शुभकामना

सात दशक लामो जनताको आन्दोलन, त्याग र बलिदानबाट नेपालको संविधान जारी भएर आज आठ वर्ष पुरा भएको छ । यस अवसरमा म सबैभन्दा पहिले लोकतान्त्रिक गणतन्त्र स्थापनाका लागि आफ्नो जीवन आहुति दिने सहिदहरूप्रति भावपूर्ण श्रद्धाञ्जली व्यक्त गर्दछु । त्यस्तै, मुलुकमा लोकतान्त्रिक प्रणाली स्थापनार्थ पथ प्रदर्शन गर्नुहुने सम्पूर्ण अग्रजहरूप्रति अपार सम्मान एवम् श्रद्धा प्रकट गर्दछु ।

वर्तमान संविधानले केन्द्रीकृत र एकात्मक राज्य व्यवस्थाद्वारा सिर्जित सबै प्रकारका विभेद र असमानतालाई अन्त्य गर्दै जातीय, भाषिक, धार्मिक, सांस्कृतिक तथा भौगोलिक विविधतायुक्त नेपाली समाजलाई वृहत् राष्ट्रिय एकताको सूत्रमा आवद्ध गरेको छ ।

नेपालको संविधानले संघीय लोकतान्त्रिक गणतन्त्रात्मक शासन व्यवस्थाको माध्यमद्वारा दिगो शान्ति, सुशासन, विकास र समृद्धिको आकांक्षा पुरा गर्ने लक्ष्य राखेको छ । मौलिक हक, राज्यका निर्देशक सिद्धान्त तथा नीतिहरूको दायरा फराकिलो बनाउँदै आर्थिक समृद्धिसहितको सामाजिक न्याय र समानता सुनिश्चित गर्न समानुपातिक, समावेशी र सहभागितामूलक सिद्धान्त अवलम्बन गरिएको हो ।

संविधान प्रदत्त मौलिक हकको प्रभावकारी कार्यान्वयन, आयातमुखी अर्थतन्त्रलाई विस्थापन गरी स्वदेशमै उद्योग, उत्पादन, रोजगारी बढाएर आफ्नै गाउँठाउँ र देशमा बस्ने वातावरणसहित राष्ट्रिय अर्थतन्त्रलाई दह्रो र सबल बनाउनुनै आजको मुख्य चुनौति र जिम्मेवारी हो । श्रमलाई सम्मान गर्ने संस्कृति, विपन्नलाई आय र निमुखालाई न्याय दिने प्रणालीलाई सबल र प्रभावकारी बनाउनुपर्नेछ । राजनीतिक व्यवस्था र शासकीय संरचनामा आउने परिवर्तनले मात्र युगका अपेक्षा पूरा हुँदैनन् । अतः आजका दिनले हामी, हाम्रा राजनीतिक दल, नेतृत्व, सरकार र सम्पूर्ण राज्यसत्तालाई अझ लोकतान्त्रिक, न्यायपूर्ण र परिणाममुखी बनाउने दायित्व बोध गराउनेछ भन्ने विश्वास लिएको छु ।

संविधान दिवस २०८० को उपलक्ष्यमा सञ्चार तथा सूचना प्रविधि मन्त्रालय, सूचना तथा प्रसारण विभागबाट प्रकाशित हुने नेपाल द्वैमासिकको यस पटकको अंक 'संविधान दिवस विशेषांक' का रुपमा प्रकाशन गर्न लागेकोमा मलाई खुशी लागेको छ । अन्तर्वार्ता, लेखरचना र प्रदेश एवम स्थानीय तहका उपलब्धि यसमा समेटेर विभिन्न क्षेत्रका विज्ञ र विद्वानका रचना प्रकाशित हुनु सकारात्मक र सह्रानीय काम हो ।

यसमा समाविष्ट लेखरचनाले संविधानसभाबाट संविधान प्राप्त गर्ने नेपाली जनताको उत्कट चाहनाको लामो राजनीतिक संघर्ष र घट्नाक्रमबारे अभिलेखीकरण गर्न, जान्न र बुझ्न योगदान दिने मैले विश्वास लिएको छु । संविधानको कार्यान्वयनमार्फत नागरिकको हक, हित र मुलुकको समृद्धि हासिल गर्न सकौं भनी पुनः एकपटक संविधान दिवस तथा राष्ट्रिय दिवस, २०८० को हार्दिक शुभकामना व्यक्त गर्दछु ।

जय नेपाल ।

२०८० साल असोज ३ गते बुधबार

रामचन्द्र पौडेल




काठमाडौं, नेपाल

प्रधानमन्त्री

## हार्दिक शुभकामना

संविधान दिवसको अवसरमा सञ्चार तथा सूचना प्रविधि मन्त्रालय, सूचना तथा प्रसारण विभागले नेपाल द्वैमासिकको 'संविधान दिवस विशेषाङ्क' प्रकाशन गर्न लागेकोमा खुशी लागेको छ । यसमा समेटिएका सामग्रीले संविधानसभाबाट संविधान निर्माणको ऐतिहासिक सन्दर्भलाई चित्रण गर्दै संविधान कार्यान्वयनलाई प्रभावकारी बनाउन सहयोग पुग्ने विश्वास लिएको छु । संविधान दिवसका अवसरमा राजनीतिक परिवर्तनका लागि जीवन उत्सर्ग गर्ने महान सहिदहरूप्रति हार्दिक श्रद्धाञ्जली अर्पण गर्दै बेपत्ता, घाइते, अपाङ्ग योद्धाहरूप्रति उच्च सम्मान व्यक्त गर्दछु । जनयुद्ध, ऐतिहासिक जनआन्दोलन, मधेश आन्दोलनसहित आदिवासी जनजातिलगायत विभिन्न समुदायका संघर्षमा सहभागी सबैप्रति आभार प्रकट गर्दछु ।

संविधानसभाबाट संविधान निर्माण नेपालमा ऐतिहासिक परिघटना हो । महान् दश वर्षे जनयुद्ध, २०६२/०६३ को जनआन्दोलनलगायत राजनीतिक परिवर्तनका लागि भएका तमाम् आन्दोलनको योगफलको रुपमा नेपालमा संविधानसभाबाट संविधान जारी भएको हो । आफैबाट निर्वाचित प्रतिनिधिहरूबाट तर्जुमा भएको संविधानबाट मात्र शासित हुने नेपाली जनताको सात दशक लामो चाहना यसै संविधानमार्फत् पूरा भएको छ । त्यसैले संविधान जारी भएको दिन असोज ३ लाई नेपाल सरकारले राष्ट्रिय पर्वका रुपमा मनाउँदै पनि आएको छ ।

संविधानले संघीय लोकतान्त्रिक गणतन्त्र संस्थागत गर्दै नागरिक स्वतन्त्रता, मौलिक अधिकार, मानव अधिकार, वालिग मताधिकार, आवधिक निर्वाचन, पूर्ण प्रेस स्वतन्त्रता, स्वतन्त्र न्यायपालिका, कानूनी राज्य जस्ता लोकतन्त्रका अवयवहरुको जगमा दिगो शान्ति, सुशासन, सामाजिक न्याय र समृद्धि प्राप्तिका लागि मार्ग प्रशस्त गरेको छ । संविधानले नागरिक तथा राजनीतिक मात्र होइन आर्थिक, सामाजिक, साँस्कृतिक हक अधिकार पनि सुनिश्चित गरेको छ ।

अहिले हामी संविधान कार्यान्वयनमार्फत् जनताको जीवनस्तरमा आमूल परिवर्तन गर्ने रुपान्तरणकारी अभियानमा छौं । सरकारले सुशासन, समृद्धि र सामाजिक न्यायको मार्गलाई फराकिलो बनाउँदै संघीय लोकतान्त्रिक गणतन्त्रलाई जनताको वास्तविक राज्य व्यवस्थामा परिणत गर्ने अभियान थालेको छ । संविधान कार्यान्वायनमा आवश्यक पर्ने कानुन निर्माणदेखि भएका कानुनको परिपालनामार्फत् जनतामा राजनीतिक परिवर्तनको प्रत्याभूति गराउने, प्राप्त राजनीतिक उपलब्धिलाई संस्थागत गर्दै लोकतान्त्रिक गणतन्त्रको सुदृढीकरण तथा सुशासन, समृद्धि र सामाजिक न्यायमा आधारित राष्ट्र निर्माणको महाअभियानको थालनी गर्नु सरकारको प्राथमिकता हो ।

यस अघि गणतन्त्र दिवसको अवसरमा सञ्चार तथा सूचना प्रविधि मन्त्रालयले 'गणतन्त्रका पन्ध्र वर्ष' प्रकाशन गरेर सिर्जनशील कार्यको सुरुवात गरेको थियो । संविधान दिवसको अवसरमा नेपाल द्वैमासिकको 'संविधान दिवस विशेषाङ्क' प्रकाशन गर्नु त्यसैको निरन्तरता हो भन्ने ठानेको छु । संविधान कार्यान्वयन र संघीय लोकतान्त्रिक गणतन्त्रको सुदृढीकरणमा यस्ता प्राज्ञिक कार्यलाई अझै बढाएर लैजान आवश्यक ठान्दछु ।

३० भदौ, २०८०

पुष्पकमल दाहाल 'प्रचण्ड'

# विषय सूची

## प्रदेश तथा स्थानीय तह उपलब्धि खण्ड

# संविधान संसोधनभन्दा प्रभावकारी कार्यान्वयनमा लाग्नुपर्छ

**ताप्लेजुङको सिँकैचामा जन्मनुभएका प्रतिनिधिसभाका सभामुख देवराज घिमिरे नेपालको वाम–लोकतान्त्रिक आन्दोलानमा लामो समयदेखि संलग्न व्यक्तित्व हुनुहुन्छ। वि.सं. २०७९ को निर्वाचनमा नेकपा (एमाले) का तर्फबाट झापा क्षेत्र नं. २ बाट निर्वाचित घिमिरे नेपालको संविधान कार्यान्वयनका क्रममा अघि बढेकाले यसको प्रभावकारी कार्यान्वयनबाट नै आम जनताको जीवनमा परिवर्तन आउने धारणा राख्नुहुन्छ। संविधान दिवस २०८० का पूर्वसन्ध्यामा सभामुख घिमिरेसँग राससका समाचारदाताद्वय प्रकाश सिलवाल र कालिका खड्काले गरेको कुराकानीको सम्पादित अंश :**



**● देवराज घिमिरे**
**सम्माननीय सभामुख**
**प्रतिनिधि सभा**

**नेपालको संविधान जारी भएको आठ वर्ष व्यतित भएको छ। संविधानको कार्यान्वयको हालसम्मको अवस्थालाई कसरी मूल्याङ्कन गर्नुहुन्छ ?**

हामीले २०७२ सालमा नेपालको संविधान जुन जारी गरेको छौं; यो सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक संविधान वस्तुगत रुपमा जनताका चाहना र भावना बोकेर आएको छ। हामीले संविधानलाई यस अवधिमा कार्यान्वयन गरिरहेका छौं। कार्यान्वयनका सकारात्मक र नकारात्मक असरहरू देखा परिरहेका छन्। संविधानले जनताको जीवनमा प्रभाव पारिरहेका छन्।

**संविधानका कारण जनताले अधिकार पाए भन्नेमा त विवाद भएन तर जनताको जीवनमा प्रभावको कुरा गर्दा, उसको व्यक्तिगत जीवनमा प्रत्यक्षतः यो लाभ पायो ठोसरुपमा भन्नुपर्दा के भन्न सकिन्छ ?**

मेरो विचारमा जनताले तुलनात्मक ढङ्गबाट सबै कुराहरू पाएका छन्। सबै भन्नाले आधारभूत कुराहरूमा राज्यले दायित्व निर्वाह गरेको हुनुपर्छ भन्ने कुरा संविधानमा स्पष्ट व्यवस्था गरिएको छ। नागरिकको घर नजिकै स्थानीय सरकार छ। त्यहाँबाट कति मात्रामा जनताले पायो ? कति पाइरहेको छ भन्ने बेल्लै कुरा हो तर उसले जनताले अधिकार पाएको छ। तीन तहका सरकारले दायित्व पाएको छ। जस्तो शिक्षाको

कुरा गरौँ, स्थानीय तहले कहाँ कस्तो विद्यालय बनाउने, जीवनोपयोगी शिक्षा नीति कस्तो बनाउने, पाठ्यक्रम कस्तो बनाउने भन्ने सवालमा उसले आफ्ना नीति र योजना लागू गर्न सक्छ । अधिकार प्रत्यायोजन र व्यवस्थापनका कुराहरू भएको छ । आफ्नो गाउँ वा नगरलाई कसरी विकास गर्ने भन्ने सवालमा स्थानीय सरकार स्वायत्त र जिम्मेवार भएको छ । जनतालाई महसुस दिलाउने काम स्थानीय तहको हो । आर्थिक, सामाजिक र सांस्कृतिक हिसाबले जनताको जीवनमा परिवर्तन गराउने काम डेलिभरी गराउने निकायको काम हो । बजेट बनाउने, खर्चको बाँडफाँड र सेवा वितरणमा हरेक स्थानीय सरकारले अफ्नो मौलिकता प्रदर्शन गर्न सक्छ । यो संविधानको देन हो भन्ने मलाई लाग्छ ।

**सङ्घ, प्रदेश र स्थानीय सरकारको समन्वयमा जति हुनुपर्ने हो, त्यति प्रभावकारिता नआएको पनि देखिन्छ नि ?**

हामीले संविधान जारी गरेर कार्यान्वयनमा लगेको धेरै लामो भएको छैन । एक कार्य अवधिको निर्वाचन सकेर अर्को कार्य अवधिको निर्वाचन भर्खरै भएको छ । ऐन, कानुन र नियमावाली बनाउने सवालमा सुरुमा काम हुँदै आयो । पहिलो कार्यकालका पाँच वर्ष कानुन निर्माण र प्रदेशका संरचना निर्माणमा बित्यो । अब विकास निर्माण र प्रभावकारिता वृद्धि गर्दै जनताको जीवन र व्यहारमा परिवर्तन गराउने क्रममा काम गर्नुपर्नेछ । खासगरी समन्वय भएन भन्ने कुरा आधारभूत तहका जनताले भन्दा पनि बौद्धिक तहका मानिसबाट आएको छ । केही कामहरू तदर्थका रुपमा सञ्चालन भएका पनि छन् । यसलाई केही हदसम्म स्वीकारेर प्रभावकारिता बढाउनुपर्छ ।

**संविधानको कार्यान्वयनका लागि आवश्यक कानुन निर्माणमा विगतमा र अहिलेको सदनमा पनि ढिलाइ भइरहेको छ । यसको कारण के होला ?**

हाम्रो गाउँघरतिर एउटा उखान छ, पछार्न त पछार्थें तर मलाई खुट्टा टेक्नै दिएनन् । सङ्घीय कानुन बनाउने सङ्घीय संसद्ले हो । गत कार्यकालको संसद् पूर्णतः सुचारु हुन सकेन । त्यहाँ तानातान र हानाहानको स्थिति भयो । विरोध र बहिष्कारको स्थिति भयो । जरुरी कानुन बनाउने र बहस छलफल गर्ने काममा सोचेजस्तो सफलता हासिल भएन । राजनीतिक अस्थिरता भयो । कानुन बनाउने थलो कहिले विघटन भयो, कहिले पुनः स्थापित भयो । यसले गर्दा केही अलमल र ढिलाइ भयो । अब अहिलेको सदनमा आवश्यक कानुन ल्याउन सरकार र राजनीतिक दलले चासो दिनुपर्ने हुन्छ । संसद्, संसदीय समितिहरू र संसद् सचिवालय आवश्यक सहजीकरण गर्न तयार छ ।

**सदनमा अवरोध र आरोप प्रत्यारोपका घटना बढेको देखिन्छ । यसलाई न्यूनीकरण गर्न सभामुखको थप भूमिका कसरी प्रदर्शन हुन सक्छ ?**

राजनीतिक दलहरूबीचको जिम्मेवारीबोध र उनीहरूले देशप्रतिको समझदारी कसरी बढाउँछन् भन्नेमा यो कुरा भर पर्छ । संसदीय प्रणालीमा सदनलाई प्रभावकारी बनाउन राजनीतिक दलहरूकै भूमिका हुन्छ । सभामुखको पनि भूमिका हुन्छ । सभामुखले निष्पक्ष र तटस्थ भएर समन्वय र सहयोगी भूमिका खेल्ने हो । संसद्ले बनाएका कानुनको कार्यान्वयन र अनुगमन गर्ने काममा सांसद् र सम्बन्धित समितिहरू लाग्नुपर्ने हुनछ ।

दलीय प्रणालीमा संसदलाई प्रभावकारी तरिकाले लैजानका लागि राजनीतिक पार्टीबीचहरूको समझदारी

महत्वपूर्ण हुन्छ । त्यो जिम्मेवारी पूरा गर्न सकेमा सरकार र संसद जिम्मेवार ढङ्गबाट चल्छ । संसदलाई ऐन, कानुन बनाउन दिएको जिम्मेवारी पूरा गर्नुपर्ने जरुरी हुन्छ । संसदले बनाएका कानुनहरूको कार्यान्वयनका लागि समय लाग्छ । त्यसका लागि संसद र सांसदले भूमिका खेल्नुपर्छ ।

**अन्तर्राष्ट्रिय अभ्यासका आधारमा हेर्दा पनि विधायकले विधि निर्माण गर्ने हो तर यहाँ सांसद्हरू मन्त्रालयका मन्त्री र कर्मचारीका कार्यकक्षमा योजना र बजेटका फाइल बोकेर धाइरहेका हुन्छन् । के यो सही भूमिका हो र ?**

यसलाई नेपालको परिप्रेक्ष्यमा हेर्नुपर्छ जस्तो लाग्छ मलाई । लामो समयसम्म राणाहरूको हुकुमी शासन र त्यसपछि पञ्चायती शासन व्यहोरेर आएको मुलुक हो हाम्रो । प्रजातन्त्र आइसकेपछि पनि राजाको निरंकुशता भोगेर आएका हौँ । बहुदलीय व्यवस्था आएपछि पनि राजालाई शिरमा राखेर बहुदलीय प्रणालीलाई मानेर अघि बढेको अवधि हो । एउटा अवधिलाई हामीले निकै ठुलो अन्योल, आतङ्क र अस्थितरा भोगेर आएका छौँ । अहिले पछिल्लो आठ वर्ष सङ्घीयता कार्यान्वयन गर्ने चरणमा छौँ । यो प्रणालीलाई कार्यान्वयन गर्ने चरणमा छौँ । प्रणाली क्रमशः विकास हुँदै छ । कार्यान्वयन गर्ने इकाइहरू विस्तार अघि बढ्दै छन् । वास्तवमा सांसद्को भूमिका कानुन बनाउने नै हो तर उसप्रति जनताका अपेक्षा स्वभाविकरुपमा हुने भएकाले सरकारका योजना र बजेटमा पनि चासो दिनुपर्ने स्थिति छ । तर बजेट बनाउने र कार्यान्वयन गर्ने काम सरकारका सम्बन्धित निकायकै हो । काम प्रभावकारी भएन भने घच्घच्याउने त राजनीतिक दल र सांसद्ले पनि गर्न सक्छन् ।

**न्यायापालिका र व्यवस्थापिकाको सम्बन्ध शक्ति सन्तुलनको सिद्धान्तअनुरुप हुनुपर्ने हो । पछिल्ला केही घटनाहरू हेर्दा असन्तुलन भएको जस्तो देखिन्छ नि ?**

संविधानले स्पष्टरुपमा राज्यका तीन अङ्गहरूलाई स्वायत्तता दिएको छ । कसले कहाँ कहाँ के के गर्ने भन्ने तोकिएको छ । त्यसमा मिलेन भने हस्तक्षेप दिने वा न्याय निरुपण गर्नुपर्ने कुराहरू हुन्छन् । त्यसमा व्यवहारमा केही समस्या देखा परेका छन् । राजनीतिकमा अस्थिरता, अन्योल र अराजकता बढेपछि यस्ता कुरामा चलखेल हुने गरेको छ तर यो सुरुवाती चरणमा देखिएको सवालका रुपमा लिनुपर्छ । कार्यान्वयनका क्रममा संविधानको व्यवस्थाअनुरुप स्पष्टता हुदै जान्छ भन्ने मलाई लाग्छ ।

**संविधानको प्रभावकारी कार्यान्वयनमा त यहाँले जोड दिनुभयो । संविधान निर्माणका समयमा असन्तुष्ट रहेका पक्षका सवाल र अहिले कार्यान्वयनमा देखिएका अनुभवका आधारमा संविधान संशोधनको गृहकार्य गर्न जरुरी ठान्नुहुन्छ ?**

अन्य मुलुकको अनुभवका आधारमा हेर्दा जनताको जीवनमा प्रगति ल्याउन काममा कुरामा भन्दा काममा लाग्नुपर्ने हो । हामीले कामबाट परिणाम निकाल्ने हो । परिणामले जुन गति दियो, त्यसको आधारमा नीतिगत निर्णय र समीक्षा गरेर अघि बढ्नुपर्ने हो । यहाँ सोचाई र व्यवहारमा केही समस्या देखिन्छ । हाम्रोमा कामका जाने भन्दा नि कुरैकुरामा जाने जस्तो देखिएको छ । संविधान आएपछि कति कार्यान्वयनमा गयो ? कस्तो जनशक्ति प्रयोग गरियो ? यथार्थमा गरेर हेर्ने कुरामा कमजोरी छ । मेरो विचारमा यसलाई प्रभावकारी कार्यान्वयनमै जोड दिनुपर्छ । सुरुमा सङ्घीयतामा जान हुँदैन, एकात्मक व्यवस्था नै ठिक छ

भनेर आवाज उठाउने पनि देखिएको हो । हिजो संविधान निर्माणको समयमा पनि अनेक कुरा उठेको थियो । अहिले सात प्रदेश पाल्न कठिनाइ भयो भनेर राजनीतिक रुपमा आइरहेको छ । तर व्यवहारमा कार्यान्वयन प्रभावकारी हुन सकेको छैन । प्रभावकारी कार्यान्वयनमा ध्यान दिने हो भने अझै पनि समस्या छैन । त्यसकारण अहिले संविधान संशोधन गर्नुपर्ने कुरा मनोगत छ, वस्तुगछ छैन ।

**निर्वाचन प्रणाली खर्चिलो भएको र कुनै पनि दलले बहुमत ल्याउन नसक्ने मिश्रित प्रकारको हुँदा राजनीतिक अस्थिरताका समस्या देखिएको छ । निर्वाचन प्रणालीबारे पुनः विचार गर्ने समय भएन र ?**

मुलुकमा पछाडि परेका जातजाति, समुदाय, वर्ग, क्षेत्र, लिङ्गलाई अहिलेकै निर्वाचन प्रणालीले समेटेको छ । यो हिसाबले पनि सोच्न जरुरी छ । तर यो निर्वाचन प्रणालीले सरकार बनाउन असहज पनि भएको छ । यस्लाई मिलाएर सहज के हुन सक्छ भनेर सोच्न जरुरी छ । यथार्थमा ती वर्ग र समुदायलाई समानुपातिक निर्वाचन प्रणालीले सहयोग गरेको छ । त्यसकारण म फेरि पनि भन्छु, अहिले संविधानको प्रभावकारी कार्यान्वयन गरेर नै जानुपर्छ । हतारमा निर्णय गरेर संशोधनमा लाग्नु आवश्यक हुँदैन ।

**अन्यत्यमा, संविधान दिवसमा अवसरमा नेपाली जनतालाई के सन्देश दिन चाहानुहुन्छ ?**

नेपाली जनताले यो संविधान बनाउनका लागि ठुलो त्याग, तपस्या र बलिदान गरेका छन् । संविधान जारी भएपछि राष्ट्रका सामु जुन जिम्मेवारीहरू आएका छन् । त्यो पूरा गर्ने अभिभारा हामीमा छ । खासगरी, कार्यान्वयन गर्ने निकायहरू थप जिम्मेवार हुनु जरुरी छ । यो संविधानलाई कार्यान्वयनमा लगेर जनताको जीवनमा रुपान्तरण गर्न जरुरी छ । जनताले समामाजिक न्याय र आर्थिक रुपान्तरण खोजेका छन् । जनताको दैनिक जीवनका हरेक क्षेत्रमा यो संविधानमार्फत केही पाउँदैछौ भन्ने बुझाउनका लागि संविधानलाई कार्यान्वयन गर्नुपर्छ । राष्ट्रियता र भौगोलिक अखण्डतालाई बलियो बनाउन लाग्नुपर्छ । अहिले विभिन्न ढङ्गबाट फैलाउन खोजेको सम्प्रादायिक सो र विचारलाई निष्तेज गर्नुपर्छ । राष्ट्रिय एकता, राष्ट्रिय भावना र सामाजिक सद्भावलाई संरक्षण गर्दै यसको विकास गर्न जननिर्वाचित पदाधिकारी र राजनीतिक दलले जिम्मेवारी निर्वाह गर्नुपर्छ । त्यो नै संविधानको दिवसको सार्थकता हो । म यस दिवसका अवसरमा स्वदेश र विदेशमा रहेका सम्पूर्ण दाजजुभाइ दिदीबहिनीमा हार्दिक शुभकामना व्यक्त गर्दछु ।



# लोकतन्त्रको विकल्प सुदृढ लोकतन्त्र हो

**लामो राजनीतिक सङ्घर्ष, त्याग र बलिदानको प्रतिफलका रुपमा नेपालको संविधान जारी भएको आठ वर्ष पूरा भएको छ । नेपाली जनताले आफ्ना प्रतिनिधिमार्फत लेखेको र संविधान सभाबाट जारी भएको संविधानले विभिन्न मौलिक अधिकार स्थापित गरेको छ । संविधान जारी भएको लामो समयसम्म पनि केही महत्वपूर्ण कानुन निर्माण हुन सकेका छैनन् । यद्यपि, सरकारले केही महत्वपूर्ण कानुन निर्माणको कामलाई अगाडि बढाएको छ ।**

**संविधानसँग जोडिएको शान्ति प्रक्रियाको कामले पूर्णता पाउन सकेको छैन । त्यसलाई अन्तिम रुप दिने तयारी भइरहेको छ । प्रस्तुत छ, संविधान दिवस, सरकारको काम कारवाहीलगायतका विषयमा नेपाल सरकारको प्रवक्तासमेत रहनुभएका सञ्चार तथा सूचना प्रविधिमन्त्री रेखा शर्मासँग राष्ट्रिय समाचार समिति (रासस) का आलेख प्रमुख कृष्ण अधिकारी र समाचारदाता रमेश लम्सालले गरेको अन्तर्वार्ताको सम्पादित अंश :**



● **रेखा शर्मा**
**माननीय मन्त्री**
**सञ्चार तथा सूचना प्रविधि मन्त्रालय**

**नेपालको संविधानको कार्यान्वयनको अवस्था कस्तो पाउनु भएको छ ?**

तत्कालीन राजनीतिक शक्ति सन्तुलनका आधारमा नेपालको संविधान निर्माण भएको हो । यसबीचमा केही महत्वपूर्ण काम भएका छन् । दलहरूको उपस्थिति र शक्ति सन्तुलनका आधारमा संविधान निर्माण भएको हो । मुलुक एकात्मक राज्यसत्ता र प्रणालीबाट सङ्घीयतामा प्रवेश भएको छ । एउटै जात, एउटै बोली र एउटै भाषाबाट बदलेर समावेशीताको आधार प्रदान गरेका छौं । समावेशी, समानुपातिक, धर्मनिरपेक्षताजस्ता महत्वपूर्ण विषयलाई संविधानमा स्थापित गरेका छौं । खासगरेर सङ्घीयतालाई बलियो बनाउन र तीन तहका सरकारलाई समन्वय गरेर अगाडि बढ्ने सवालमा हामीले जुन कानुन निर्माण गर्नुपर्ने थियो, त्यसमा भने केही ढिलाइ भएको छ । संविधानको कार्यान्वयन प्रभावकारी रुपमा भइसकेको छैन । वर्तमान सरकार गठन भइसकेपछि शिक्षा, निजामती विधेयक जस्ता कानुन निर्माणको कामलाई अगाडि बढाएको छ ।

सङ्घीयतासँग जोडिएका कतिपय कानुन निर्माण नहुँदासम्म सङ्घीयता पूर्णरुपमा कार्यान्वयन भयो भन्ने अवस्था छैन ।

**सङ्घीयतासँग जोडिएका महत्वपूर्ण कानुनहरूले कहिलेसम्म पूर्णता पाउला ?**

सङ्घीय शिक्षा ऐन संसदमा पेश भइसकेको छ भने निजामती ऐन पनि अन्तिम चरणमा छ। त्यसमा केही विषय बाँकी रहेको छ। गृह मन्त्रालयले प्रहरी ऐनलाई पनि अन्तिम चरणमा पुऱ्याएको छ। स्थानीय सरकार र प्रदेश सरकारलाई बलियो बनाउने केही ऐन पनि निर्माणको चरणमा छन् । त्यसलाई हामी छिट्टै निष्कर्षमा पुऱ्याउँछौ । संविधानसँग जोडिएका कतिपय विषयलाई थप प्रष्ट पारेर कानुन निर्माणको काममा सरकार प्रतिवद्ध छ। यो सँगै शान्ति प्रक्रियासँग जोडिएको महत्वपूर्ण विषय पनि हाम्रो सामु छ। सत्य निरुपण तथा मेलमिलाप आयोगसँग सम्बन्धित विधेयकले कानुनको रुप पाउन धेरै समय लिएको छ। सरकार गठन हुने बित्तिकै हामीले सो विधेयक अगाडि बढाएका थियौँ । तर समितिमा लामो समय लागिरहेको छ। सो विधेयक पूरा नहुँदा शान्ति प्रक्रिया पूर्णरुपमा टुङ्गोमा पुगेको सन्देश हामीले दिन सकेका छैनौँ । शक्ति सन्तुलनका आधारमा बनेको संविधान, त्यसको कार्यान्वयनलगायतका विषय ओझेलमा परेका छन् । सत्य निरुपणसम्बन्धी विधेयक उपसमितिले करिब टुङ्गोमा पुऱ्याएकाले यसलाई छिट्टै निष्कर्षमा लैजाने अवस्थामा छौँ । यसै अधिवेशनमा त्यसलाई निष्कर्षमा लैजान हामी प्रयासरत छौँ ।

**सत्य निरुपण तथा मेलमिलाप आयोग र बेपत्ता नागरिक खोजबिनसम्बन्धी ऐन निर्माणमा सत्तारुढ र प्रतिपक्षी दल नै जिम्मेवार भएनन् भन्ने गुनासो पनि सुनिन्छ नि ?**

मूलभूत रुपमा सरकारको नै दायित्व र जिम्मेवारी हो । अघिल्लोपटक पनि मूलभूत रुपमा सहमति गरेर सो विधेयकलाई समितिमा पठाउका थियौँ । समितिमा चार/पाँच दिनमा ल्याउने भन्ने भयो । तर समितिबाट आउन सकेन । संसदको कार्यकाल सकियो र विधेयकको हैसियत शून्यमा पुग्यो । मलाई के लाग्छ भने शान्ति प्रक्रियाको विषयलाई कुनै दल, समूह वा कुनै नेता विशेषको जसरी बनाउन खोजिँदैछ, त्यो गलत त्यही नै छ। नेपालको शान्ति प्रक्रिया नेपालको हो । नेपालमा भएका सबै राजनीतिक दलको विषय हो भन्ने ढङ्गले अपनत्व महसुश हुन नसकेको विषय हो । त्यही शान्ति प्रक्रियाको उपलब्धिमा टेकेर सबै राजनीतिक दल यहाँ छौँ । तर त्यही शान्ति प्रक्रियालाई टुङ्गो लगाउने बेलामा दल विशेष, नेता विशेष जसरी उभिएका छौँ। मूल रुपमा सबैको साझा दायित्व हो भनेर हेर्न जरुरी छ। पछिल्लो अवधिमा आइपुग्दासम्म सबैको बुझाई एकै ठाँउमा आउन खोजेको जस्तो लाग्छ। आशा गरौं, छिटोभन्दा छिटो निष्कर्षमा पुग्छ भन्ने लाग्छ ।

**संविधान र सङ्घीयता कार्यान्वयनसँग जोडिएका विभिन्न ४२ वटा ऐन संशोधन गर्नुपर्छ भनेर राष्ट्रियसभाले सरकारलाई निर्देशन नै गरेको अवस्था छ, त्यसलाई सरकारले कसरी सम्बोधन गर्ला ?**

सरकारले कानुन निर्माणलाई मूलभूत रुपमा उच्च प्राथमिकतामा राखेको छ। सङ्घीयता र संविधानसँग जोडिएका विषयलाई महत्व दिएका छ। नागरिकतासँग जोडिएको विषयलाई हामीले सम्बोधन गरेका छौँ । मन्त्रिपरिषद्को बैठकले नागरितासम्बन्धी नियमावली पनि स्वीकृत गरेको छ। अब यो कार्यान्वयनमा गयो । सरकारको उच्च प्राथमिकता नै संविधान कार्यान्वयनसँग जोडिएका कानुन निर्माण गर्ने कुरा नै हो । सम्बन्धित मन्त्रालय नै यसमा लागेका छन् । प्रधानमन्त्री प्रचण्डको पनि यसमा स्पष्ट निर्देशन छ। सुधारका

काम गर्दागर्दै पनि कानुन निर्माणको कामलाई पनि उत्तिकै प्राथमिकता दिइएको छ । प्रधानमन्त्रीको निर्देशन लगत्तै हामी सबैले त्यसमा कोशिस गरिरहेका छौँ । कूल ४२ वटा कानुनमध्ये कुनै महत्वपूर्ण छन् । त्यसलाई छिट्टै हामी पूर्णता दिन्छौँ । हामीले कानुन निर्माणलाई उच्च प्राथमिकतामा राख्नुपर्छ ।

**पछिल्लो राष्ट्रिय समस्या समाधान समितिको बैठकमा सातवटै प्रदेशका मुख्यमन्त्रीले प्रहरी समायोजनको प्रक्रिया छिटो अगाडि बढाइदिन प्रधानमन्त्रीलाई आग्रह गर्नुभएको थियो। प्रदेश सरकारहरूले प्रहरी समायोजनसँग जोडिएको ऐन निर्माण गरिसकेका छन्। प्रहरी समायोजन हुन नसक्दा प्रदेश सरकार सरकार जस्तो हुन नसकेको गुनासो छ, यसलाई कसरी सम्बोधन गर्दै हुनुहुन्छ ?**

प्रहरीसँग जोडिएको ऐन गृह मन्त्रालयमा अन्तिम तयारीमा छ। मन्त्रिपरिषद्मा पनि यस विषयमा छलफल भएको थियो। गृहमन्त्रीले हामी अन्तिम चरणमा छौँ भन्नु भएको छ। प्रहरी समायोजनसँग जोडिएको ऐन पहिला पनि बनेको हो। त्यसमा केही कमजोरी भएको रहेछ। त्यो समस्यालाई समाधान गरेर प्रहरी ऐन छिट्टै आउँछ। प्रदेश सरकारको दोस्रो कार्यकालमा छौँ। पहिलो कार्यकाल यत्तिकै बित्यो। नगरपालिकाका आफ्ना नगर प्रहरी छन्। प्रदेशको त्यो नभइराखेको अवस्था छ। त्यसले गर्दा केही समस्या पैदा भएको छ। सरकार भन्ने बित्तिकै प्रहरी र न्यायालय भएन भने त्यसको खासै प्रभाव पर्दैन भन्ने भावनाले काम भएको छ। न्यायालयको हकमा उच्च अदालतहरू कार्यरत छन्। प्रहरीको विषयलाई पनि टुंगो लगाउनुपर्छ भन्ने भएको छ। जहाँसम्म प्रदेशमा बनेका ऐनमा पनि विशेष ध्यान दिनुपर्छ। केन्द्रमा बनेको ऐनसँग बाझिएको हकमा त त्यो स्वतः खारेज नै भइहाल्छ। तर, धेरै विषय हेर्नुपर्छ। प्रहरीको मिशन, सेवा सुविधा पनि जोडिन्छ। तिनका परिवारले पाउने सेवा सुविधा, छात्रवृत्तिलगायतका विषय प्रदेशले बोल्न सक्दैन, सङ्घीय सरकारले नै त्यसमा विशेष ध्यान दिनुपर्छ। सङ्घीय सरकार यसमा सचेत छ। प्रदेश सरकारले त यसमा चासो लिनु स्वभाविक नै हो ।

**प्रदेश सरकारलाई थप प्रभावकारी बनाउनका लागि सङ्घीय सरकारको तर्फबाट के कस्ता काम गर्नुपर्ला भन्ने यहाँलाई लाग्छ ?**

विगतमा हामीले हेर्‍यौँ भने स्थानीय सरकार सञ्चालनसम्बन्धी ऐन नै नबनाई हामीले स्थानीय सरकार गठन गर्‍यौ । त्यो सरकार कुन कानुनबाट चल्ने हो भन्ने टुङ्गो थिएन । प्रदेशको कानुन नबनाउँदै हामीले प्रदेश सरकार गठनको प्रक्रिया अगाडि बढायौ । स्थानीय तह त पहिले पनि निकायका रुपमा थिए । प्रदेश त हाम्रा लागि नितान्त नयाँ नै थिए। प्रदेश कसरी चलाउने भन्ने बारेमा कानुनतः मोटामोटी रुपरेखा तय नभएको अवस्था थियो । त्यस्तै लामो समयदेखि एकात्मक राज्यसत्ता र सञ्चालन प्रक्रियाबाट अभ्यस्त भएको अवस्था थियो । त्यसबाट प्रभावकारिता समयमै देखिनु पर्दथ्यो, त्यो भने हुन नसकेको हो । कानुन, बुझाइ, हाम्रा चिन्तनलगायत विभिन्न कारणले गर्दा समस्या देखिएको हो । छिटोभन्दा छिटो हामीले कानुन निर्माण गर्नुपर्दथ्यो, हामीले सकेनौँ । अघिल्लोपटक पनि संसदमा ती कानुन निर्माणका लागि प्रक्रिया अगाडि बढेको थियो । म राज्य व्यवस्था समितिमा थिएँ । नागरिता, प्रहरी, निजामती सेवा ऐनलगायतका विषय टुङ्गो लगाएर पठाएका थियौँ । संसदमा विभिन्न खालका शक्ति सन्तुलन, राजनीतिक अवस्थालगायतका कारणले ती कानुनले निष्कर्ष पाउन सकेन। पहिलो विषय त, कानुनबाट नै यसलाई सम्बोधन गर्नुपर्छ। दोस्रो कुरा, प्रदेश पनि सरकार भएकाले आफैँमा जिम्मेवार हुनैपर्छ। उसका अधिकारका कुरा पनि छन्,

कर्तव्यको कुरा पनि छ । सरकारको नेतृत्व गर्नेले पनि यसमा ध्यान दिनुपर्छ । सङ्घीय सरकारले पनि यसमा विशेष ख्याल गर्नैपर्छ । आवश्यक ऐन, कानुन निर्माणमा ध्यान दिनुपर्छ । हाम्रो सोचाइ कस्तो छ भने त्यही व्यक्ति केन्द्रमा हुँदा राम्रो र ठिक गर्छ जस्तो, त्यही व्यक्ति, प्रदेशमा जाँदा बेठीक गर्छ भन्ने जस्तो भएको छ । हाम्रो यस्तो खालको बुझाइ छ । यो एकात्मक खालको बुझाइ हो । दुई सय ४० वर्षदेखिको सोच भत्किन र भत्काउन सचेत प्रयत्न चाहिन्छ । हाम्रो सहयोगात्मक सङ्घीयतालाई एकापसमा मिलेर नै अगाडि बढाउनुपर्छ । मन्त्रालय, मन्त्रीका सङ्ख्याका विषयमा पनि प्रश्न उठेका छन्, त्यसलाई समीक्षा गरेर गल्ती कमजोरी भएका छन् भने त्यसलाई सुधार गरेर जानुपर्छ । प्रदेशप्रति वितृष्णा होइन, आकर्षण बढाउने काम गर्नुपर्छ । सैद्धान्तिक रुपमा जनताको नजिकमा सरकार पुऱ्याउने विषय हो । जनताको सेवा गर्ने विषय हो । व्यावहारिक रुपमा यसलाई मिलाएर जानुपर्छ ।

**संविधान दिवसको अवसरमा सरकारको तर्फबाट नेपाली जनतालाई सन्देश के रहेको छ ?**

हामी संविधान दिवस मनाउन लागेका छौँ । संविधानमा जे जस्ता मौलिक हकको प्रबन्ध गरिएको छ । सरकारले कानुन निर्माणको कामलाई प्राथकितामा राखेको छ । हामीले यो बिचमा ठुलो राजनीतिक परिवर्तन गऱ्यौँ । समाजवादमा जाने भन्यौँ । तर, हाम्रा काम गतिविधि त्यसतर्फ धेरै उन्मुख भएनन् । लेखेका कुरालाई व्यवहारमा कार्यान्वयन गर्ने गरेर हाम्रा सरकारी निकाय र एजेन्सीले कार्यान्वयन गर्न सकेको अवस्था छैन । त्यसैलाई लिएर नियोजित रुपमा यो व्यवस्थाप्रति, संविधानप्रति भित्र र बाहिरबाट प्रहार भएको छ । त्यसकारण, सरकारको तर्फबाट भनाइ के हो भने यो व्यवस्थाको दोष होइन । सङ्घीयता, गणतन्त्र थियो र त अहिले ठूला मान्छेलाई पनि कानुन लाग्छ भन्ने अवस्था सिर्जना भएको छ । जनतालाई आशावादी बनाउने गरी सरकारले काम अगाडि बढाएको छ । व्यक्तिले गरेका गलत काम र यसका कमजोरीका कारण व्यवस्थामाथि प्रश्न उठ्नु हुँदैन । लोकतन्त्रको विकल्प भनेको सदृढ लोकतन्त्र नै हो । सङ्घीयताको विकल्प भनेको कमी कमजोरीरहित सङ्घीयता नै हो । समावेशीतामा पनि प्रश्न उठ्ने गरेको छ । भुइँ मान्छेलाई राज्यसत्ताको मूल प्रवाहमा ल्याउने कुरा आफैँमा महत्वपूर्ण छ । तर त्यसलाई दुरुपयोग गर्ने प्रवृत्तिलाई अन्त्य गर्नुपर्छ । नेपालको संविधान सापेक्षित रुपमा राम्रो छ, उत्कृष्ठ छ । यसलाई कार्यान्वयनमा लैजानुपर्छ, कार्यान्वयनमा नलगेपछि जतिसुकै राम्रा कुरा लेखेपनि त्यसको अर्थ रहँदैन । सरकार आफ्नोतर्फबाट सचेत छ, जिम्मेवार पनि छ । सरकारका अन्य निकायले पनि यसमा विशेष ध्यान दिनुपर्छ ।

**देशभित्र केही पनि भएन भनेर विदेशिएका नेपाली युवालाई देशभित्रै केही हुन्छ भनेर आशावादी बनाउने काममा सरकारले कत्तिको ध्यान दिइरहेको छ ?**

संविधान दिवसको सन्दर्भमा हेर्दा यसको कार्यान्वयन नै महत्वपूर्ण पक्ष हो । त्यसबाट आशावाद जगाउन सकिन्छ । यसबीचमा हामीले केही महत्वपूर्ण व्यक्तित्व गुमायौँ । अन्त्येष्टिका लागि विदेशबाट सन्तान आउँदैछन् भन्ने अवस्था देखिएको छ । यो धेरै डरलाग्दो अवस्था हो । हामीले हाम्रो देश र माटोप्रति गौरव गर्ने र आफ्नो भाग्य र भविष्य देख्ने अवस्थाको सिर्जना गर्नुपर्छ । लामो समयसम्म हाम्रोमा राजनीतिक स्थायित्व हुन सकेन । त्यसकारण सरकारले पनि चाहे जसरी काम गर्न सकेन । हामीले सचेत प्रयत्न गर्न जरुरी छ । हामीले विदेशिन खोजेका युवालाई देशभित्रै भविष्य देखाउन उत्पादनमा जोड्नै पर्छ । समाजवादमा जाने भनेर संविधानमा लेखिएको कुरालाई व्यावहारिक रुप प्रदान गर्ने हो भने विदेश जाने

क्रम स्वतः रोक्न सकिन्छ । योजना मूर्त रुपले तय गर्नुपर्छ । हाम्रो बजेट निर्माण प्रक्रियामा नै कमजोरी रहेको कुरा प्रधानमन्त्रीले बोल्नु भएको पनि छ । हामीले त्यहाँ सच्याउनुपर्छ । जतातते नकारात्मकता नै देखाउने अवस्था देखिएको छ । राम्रा कामहरू पनि यसबीचमा भएका छन् । सरकारले यसबीचमा ठूलालाई पनि कानुन लाग्छ है भन्ने तथ्य स्थापित गरेको छ । सरकारप्रतिको विश्वास जगाउने काम भएको छ । इतिहासमा पहिलोपटक सरकार र जनता एकापसमा जोडिएका छन् । यसलाई कसरी व्यवस्थित गर्ने भन्ने बारेमा हाम्रोबीचमा चुनौती छ । देशमा भएका सबै राजनीतिक दल, नेताले यस विषयमा ध्यान दिनुपर्छ । देशप्रतिको अनास्था, वितृष्णा छ, नेता, कर्मचारीप्रतिको वितृष्णालाई कम गर्न सचेत प्रयत्नद्वारा तोड्नपर्छ । विदेश गएका मानिसलाई यहीँ बस्न सक्ने गरी योजना र कार्यक्रम बनाउनुपर्छ । त्यसमा हामी सचेत छौँ ।

**यो व्यवस्था स्थापनाका लागि शहिद भएका, आफ्ना मानिस बेपत्ता भएका र घाइते अपांगता भएकाले कहिले अपनत्व महसुस गर्न पाउने हुन् भन्ने प्रश्न पनि सँगसँगै आउने गरेको छ ? सरकारको प्रवक्ताको हैसियतले के भन्नुहुन्छ ?**

यो परिवर्तनको जग भनेकै महान् शहिदहरू हुन् । बेपत्ता योद्धा हुन्, घाइते योद्धा हुन् । लामो समयसम्म पनि त्याग बलिदान गर्नेलाई राज्यले चिन्न सकेको थिएन । शहिद भनेर मान्यता दिएको थिएन । यसपटक राजपत्रमा प्रकाशन गरेर हामीले शहिदको मान्यता दिएका छौँ । यसका बारेमा आएका प्रतिक्रिया यहाँहरूले सुन्नु भएकै छ । मानिसहरू कतिसम्म कृतज्ञ रहेछन् भन्ने पनि देखिएको छ । राज्यले सम्मान गरेको छ । हामीले सशदि परिवारलाई सम्बोधन गर्न हरेक कानुनमा प्राथमिकता दिएका छौँ । घाइतेहरू अहिले पनि गोलीको छर्रा बोकेर हिंड्नु परेको अवस्था छ । यो समग्र शान्ति प्रक्रियाको विषय भएकाले यसलाई अन्तिम निष्कर्षमा पुऱ्याउँदा टुङ्गोमा पुऱ्याउनु नै पर्छ । यसले लामो समय लियो । द्वन्द्वको घाउ पुरिएर, अन्तरघुलन भएर नयाँ ठाँउमा पुगिसक्नुपर्ने थियो । शान्ति प्रक्रियाले पूर्णता पाएको भए यतिबेला आर्थिक समृद्धिको यात्रामा हामी धेरै अगाडि बढिसकेका हुने थियौँ । हाम्रोमा नदी तर्ने लौरौ बिर्सने जस्तो भएको छ । शहिदको बलिदानबाट मात्रै हामी यो स्थानमा छौँ है भन्ने कुरा सबैले मनन् गर्नुपर्छ । यो खास पार्टीको मात्रै विषय होइन, समग्र नेपालको राजनीतिक परिवर्तन र आन्दोलनको विषय भएकाले यो परिवर्तनलाई मान्ने, यो संविधानलाई मान्ने यसलाई अगाडि बढाउनुपर्छ भनेर सोच्ने हरेकको विषय हो यो । बेपत्ता नागरिकको अवस्था के हो भनेर सार्वजनिक गर्ने अवस्था समेत हुन सकेको छैन । यो चिन्ताको विषय हो । छिटोभन्दा छिटो सत्य निरुपण तथा मेलमिलापसम्बन्धी ऐनलाई प्रमुख प्राथमिकतामा राखेर काम अगाडि बढाउनै पर्छ ।

**हामीले वित्तीय सङ्घीयताको कार्यान्वयनलाई कम आक्यौँ र कम महत्व दियौँ भन्ने गुनासो पनि बेलाबेलामा उठ्ने गरेको छ, यसका बारेमा के भन्नुहुन्छ ?**

एकात्मक राज्यसत्ताबाट सङ्घीय राज्यसत्तामा परिवर्तन हुँदा रातारात सबै विषयमा परिवर्तन हुन सक्ने विषय थिएन । वित्तीय सङ्घीयता कार्यान्वयनमा सरकारले ध्यान दिएकै छ । तर हाम्रोमा के भयो भने केन्द्रीय सरकारले पनि कमी कमजोरी गर्छ, खासै प्रश्न उठ्दैन तर प्रदेशमा एकाध घटना घट्नेबित्तिकै प्रश्न उठाउने कुरा आफैँमा अमिल्दो छ । कमजोरी र उठेका प्रश्नलाई स्वीकार गर्नुपर्छ । कमजोरी सुधार गरेर जानुपर्छ । हामी त्यसमा प्रयासरत छौँ ।

**संविधान दिवसको सन्दर्भमा नेपाली जनतालाई आशावादी बनाउन सरकारको तर्फबाट यहाँको आह्वान**

**केही छ कि ?**

नेपालमा प्राप्त भएको उपलब्धि सानो त्याग र बलिदानबाट भएको होइन । यसका पछाडि ठुलो त्याग र बलिदान छ । आँसु, पसिना र रगत बगाएर प्राप्त भएको उपलब्धि हो । परिवर्तन हुँदेन थियो भने हामी जस्ता भुइँमान्छेहरू राज्यसत्ताको मूल प्रवाहमा आउन सक्ने अवस्था हुँदैनथ्यो । नेपाली जनताको छोरी राष्ट्र प्रमुख बन्ने कुरा कल्पनाभन्दा बाहिरको विषय थियो । सिंहदरबारमा सिण्डिकेटको अवस्था थियो । तर, आज त्यो भत्किएको छ । तल्ला वर्गका मानिसलाई देश हाम्रो हो भन्ने अवस्थामा ल्यायौँ । काम गर्दै जाँदा हाम्रो पनि कमी कमजोरी भयो होला । त्यसलाई देखाएर व्यवस्थालाई दोष दिन भएन । यस व्यवस्थाले सबैलाई अपनत्व जगाएको छ । सरकार सञ्चालन गर्नेहरूबाट भएको गल्ती कमजोरीको कुनै न कुनै दिन सजाय हुन सक्छ भन्ने कुरा स्थापित भएको छ । विगतमा यस्तो सम्भव थिएन । व्यक्ति तिरस्कृत हुन सक्छ, तर व्यवस्था तिरस्कृत हुन सक्दैन । व्यवस्था बदलिएको छ, अवस्था बदल्ने चुनौती हाम्रो सामु छ । यो संविधानको विकल्प अर्को संविधान हुन सक्दैन । हाम्रोमा समस्या कार्यान्वयनमा छ । कार्यान्वयन गर्नेहरूको विकल्प खोज्न सकिन्छ । हामीले प्राप्त गरेको उपलब्धिलाई थप संस्थागत गरेर अगाडि बढ्नुपर्छ । सबैलाई आशावादी हुन म यस अवसरमा सबैलाई आग्रह गर्दछु ।

**अन्त्यमा तपाई सञ्चारमन्त्री पनि हुनुहुन्छ, नकारात्मकताको भेल सामाजिक सञ्जालमा बढी बहेको छ । यसलाई दायरामा ल्याउन सरकारको तर्फबाट के कस्ता प्रयास भइरहेको छ ?**

सामाजिक सञ्जाललाई सही दिशामा अगाडि बढाउन स्वनियमन नै मुख्य विषय हो । यो सदुपयोग भएको छैन, दुरुपयोग भएको छ । सिंगो व्यवस्था, राजनीतिक प्रणालीविरुद्ध नै उभ्याउने खालको अवस्था देखिएको छ । त्यसकारण सामाजिक सञ्जाल सम्बन्धी विषयलाई हेर्नका लागि हामीले निर्देशिकाको अन्तिम तयारी गरिरहेका छौँ । अर्थ र कानुन मन्त्रालयमा सहमतिका लागि पठाएका छौँ । तत्कालका लागि निर्देशिका बनाएर हामी व्यवस्थित गर्ने प्रयास गर्नेछौँ । यस्तै समानान्तर रुपमा ऐन निर्माणको कामलाई पनि अगाडि बढाइएको छ । मूलभूत रुपमा सामाजिक सञ्जाललाई स्वनियमन हुनुपर्छ । स्वनियमन र व्यवस्थापन नभए राज्यले नियमन गर्छ नै ।



# संस्मरण अन्तर्वार्ता: परिवर्तनका लागि अब आन्दोलन गरिरहनु पर्दैन

तत्कालीन संविधान सभा अध्यक्ष एवम् नेकपा (एमाले) ससदीय दलका उपनेता सुवास नेम्वाङले आफूलाई नेपालको संसदीय अभ्यासमा अनुभवी र अभिभावकीय छवि बनाउन सफल हुनुभएको छ। कानुनी पृष्ठभूमि रहेका नेम्वाङले संविधान सभासहित छ पटक व्यवस्थापिका–संसदको नेतृत्व सम्हाल्नुभयो। उहाँले मुलुकमा राजनीतिक प्रणाली परिवर्तन भई चर्को सङ्क्रमण कालका समयमा समेत सबै राजनीतिक शक्तिलाई संवादमार्फत नै समस्या समाधानका लागि निरन्तर प्रेरणा प्रदान गर्नुभयो। संविधासभाबाट संविधान जारी भएसगैँ उहाँले त्यसमा सफलता प्राप्त गर्नुभयो।

पूर्वसभामुख नेम्वाङ जहिले पनि सङ्घीय संसदमा सत्तापक्ष र प्रतिपक्षका कारण उत्पन्न परिस्थितिमा राजनीतिक र कानुनी पाटोबाट आउने समस्या सुल्झाउन मुख्य सूत्रधारको काम गर्दै आउनुहुन्थ्यो। उहाँको २०८० भाद्र महिनाको अन्तिम साता स्वर्गारोहण भएको छ। प्रस्तुत छ, १६औँ गणतन्त्र दिवसका अवसरमा डेढ दशकदेखि मुलुकमा भइरहेका राजनीतिक र शासकीय प्रणाली सम्बन्धी अभ्यासबारे उहाँसँग राष्ट्रिय समाचार समितिका उपप्रमुख समाचारदाता नारायण न्यौपानेले गर्नुभएको कुराकानीको सम्पादित अंश :



● स्व. सुवास नेम्वाङ
संविधान सभा अध्यक्ष

**संविधान सभाबाट सङ्घीय लोकतान्त्रिक गणतन्त्रसहितको संविधान जारी गर्ने अवसर र प्रक्रियाबारे कसरी जुट्यो ?**

मुलुकमा ७० वर्षअघिदेखि संविधान सभाद्वारा संविधान जारी गर्नुपर्छ भन्ने प्रसङ्ग उठेको थियो। वि.सं. २०६२/६३ को संयुक्त जनआन्दोलन उत्कर्षमा पुगेसँगै जनताको त्यो चाहना र भावनाले मूर्तता प्राप्त गऱ्यो। संविधान सभाको दुई पटक निर्वाचन भई संविधान जारी भयो। जनताको यसअघि कहिल्यै नभएको पर्याप्त दबाबले मूर्तता प्राप्त गर्न सफल भएको हो। संविधान सभाबाट समयमा संविधान

बन्नुपर्छ भनेर निरन्तर लागेकै कारण सङ्घीय लोकतान्त्रिक गणतन्त्र, धर्म निरपेक्षता, समावेशीतासहितको समाजवाद उन्मुख संविधान प्राप्त भयो । यो जनताले आफ्ना लागि बनाएको संविधान हो । यसअघि जारी संविधानका स्रोत शासक थिए । यो त्यस्तो संविधान हो जसको अधिकारको स्रोत जनता हुन् । त्यसैले संविधानको प्रस्तावनामै सार्वभौम सम्पन्न नेपाली जनताको प्रतिनिधिमूलक संस्था संविधान सभाले यो संविधान बनाएर जारी गरेका छौं भनेर घोषणा गरिएको हो ।

**मुलुक सङ्घीय लोकतान्त्रिक गणतन्त्रमा प्रवेशपछि पनि भइरहेका अभ्यासप्रति अनेक टिका टिप्पणी सुनिएको छ, यसप्रति यहाँको धारणा के छ ?**

नेपाली जनताको लामो सङ्घर्ष र बलिदानको उपलब्धिका रूपमा प्राप्त संविधान र हाल अभ्यासमा रहेको शासन व्यवस्थाको कुनै विकल्प छैन । जनताको यो तहबाट संविधान बन्ने जुन यथार्थ छ, योभन्दा माथि अब यो देशमा अर्को संविधान बनाउने कुनै पनि ठाउँ छैन । अब फेरी पनि अर्को परिवर्तनका कुरा गर्नुको कुनै अर्थ छैन । यही संविधानअन्तर्गत रही जुनसुकै परिवर्तन गर्दै अघि बढन सकिन्छ ।

**मुलुक संङ्घीय लोकतन्त्रान्त्रिक गणतन्त्रमा प्रवेश गरेपछि डेढ दशकमा भएका अभ्यास र उपलब्धिलाई कसरी हेर्नुभएको छ ?**

अहिले हामीले अभ्यास गरेको संविधान जनताले जनताका लागि बनाएको संविधान हो । जसको अधिकारको स्रोत नेपाली जनता हुन् । जसले देशलाई सङ्घीय लोकतान्त्रिक गणतन्त्र, धर्म निरपेक्षता, समावेशिता, समाजवाद उन्मुख देशलाई प्रदान गऱ्यो । यो संविधानअन्तर्गत सबै प्राप्त उपलब्धि कार्यान्वयन गर्दै लैजानुपर्छ । राज्यका सबै अङ्गमा ३३ प्रतिशत महिलाको सहभागिताको व्यवस्था गरेका छौं । समावेशी समाजको कल्पना गरेका छौं । यसबिचमा नेपाल र नेपाली जनताको हितका लागि थुप्रै काम हामीले सम्पन्न गरेका छौं । राजनीतिक रूपमा यति धेरै परिवर्तन गरेका छौं । जनतलाई पहिलो पटक सार्वभौम सम्पन्न तुल्याएका छौं । जनता यति अधिकार सम्पन्न भएका छन् कि जनताको आशीर्वाद र समर्थन जितेर संसदमा पुग्नुस् जुनसुकै परिवर्तन गर्न सकिन्छ । त्यसका लागि निर्वाचन र संसदमार्फत जुनसुकै परिवर्तन गर्न सकिन्छ । परिवर्तनका लागि अब आन्दोलन गरिरहनु पर्दैन ।

**राजनीतिक दलहरूले विगतको सशस्त्र द्वन्द्वको घाउलाई सम्बोधन गर्ने शान्ति प्रक्रियालाई निकै लामो समयसम्म टुङ्गोमा पुऱ्याउन सकेन भन्ने आरोप छ नि ?**

हामीले यति ठुलो राजनीतिक परिवर्तन गरेका छौं । शान्ति प्रक्रियाका बाँकी काम लगभग टुङ्गोमा पुऱ्याएका छौं । सेना समायोजन गरेर एउटा ठुलो सफलता प्राप्त गरेका छौं । त्यही प्रक्रियाको सन्दर्भमा यति राम्रो संविधान बनाउन सफल भएका हौं । अब शान्ति प्रक्रियासँग सम्बन्धित थोरै काम मात्रै बाँकी छ । जुन अब दुई/तीन वर्षभित्र सम्पन्न गर्ने गरी हामी कामअघि बढाइरहेका छौं । यो शान्ति प्रक्रियासँग सम्बन्धित जे काम गरिएको छ, विश्वकै शान्ति प्रक्रियाका उदाहरणीय छ । म भरखरै कोलम्बिया पुगेर आएँ, त्यहाँको समेत अनुभव हेर्दा दाबीका साथ भन्न सकिन्छ कि नेपालको शान्ति प्रक्रियाको जुन प्रसङ्ग छ, त्यो हाम्रो मोडेल हो, विश्वमै उत्कृष्ट छ ।

**मुलुकका प्रमुख राजनीतिक शक्तिले समयमै पूरा गर्न पर्ने समाजका जल्दाबल्दा विषयमा पनि त्यति ध्यान पुऱ्याएनन् भन्ने आरोप छ नि ?**

हो, जनताको चाहना र भावनाअनुरुप कतिपय महत्वपूर्ण काम भने अझै पनि गर्न सकेका छैनौं । त्यसतर्फ केही कमी कमजोरी रहेकै हुन् । देशमा ठुलो राजनीतिक परिवर्तनका साथ केही महत्वपूर्ण उपलब्धि हासिल भएको छ । तर आर्थिक, सामाजिक र सांस्कृतिक क्षेत्रमा भने कमी कमजोरी रहन गए । गणतन्त्र दिवसका अवसरमा म प्रस्ट र ढुक्कसँग भन्न सक्छु कि समाजमा विद्यमान त्यस्ता कमी कमजोरीलाई सच्चाएर अब हामी अघि बढ्नुपर्छ ।

**देश गणतन्त्रको अभ्यासमा छ, देशको आर्थिक सङ्कटसँग जोडेर सङ्घीयता खर्चिलो भयो भन्ने पाटोबाट कुरा उठाइएको छ, यसमा यहाँको धारणा के ?**

हामीले स्थापना गरेको लोकतन्त्र भनेको समाजमा व्यक्त भएका सबैखाले विचार सुन्न सक्ने सुन्दर पक्ष हो । समाजमा आउने सबै विचारका बारेमा छलफल हुन्छ । छलफल हुनु राम्रो कुरा हो । विगतमा हामी कुन व्यवस्थाबाट गुज्रदै यहाँ आइपुगियो भन्ने हामीलाई राम्ररी थाहा छ । समाजमा विकृति र विसङ्गति छन्, त्यसलाई सच्याऔं, सुधारौंभन्दा सुरक्षा कानुन भोग्नुपरेका हामी धेरै ज्यूँदै छौं । प्रधानमन्त्री भारतमा जाँदा त्यहाँ बोलेका कुराका लागि काठमाडौंमा पर्चा छर्दा राजकाज मुद्धा लागेर सात महिना कैद सजाय भोग्ने मानिस मै हुँ । अहिले हामीले त्यो प्रणाली परिवर्तन गरियो । पूर्ण लोकतन्त्रको आधार तयार गरिएको छ । अहिले यस्तो हुनुपर्छ भनेर आएको विषयलाई अचम्म मान्न हुन्न । त्यो छलफल र आएका विचार स्वस्थ्य र स्वच्छ भने हुनुपर्छ । त्यसले एउटा निष्कर्षमा पुऱ्याउँछ । सविधान बनाउने क्रममा सबैभन्दा बढी सङ्घीयताको विषयमा छलफल भएको हो । सङ्घीयता निर्विवाद होइन । व्यापक छलफलपछि टुङ्गोमा पुगिएको हो । त्यसैले छलफल हुनुलाई अन्यथा मान्न हुन्न । छलफल चल्छ । एउटा लोकतान्त्रिक विधि र प्रक्रियाबाट टुङ्गोमा पुग्नुपर्छ ।

**१६ औं गणतन्त्र दिवस मनाइरहँदा पश्चिम नेपालमा अभिनन्दनको घटनालाई कसरी हेर्नुभएको छ ?**

एकदमै सामान्य टिप्पणी गर्न नपर्ने विषयका रूपमा लिन्छु । पूर्वराजालाई एउटा नागरिकको हैसियतले सम्मान नै गर्छु । अन्यथा टिप्पणी छैन । उहाँले बोल्न सक्नुहुन्छ । शान्तिपूर्ण ढङ्गले हिड्न सक्नुहुन्छ । संविधानबमोजिमका क्रियाकलाप त लोकतन्त्रको सुन्दर पक्ष नै हो । हामी निरङ्कुश परिस्थितिबाट अहिले फरक ठाँउमा आइसकेका छौं । अहिले शान्तिपूर्ण ढङ्गले गणतन्त्र चाहिन्न पनि भन्न पाइन्छ । तर हामीले सङ्घीय लोकतान्त्रिक गणतन्त्रको संविधान बनाएका छौं । कार्यान्वयन गर्दै यहाँ आइपुगेका छौं । कार्यान्वयन गर्ने सन्दर्भमा पटकपटक निर्वाचनमा गएका छौं । सबैखाले विचार बोकेका दल  निर्वाचनमा गएका र प्राप्त परिणामलाई स्वाभाविक रुपले लिइएको छ ।

**गणतन्त्र दिवसका अवसरमा आम जनसमुदायलाई यहाँको केही सुझाव वा सन्देश छ कि ?**

वर्तमान संविधानको आधारमा सार्वभौम सम्पन्न जनतालाई ध्यानमा राखेर हामीले अघि बढ्नुपर्छ । पुराना दलप्रति विभिन्न प्रश्न उठेका छन् । अहिलेको अवसर हाम्रा लागि अवसर हो । उठेका विषयलाई हामीले हेर्नुपर्छ, गम्भीरतापूर्वक लिनुपर्छ । गरिएका राम्रा विषय जनतामा लैजानुपर्छ । देखिएका कमी कमजोरीलाई

हार्दिकतापूर्वक स्वीकार्न पर्छ । त्यसलाई सच्याउँदै अघि बढने प्रतिबद्धता व्यक्त गरेर व्यवहारमा उतार्दै अघि बढ्नुपर्छ । लोकतन्त्रमा यो हाम्रा लागि अवसर हो । अवसरलाई सदुपयोग गरियो, कमी कमजोरीलाई समयमै सच्याएमा अघि बढने प्रशस्त आधार हुन्छ । लोकतन्त्रमा व्यक्ति र दल परिवर्तन गर्न सकिन्छ । यो हामी र सबैका लागि राम्रो अवसर हो ।



# सन्तुलित विकासका लागि सङ्घीयता आवश्यक छ

मुलुक सङ्घीय संरचनामा गएसँगै यसले व्यावहारिक अभ्यास गर्न थालेको आठ वर्ष पुग्दैछ । सात वर्षका अवधिमा नागरिकसँग दुवैखाले अनुभूति छन् । सरकार घरदैलामा आयो । सेवा लिन जिल्ला सदरमुकाम र केन्द्र जानैपर्ने बाध्यताबाट मुक्ति पाएका नागरिकलाई सङ्घीयता राम्रो लागेको छ । यो मीठो अनुभूति खास गरी दूरदराजमा बस्ने नागरिकले गरिरहेका छन् । यद्यपि सुगम, शक्ति र पहुँचमा रहनेहरूलाई सङ्घीयता घाँडो जस्तो लागिरहेको छ ।

नागरिकका यी दुवैखाले अनुभूति र अनुभवमा रहेर कर्णाली प्रदेशका प्रथम मुख्यमन्त्री महेन्द्रबहादुर शाहीसँग रासस कर्णाली प्रदेश कार्यालयका प्रमुख शूरबहादुर सिंहले लिएको अन्तर्वार्ताको सम्पादित अंशः



● **महेन्द्रबहादुर शाही**
पूर्वमुख्यमन्त्री
कर्णाली प्रदेश

**सङ्घीयतापछि मुलुकले के प्राप्त गरेको छ ?**

सङ्घीयता एकात्मक राज्य व्यवस्थाको व्यवहारबाट उब्जिएका असमानता, अविकास, विभेद, गरिबी र पछौटेपनको मुक्तिका खातिर प्राप्त संरचनात्मक व्यवस्था हो । सामाजिक न्यायसहित समानुपातिक, समावेशी, समतामूलक समाज निर्माण गरी मुलुकमा पिछडिएको क्षेत्र, जाति, वर्ग, सीमान्तकृत, अल्पसङ्ख्यकलाई राज्यको मूल प्रवाहमा ल्याउन सङ्घीयता आएको हो । यसको उद्देश्य भनेकै मुलुकको सन्तुलित विकासबाट आर्थिक समृद्धि र सुशासन कायम गर्नु हो ।

मुलुक सङ्घीय संरचनामा गइसकेपछि सात प्रदेश तथा देशभरिका पालिकामा सन्तुलित बजेट पुग्नु, बजेट वितरणका सूचक जस्तै जनसङ्ख्या, भौगोलिक विकटता र राजस्व सङ्कलनलाई आधार बनाएर स्रोतको बाँडफाँड हुनु, मूलतः स्थानीय सरकारले जनताको आँगन र प्रदेश सरकारले दैलो पुगेर जनताको आवश्यकतालाई परिपूर्ति गर्नु तथा सङ्घीय सरकारले पूर्ण अभिभावकत्व दिनु सङ्घीयतापछिका प्रतिफल हुन् । विगतमा सामान्य कामका लागि मुकाम वा केन्द्रकै मुख ताक्नुपर्ने विवशता अहिले सीमितबाहेक सबै

हट्दा जनतामा धेरै राम्रो प्रभाव पारेको छ ।

त्यस्तै अहिले पूर्वाधार क्षेत्रको विकास भएको छ । ठेकेदार/खेताला शिक्षक रहने समस्या अन्त्य भएको छ । स्वास्थ्य तथा शिक्षामा धेरै ठुलो रूपान्तरण भएको छ । सात प्रदेशले आआफ्ना प्रदेशमा स्वास्थ्य, शिक्षाका संरचना निर्माणका साथै प्रभावकारी सेवामा जोड दिँदै आएका छन् । आर्थिक उत्पादनमा लगानी, सामाजिक न्यायसहितको सुशासन कायमका लागि तिनै सरकारमा प्रतिस्पर्धात्मक ढङ्गबाट जनताका लागि सेवा दिने अभ्यास संस्थागत हुँदै गएको छ ।

कोभिड महामारीको प्रतिकार्य, रोकथाम तथा नियन्त्रणमा स्थानीय, प्रदेश र सङ्घ सरकारको राम्रो भूमिका रह्यो । सबैले निर्वाह गरेको जिम्मेवारीले जनताको जिउधन सुरक्षामा ठुलो सहयोग पुग्यो । यसबाट दूरदराजका नागरिकलाई पनि सहजै सेवा मिल्यो । यी सबै सङ्घीय व्यवस्थाबाट उपलब्ध भएका हुन् । विशेषतः सङ्घीयता राजधानीलाई नभई कर्णाली जस्ता पछाडि परेका क्षेत्र, वर्ग, समुदाय, जातिका निम्ति ल्याइएको हो ।

**सङ्घीयताको इतिहासमा कर्णाली प्रदेशको प्रथम मुख्यमन्त्री हुँदाका बखत प्रदेश स्थापना गर्दा यहाँले के कस्ता चुनौती भोग्नुपर्‍यो ?**

सङ्घीय व्यवस्था कार्यान्वयनका लागि प्रदेश सरकार नितान्त नौलो संरचना थियो । प्रदेशसभाको चुनाव भयो तर सरकार सञ्चालन तथा व्यवस्थापन गर्ने कुनै पनि प्रकारका संरचना थिएनन् । कहाँ बसेर जनताको सेवा दिने भन्ने थाहा थिएन । हामीसँग संरचना र जनशक्ति केही थिएन, कार्यालय थिएन । मुख्यमन्त्रीको शपथ लिएपछि कहाँ गएर पदबहाली गर्ने भन्नेमा अन्योल भयो । विकल्पका रूपमा क्षेत्रीय प्रशासकलाई अर्कामा सारेर उहाँकै कार्यकक्षमा पदबहाली गरियो ।

त्यतिबेला प्रदेश सरकारका एक जना कर्मचारी थिएनन् । क्षेत्रीय प्रशासकलाई “आफ्नो कामका साथै प्रदेश सरकारलाई आवश्यक सहयोग गर्नू” भन्ने चिट्ठी आएको थियो । छ महिनासम्म कुनै कर्मचारी प्रदेश सरकारका नाममा खटाइएको थिएन । अन्य विभागीय मन्त्रालयका हकमा “प्रदेशमा रहेका सङ्घ सरकारअन्तर्गतका निर्देशनलाय तथा डिभिजन कार्यालयलाई प्रदेश सरकारले सहयोग मागे आवश्यक सहयोग गर्दिनू” भन्ने अवस्थाबाट कार्य थालनी गर्‍यौँ । यो गाह्रो मात्र नभई निकै चुनौतीपूर्ण थियो ।

कुनै निवेदन तयार गर्दा आफैँले टाइप गर्नुपर्थ्यो । क्याबिनेटका प्रस्ताव आफैँले तयार गर्दा त्यसमा सही गर्ने कुनै विशिष्ट श्रेणीको कर्मचारी खोज्दै जानुपर्ने अवस्था थियो । पछि हामीले जिल्ला कार्यालय, निर्देशनालय निर्माण गर्‍यौँ, अनि सङ्गठन तथा व्यवस्थापनको काम पनि त्यसै बेला भयो । अहिले प्रदेश सरकारका दुई हजार दुई सय कर्मचारी छन् ।

सरकार सञ्चालनको क्रमसँगै हामी प्राथमिकता केलाई दिने भन्ने मुद्दामा केन्द्रित भयौँ । तिनै तहका सरकारले सडक, शिक्षा, स्वास्थ्य, खानेपानी कृषिका संरचनाका कार्य अगाडि बढायौँ । के कति कच्ची पक्की सडक निर्माण गर्ने भनेर निर्धारण गरियो । आर्थिक समृद्धिका लागि कृषि, पर्यटन क्षेत्र निर्धारण, पूर्वाधार निर्माण गर्‍यौँ । सामाजिक सुरक्षाअन्तर्गत छोरी खाता, महिला आयआर्जनका लागि ७९ स्थानीय तहमा बिउ पुँजी, घाइते-अपाङ्गता भएका- बेपत्ता- सहिद परिवारका लागि सम्मान भत्ता, दुर्घटना बिमालगायत कार्यक्रम पनि

अगाडि बढायौँ । मुख्यमन्त्री रोजगार कार्यक्रम जे आवश्यकता छ त्यही काम गरेर रोजगारी सिर्जना गर्ने गरी सुरुआत गऱ्यौँ, जुन निरन्तर प्रभावकारी तवरबाट चलिरहेको छ ।

कर्णालीका सडक, खानेपानी, स्वास्थ्य, शिक्षाका पूर्वाधार निर्माणका लागि प्राथमिकीकरण गऱ्यौँ । प्रदेश रङ्गशाला जस्ता गौरवका आयोजना पनि अगाडि बढाइयो । सडक कति प्रदेश र कति स्थानीय सरकारले बनाउने भन्ने तय गऱ्यौँ । प्रदेश सरकारका गौरवका आयोजना पनि तयार गऱ्यौँ । आर्थिक समृद्धिका लागि कृषि, पर्यटन क्षेत्र निर्धारण पूर्वाधारका काम अगाडि बढाइएको छ ।

प्रदेश सरकारको समृद्धि र विकासको मोडललाई पूर्णता दिनका लागि प्रदेश नीति तथा योजना आयोग र आवश्यक जनशक्ति परिपूर्ति गर्न प्रदेश लोकसेवा आयोग गठन गरी त्यसअन्तर्गतका गतिविधि अगाडि बढिरहेका छन् ।

प्रदेश सरकारको व्यवस्थित सञ्चालन तथा व्यवस्थापनका लागि ऐन, नियम, कार्यविधि, मार्गनिर्देशन बनाइयो । अब प्रदेश संरचनामा रहेर काम गर्न पछिल्ला सरकारलाई कुनै अप्ठ्यारो छैन ।

**पछिल्लो समय प्रदेश संरचना अनावश्यक भन्ने टिप्पणी भइरहेको छ । यसले कस्तो सङ्केत गर्छ ?**

सङ्घीय व्यवस्था विरोधी शक्तिहरूले सङ्घीयता आवश्यक छैन भनिरहँदा नेपाली उत्पीडित, जाति, वर्ग र क्षेत्रलाई अन्याय हुने छ । सङ्घीय व्यवस्था अल्पसङ्ख्यक, सीमान्तकृत, महिला, दलित, पिछाडिएका क्षेत्रका लागि आवश्यक छ भन्ने प्रष्टै छ । परिवर्तन रोक्न नसकेर बाध्यतावश संविधान स्वीकारेका शक्तिहरू अहिले प्रतिगमनकारी व्यवस्थाको पुनर्स्थापना गर्न खोजिरहेका छन् । वर्तमान व्यवस्थामा दृढ शक्तिहरू एक ठाउँमा उभिनुपर्छ । संविधानको पूर्ण कार्यान्वयनका लागि सङ्घीय व्यवस्थाका पक्षधर सतर्क हुनुपर्छ । सङ्घीय कानुन, संरचना र अधिकार बाँडफाँडका कुरा छिटो लागु गर्नुपर्छ । चरम भ्रष्टाचारविरुद्ध सुशासन दिनुपर्ने आवश्यकता छ ।

**यस व्यवस्थालाई संस्थागत एवम् दिगो बनाउन अब के गर्नुपर्ला ?**

मुलुकमा संविधान र सङ्घीय सरकार बने तर आवश्यक कानुन बन्न सकेनन् । सङ्घीय निजामती सेवा ऐन तथा प्रहरी ऐन बनाउनुपर्छ । ती कानुन नबन्दा समस्या भएको छ । प्राकृतिक स्रोत बाँडफाँड हुनुपऱ्यो । अनुदान दिएर सरकार चल्ने प्रवृत्तिमा रूपान्तरण आउनुपर्छ । संविधानमा जे व्यवस्था गरिएको छ ती कार्यान्वयनमा आउनुपर्छ । परिणामुखी काम गर्न पुँजी मापन गर्ने र त्यहीअनुसार बाँडफाँट गर्ने प्रणाली स्थापित गरिनुपर्छ । तीनवटै तहका सरकारहरूले गुरुयोजना बनाउने र कसले कति बजेटको काम गर्ने भन्ने स्पष्ट मापदण्ड बन्नुपर्छ ।

अनुदानका भरमा चल्ने सरकार आत्मनिर्भर बन्न सक्दैनन् । उनीहरूको आफ्नै स्रोत हुनुपर्छ । कुनै पनि सरकारको गुरुयोजना नहुँदा विकास निर्माणमा योजनाको डुप्लिकेसन र बजेट दुरुपयोग भयो । सङ्घ, प्रदेश र पालिकाले कतिसम्मका सडक तथा अन्य पूर्वाधार बनाउने भन्ने प्रष्ट छैन । यसका लागि तीनवटै तहका सरकारबिच समन्वय र सहकार्य आवश्यक छ । कर्णाली प्रदेश सरकारले भने पञ्चवर्षीय योजना बनाएको छ, 'सोच २१००' निर्माण गरेको छ ।

गुरुयोजनासँगै काइयोजना निर्माण गर्ने र त्यहीअनुसार सरकार अगाडि बढ्न सके मात्र मुलुकले अपेक्षा गरेको विकास र समृद्धि प्राप्त हुन सक्छ । लगानी र आयोजनाको विभाजन गर्ने, वडादेखि पालिका जोड्ने सडकको जिम्मा पालिका, पालिका-जिल्लादेखि प्रदेश जोड्ने सडक प्रदेश र प्रदेश केन्द्रदेखि सङ्घीय केन्द्रसँग जोड्ने सडक निर्माणको जिम्मा सङ्घ सरकारलाई दिने गरी क्षेत्र निर्धारण गरिनुपर्छ ।

कर्मचारीबिचको समन्वय र स्तरवृद्धि गर्न र विधागत ज्ञान दिन आवश्यक छ भने प्रदेश सरकारसँग अनुभव कम भएकाले कर्मचारीको क्षमता अभिवृद्धिका लागि तालिम दिनु जरुरी छ । यसो हुन सके मात्र संविधान र सङ्घीयताको मर्मअनुसार प्रदेश, स्थानीय तथा सङ्घ सरकारले आशातीत गति लिन सक्ने भई संस्थागत एवम् दिगोपनमा सहयोग पुग्ने देखिन्छ ।



# पहिलो कार्यकालमा सङ्घीयताको जग बसालेका छौँ

**ऐतिहासिक संविधान सभाबाट निर्वाचित जनप्रतिनिधिको सक्रियतामा निर्माण भएको 'नेपालको संविधान' जारी भएको आगामी असोज ३ गते आठ वर्ष पूरा हुँदैछ । संविधानबमोजिम सङ्घ, प्रदेश र स्थानीय तहका सरकार गठन भई शासन व्यवस्था सञ्चालन भइरहेको छ । सबै तहका सरकारले संविधानबमोजिम आआफ्ना अधिकार प्रयोग गरी शासन चलाइरहँदा सङ्घीय लोकतान्त्रिक गणतान्त्रिक शासन व्यवस्थाको कार्यान्वयन पनि भइरहेको छ ।**

**समानुपातिकता, समावेशिता, लोकतान्त्रिकता र अग्रगामी चरित्रको संविधान जारी भएको आठ वर्ष पुग्न लाग्दा प्रदेश तहको संरचनाप्रति विभिन्न कोणबाट विविधखालका टीकाटिप्पणी सुनिने गरिएको पनि छ । नेपालको संविधान कार्यान्वयनमा आएपछिको पहिलो पाँच वर्षको पूरै कार्यकाल मुख्यमन्त्रीको नेतृत्व गर्नुभएका सुदूरपश्चिम प्रदेशका पूर्वमुख्यमन्त्री त्रिलोचन भट्टसँग संविधान दिवस, सङ्घीय व्यवस्थाका उपलब्धि र यसको कार्यान्वयनलगायत विषयमा बुधबार रासस धनगढी कार्यालय प्रमुख सिद्धराज भट्टले गरेको कुराकानीको सम्पादित अंशः**



● **त्रिलोचन भट्ट**
पूर्वमुख्यमन्त्री
सुदूरपश्चिम प्रदेश

**सङ्घीय लोकतान्त्रिक गणतान्त्रिक व्यवस्था कार्यान्वयनमा आएको आगामी असोज ३ गते आठ वर्ष पुग्दै छ । यहाँले प्रदेशको पहिलो मुख्यमन्त्रीको नेतृत्व गर्दाको अनुभव बताइदिनुहुन्छ कि ?**

संविधान दिवसका उपलक्ष्यमा सर्वप्रथम म सुदूरपश्चिमवासीसहित सम्पूर्ण नेपालीमा शुभकामना व्यक्त गर्दछु । हाम्रो संविधानले सुनिश्चित गरेका अधिकारको कार्यान्वयन हुँदै जाने क्रममा छ । एउटा साझा दस्तावेजलाई जति कार्यान्वयन गर्न सक्यो, त्यति नै नागरिक र देशका लागि हित हुने छ । प्रदेशको पहिलो मुख्यमन्त्रीको जिम्मेवारी पाएर काम गर्ने दौरानमा पहिलो अभ्यास हुँदा स्वाभाविक रूपमा केही समस्या देखिए होलान् । यस क्रममा कानुनी, प्रशासनिक, व्यावहारिक जटिलता र अनुभवको कमी हुनु स्वाभाविकै हो ।

यी समस्याका बाबजुद देशमा सङ्घीयतालाई संस्थागत विकास गर्न जग बसाल्ने काम पहिलो कार्यकालले गरेको छ । सो कार्यकालमा कानुन, प्रशासन, विकास निर्माणको साथै राजनीतिक हिसाबले पूर्वाधारको काम भएको छ । फलस्वरूप अहिले विकासको परिणाम पनि देखिन थालेको छ ।

**अहिलेको राजनीतिक व्यवस्थाबाट जनताले केही उपलब्धि महसुस गर्न सकेनन् भन्ने जनगुनासो बेलाबखत आउन थालेको छ । यसमा के भन्नुहुन्छ ?**

राजनीतिक आन्दोलनपछि बनेको नेपालको संविधान विश्वका अन्य देशका भन्दा उत्कृष्ट छ । सङ्घ, प्रदेश र स्थानीय तह अधिकारका हिसाबले शक्तिशाली भएका छन् । मौलिक हकसँगसँगै समावेशिता, समानुपातिकता, धर्मनिरपेक्षता जस्ता व्यवस्था यसमा गरिएको छ । ग्रामीण क्षेत्रमा पुगेर मूल्याङ्कन गर्ने हो भने गत सात वर्षका अवधिमा सङ्घीयतानुसार विकास निर्माणलगायत गतिविधि बढेका छन् । सहर, बजारमा केही असन्तुष्टि सुनिन्छ । अग्रगमन, सङ्घीयता र देशको स्वतन्त्र विकास होस् भन्न नचाहनेहरूले सङ्घीयता र संविधानको विरोध गरिरहेका छन् तर नागरिक सन्तुष्ट नै छन् । यस सवालमा हामी सच्चिएर जानु पनि आवश्यक छ । राजनीतिक र प्रशासनिक नेतृत्वले जनतालाई सेवा दिएर अनुभूति गराउने गरी विकासनिर्माणलगायत कामका योजना अघि बढाउनुपर्छ ।

**पाँच वर्षको कार्यकालमा यहाँले बेहोर्नुपरेका मुख्य समस्या एवम् जटिलता के के थिए ?**

संविधानले सङ्घ, प्रदेश र स्थानीय तहलाई दिएका अधिकारमध्ये साझा अधिकारका विषयमा बन्नुपर्ने कानुन र अन्य कतिपय काममा कठिनाइ भयो । प्रहरी समायोजनको कुरा ढिला भएको छ । संघीय निजामती सेवा ऐन समयमै नबन्दा कर्मचारी व्यवस्थापन गर्न नसकेर चाहेअनुसारको काम गर्न अप्ठ्यारो पैदा भयो । शिक्षाका सन्दर्भमा काम तीन तहमा बाँडिएको छ तर कसको के काम भन्ने स्पष्ट हुन सकेको छैन । शिक्षासहित विकास निर्माणका काममा एकरूपता ल्याउन सकिएको छैन । मूल रूपमा संविधानले दिएका अधिकारलाई सङ्घले प्रत्यायोजन गर्ने क्रममा कहीँ न कहीँ कमजोरी देखिएको छ ।

प्रशासनिक रूपमा हेर्ने हो भने यो क्षेत्र केवल विधि, प्रक्रियामा मात्रै अल्झिएर केन्द्रित हुने, परिणाम दिन नसक्ने र नचाहने तथा कहीँ न कहीँ एकात्मक सोचबाट चल्ने प्रवृत्ति देखिन्छ । यसलाई फुकाउँदा जटिलता हटेर जान सक्छन् ।

अर्को महत्त्वपूर्ण कुरा, वित्तीय आयोगले आर्थिक स्रोतको बाँडफाँड गर्दा प्रदेशले प्राप्त गर्ने स्रोत सङ्घीयताको मर्म र भावनानुसार भइरहेको छैन । हिजो विकासका दृष्टिमा पछि परेका-पारिएका सुदूरपश्चिम, कर्णाली र मधेस जस्ता प्रदेशलाई समावेशिता र समानुपातिकताका आधारमा आर्थिक स्रोत वितरण भइरहेको छैन । पछि परेकालाई अन्य प्रदेशका हाराहारीमा ल्याउन क्षतिपूर्तिसहितको आर्थिक स्रोतको वितरण प्रणाली अपनाउनु जरुरी छ ।

**पछिल्ला वर्षमा राजनीतिक दलका कतिपय नेता, कार्यकर्ताबाट प्रदेश तहको संरचना अवश्यक नभई राज्यका लागि बोझिलो भयो भन्ने खालका टीकाटिप्पणी आउन थालेको छ । यसमा यहाँको धारणा के छ ?**

एकल छत्रछायामा राज गर्ने मनस्थिति राखेकाहरूबाट यस्तो टिप्पणी गर्ने गरिएको सुनिन्छ । संस्थागत रूपमा

ठुला दलका नेता-कार्यकर्ताबाट सङ्घीयताको विरोध नभए पनि सङ्घीयताले आफूहरूको अधिकार कटौती गरेको सोच्ने एकात्मक चिन्तन राख्नेहरूबाट भएको देखिन्छ ।

**यहाँले सङ्घीयता कार्यान्वयनका लागि जग बसाल्न सफल भयौँ, केही जटिलता पनि देखिए भन्नुभयो । तपाइँका कार्यकालमा यी अप्ठ्यारा फुकाउन के के प्रयास भए ?**

प्रधानमन्त्रीको नेतृत्व रहने अन्तरप्रदेश समन्वय परिषद्को बैठक तत्कालीन नेकपाको सरकारका बेला तीन पटक बस्यो । त्यसपछिका सरकारका बेला बस्न सकेन । बैठकमा मैले प्रहरी समायोजन, निजामती सेवा ऐन, साझा अधिकार जस्ता विषयमा पटक पटक कुरा उठाएको थिएँ । विकासमा पछि परेको सुदूरपश्चिम प्रदेशलाई क्षतिपूर्तिसहित आर्थिक व्यवस्थापन गर्नुपर्छ भन्ने माग गरेको थिएँ ।

**जनअपेक्षानुसारको प्रतिफल दिन संविधान संशोधन वा परिमार्जन गर्न अथवा अन्य के व्यवस्था गर्न जरुरी देख्नुहुन्छ ?**

आवश्यकतानुसार साझा सहमतिमा संविधान संशोधन गर्न पनि सकिन्छ तर संविधानमा भएका अधिकारलाई मात्रै प्रयोग गर्ने हो भने पर्याप्त नै छ । जनताको अपेक्षानुसार प्रतिफल दिन नेपालमा विकासको मोडेल तयार गर्नुपर्ने देख्छु । भनसुन, पहुँच, माग, ठुलोमान्छे भएकै आधारमा भन्दा पनि आवश्यकताका आधारमा विकासको ढाँचा तयार गर्नुपर्छ । अहिलेसम्म यो मोडेल हाम्रो देशमा छैन । प्रशासनिक नेतृत्व प्रक्रियागत कुरामा अल्झिने र राजनीतिक नेतृत्वले चुनावमा बढी सपना देखाउने गर्दा व्यवहारमा आउँदा जटिलता देखाउने प्रवृत्तिको अन्त्य हुनु जरुरी छ ।



# संविधानले नेपाली समाजलाई बृहत् राष्ट्रिय एकताको सूत्रमा बाँधेको छ[१]



✍ **शेरबहादुर देउवा***

ऐतिहासिक संविधान सभामार्फत संविधान निर्माण भई जारी गरेको आज आठ वर्ष पूरा भएको छ। यस अवधिमा प्रतिनिधि सभा, प्रदेश सभा र स्थानीय तहको निर्वाचन भई दोस्रो कार्यकालको रुपमा काम गरिरहेका छन्। नयाँ संविधानअनुसार विभिन्न ऐन कानुन निर्माण सम्पन्न भई संविधान पूर्ण कार्यन्वयनतर्फ अघि बढेको छ। नयाँ संविधानअनुसारको स्थानीय, प्रदेश र केन्द्र तीनै तहका सरकार जनताको अपेक्षा अनुसारको काम गर्न अग्रसर छन्।

संविधान सभामार्फत निर्माण भएको संविधानले लोकतन्त्रको जग बलियो बनाउँदै अमन चयन र शान्ति स्थापना गर्न सफलता मिलेको छ। साथै संविधानले जातीय, भाषिक, धार्मिक, सांस्कृतिक तथा भौगोलिक विविधतायुक्त नेपाली समाजलाई बृहत् राष्ट्रिय एकताको सूत्रमा बाँधेको छ।

लोकतान्त्रिक संविधानमार्फत मुलुकलाई समृद्धिको मार्गमा अघि बढाउन दिशानिर्देश भएको छ। संवैधानिक अभ्यासमा भएका कमीकमजोरी हटाएर संविधानको व्यावहारिक कार्यान्वयनमा विशेष ध्यान दिएर अघि बढ्नुपर्ने जिम्मेवारी छ। सबै राजनीतिक दल, नागरिक समाज, निजी क्षेत्र र विभिन्न पेशाकर्मीहरूको सामुहिक प्रयत्नबाट अब मुलुकलाई समुन्नत मुलुकको रुपमा अघि बढाउनु पर्ने दायित्व हामी सबैको काँधमा आएको छ।

२००७ सालदेखि सुरु भएको विभिन्न चरणका राजनीतिक संघर्ष र प्रातः स्मरणीय शहिदको बलिदानको

१ कुराकानीमा आधारित, स्रोत : राष्ट्रिय समाचार समिति

* पूर्वप्रधानमन्त्री

उपलब्धिका रुपमा संविधान सभामार्फत संविधान जारी भएको हो । संविधानको सफल कार्यान्वयन गरेर जनतालाई न्याय, सुशासन, समानता, सुख एवम् समृद्धिसहितको समुन्नत मुलुक बनाउन हामी सबैले एकआपसमा हातेमालो गरेर अघि बढ्नु पर्ने आवश्यकता छ । मुलुकलाई केही वर्षमा नै समुन्नत मुलुकको रुपमा अघि बढाउन सबै एकताबद्ध भएर लाग्नुपर्ने भएको छ। संविधान दिवशको यो पावन अवसरमा समुन्नत मुलुक बनाउने अभियानमा सबैलाई एकताबद्ध भएर सहभागी हुन अनुरोध गर्न चाहन्छु ।

अन्त्यमा, संविधान दिवसको यस पावन अवसरमा विगतमा भएका हरेका राजनीतिक र सामाजिक आन्दोलनको अगुवाई गरेका हाम्रा अग्रज नेता गणहरू, विभिन्न आन्दोलनका क्रममा ज्यानको आहुति दिने महान् सहिदहरू, लोकतन्त्र प्राप्तिको आन्दोलनमा त्याग, संघर्ष र योगदान दिने विभिन्न क्षेत्रका व्यक्तित्वहरू, हरेक आन्दोलनमा साथ सहयोग गर्ने नागरिकहरूप्रति उच्च सम्मान प्रकट गर्दछु । साथै सम्पूर्ण नेपाली दिदीबहिनी तथा दाजुभाइहरूमा संविधान दिवसको हार्दिक शुभकामना व्यक्त गर्दछु ।



# ‘संविधानको सकारात्मक पक्षको रक्षा गर्दै अपूर्णता पूरा गर्नुपर्छ’



✍ **डा. बाबुराम भट्टराई***

संविधान सभाबाट संविधान बनाउने कुरा धेरै ऐतिहासिक महत्वको विषय हो । आधुनिक लोकतन्त्रको परिभाषा भनेको नै जनता नै सर्वाधिकार सम्पन्न हुन्छन् । उनीहरूको सहभागिता र इच्छाले नै राज्यको सञ्चालन हुनुपर्छ भन्ने मान्यता हो । जनता नै सार्वभौमसत्ता सम्पन्न बन्ने कुरा लोकतन्त्रको आधारभूत पक्ष हो । त्यसको व्यावहारिक कार्यान्वयन भनेको जनताले आफ्नो संविधान आफैँ बनाउने हो । त्यसैलाई नै इतिहासमा संविधान सभा भन्ने गरिएको हो । तर हाम्रो नेपालमा दुर्भाग्यवशः २००७ सालदेखि यो प्रश्न उठे पनि पटकपटक छोडिँदै गयो र अन्ततः करिबकरिब विलय जस्तै भयो । त्यतिबेलाका नेताहरू बी.पी. कोइराला, पुष्पलाल श्रेष्ठलगायतले पनि यसलाई कार्यान्वयन गर्न सक्नु भएन । मुख्य रुपमा २०४६ सालको आन्दोलनपछि त्यति बेलाका नेपाली कांग्रेस र नेकपा (एमाले) र वाममोर्चा मुख्य शक्तिका रुपमा उदय भयो । उहाँहरूले पनि यो मुद्दालाई छाडिदिनुभयो । संयुक्त राष्ट्रिय जनआन्दोलन भन्ने वामपन्थीको पक्ष थियो । त्यतिबेला म त्यसको प्रवक्ता थिएँ । म पश्चिमा फ्रान्सेली क्रान्तिलगायतबाट पनि प्रभावित भएको र संविधान सभाबाट संविधान नबनेसम्म लोकतन्त्र पूरा हुँदैन भन्ने मान्यतामा गहिराइपूर्वक नै आत्मसात गरेको हुनाले त्यस विषयलाई २०४६ सालदेखि नै हामीले पटकपटक उठाएका थियौँ । संविधान सभालाई नै माओवादी जनयुद्धका रुपमा मुख्य माग बनायौँ । जनयुद्धको प्रतिफलस्वरुप नेपालमा संविधान सभाबाट संविधान बन्ने काम सम्पन्न भयो । यो पृष्ठभूमि बुझ्न किन जरुरी छ भने नेपालमा कोही मान्छे सात वटा संविधान बने भन्छन् । तर खासगरी एउटै संविधान बनेको हो । त्यसभन्दा अगाडि

---

* पूर्वप्रधानमन्त्री एवम् अध्यक्ष, नेपाल समाजवादी पार्टी

राजा महाराजाहरूले आफ्नो सुविधाअनुसार दबाब परेका बेला खुकुलो खालको र आफ्नो एकलौटी भएको बेला निरङ्कुश खालको संविधान जारी गरेका हुन् । उनीहरूले 'हामीमा निहित सार्वभौमसत्ता र राजकीयसत्ताको प्रयोग गरी यो संविधान जारी गरेका छौँ' भने । तर संविधान सभाबाट निर्माण भएको संविधानमा हामीले 'सार्वभौमसत्ता सम्पन्न संविधान सभाबाट यो संविधान जारी गरेका छौँ' भनेका छौँ । नेपाली इतिहासका लागि यो अत्यन्त महत्वपूर्ण ऐतिहासिक घटना हो । त्यसैले पहिलो कुरा विधिको हिसाबले संविधान सभाबाट संविधान बन्ने विषयलाई कसैले पनि 'किन्तु परन्तु' गर्नै हुँदैन । जसले यसको महत्व नबुझेर संविधान भएन, फ्याकिदिँऊ भन्न खोज्छन् तर संविधान संविधान सभाले नै बनाउनुपर्छ, अर्को कसैले आएर संविधान बनाउन सक्दैन । संविधान दिवसको सन्दर्भमा यो पाटो र यसको ऐतिहासिक महत्व सबैले बुझ्न जरुरी छ । संविधान सभाबाट नेपालमा पहिलो संविधान बनेको हुनाले प्रक्रियागत हिसाबले यो ऐतिहासिक घटना थियो । हामी सबै मिलेर संविधानको रक्षा गर्नुपर्छ । कुनै पनि बहानामा संविधानलाई कमजोर पार्नु हुँदैन ।

जहाँसम्म संविधानको विषयवस्तुको कुरा छ, यो त समयानुकूल, समाजको चेतना, आर्थिक सामाजिक विकासको स्तर र राजनीतिक शक्तिहरूबिचको शक्ति सन्तुलनका आधारमा त्यसको 'कन्टेन्ट' बन्ने हुन्छ । हाम्रो सन्दर्भमा राष्ट्रिय औद्योगिक पूँजीको पनि विकास नभइसकेको, कृषि प्रधान अर्थतन्त्रको बाहुल्य रहेको, सामन्तवादी सोच एवम् संस्कार हावी रहेको तथा हाम्रा संस्थाहरू पनि लामो लोकतान्त्रिक अभ्यासबाट नगुज्रेको, नेता र जनताको चेतना पनि नउठेका कारण संविधानमा केही अपूर्णता त छन्, फेरि पनि समकालीन विश्वमा 'कन्टेन्ट'का हिसाबले नेपालको संविधानमा उल्लेख भएको सङ्घीय लोकतान्त्रिक गणतन्त्र, सङ्घीयता, धर्मनिरपेक्षता, समावेशिता धेरै महत्वपूर्ण छन् । म आफैँ यो संविधासभाका निम्ति निरन्तर लडेको, संवैधानिक समितिको सभापतिका रुपमा भूमिका निर्वाह गरेको नाताले यहाँ भन्न सक्छु, यसको केही अपूर्णता पनि छन् । जुन मैले संविधान जारी भएको दिनदेखिनै भनेको छु । यो संविधान आधा भरी, आधा खाली छ, मैले किन भनेको हो भने, भरि त भरिएकै हो । संविधान सभाबाट संविधान जारी गर्नु नै भरिनु हो । सङ्घीय लोकतान्त्रिक गणतन्त्रको संविधानको सारवस्तु हुनु पनि भरिएको नै हो । तर अपूर्णचाहिँ कहाँनेर हो भने शासकीय स्वरुप मिश्रित प्रकृतिको बनायौँ, त्यसले देशमा राजनीतिक स्थिरता दिन सकेन, त्यसैले प्रत्यक्ष निर्वाचित राष्ट्रपतीय प्रणाली र पूर्ण समानुपातिक संसद्को व्यवस्था हुनुपर्थ्यो । यो ठुलो त्रुटि भयो भन्ने मेरो त्यस बेलादेखिको बुझाइ हो र दुई पटकको निर्वाचनपछि पनि त्यो कमजोरी देखिइरहेको छ । नेपालजस्तो जातीय, क्षेत्रीय विविधतायुक्त मुलुकमा सङ्घीयता अनिवार्य थियो, तर हामीले ठिक ढङ्गले संविधान सभाले तय गरेको 'पहिचानका पाँच र सामर्थ्यका चार आधार'अनुसार संविधान बनाउन नसक्दा 'खिचडी' खालको बनेको छ, त्यसले गर्दा सङ्घीयता पनि सोचेजस्तो आवश्यकताअनुरुप हुन सकेन । न्यायालयलगायत राज्यको निकायको पुनःसंरचना गरिनुपर्छ भन्ने हाम्रो मान्यता थियो । संवैधानिक आयोग, न्यायालयलगायतलाई पनि अझै बढी लोकतान्त्रिकीकरण गरेर हामीले लैजान सक्नुपर्थ्यो । त्यसमा पनि हामी अलिकति चुकेका छौँ । संविधान दिवसका अवसरमा मूल्याङ्कन गर्दाखेरी इतिहासको यो

सापेक्षतामा यसको सकारात्मक पक्षको रक्षा र अपूर्णता पूरा गर्ने ढङ्गले जानु नै उपयुक्त हुन्छ । संविधान दिवसका अवसरमा सम्पूर्ण नेपाली दाजुभाइ तथा दिदीबहिनीमा शुभकामना व्यक्त गर्न चाहन्छु । यति ठुलो परिवर्तनका निम्ति सहिद, बेपत्ता र घाइतेजनले जुन योगदान गर्नुभयो, त्यसको म उच्च सम्मान गर्न चाहन्छु । संविधानका मूलभूत विषय सङ्घीयता, गणतन्त्र, धर्मनिरपेक्षता र समावेशी लोकतन्त्रलाई जोगाउँदै योभन्दा उन्नत प्रकारको समृद्ध समाजवादी समाज निर्माण गर्नु नै अबको आवश्यकता हो । विभिन्न बहानामा यसलाई उल्ट्याउन खोज्ने प्रवृत्तिबाट हामी सतर्क रहनुपर्छ । नयाँ युवापुस्ता सक्रिय र जागरुक हुँदै अगाडि आएको छ, उसले इतिहासको उपलब्धिमा टेकेर अगाडि जाने सोच बनाउनुपर्छ । त्यसो हुन सक्यो भने नेपाल बन्छ । यो संविधान दिवसले हामी सबैलाई त्यो उत्प्रेरणा देओस् ।



# समावेशिताले फेरिएको नेपाल



✍ **ओनसरी घर्तीमगर***

बहुजातीय, बहुभाषिक, बहुधार्मिक, बहुसांस्कृतिक तथा भौगोलिक विविधतायुक्त हाम्रो देश स्वतन्त्र, अविभाज्य, सार्वभौमसत्ता सम्पन्न, धर्मनिरपेक्ष, समावेशी लोकतन्त्रात्मक, समाजवाद उन्मुख, संघीय लोकतान्त्रिक गणतन्त्रात्मक राज्य हो । हामीले आर्थिक समानता, समृद्धि र सामाजिक न्याय सुनिश्चित गर्न समानुपातिक समावेशी र सहभागितामूलक सिद्धान्तका आधारमा समतामूलक समाजको निर्माण गर्ने संकल्प गरेका छौँ । संघीय लोकतान्त्रिक गणतन्त्रात्मक शासन व्यवस्थाको माध्यमद्वारा दिगो शान्ति, सुशासन, विकास र समृद्धिको नेपाली जनताको आकांक्षा पूरा गर्ने बाटो रोजेका छौँ ।

यो हामीले लामो बलिदानीपूर्ण संघर्षबाट स्थापित गरेका नयाँ शासन प्रणाली हो । यस व्यवस्थाका मूल पक्ष लोकतान्त्रिक गणतन्त्र, धर्मनिरपेक्षता, सामाजिक न्याय र समानुपातिक समावेशी प्रतिनिधित्व र समावेशी भौतिक तथा आर्थिक विकास प्रणाली हो । यस आलेखमा समानुपातिक समावेशी व्यवस्था प्राप्तिको आन्दोलन, यसबाट देश र जनताले पाएका उपलब्धि, चुनौती र यसलाई कसरी परस्कृत गर्न सकिन्छ भन्ने विषयमा चर्चा गर्ने कोसिस गरिएको छ ।

ooo

राज्यका सबै निकाय मात्रै होइन देशको सबैखाले संरचनामा समानुपातिक समावेशी प्रतिनिधित्व वा सहभागिता अहिलेको संवैधानिक व्यवस्था हो । यो प्रणाली कसैलाई संवैधानिक तथा कानुनी बाध्यकारी व्यवस्था जस्तो मात्रै लाग्ला । त्यसरी मात्रै बुझ्दा देश नबुझेको हुन्छ । देशको वस्तुस्थिति, सामाजिक बनावट नबुझेको हुन्छ ।

हाम्रो देशको वस्तुस्थिति संसारकै भिन्न छ । हिमाल, पहाड, तराई-मधेसको भौगोलिक विविधता छ । थुप्रै जातीय, भाषिक, धार्मिक, सांस्कृतिक समुदायको बसोबास छ । कुनै पनि एक जातको बाहुल्य छैन । नेपालको यस प्रकारको विविधता अहिलेको होइन, शताब्दीऔँ पुरानो हो ।

---

* पूर्वसभामुख

देशको जनसङ्ख्याको बहुमत महिलाहरू सधैं पछाडि पारिए । आदिवासी जनजातिहरू राज्यको मूलधारमा आउन पाएनन् । आउन दिइएन । दलितहरूलाई राज्यको मूलधारमा ल्याउनु त धेरै पर छुवाछुत, विभेदले थिचेर उनीहरूको मानवता नै स्वीकार गरिएन । मधेसी, पिछडावर्ग, अल्पसङ्ख्यक जहिल्यै पछि पारिए । कर्णालीलगायत उत्पीडित क्षेत्रका जनता जुन जातिका भए पनि जहिल्यै पछि पारिए । यहाँ भिन्न भाषा, भिन्न संस्कार, संस्कृति, भिन्न धर्म भएका जनता थिए । तर, कहिल्यै सबैको भाषा, धर्म, संस्कार, संस्कृतिलाई राज्यमार्फत स्वीकार गरिएन । गरिब थिए, किसान थिए, कम्लहरी, सुकुम्बासी थिए, हरवा, चरवा थिए, तीनको वास्तविक समस्या सम्बोधन गर्न र उनीहरूलाई राज्यका अंगमा ल्याउन कोसिस गरिएन ।

नेपाल अनेक फूलहरू फुलिरहेको साझा फूलबारी थियो । सुन्दर बगैचा थियो । तर, शासनमा भएकाले स्वीकार गरेका थिएनन् । शासन व्यवस्था यस्तो थियो, एक रङ, एक प्रजातिको फूल मात्रै फुल्न पाउँथ्यो । नेपालको विकास, समृद्धिका लागि यो सबैभन्दा ठुलो घातक थियो । यो केन्द्रिकृत सामन्ती राजतन्त्रात्मक व्यवस्थाको उपज थियो । जनता चाहन्थे, यो सबैको फूलबारी हो फुल्न पाउनुपर्छ ।

सबै प्रकारका फूलहरू कसरी फुल्न सक्छन् यहाँ ? राज्यका सबै अंगमा देशको वास्तविक तस्बिर कसरी देख्न सकिन्छ ? यसको एउटै मात्रै विकल्प थियो, सामन्ती एकात्मक राजतन्त्रात्मक व्यवस्थाको अन्त्य गर्ने, संघीय लोकतान्त्रिक गणतन्त्रात्मक शासन व्यवस्था प्रारम्भ गर्ने, धर्मनिरपेक्ष देश बनाउने र सामाजिक न्यायसहितको समानुपातिक समावेशिता लागु गर्ने । त्यसैले हामीले आजको व्यवस्था प्रारम्भ गरेका हौँ । समानुपातिक समावेशीले मात्रै देशको सही चित्रण गर्न सक्छ भन्ने सबैले बुझ्नुपर्दछ । हिजो राज्यले पछि पार्‍यो । त्यो गल्तीलाई सच्च्याउन र पछि पारिएका सबै समुदायलाई अगाडि ल्याउन आजको राज्यले समानुपातिक समावेशिता ल्याएको हो ।

ooo

हामीले भन्ने गरेका छौँ देश पछि पर्‍यो । सत्य हो देश पछि परेकै छ । तर पछि पर्नुको कारण बारे कम जिज्ञासा राख्छौँ । कम सोच्छौँ । देशको विकास र समृद्धिका लागि जनसहभागिता महत्वपूर्ण कुरा हो । विकासमा जबसम्म जनसहभागिता हुँदैन, जनता जहिल्यै पछि परिरहन्छन् । न विकास हुन्छ । नत समृद्धि प्राप्त हुन्छ । देशको जनसङ्ख्याका बहुमत रहेका महिलाहरूले न त अधिकार पाए, न त विकास निर्माणमा सहभागिता रह्यो । आदिवासी जनजाति, दलित, मधेसी, मुस्लिम, अल्पसङ्ख्यक, पीछडिएका क्षेत्रका जनताले कहिल्ये मूलधारमा आउन पाएनन् । विकास र समृद्धिको कार्यमा भाग लिन पाएनन् । सबै जनताको सहभागिता र विवेकलाई सामूहिक रुपमा एकैचोटी प्रयोग गर्दा मात्रै देशले विकास र समृद्धिको बाटो ल्याउने हो । तर, बाटो उल्टो थियो । लिङ्गको आधार, जातका आधारमा भूगोलका आधारमा विभेद गर्ने, उत्पीडनमा पार्ने । यो शासकहरूको खराबीले थियो । शासन प्रणालीको खराबीले थियो ।

आज कतिपयलाई माओवादीले सञ्चालन गरेको जनयुद्धका बारेमा विमति हुन सक्छ । तर यथार्थ त्यहीं जनयुद्धले हिजोको शासन व्यवस्था परिवर्तन गर्‍यो । समानुपातिक समावेशीसहितको आजको शासन व्यवस्था ल्यायो । समानुपातिक समावेशीका लागि माओवादी जनयुद्धभन्दा अगाडि कुनै आवाज उठेका थिएनन् भन्ने होइन । तर, समग्र देशको शासन व्यवस्था नै नफेरेर समानुपातिक समावेशिता मात्रै आउँदैन थियो । यो व्यवस्थाका लागि महिलाहरूले आन्दोलन गरेका छन्, जनजाति, मधेसी, दलित, उत्पीडित

क्षेत्रका समुदायले आन्दोलन गरेका छन्, सहभागिता जनाएका छन् । तर, यसको मूर्त एजेण्डा उठाएको माओवादीले नै हो । माओवादी जनयुद्धले नै हो ।

ooo

अहिलेको नेपाल समावेशी नेपाल हो । अहिलेको लोकतन्त्र समावेशी लोकतन्त्र हो । अहिलेको विकास प्रणाली समावेशी विकास प्रणाली हो । हाम्रो संविधान, संविधानबमोजिम बनेका ऐन कानुनमा प्रष्ट व्यवस्था गरिएको छ । तर, यहाँ समस्या के छ भने शासनमा भएकाहरूले पनि समानुपातिक समावेशीका बारेमा भएको संवैधानिक कानुनी व्यवस्थामा आँखा चिम्म गरिदिन्छन्, जसका लागि समानुपातिक समावेशी व्यवस्था गरिएको हो तिनीहरू पनि आफ्ना अधिकारका बारेमा बोल्दैनन् । यो सकारात्मक संकेत होइन ।

संविधानको प्रस्तावनामै देशको बहुजातीय, बहुभाषिक, बहुधार्मिक, बहुसांस्कृतिक तथा भौगोलिक विविधतायुक्त विशेषतालाई आत्मसात् गरिएको छ । वर्गीय, जातीय, क्षेत्रीय, भाषिक, धार्मिक, लैंगिक विभेद र सबै प्रकारका जातीय छुवाछूतको अन्त्य गरी आर्थिक समानता, समृद्धि र सामाजिक न्याय सुनिश्चित गर्न समानुपातिक समावेशी र सहभागितामूलक सिद्धान्तका आधारमा समतामूलक समाजको निर्माण गर्ने संकल्प गरिएको छ ।

सामाजिक न्याय र समावेशीकरण सम्बन्धी राज्यको नीति के हुने छन् भन्ने संविधानमा स्पष्ट छ । महिला, दलित, आदिवासी जनजाति, मधेसी, मुस्लिम, पीछडा वर्ग, उत्पीडित क्षेत्र, मुक्त कमैया, कम्लहरी, हरवा, चरवा, हलिया, भूमिहिन, सुकुम्बासीको राज्यका प्रत्येक अंगमा प्रतिनिधित्व र उनीहरूको उत्थानको बारेमा प्रष्ट छ ।

राज्यका तीनवटै अंग व्यवस्थापिका, कार्यपालिका र न्यायपालिकामा समानुपातिक समावेशी प्रतिनिधित्वको सुनिश्चिता छ । यसका साथै निजामति कर्मचारी, सुरक्षा अंगलगायतका सबै क्षेत्रमा कर्मचारीहरू पदपूर्ति तथा नियुक्ति गर्दा समानुपातिक समावेशी सिद्धान्तका आधारमा गर्नुपर्ने स्पष्ट संवैधानिक तथा कानुनी व्यवस्था छ ।

संघीय संसदमा ३३ प्रतिशत महिलाको अनिवार्य सहभागिताको व्यवस्था छ । ३३ प्रतिशित महिला पनि जातीय जनसङ्ख्याको आधारमा आउने व्यवस्था छ । समानुपातिक निर्वाचनबाट हुने प्रतिनिधि सभाको निर्वाचनका लागि राजनीतिक दलले उम्मेदवारी दिँदा जनसङ्ख्याको आधारमा महिला, दलित, आदिवासी जनजाति, खस आर्य, मधेसी, थारू, मुस्लिम, पिछडिएको क्षेत्रसमेतबाट बन्द सूचीका आधारमा प्रतिनिधित्व गराउने र सोहीबमोजिम निर्वाचित गर्ने कानुनी व्यवस्था छ । यसमा अपांगता भएका व्यक्तिको समेत प्रतिनिधित्व हुने व्यवस्था छ ।

प्रदेशसभामा पनि ३३ प्रतिशत महिला अनिवार्य गरिएको छ । प्रतिनिधि सभामा जस्तै त्यहाँ पनि सबै जातिको सहभागिता सुनिश्चित गरिएको छ ।

हामीले राष्ट्रपति र उपराष्ट्रपतिको निर्वाचन गर्दा फरक लिङ्ग वा समुदायबाट निर्वाचित हुने संवैधानिक व्यवस्था गरेका छौँ । प्रतिनिधि सभाका सभामुख र उपसभामुख, राष्ट्रिय सभाको अध्यक्ष र उपाध्यक्ष, प्रदेश सभाको सभामुख र उपसभामुखमध्ये एकजना महिला अनिवार्य हुने व्यवस्था छ । स्थानीय तहको

निर्वाचनमा भाग लिँदा दलहरूले पालिका प्रमुख र उपप्रमुखमा एकजना महिला, वडा सदस्यहरूमा दुई जना महिला, त्यसमा पनि एक जना दलित महिला अनिवार्य राखेर उम्मेदवारी दर्ता गर्ने व्यवस्था गरेका छौँ ।

संघीय तथा प्रदेश सरकार गठन गर्दा समावेशी सिद्धान्त अवलम्बन गर्नुपर्ने व्यवस्था छ । राजदूत, संवैधानिक अङ्ग र निकायका पदमा नियुक्ति गर्दा समावेशी सिद्धान्तबमोजिम गर्नुपर्ने व्यवस्था छ ।

पछिल्लो राजनीतिक दल सम्बन्धी कानुनबमोजिम राजनीतिक दल गठन गर्दा केन्द्रीय समितिमा ३३ प्रतिशित महिलाको प्रतिनिधित्व गराउनै पर्ने व्यवस्था छ। सरकारी तथा गैरसरकारी संस्था दर्ता गर्दा समितिमा ३३ प्रतिशत महिला हुनैपर्छ ।

हामी प्रष्ट के हुनुपर्छ भने नेपालमा निर्वाचन, नियुक्ति, पदपूर्ति, मनोनयन जे जे गर्छौं, ती सबै समानुपातिक समावेशी सिद्धान्तकै आधारमा हुने प्रावधान बनाएका छौँ । त्यो पनि सामाजिक न्यायसहितको हुनुपर्ने व्यवस्था छ । त्यस कारणले नै सामाजिक न्यायसहितको समानुपातिक समावेशी शासन प्रणाली अवलम्बन गरेका हौँ ।

यतिमात्रै होइन विकास सम्बन्धी नीतिमै क्षेत्रीय सन्तुलनसहितको समावेशी आर्थिक विकास गर्ने व्यवस्था छ । विकासका दृष्टिले पछाडि परेको क्षेत्रलाई प्राथमिकता दिँदै सन्तुलित, वातावरण अनुकूल, गुणस्तरीय दिगो रुपमा भौतिक पूर्वाधारको विकास गर्ने, विकासको प्रतिफल वितरणमा विपन्न नागरिकलाई प्राथमिकता दिँदै आम जनताले न्यायोचित रूपमा पाउने व्यवस्था गरिएको छ । यसबाट के कुरा प्रष्ट हुन्छ भने हामीले समानुपातिक समावेशिताको कुरा गर्दा यो एउटा जाति, लिङ्गको प्रतिनिधित्वको कुरा मात्रै होइन यो त हाम्रो भौतिक पूर्वाधार विकास, आर्थिक विकास र समृद्धिको प्रणाली पनि हो ।

०००

जब हाम्रो मुलुक संघीय लोकतान्त्रिक गणतान्त्रिक भयो । यहाँ समानुपातिक समावेशी पनि भयो । सबै समुदाय, जात जाति, भाषा भाषी, धर्म संस्कृति मान्ने समुदाय समान बने । यसबाट सबै समुदायमा ठुलो राजनीतिक चेतना फैलियो । यो सबैभन्दा ठुलो उपलब्धि हो । विगतमा लोक सेवा आयोगको परिक्षामा भाग लिनेमा अधिकांश महिलाहरूमा सुरुमै हामी सक्दैनौं कि भन्ने थियो । जनजातिले सक्दैनौं होला भनेर लाहुरे हुन जान्थे । अरु समुदायमा पनि त्यस्तै थियो । तर आज समानुपातिक समावेशिताले यस प्रकारको मानसिकतालाई तोड्यो ।

समानुपातिक समावेशिता लागु भएको आज डेढ दशक पूरा भइसकेको छ । यहीं व्यवस्थाको प्रभावले राज्यका उच्च निकायमा महिलाहरूको प्रतिधित्व भइसकेको छ । संसदमा ३३ प्रतिशत महिलाको अनिवार्य सहभागिता छ । निजामति, सुरक्षा निकाय सबै क्षेत्रमा आज सबै जाति, क्षेत्र, वर्गका मानिसको पहुँच र प्रतिनिधित्व बढेको छ । राजनीतिक पार्टीका केन्द्रीय समितिमा ३३ प्रतिशत महिला सहभागिता पुगिसकेको छ । हामीले भने जस्तो जनसङ्ख्याकै आधारमा समानुपातिक प्रतिनिधित्व भएको छैन । तर पनि समानुपातिक समावेशी व्यवस्थाकै कारण आज राज्य तथा विभिन्न निकायमा देशको वास्तविक विविधतायुक्त तस्बिर देख्न थालेका छौँ । यसो हुनु हामी सबैको गौरव हो, उपलब्धि हो ।

यसबाट अर्कोतर्फ उत्पीडित लिङ्ग, समुदाय र क्षेत्रमा राज्यप्रति, देशप्रति गौरव बढाएको छ । उनीहरूमा

हामी पनि केही गर्न सक्छौँ भन्ने मनोबल बढेको छ। त्यो मनोबल उनीहरूको परिवार, समुदायमा पनि फैलिएको छ। यो देशको विकास र समृद्धिको अत्यन्त सकारात्मक संकेत हो।

०००

हामी जुन विविधतायुक्त वस्तुस्थितिमा छौँ, यसले समानुपातिक समावेशी व्यवस्थाको अनिवार्य माग गर्दछ। यो व्यवस्थाबाट देश सबैको साझा हो भन्ने भएको छ। देशप्रति सबैले गौरव गर्नु, अपनत्व महसुस गर्नु नै देशको विकास र समृद्धिको उर्जा हो। तर, यसलाई जसरी हुन्छ विकृत बनाएर यसको लोकप्रियतालाई घटाउने कोसिस भइरहेका छन्।

यसमा मुख्य गरी दुई वटा नकारात्मक काम भइरहेका छन्। समावेशीमै अवसर पाएकाहरूलाई पुनः समावेशीमै अवसर दिएर राखिएको छ, विशेष गरी सांसद बनाउँदा। समानुपातिक सांसद, विभिन्न नियुक्ति, मनोनयनमा समावेशी कोटामा आफ्ना आफन्त, नाता, सम्बन्ध र नजिकका मान्छेलाई व्यवस्थापन गर्ने ठाउँ बनाउँदा समग्र समानुपातिक समावेशी एजेण्डा नै कमजोर बन्दै गएको छ। अर्कोतर्फ जो जुन समुदाय, क्षेत्रको प्रतिनिधित्व गएर समानुपातिकबाट सांसद बनेको छ, उसले नै समानुपातिक समावेशीको वकालत गर्दैन। जुन समुदायबाट गएको हो आफ्नो समुदायको पक्षमा बोल्दैन, बरु विरोध गर्छ। यस प्रकारका गतिविधिले समानुपातिक समावेशिता अपरिहार्य हुँदाहुँदै पनि यसको लोकप्रियता घट्ने जोखिम बढेको छ।

०००

समानुपातिक समावेशी प्रणालीबाट प्रतिनिधित्व गर्नेहरू, प्रतिस्पर्धाबाट नियुक्त भएकाहरू पनि प्रत्यक्ष वा खुलाबाट आएका समान हुन्। हाम्रो संविधान, ऐन कानुनले कहीँ पनि खुला र समानुपातिकबाट आएकाहरूका बारेमा असमानताको कुरा गर्दैन। यो मात्रै एउटा प्रवेशको ढोका हो। तर यहाँ व्यावहारिक रुपमा केहीं जटिलताहरू देखिन्छन्। प्रत्यक्ष वा खुलाबाट आएकाले आफूलाई भिन्न देख्ने र समानुपातिकबाट आएकाहरूप्रति फरक व्यवहार गर्ने देखिन्छ। अर्कोतर्फ कतिपय समानुपातिक समावेशीबाट प्रवेश गरेकाहरूले अरु आफू समानुपातिक समावेशीबाट आएकाले आफैंलाई कमजोर महसुस गर्ने गरेको पनि देखिन्छ। यी दुवै कुरा गलत हुन्। यथार्थ। बुझ्नुपर्ने एउटै हो, कुन बाटोबाट यात्रा गर्ने त्यो संविधान, कानुन, राज्यले दिएको बाटो हो। पद, जिम्मेवारी, सेवा सुविधा सबै समान् हुन्।

०००

कतिपय नेता र शासनको कुर्सीमा बसेकाहरूमा समानुपातिक समावेशिताको बारेमा पूर्वाग्रही बुझाइ रहेको लुकेको छैन। समावेशिता कानुन हो। यो कार्यान्वयन गर्ने जिम्मेवारी राज्यको हो। राज्य सञ्चालन गरिरहेकाहरूको हो। सरकारको नेतृत्वमा पुगेका, पुग्न खोजिरहेका पार्टी र तिनको नेताहरूको हो। महिलाहरूको बारेमा के गर्ने, दलित, जनजाति, मधेसी, मुस्लिम, उत्पीडत क्षेत्र, अल्पसङ्ख्यक, किसान, विपन्न, गरिबहरूका लागि राज्यले के गर्ने ? यो संविधानमै प्रष्ट छ। तर, त्यहीं संविधान लेखिएको कुरा आज महिलाले गर्दा उनीहरूलाई महिलावादी भनेर आरोपित गरिन्छ, जनजाति, दलितले आफ्ना कुरा उठाए जातिवादी भन्न थालिएको छ। मधेसी, कर्णालीलगायतका उत्पीडित क्षेत्रकाले आफ्ना कुरा उठाउँदा क्षेत्रीयतावादी भन्न थालिएको छ। आफ्नो भाषा, संस्कार, संस्कृतिको बारेमा कुरो उठायो भने संकीर्णवादी भन्न थालिएको

छ। यो त पुरातनपन्थी सोच हो। व्यवस्था नयाँ ल्यायौँ, सोच पुरानै रह्यो। यो बदल्न आवश्यक छ। महिलाको एजेण्डा महिलाले नै उठाउनुपर्ने, जनजातिको जनजातिले, दलितको दलितले, मधेसीको मधेसीले, कर्णालीलगायत उत्पीडित क्षेत्रले त्यस क्षेत्रको एजेण्डा उठाउनुपर्ने हुनाले एकताभन्दा द्वन्द्व सिर्जना हुन्छ। यो त राज्यले बोल्नुपर्ने हो। राज्यको दायित्व हो। राजनीतिक दलहरूले पहल लिनुपर्ने हो।

०००

हामीले समावेशितालाई सही कार्यान्वयन गर्नुपर्छ। यसलाई थप परस्कृत गर्दै भने लैजानुपर्दछ। यसका लागि सबैभन्दा पहिले समानुपातिक समावेशीका बारेमा संविधानमा जे लेखेका छौँ, त्यसलाई तोडमरोड नगरेर कार्यान्वयन गर्नुपर्छ। जस्तो की अहिले पनि संविधानमा, कानुनमा भएका समावेशी व्यवस्थाको पूर्ण कार्यान्वयन भएको छैन। मन्त्रिपरिषद् गठन, राजदूत र संवैधानिक अङ्ग तथा नियुक्तिमा समावेशिता देखिंदैन। यो राम्रो होइन। कार्यान्वयनको सिलसिलमा कहीँ राज्यलाई कानुन निर्माण गर्ने आवश्यकता पर्छ भने तुरुन्तै गर्नुपर्छ। कानुन बनिसकेपछि हुबहु कार्यान्वयन हुनुपर्छ।

अर्को कुरा देश चलाउने जनताको प्रतिनिधिले हो। राजनीतिक पार्टीहरूबाटै नै जनताको प्रतिनिधि आउने हुन्। त्यसकारण राजनीतिक दल र नेताहरूले सोच बदल्नुपर्छ। यो संविधान मान्ने, संविधानबमोजिम निर्वाचित हुने, जिम्मेवारी लिने तर संविधानले गरेको महत्वपूर्ण व्यवस्थाहरूलाई उल्टाउन खोज्ने, कार्यान्वयनमा ध्यान नदिने गर्नु हुँदैन। त्यो त संविधान विपरित कार्य हो। समानुपातिक समावेशी व्यवस्थालाई सही कार्यान्वयन गर्ने, यसलाई परस्कृत गर्दै लैजान सबैभन्दा पहिले राजनीतिक दलहरू जिम्मेवार हुनुपर्छ।

यसको कार्यान्वयनको पक्षमा कर्मचारीतन्त्रको महत्वपूर्ण भूमिका हुन्छ। कर्मचारीतन्त्रले सबैभन्दा पहिले हृदयबाट समानुपातिक समावेशितालाई स्वीकार गर्नुपर्छ। उनीहरूले यसलाई कार्यान्वयनको क्रममा कानुनको छिद्र खोजेर होइन यसको मूल मर्मलाई टेकेर काम गर्नुपर्छ। जसले यसलाई तोडमरोड गर्न खोज्छ, कार्यान्वयन गर्दैन, कार्यान्वयनमा ढिलाई गर्छ उसलाई कानुनकै अगाडि उभ्याउन व्यवस्था गर्नुपर्छ। यसका साथै संविधान र कानुनको कार्यान्वयन गर्न राज्यद्वारा व्यवस्था गरिएका निकायले कार्यान्वयन गरिरहेका छन् कि छैनन् भन्ने अनुगमन र गरिरहेको छैनन् भने कारबाहीको दायरामा ल्याउने व्यवस्था गर्नुपर्छ।

०००

समानुपातिक समावेशी व्यवस्था हामीले संघर्ष गरेर ल्याएको हो। यो मूलतः जनयुद्धको उपलब्धि हो। यो अनन्त कालसम्म रहने व्यवस्था होइन। यसको औपचारिक समिक्षा गर्न आवश्यक छ। समावेशीका बारेमा सामान्यतया १० वर्षमा समीक्षा गर्ने भन्ने हुन्छ। हामीले पनि अब समीक्षा गर्नुपर्छ।

यसका लागि हामीले किन समावेशी व्यवस्था ल्यायौँ भन्ने पृष्ठभूमि जान्नुपर्छ। यो व्यवस्था आएपछि देशको शासन प्रणाली, जनताको जीवनस्तर, शासन सत्तामा जनताको पहुँच कति विस्तार भो भन्ने हेर्नुपर्छ। हामी उद्देश्यमा कति सफल भयौँ, कस्तो खालको जनशक्ति उत्पादन गर्‍यौँ, कुन समुदाय, त्यसमा पनि कुन वर्गका मानिस प्रतिस्पर्धाका लागि योग्य भए भन्नेमा ध्यान दिनुपर्छ। अहिलेसम्मको अवस्था हेर्दा समानुपातिक समावेशी प्रणाली अत्यन्त सही थियो भन्ने पुष्टि भइसकेको छ। यसबाट हामीले ठुलो उपलब्धि हासिल गरिसकेका छौँ।

हाम्रो वस्तुस्थितिले यो व्यवस्थालाई अझ केही दशक निरन्तरता दिनुपर्ने देखिन्छ । यसका मापदण्ड भने परिमार्जन गर्न सक्छौं । अब समुदायभित्र पनि वर्गतर्फ ध्यान दिनुपर्छ । एउटै समुदायमा पनि वर्ग छ, महिलामा पनि वर्ग छ, क्षेत्रमा पनि वर्ग छ, अब हामीले समुदाय, लिङ्ग, क्षेत्रमा पनि तल्लो वर्गकालाई प्राथमिकता दिएर ल्याउनुपर्छ । किनकी यो त तल्लो वर्गको उत्थानका लागि, पहुँच नभएकाहरूको पहुँच विस्तारका लागि र समग्रमा सबै नेपालीलाई समान हैसियत, समान पहुँच, समान क्षमतायोग्य र प्रतिस्पर्धी बनाउनका लागि हो । सबै जाति, वर्ग, लिङ्ग, क्षेत्रका मानिसलाई सक्षम, प्रतिस्पर्धी योग्य बनाएर समानुपातिक समावेशितालाई शून्यमा झार्नुपर्छ । यदि नेपालका सबै जाति, क्षेत्र, वर्गका मानिस स्वतन्त्र प्रतिस्पर्धाका लागि पूर्ण योग्य भइसकेका छन् भने अरुका लागि अन्याय हुन्छ । यसका लागि अझ केही दशक सरकार, राज्यका निकाय, राजनीतिक पार्टी र सबै क्षेत्र गम्भीर र जिम्मेवार भएर लाग्नुपर्छ ।



# नेपालको संविधान र संघीयता



✍ **देव गुरुङ***

संविधान राष्ट्रको मार्गचित्र र मूल कानुन हो । यो राज्यका नागरिकहरूको वडापत्र पनि हो । यसले सरकारको स्वरुपको निर्धारण गर्दछ । राज्यको काम कारवाहीहरूलाई वैधता प्रधान गर्दछ । राज्यका शक्तिहरूको सिमाङ्कन पनि गर्दछ ।

संघीयता एउटा राजनीतिक प्रणाली हो । राज्यका अधिकारहरूको विभाजन गरी चलाइने शासन व्यवस्थालाई संघीयता भनिन्छ । अधिकारहरूको विभाजन गर्दा जहाँ शक्तिको उद्गम भएको हुन्छ, त्यहि ठाँउमा पुग्ने गरी शक्तिको विभाजन गरिनुपर्छ भन्ने मान्यताबाट संघीयता सुरु भएको देखिन्छ । अर्थात राज्यको सार्वभौम अधिकार र शक्तिको श्रोत भनेको जनता हो । शक्तिको श्रोतको रुपमा रहेको जनताको विचमा अधिकार विभाजन गरी चलाइने शासन प्रणालीलाई संघीयता भनिन्छ । जुन मुलुकको सामाजिक विशेषता विविधतायुक्त हुन्छ, त्यस प्रकारका मुलुकहरूमा संघीयताको अभ्यास बढी देखिन्छ । अर्थात् बहुजाति, बहुभाषिक, भौगोलिक विविधता र बहुसाँस्कृतिक विविधातायुक्त मुलुकहरूमा संघीयताको अभ्यास भएको देखिन्छ । विश्वमा ३० वटा मुलुकमा संघीय प्रणाली अभ्यास भइरहेको देखिन्छ ।

नेपालको संविधानले पनि संघीय प्रणाली अवलम्बन गरेको छ । नेपाल बहुजाति, बहुभाषिक, बहुसाँस्कृतिक र भौगोलिक रुपमा पनि विविधतायुक्त मुलुक हो । राज्यका अधिकारहरूलाई राज्य शक्तिको श्रोतको रुपमा रहेको जनताको बिचमा अधिकार पुऱ्याउनु पर्छ भन्ने लोकतन्त्रको मान्यता हो । जनताको बिचमा अधिकार विभाजन गर्दा त्यसको प्रयोग गर्ने जनताको एकताको स्वरुपहरू पनि विविधतामा रहेकोले सोही अनुरुपका संरचना निर्माण गरी अधिकारहरूको विभाजन, संघीयताको सैद्धान्तिक मान्यता हो ।

संघीय प्रणाली अवलम्बन गर्ने क्रममा विश्वको अभ्यास हेर्दा दुई प्रकारले संघीयता निर्माण गरेको देखिन्छ । एउटा प्रणाली विभिन्न राज्यहरूबिच मिलेर वा सम्झौता गरेर सङ्घ बनाएको देखिन्छ भने अर्को एकात्मक प्रणालीलाई नै परिवर्तन गरी सङ्घ बनाएको देखिन्छ । नेपालको सन्दर्भमा तत्काल केन्द्रिकृत प्रणालीबाट

* माननीय सदस्य, प्रतिनिधि सभा

संघीय प्रणालीमा परिणत गरिएको भएता पनि इतिहास हेर्दा यस क्षेत्रमा कविला राज्यहरू हुँदै लामो कालखण्डसम्म संघीय गणराज्यहरूको अभ्यास भएको देखिन्छ । नेपाल मण्डल, किराँत, मिथिला, कोचिला, थारुवान/थरुहट, खसान, डोटेल, मगरात, ताम्वाशालिङ, तमुवान आदि गणराज्यहरूका अवशेषहरू हुन् । सामन्तवादको सुरुवातसँगै ती गण प्रथाहरूको विघटन भई ससाना सामन्ती राज्यहरूको विकास भयो । १४/१५ औ शताब्दीदेखि बाइसे / चौबिसे ससाना भुरेटाकुरे सामन्ती राज्य रजौटाहरूको रुपमा स्थापित भयो । १७/१८ औँ शताब्दीदेखि तिनै सामान्ती राज्यहरूलाई विस्थापित गरी गोरखा राज्यको रुपमा स्थापना भएको देखिन्छ । गोरखा राज्यदेखि वर्तमानसम्म केन्द्रिकृत र एकात्मक राज्यको रुपमा रहँदै आएको देखिन्छ । सामन्तवादी राज्य संरचनाका साथै डेढसय वर्ष पूर्वदेखि अङ्ग्रेज साम्राज्यवादको प्रत्यक्ष उपनिवेश नभए पनि ईष्ट ईण्डिया कम्पनीमार्फत परोक्ष रुपमा उपनिवेश कायम हुँदै आइरहेको अवस्था हो ।

त्यसैले नेपालमा संघीयताको निर्माण अन्य मुलुकहरूको भन्दा पृथक रुपमा विकास भएको देखिन्छ । यस सन्दर्भमा हेर्दा नेपालको संघीयताले सामन्तवादी सामाजिक सम्बन्धलाई रुपान्तरण गरी गणतन्त्रलाई जनताको असली गणतन्त्र बनाउनुका साथै अङ्ग्रेज साम्रज्यवादले सिर्जना गरिरहेका राज्यको संरचनामा पनि पुनर्संरचना गरी मुलुकलाई स्वाधिन बनाउन सक्ने गरी राज्यको पुनर्संरचना अनिवार्य पक्ष हो ।

सामन्तवाद र विदेशी साम्रज्यवाद दुवैको समान विशेषता के हो भने समाजलाई विभाजन गर र शासन गर नै मुख्य विशेषता हो । सामन्ती हिन्दु वर्णाश्रम व्यवस्थाले जात प्रथाको सुरुवात गरेर समाजलाई विभाजन गरिरहेको अवस्था हो भने विदेशी एकाधिकारवादले आफ्नो प्रभुत्व कायम राख्न कमिशन अर्थतन्त्रमार्फत दलालै दलालहरूको वर्ग तयार गरेर समाजलाई विखण्डन गराइरहेको अवस्था हो । दुवै शक्तिले खडा गरेको सामाजिक विखण्डनवादको चुनौतीलाई सामना गरी समाजलाई एकताबद्ध गराउनु नै संघीय राज्य पुनर्संरचनाको मूल उद्देश्य हुनुपर्ने हो । सामाजिक एकताको लागि आधारहरू तयार गर्नुपर्ने हुन्छ । एकताको आधार भनेको समानता हो । समानताको लागि असमानता, भेदभाव, उत्पिडनका स्वरुपहरू निर्क्यौल गरी त्यसलाई निर्मुल गर्न सकेमा समानता त्यसैबाट पैदा हुने हो । त्यही उत्पीडन र भेदभावहरूको पहिचान गरी उत्पिडन र उत्पिडित समुदायको पहिचानको आधारमा राज्यको पुनर्संरचना हुनुपर्ने हो । नेपालको विशेषताअनुसार प्रादेशिक संरचनाहरूबिचमा प्रतिस्पर्धाभन्दा पनि समन्वयात्मक प्रकृतिको व्यवस्था आवश्यक हो । त्यस्तै गरी राज्यका सबै अङ्गहरूमा उत्पिडित समुदायहरूको समानुपातिक सहभागिता अत्यावश्यक हो ।

परन्तु नेपालको संविधान निर्माणको सन्दर्भमा ती मान्यताहरूलाई दह्रो साथ अवलम्बन गरेको देखिँदैन । नेपालको संविधान निर्माणमा मुख्य त भौगोलिक विविधताको आधारमा संघीय प्रणाली निर्माण गरिएको देखिन्छ । राजनीतिक दलहरूको विविधता रहेको स्थितिमा दलहरूबिचमा संविधान सभामा शक्ति सन्तुलन र सम्झौताको मार्ग अवलम्बन हुँदा सायद त्यो भन्दा थप व्यवस्था सम्भव थिएन पनि । पहिलो संविधान सभाको कार्यकालमा उत्पिडित समुदायहरूको पहिचानको मुद्दाले प्राथमिकता प्राप्त गरेको भएता पनि दोस्रो संविधान सभामा त्यो स्थिति रहेन । त्यसले गर्दा उत्पिडित समुदाय र वर्गको पहिचानको मुद्दा केही ओजेलमा पर्न गएको यथार्थता सर्वविदितै छ । त्यस्तै गरी राज्यका अङ्गहरूमा पूर्ण समानुपातिक समावेशी

अत्यावश्यक हो । तर अन्तरिम संविधानले स्थापित गरेको ६० प्रतिशत समानुपातिक प्रतिशतसमेत घटेर ४० प्रतिशतमा झऱ्यो । भौगोलिक नै भए पनि विश्वका विभिन्न मुलुकहरूले केन्द्र र प्रदेश गरी दुई तहको संघीय संरचनाको अभ्यास गर्दै आइरहेको देखिन्छ । स्थानीय तहलाई प्रदेशको मातहतमा राख्ने गरेको देखिन्छ । तर नेपालमा तीन तहको संरचना खडा गरियो । स्थानीय तहलाई प्रदेशको मातहत हुनुपर्नेमा सिधै सङ्घको मातहतमा राखिएको छ । प्रदेश र स्थानीय तहलाई समानान्तर रुपमा खडा गरिएको छ । त्यसले प्रकारान्तरणले प्रदेशलाई औचित्यहिन बनाउछ र संघीयता विफल तुल्याउने कडी पनि बन्न सक्छ । यद्यपि सङ्घ, प्रदेश र स्थानीय तहको क्षेत्राधिकार सम्बन्धी अनुसूची संविधानमा व्यवस्था गरिएको छ । त्यसले क्षेत्राधिकारको विभाजन गरेको देखिएता पनि कार्यन्वयनमा त्यसको जटिलता देखिन्छ । विश्वका अन्य मुलुकहरूले सङ्घले मुख्यतः रक्षा, मुद्रा, परराष्ट्र सम्बन्ध, बृहत्तर रणनीतिक मेघा परियोजनाहरू, ठुला औद्योगिक प्रतिष्ठानहरू, दूरसञ्चार, भन्सार, नागरिक उड्डयनलगायत मुख्यतः नीति निर्माणमा केन्द्रित गरेको देखिन्छ । प्रदेशलाई व्यापक रुपमा औद्योगिक प्रतिस्ठानहरूको सञ्चालन तथा पूर्वाधार निर्माणको अगुवा बनाउनु पर्ने । स्थानीय पालिकाहरूलाई कृषि उत्पादन, बजारीकरण, खाद्यन्नलगायतका दैनिक उपभोग्य वस्तुहरूको आपूर्ति तथा दैनिक सेवामूलक कार्यहरूमा केन्द्रित गर्नुपर्ने हो । तर नेपालको संविधानको अनुसूची निर्माण गर्दा संघीय सिद्धान्तमा आधारित हुन सकेको देखिँदैन । त्यसले गर्दा अनुसूची निर्माण गर्दा पनि केन्द्रिकृत मानसिकता कै प्रभावको बिचबाट तय भएको देखिन्छ ।

नाम संघीय भए पनि राज्यका संरचनाहरू एकात्मक र केन्द्रिकृत प्रणाली अनुरुपका भारी भर्कमका संरचना यथावत् रह्यो । मन्त्रालयहरू, आयोगहरू, विभागहरू, प्रतिष्ठानहरू आदि सबै यथावत् मात्र होइन, झनझन सञ्जाल बढ्दै गइरहेको छ । न्यायालय पुनर्संरचनाको व्यवस्था नै छैन । त्यस्तै गरी सुरक्षा निकायहरूको पनि पुनर्संरचनाको व्यवस्था गरिएको छैन । पुरानै संरचनाहरू सबै यथावत् राखेर प्रदेश र पालिकाको संरचनामात्र थप्न खोजेको देखिन्छ । त्यसले गर्दा प्रादेशिक तथा स्थानीय संरचना थपेर आर्थिक भार थपियो, संघीयता आर्थिक रुपले धान्न सकिँदैन भन्ने परिस्थिति सिर्जना गरिँदै छ ।

संघीयताको तात्पर्य भारिभर्कमको केन्द्रिकृत संरचनालाई पुनर्संरचना गर्नु पनि हो । विद्यमान कूल तीन भागको एक भाग संरचना केन्द्रमा र बाँकी एक भाग प्रदेश र स्थानीय पालिकामा कायम राख्दा विद्यमान संरचनामा तीन भागको दुई भागले सबै तह चल्छ र कम्तिमा पनि एक भाग राज्यको संरचना घट्न जान्थ्यो र सोही अनुपातमा चालू खर्च पनि कूल तीन खण्डको एक खण्ड घट्थ्यो । तर संघीय संविधान जारी भइसके पछि पनि केन्द्रिकृत मानसिकताले गर्दा राज्यको केन्द्रिकृत संरचना घटाउनेतर्फ होइन, उल्टो आयोग, प्रतिष्ठान आदि नाममा थपेकोथप्यै गरेर ससाना कामहरूको लागि दोहोरो तेहोरो संरचना बनाएर झन झन भारिभर्कमको संरचना विस्तार गरिएको छ । त्यसबाट चालू खर्च नै यति धेरै बढ्न थाल्यो कि राज्यको कुल राजश्वले समेत चालू खर्च धान्न नसक्नेतर्फ पुग्दै छ । विकास खर्च के ले गर्ने ?

यिनै एकात्मक मानसिकताको बिचमा संघीय संविधान जारी भएर लागू हुन थालेको ७ वर्ष पुग्दैछ । तिनै तहका संरचनाहरू बनेका छन् । स्रोत साधन, जनशक्ति र कानुनको अभावका बिचमा पनि आआफ्नो सापेक्षतामा सबै तहका अङ्गहरू क्रियाशील नै देखिन्छन् । यद्यपि संविधानले सूचीकृत गरेअनुरुपको क्षेत्राधिकारको विभाजन गरी कानुन बन्न सकेको छैन । संघीय निजामती ऐन, संघीय प्रहरी ऐन बन्न सकेको

छैन । वित्तिय आयोगको सिफारिसमा तीनै तहमा वित्तिय स्रोतको बाँडफाँड गरिनुपर्ने । त्यो पनि उल्लेखनीय रुपमा हुन सकेको छैन । यी सबै चुनौतीहरूको अलवा पनि धीमा गतिमा किन नहोस्, तर पनि प्रदेश र स्थानीय तहहरू चलिरहेका छन् । यसलाई सुदृढ गर्दै राज्यका सबै अङ्गहरूमा जनताको प्रत्यक्ष पहुँच पुग्न सक्ने व्यवस्थामा जोड दिनु पर्छ । जनताले नै राज्यका अङ्गहरूलाई नियन्त्रण र निगरानी गर्न सक्ने बनाउँनै पर्दछ । राज्यका अङ्गहरू जनताका सेवक हुन ।

संविधानमा भएकै व्यवस्थाअनुसार अति पिछाडिएका र लोपोन्मुख अवस्थामा पुगेका समुदायहरूको सन्दर्भमा आर्थिक र साँस्कृतिक अधिकार प्रयोगका लागि विशेष, स्वायत्त र संरक्षित क्षेत्रको संरचना निर्माण गर्ने संवैधानिक व्यवस्था अझै पनि सम्बोधन भएको छैन । अनुसूचीहरूको व्यवस्थाअनुसार कार्यन्वयनका लागि कानुनहरूको व्यवस्था अनिवार्य पक्ष हो । कैयन अनुसूचीहरूको कानुनी व्यवस्था भएको छैन । कानुनी व्यवस्था भए पनि त्यसलाई कार्यान्वयनको लागि बजेट र जनशक्ति आवश्यक हुन्छ । तर त्यसको अभावले गर्दा बनेका कानुनहरू पनि कार्यान्वयन हुन सकिरहेको छैन । यि सबै सीमा र चुनौतीहरूको अलवा पनि संवैधानिक व्यवस्थाअनुरुपको कार्यान्वयनमा जोड दिनुको विकल्प छैन । संवैधानिक सीमाहरूको सन्दर्भमा प्रत्येक १०/१० वर्षको अन्तरालमा संविधानको पुनरावलोकन गर्ने अवधारणाअनुसार समय क्रममा अवश्य पुनरावलोकन र सुधार हुँदै जानेछ । संघीयतालाई प्रभावकारी कार्यान्वयनबाट नेपाली समाजलाई बृहत्तर रुपमा एकता र सद्भाव कायम राख्न सकिने छ ।

त्यसले मुलुकको राष्ट्रिय स्वाधिनतालाई अझ सुदृढ गर्न सकिनेछ । अन्यथा एकात्मक व्यवस्थाको सोचाई रहँदासम्म बृहत्तर सामाजिक एकता सम्भव हुँदैन, सामाजिक एकता पैदा गर्न नसक्दा विश्व एकाधिकारवादी शक्ति केन्द्रहरूले त्यही सामाजिक विभाजनमा खेलेर अस्थिर र अराजकता सिर्जना गरिरहन्छन् । त्यसैमा टेकेर बाह्य शक्ति केन्द्रहरूले राष्ट्रिय स्वाधिनतालाई धरापमा पार्ने मौका पाउने छन् । अतः स्वाधिनताको रक्षाको निम्ति संघीयतामार्फत सामाजिक एकता र सद्भावलाई सुदृढ बनाउनै पर्दछ ।



# सबैको कार्यभार संविधानको ‘रक्षा र विकास’



✍ **पम्फा भुसाल***

हामीले लामो समय एकात्मक एवं पितृसत्तावादी सोच भएका निरङ्कुश व्यवस्थाबाट पिल्सीरहनु परेको यथार्थ भूल्नु हुँदैन । त्यतिबेला एकात्मक तथा राजतन्त्रात्मक व्यवस्थाबाट नेपाली समाज पीडित थियो भने जनताका आवाज अन्यायपूर्वक तवरले दबाइएको थियो । जनताले पाउनुपर्ने सबै अधिकार खोसिएको अवस्था थियो । निरन्तररुपमा निरङ्कुशताका विरुद्ध लामो सङ्घर्ष चलिनै रह्यो । राजनीतिक दल र नागरिक समाजले निरन्तर आन्दोलन जारी राखे पनि सामान्यरूपमा परिवर्तन हुने तर मात्रात्मक ढङ्गले परिवर्तनको अनुभूत गर्न पाइएन । ती आन्दोलन निरङ्कुशताको जरैसम्म पुग्ने अवस्था सिर्जना भएन । त्यतिबेलाका परिवर्तनकारी शक्तिका आन्दोलनले निरङ्कुशतालाई निमिट्यान्न पार्न सकेन, जनताको आवाज स्थापित गर्न पनि सकेन ।

आन्दोलन गर्ने तर जनताको अधिकार स्थापित नहुने अवस्था लामो समयसम्म रहेकाले निरङ्कुशताको जरा उखेल्नका लागि हामीसँग सशस्त्र आन्दोलन गर्नुको विकल्प रहेन, हतियार उठाउन बाध्य पारियो । जनताकै अधिकारका लागि तत्कालिन नेकपा (माओवादी)ले जनताको पक्षमा गाउँवस्तीमा आन्दोलन सुरु गऱ्यो । त्यो महान जनयुद्धले गाउँवस्तीका जनताको चेतनास्तरमा बदलाव ल्यायो । जनता जनयुद्धको अभियानमा लामबद्ध भए । जनताले आफूहरूमाथि भइरहेको थिचोमिचोका बारेमा जानकारी पाएपछि माओवादी आन्दोलनलाई साथ दिए । जनताको अपार साथ पाएको सशस्त्र आन्दोलनले सामन्ती राज्यसत्ताको जरा उखेल्ने काम गऱ्यो । जातीय एवं लैङ्गिक रूपमा चल्दै आएको सामन्तवाद र त्यसबाट निर्दिष्ट सत्ताविरुद्ध लामै सङ्घर्ष चल्यो । त्यसले समग्रतामा हलचल मच्चायो र आम आन्दोलनको रुप लियो ।

माओवादी नेतृत्वमा जागेको अभियान र त्यतिबेलाको परिवर्तनकारी शक्तिको आन्दोलनबीच निरङ्कुश

---

* उपाध्यक्ष, नेकपा(माओवादी केन्द्र)

एकात्मक राज्यसत्ताविरुद्ध आन्दोलन गर्ने सहमति भयो र जनआन्दोलन रुप लियो । त्यो जनआन्दोलनले मूर्तरुप लिएसँगै केन्द्रीकृत निरङ्कुश व्यवस्थालाई फाल्न सफलता मिल्यो । निरङ्कुशता इतिहास बन्ने अवस्था सिर्जना भयो । जनयुद्ध र जनआन्दोलनको कूल योगबाट एकात्मक अवस्थाको अन्त्य भयो, निरङ्कुशता ढल्यो । नयाँ परिवर्तनकारी राज्यसत्ता स्थापना गर्ने प्रणालीका लागि संविधानसभा निर्वाचन गर्ने अभियान शुरु भयो । त्यस अभियानमा जनयुद्धमा सहभागी नेकपा(माओवादी) र जनआन्दोलनमा सहभागी परिवर्तनकारी राजनीतिक दल निर्वाचनमा होमिए । पहिलो पटक सम्पन्न निर्वाचनबाट निर्धारित लक्ष्य प्राप्त गर्न नसकिएपछि दोस्रो पटक पनि संविधानसभा निर्वाचन भयो । तीनै जनप्रतिनिधिको अगुवाईमा संविधान लेख्ने काम भयो र संविधानसभाका ९० प्रतिशतभन्दा बढी जनताप्रतिनिधिको समर्थनमा नेपालको संविधान जारी भयो । यो संविधान नेपालको इतिहासमै पहिलो संविधान हो जहाँ जनताका प्रतिनिधि संलग्न भए र जनता आफ्नो व्यवस्था स्थापित गर्न सफल भए ।

हामी अहिले त्यही संविधानबाट निर्दिष्ट छौं, जनताले तय गरेको प्रणालीबाट शासित छौं । नयाँ परिवर्तनकारी व्यवस्थामा हामी रहेका छौं । यो संविधानले स्वतन्त्र, अभिभाज्य, सार्वभौमासत्ता जनतामा निहित रहेको धर्मनिरपेक्ष, सामावेशी, लोकतान्त्रात्मक समाजवादउन्मुख सङ्घीय लोतान्त्रिक गणतन्त्रलाई केन्द्रमा राखेको छ । संविधानका यी मूल मर्म अकाट्य छन् । यसलाई सकारात्मक तवरले परिमार्जित गरी समृद्ध तुल्याउन सम्भव छ, मेटाउन सम्भव छैन । यो निरन्तर जनताको सङ्घर्षको प्रतिफल हो, जनयुद्ध र जनआन्दोलनबाट प्राप्त भएको महान उपलब्धि हो । यस संविधानले नेपाली समाजलाई बहुभाषिक, बहुधार्मिक, बहुजातीय, बहुसांस्कृतिक विशेषतायुक्त र भौगोलिक विविधतासहितको सहिष्णुतायुक्त समाज स्थापित गर्ने लक्ष्य लिएको छ ।

संविधानले निरङ्कुशता अन्त्य गरेर लोकतन्त्र र एकतन्त्रीय राजसंस्था अन्त्य गरेर सङ्घीय लोकतान्त्रिक गणतन्त्र स्थापना गरेको छ । सबैभन्दा उत्पिडनमा परेका महिला, दलित, आदिवासी जनजाति, मधेसी र अल्पसङ्ख्यक जनताको प्रतिनिधित्व सुनिश्चित गर्ने समावेशिता र समानुपातिक प्रणालीलाई अबलम्बन गरेको छ । राज्यले सबै नागरिकलाई समान तवरले राज्यका अङ्गमा समाहित गर्ने नीति अङ्गीकार गरेको छ । संविधानको निर्माणसँगै नेपालले २१ औँ शाताब्दीको पहिलो दशकमा नयाँ क्रान्ति सम्पन्न गरेको छ । संविधानमा जनताका मौलिक अधिकार सुनिश्चित भएका छन् । नागरिकले पूरा गर्नुपर्ने कर्तव्यहरूलाई संविधानमै उल्लेख गरिएको छ । नागरिक अधिकारमा शिक्षा, स्वास्थ्य, रोजगार, खाद्यसंप्रभुता, आवास, प्रेस स्वतन्त्रता र राजनीतिक स्वतन्त्रता प्राप्त भएको छ ।

यो परिवर्तनले जनताको अधिकार सुनिश्चित गरेसँगै आमरूपमा फाइदा भएको छ । तर, जनताले पाएको अधिकारप्रति यथास्थितिवादी वर्ग जसले एकलौटीरूपमा रजाइँ गर्दै आएका थिए, उनीहरूलाई मन परेको छैन । अरूका अधिकारमाथि मनलागी ढङ्गले प्रयोग गर्ने वर्ग छटपटाइ रहेको छ । कतै न कतैबाट मुन्टो उठाउन लागिपरेको छ । त्यो वर्गको साथमा देशी एवं विदेश शक्तिहरू लागिरहेका छन् । सोही वर्गले तत्कालीन अवस्थामा पनि संविधान जारी हुन नदिने प्रयास गरेको थियो । ती शक्तिहरू अहिले पनि संविधान कार्यान्वयन नहोस् भन्ने पक्षमा छन् । संविधान असफल तुल्याउन लागिरहेका छन् । तर, जनताको ताकत

एवं समर्थनले संविधान जारी भयो र कार्यान्वयनमा आएको छ। प्रतिगामी शक्तिहरू जनतासँग सक्दैनन्, टिक्दैनन् । यद्यपी पराजित भएको शक्तिले अझै दोब्बर ताकतद्वारा आफ्नो गुमेको शक्ति प्राप्त गर्ने दुस्साहस भने गर्छ नै । यो विश्व इतिहासको उदाहरण हो ।

अहिले संविधान जारी भएको आठ वर्ष पूरा भएको छ। यो कार्यान्वयनको प्रक्रियामा छ। जनताका मौलिक अधिकार संविधानमा मात्र सिमीत छैन, कानुन नै बनाएर कार्यान्वयन गर्न थालिएको छ । कार्यान्वयन पाटोलाई थप प्रभावकारी तुल्याउनुपर्छ । निश्चय पनि एकपटक प्राप्त गरेको अधिकारले जनतालाई पुग्दैन, एकपटक लेखिएको कानुनले सँधैका लागि हुँदैन । निरन्तर परिमार्जन र सबल बनाउँदै लैजानुपर्छ । समय परिस्थितीअनुसार संविधान परिमार्जन एवं अधिकार थप हुँदै जान्छन् । कति कुरा संशोधन र कयौं कुरा परिवर्तन पनि गरेर लैजानुपर्छ। त्यसैले हामी संविधान कार्यान्वयनको बाल्यअवस्थामै छौँ। परिवर्तनका मुद्दा संविधानमा लेख्नका लागि राजनीतिक दल, परिवर्तनकारी शक्तिहरू एवं नागरिक समाजहरू एकताबद्ध हुनुपर्छ । यसको कार्यान्वयनमा पनि सोही ढङ्गबाट लाग्नुपर्छ ।

विभिन्न कोणबाट संविधान र व्यवस्थाविरुद्ध यो वा त्यो बहानामा षड्यन्त्र हुन खोजेको देखिएको छ। त्यो मध्येको हाम्रो सामाजिक सद्भाव, सांस्कृतिक एकतामा प्रहार गर्ने दुस्प्रयास भएको देखिन्छ। हाम्रो संविधानले बहुसंस्कृति, बहुधर्म एवं भाषा र बहुजातिलाई अङ्गीकार गरेको छ भने हाम्रो परम्परा पनि सोहीअनुसारको छ। सामाजिक सद्भाव कायम गर्ने हाम्रो परम्परा छ। त्यही भावनाले सामाजिक एकता र सदृढ राष्ट्रिय एकता कायम रही आएको छ। यही कारणले नेपालको राष्ट्रियतामाथि कसैले पनि हस्तक्षेप गर्न सक्दैन, अक्षुण राष्ट्र कायमै रहनेछ। तर, पछिल्लो समय सामाजिक सद्भाव, सामाजिक एकता एवं राष्ट्रिय एकता खल्बल्याउने कोसिस भएको छ। त्योमध्ये पनि सबैभन्दा संवेदनशील मानिएको साम्प्रदायिक एकतामा खलल पुऱ्याउने प्रयास भएको देखिएको छ। हाम्रो धार्मिक, सांस्कृतिक एवं जातियताजस्ता कोणबाट एकता भत्काउने कोसिस भएको छ, यसले संविधानको कार्यान्वयन र आवश्यकताअनुसार परिमार्जन गर्ने विषयलाई कहीँ न कहीँ अप्ठ्यारो पार्नेछ। यो दुस्साहसको प्रतिकार गर्नुपर्ने छ।

त्यसैले हिजोको परिवर्तनको आन्दोलनमा आफ्नो प्राणको आहुति दिने सहिद, बलिदान दिन तयार राजनीतिक दल, त्यसका नेता-कार्यकर्ताको एउटा 'स्पिरिट' लाई रक्षा गर्नेभन्दा पनि सामाजिक एकता भत्काउने र गुमेको राजनीतिक सत्तालाई प्राप्त गर्ने उद्देश्यबाट अलिअलि निरङ्कुशतावादी शक्तिले टाउको उठाउन खोजेको देखिएको छ। त्यसमा बढो सतर्क भएर एकले अर्कोको सांस्कृतिक एवं सामाजिक सद् भाव र सम्मान एवं एकतालाई सुदृढ गर्नुपर्नेछ। हामीले सामाजिक एकता र संस्कृतिक सद्भावलाई कायम गर्न सकेनौं भने राष्ट्रिय एकता पनि कायम हुन्न र राष्ट्रिय एकता कायम नहुँदा हाम्रो पहिचान र सार्वभौमसत्ता एवं भौगोलिक अखण्डताजस्ता कुरा पनि हामीले रक्षा गर्न सक्छौं कि सक्दैनौं भन्ने संशय रहन्छ। हाम्रा पुर्खाहरूले विश्व कब्जा गर्न हिँडेका ब्रिटिसहरूलगायत वैदेशिक शक्तिलाई पराजित गरेर यो देशलाई अक्षुण एकताबद्ध रुपमा राख्न सकेको विरासतलाई बचाउने कुरा हाम्रा सामु छ। यो जनताको अधिकारको रक्षा गर्ने कुरा पनि हो । हाम्रो पूर्णरूपमा पितृसत्ता हावी भएका समयमा आफ्नो अधिकार स्थापित गराएका छौँ । समग्रमा महिलाले अहिले तेत्तीस प्रतिशत आरक्षण पाएका छन् । यद्यपि त्यो पूर्ण छैन, कूल जनसङ्ख्याको

आधा हिस्सा भएको महिलाले पचास प्रतिशत सुविधा पाउनै पर्छ । दलित, जनजाति आफ्नो अधिकार उपभोग गर्दा खेरी विगतमा शतप्रतिशत अधिकार प्रयोग गर्ने शासक वर्ग र जातिहरूलाई अहिले छटपटाहट भएको छ । जनताको आन्दोलनद्वारा विस्थापित भएकाहरूले कतै स्थापित हुन सकिन्छ कि भन्ने दुस्साहस गरिरहेको स्थिति रहेको छ । यस विषयमा समयमै सचेत हुने र जनतालाई सचेत गराउने काममा लाग्नुपर्नेछ । जनताको त्याग तपस्या र बलिदानबाट आएको व्यवस्थाको रक्षाका निम्ति बनेको संविधान दिवस मनाउँदै गर्दा सबैको कार्यभार संविधानको रक्षा र विकास हुनुपर्छ । संविधान कार्यान्वयन र समयसापेक्ष सुधारका लागि सत्तापक्ष, प्रतिपक्ष, पूराना एवं नयाँ सबै राजनीतिक शक्ति एकै स्थानमा आउनुपर्छ ।



# संविधान : एक समीक्षा



✍ रमेश लेखक*

नेपालको संविधान प्रारम्भ भएको आठ वर्ष पूरा भएको छ। संविधानको समग्र मूल्याङ्कन गर्न आठ वर्षको समय निकै थोरै हुने हुँदा यस्का गुण दोष बारे धेरै चर्चा गर्न बाञ्छनीय नहोला। यी आठ वर्षमा तमाम कठीनाई, जटिलता वा चुनौती हुँदाहुँदै पनि संविधानले औचित्य र सान्दर्भिकता स्थापित गर्दै आएको छ। संविधानले सबै आवश्यकता, आकांक्षा वा चाहना पूरा गर्ने होइन। राष्ट्रको उद्देश्य वा गन्तव्य निर्धारण गर्दछ र उक्त लक्ष्य प्राप्तिका लागि अवलम्बन गर्ने राजनीतिक, आर्थिक, सामाजिक र सांस्कृतिक व्यवस्थाको सुनिश्चितता गर्दछ। नेपालको संविधानले बहुलवादमा आधारित बहुदलीय प्रतिस्पर्धात्मक संघीय लोकतान्त्रिक गणतन्त्रात्मक संसदीय शासन प्रणाली हुने व्यवस्था गरेको छ। संघीय लोकतान्त्रिक गणतन्त्रात्मक शासन व्यवस्थाका माध्यमबाट जनताको दिगो शान्ति, सुशासन, विकास र संमृद्धिको आकांक्षा पूरा गर्ने संविधानले लक्ष्य राखेको छ।

संविधानले साध्य र साधनलाई स्पष्ट रुपले परिभाषित गर्नुका साथै रेखाङ्कन गरेको छ। हामी साध्य र साधनमा दिग्भ्रमित हुनु हुँदैन। बहुलवादमा आधारित बहुदलीय प्रतिस्पर्धात्मक संघीय लोकतान्त्रिक गणतन्त्रात्मक संसदीय शासन प्रणाली साधन हो। दिगो शान्ति, सुशासन, विकास र संमृद्धि साध्य हो। साधनको समुचित प्रयोगले साध्यको प्राप्ति सम्भव हुन्छ। साध्यसम्म पुग्न संविधानको सार्थक कार्यान्वयन हाम्रो प्राथमिक एजेण्डा बन्नुपर्दछ।

नेपाली जनताले सत्तरी वर्ष भन्दा बढी अविरल क्रान्ति, आन्दोलन, संघर्ष र विविध राजनीतिक अभियान सञ्चालन गरेर संविधान प्राप्त भएको हो। लामो यात्रामा सयौं सपुतले शहादत गरे, हजारौं मानिसले जेल, नेल, सर्वस्व हरण, देश निकाला, विस्थापनको पिडा भोग्नु पऱ्यो। लोकतान्त्रिक व्यवस्था संस्थागत गर्न संविधान निर्माण गर्ने विषयमा ठुलो त्याग, तपस्या र बलिदान भएको छ। मुलुक र अग्रजले निकै मूल्य चुकाएको छ। वर्तमान संविधान सत्तरी वर्ष लामो त्याग, तपस्या र बलीदानको सारसंक्षेप हो।

---

* माननीय सदस्य, प्रतिनिधि सभा

संविधान सभाबाट संविधान निर्माण गर्ने अठोटकासाथ प्रारम्भ भएको यात्राको सत्तरी वर्षको कालखण्डमा सात वटा संविधान बने । बढी संविधान बन्नु यस बिचमा देश निकै अस्थिरताबाट गुज्रिएको प्रमाण हो । नेपालको अन्तरिम संविधान, २०६३ भन्दा पहिलेका पाँच संविधान असफल भए । विगतको कटु तथ्यलाई हेरेर वर्तमान संविधानलाई असफलताबाट जोगाउनु आवश्यक छ ।

हाम्रो संविधान कान्छो हो । यो संविधान पछि बनेको हुँदा यस्को निर्माणमा हामीलाई केही स्वाभाविक सुविधा प्राप्त भए । अन्य देशका संविधानको व्यवस्था र अवस्था बारे जानकारी लिने विषय होस् वा सबल र दुर्बल पक्षको विश्लेषण गर्न सहज भयो । संविधानको निर्माण वा कार्यान्वयका कमी कमजोरीबाट पाठ सिक्न पाइयो र परिवर्तनशील समाजसँग संविधानको सामन्जस्यता गर्न सकियो । अन्य मुलुकका संविधानका अनुभवले परिष्कृत गर्ने अवसर पाइयो ।

नेपालको संविधान उत्कृष्ट मानिन्छ । निर्माण विधि र अन्तरवस्तु दुवै आधारमा संविधानलाई उत्कृष्ट मान्न सकिन्छ । अधिकाशं संविधान शासकबाट जारी हुने, सरकार वा आयोग वा सानो समिति वा संयन्त्र गठन गरेर निर्माण गरिन्छन् । विगतका हाम्रा संविधान पनि कुनै न कुनै रुपमा यसरी नै निर्माण भए । वर्तमान संविधान, संविधान सभाको गठन गरी बनाइयो । संविधान सभामा देशको सबै भूगोल र सबै जातीय, वर्गीय, लैगिङ्क समुदायबाट निर्वाचनका माध्यमले व्यापक प्रतिनिधित्व गराइयो । संविधान सभा समग्र मुलुकको प्रतिबिम्बका रुपमा देखियो । संविधान सभाबाट संविधान निर्माण गर्ने कार्य बढी आर्थिक बोझ हुने, जटिल र बढी समय लाग्ने भएपनि सर्वोत्तम विधि मानिने हुँदा नेपालको संविधान सर्वोत्कृष्ट विधिबाट निर्माण भएको छ । संविधान सभाबाट संविधान निर्माण गर्न अन्तरिम संविधान बनाइयो । नेपालको अन्तरिम संविधानले तत्कालिन राजनीतिक परिवर्तन र परिस्थितिलाई वैधानिकता प्रदान गर्नुका साथै संविधान सभाको निर्वाचन र नयाँ संविधान निर्माणलाई मार्ग निर्देश गऱ्यो । अन्तरिम संविधानको निर्माणका कारणले पहिलो संविधान सभाको असफलतापछि पनि सभाबाट संविधान निर्माणको विषय बरालिएन । दोस्रो संविधान सभाले संविधान निर्माणलाई पूर्णता दियो । यो विधिले परिपक्व संविधान बन्न सक्यो ।

संविधान देशमा विद्यमान विपरित राजनीतिक दर्शन, आदर्श, नीति तथा कार्यक्रम भएका दलहरूबिच सहमतिमा निर्माण भयो । यो काम जटिल तर विशिष्ट रुपमा हेर्न सकिन्छ । तत्कालीन अवस्थामा नेपाली समाज संसदीय व्यवस्थामा विश्वास गर्ने र माओवादी विचारबिच ध्रुवीकृत थियो । संसदीय प्रणालीको राजनीतिक अभ्यास गरिरहेका नेपाली काँग्रेस, एमाले, मधेश आधारित दल र अन्य सहित सात दलबिच पनि विचार र मुद्दामा समानता थिएन । मतैक्यताको नितान्त अभाव देखिन्थ्यो । माओवादीसँग आधारभूत विषयमानै बिमतिहरू थिए । दलहरूबिच मुद्दामा मात्र मतान्तर थिएन शब्द शब्दमा अविश्वास थियो । अन्तरिम संविधानमा एकै विषयका लागि व्यवस्थापिका संसद शब्द प्रयोग भएको स्थितिले दलहरूबीचको मतभिन्नता र विश्वासको अभावलाई देख्न सकिन्छ । तत्कालीन राजनीतिका विपरित एवम् असहमत दलहरूबिच संवाद, सहकार्य र सहमति विश्वकै लागि अनुकरणीय विषय हो । बाह्र वर्षको ससस्त्र संघर्षलाई शान्तिमा रुपान्तरण गर्दा दलहरूबिच विश्वासको वातावरण सिर्जना भयो । त्यो विश्वासले संवाद, सहकार्य र सहमतिलाई थप निरन्तरता दियो । शान्ति प्रक्रियालाई दिगो शान्तिमा लैजाने नेपाली जनताको आकांक्षाले सहमतिमा मलजल गऱ्यो ।

स्वीकार्यताको सन्दर्भमा पनि संविधान परिणाममुखी देखिएको छ । संविधान सभाबाट व्यापक जनसहभागितामा निर्मित भएको हुँदा पनि नेपाली जनताले सहजरुपमा स्विाकार गर्नुका साथै संविधानमा स्वामित्व स्थापित गरे । संविधान जारी हुँदा धेरै कोणबाट असहमति अभिव्यक्त भएका थिए । मधेशमा निकै विरोध भयो । विभिन्न जातीय, वर्गीय समुदाय महिला, दलित, आदिवासी जनजातिबाट पनि असन्तुष्टि व्यक्त भए । कार्यान्वयनको आठ वर्षमा संविधानको स्वीकार्यता विस्तारित र व्यापक भएको छ । असन्तुष्ट समुदाय पनि संविधानको छाता मुनि आएका छन् । पछिल्लो समयमा संयुक्त मधेशी गठबन्धन (सी.के. रावत) र माओवादी (विप्लव समुह) लगायतसँगको राजनीतिक सहमतिले संविधानको दायर थप विस्तारित भएको छ । हतियार र हिंसाको राजनीति कमजोर हुँदै गएको सुखद अनुभूति संविधानले दिलाएको छ । यो संविधान देशमा हतियारको राजनीतिलाई समाप्त गर्दै शान्ति स्थापना गर्न सफल भएको छ ।

संविधानले पूर्ववर्ती राजनीतिक व्यवस्थाभन्दा नितान्त फरक व्यवस्थालाई संस्थागत गरेको छ । मुलुक राजतन्त्रको स्थानमा गणतन्त्र, केन्द्रीकृत प्रबन्धको साटो संघीयतामा प्रवेश गरेको छ । समावेशी चरित्रको राज्य निर्माण गर्ने अभिष्ट बोकेको छ । यी रुपान्तरण शान्तिपूर्ण भएका छन । संसदीय प्रणाली पनि केहि नविनतम् प्रयोगकासाथ पुनर्स्थापित गरिएको छ ।

समावेशिताको कोणबाट संविधान सार्थक देखिएको छ । यसले राज्य व्यवस्था र नेपाली समाजलाई समावेशी चरित्रको बनाएको छ । महिलाको प्रतिनिधित्व कम्तीमा तेत्तिस प्रतिशत सुनिश्चित गरेको छ । सामाजिक रूपले पछाडि परेका महिला, दलित, आदिवासी जनजाति, मधेशी, थारू, अल्पसङ्ख्यक, अपांगता भएका व्यक्ति, सीमान्तीकृत, मुस्लिम, पिछडा वर्ग, लैंगिक तथा यौनिक अल्पसङ्ख्यक, युवा, किसान, श्रमिक, उत्पीडित वा पिछडिएको क्षेत्रका नागरिक तथा आर्थिक रूपले विपन्न खस आर्यलाई समावेशी सिद्धान्तका आधारमा राज्यको निकायमा सहभागिताको हकको प्रत्याभूति गरिएको छ । महिलाको सहभागिता विश्वका संसदमा औसत सत्ताईस प्रतिशत जति देखिन्छ । दक्षिण एसियाका देशमा जम्मा सत्र प्रतिशत रहेको छ । संविधानले व्यवस्था गरेका अन्य समुदायको पनि जनसङ्ख्याका आधारमा प्रतिनिधित्व गर्ने व्यवस्था छ । समावेशिताको सवालमा कतिपय जायज आलोचना पनि छन् । खासगरी कार्यपालिकामा प्रतिनिधित्व नभएको र मुख्य पदमा पनि 'उप' जोडिएका पदमात्र दिने गरेको गुनासाहरू उठ्ने गरेका छन् । यो संविधानको दोष भन्दापनि दलका मनावृत्तिको समस्या हो । यस्ता विषयलाई सम्बोधन गर्दै जानु पर्दछ ।

वर्तमान संविधानले लोकतन्त्रका सबै आधारभूत मान्यतालाई स्विकार गरेको छ । राष्ट्रिय अन्तर्राष्ट्रिय स्तरमा प्रचलनमा रहेका लोकतन्त्रका विश्वव्यापी मान्यतालाई अङ्गीकार गरेको छ । बहुलवादको मान्यतालाई स्थापित गर्नु संविधानको सबल पक्ष हो । शक्ति पृथकीकरण तथा सन्तुलन, व्यक्तिका राजनीतिक, आर्थिक, धार्मिक, सांस्कृतिकलगायत सबै खालका स्वतन्त्रताको सुरक्षा, स्वतन्त्र, निश्पक्ष र सक्षम न्यायापालिका, मानव अधिकार, बालिग मताधिकार, पूर्ण प्रेस स्वतन्त्रता, अवधिक निर्वाचन, कानुनी राज्यको अवधारणा, राज्यको लोक कल्याणकारी चरित्र, सत्ताको शान्तिपूर्ण हस्तान्तरणका विधि प्रक्रियालगायत लोकतन्त्रका सबै मान्यता समेटिएका छन् ।

नागरिकको मौलिक हकको विषयमा संविधान अग्रगामी छ । नागरिकले प्राप्त गर्नु पर्ने सबैजसो अधिकारहरू मौलिक हकको रुपमा प्रत्याभूत गरिएका छन् । ती हकहरू राज्यले संरक्षण र प्रचलन गर्नुपर्ने बाध्यात्मक

दायित्व छ। नेपाल अधिराज्यको संविधान २०४७ मा बाह्रवटा अधिकार मौलिक हकको रुपमा व्यवस्था गरिएको थियो। नेपालको अन्तरिम संविधान, २०६३ मा एक्काईस वटा मौलिक हक उल्लेख गरियो। वर्तमान संविधानमा एकतीसवटा हकलाई मौलिक हकको रुपमा व्यवस्था गरिएको छ। मौलिक हकको प्रचलन गर्नु राज्यको दायित्व भएको छ। मौलिक हकको संरक्षण वा प्रचलन हुन नसकेको अवस्थामा उपयुक्त संवैधानिक उपचारको व्यवस्था गरिएको छ। यस विषयमा निकै आलोचनाका विषय भने कायम छन। मौलिक हकको प्रचलनका लागि आवश्यक कानुन समयमा नबनेको, राज्यले यस क्षेत्रमा उचित स्रोतको व्यवस्थापन नगरेको दुर्बल पक्ष विवादमा नै छन्। मौलिक हकको प्रचलनका लागि सबै कानुन तत्काल निर्माण गर्न र सरकारले मौलिक हकको कार्यानवयमा खर्च गर्ने पर्याप्त बजेट व्यवस्था गर्न आवश्यक छ।

वर्तमान संविधानले लोकतान्त्रिक मूल्य र मान्यतामा आधारित समाजवादप्रति प्रतिबद्ध रही समृद्ध राष्ट्र निर्माण गर्ने अठोट गरेको छ। लोकतान्त्रिक समाजवादको मान्यतालाई आत्मसात् गर्दै सार्वजनिक, निजी र सहकारी क्षेत्रको सहभागिता र स्वतन्त्र विकासमार्फत राष्ट्रिय अर्थतन्त्र सुदृढ गर्ने नीति लिएको छ। यो लोतान्त्रिक मूल्य र मान्यतामा बसी आर्थिक गतिविधि सञ्चालन गर्ने व्यवस्था हो।

संविधानका अन्तरनिहित विषयहरू लोकतान्त्रिक व्यवस्थामा आधारित छन्। विधिको शासनको ग्यारेण्टी गरिएको छ। समग्रतामा संविधान उत्कृष्ट छ। तर संविधानको लेखनले उत्कृष्ट भएर मात्र प'ग्दैन। संविधानको भावना र कल्पना अनुरुपको कार्यान्वयन आवश्यक हुन्छ। कार्यान्वयनको पाटोमा तमाम कमी कमजोरी रहेका छन्। संविधान कार्यान्वयनका लागि आवश्यक कानुनको अभाव, तद्अनुरुप बजेटको कमी बारे माथि चर्चा भइसकेको छ। यी सबै भन्दा महत्वपूर्ण विषय मानसिकता हो। संविधानले गरेको व्यवस्था बमोजिम दलहरू हिड्न तयार छन् वा छैनन्, अहिले सबै भन्दा चुनौतिको विषय हो। संघीयताको कुरा केन्द्रीयताको मन वा गणतन्त्रको व्यवस्था राजतन्त्रको व्यवहारले संविधानलाई जोखिममा पार्नेछ। तसर्थ संविधानको कार्यान्वयनका लागि भावनाबमोजिमको मानसिकता र सोही अनुरुपको व्यवहारको अपेक्षा गरिन्छ। कुनै पनि व्यवस्था वा संविधान अन्तिम सत्य हुन सक्दैन। समय र समाजको गतिसँगै परिमार्जन र परिष्कृत हुँदै जानु पर्दछ। समयक्रममा संविधानमा थप परिमार्जन हुँदै जाला। तर परिवर्तन वा परिमार्जनको अनिवार्य सर्त अग्रगमन हुनुपर्दछ। पश्चगमन परिमार्जन होइन।



# संविधान कार्यान्वयनका आठ वर्ष : अपेक्षा, उपलब्धि र चुनौती



✍ प्रदीप ज्ञवाली*

**ऐतिहासिक उपलब्धि**

आफूले चुनेका प्रतिनिधिहरूबाट संविधान निर्माण गर्ने जनताको सात दशक लामो सपना साकार भएको दिन असोज ३ गते नेपाली इतिहासको एउटा महत्वपूर्ण कोसेढुङ्गा हो । संविधान सभाबाट संविधान जारी भएसँगै दस वर्ष लामो सशस्त्र द्वन्द्वपछिको झण्डै उत्तिकै लामो सङ्क्रमण काल अन्त्य भयो । जनताको बलिदानी सङ्घर्षबाट प्राप्त लोकतान्त्रिक गणतन्त्र, सामाजिक न्यायसहितको लोकतन्त्र, सङ्घीयता र समावेशिता, धर्मनिरपेक्षता र धार्मिक स्वतन्त्रतालगायतका महत्वपूर्ण उपलब्धि संस्थागत भए । नेपाली समाजको भविष्य धेरै हदसम्म सुनिश्चित भयो । नेपालको संविधानले मुलुकमा राजनीतिक प्रणालीको स्थायित्व, दिगो शान्ति र आर्थिक समृद्धिको दिशामा अगाडि बढ्ने बलियो संवैधानिक आधारशिला निर्माण गऱ्यो ।

संविधान तत्कालिक राजनीतिक शक्ति सन्तुलनको दस्तावेज हो । यो तत्कालीन सामाजिक-आर्थिक संरचनाको प्रतिबिम्ब पनि हो । अनुदार दक्षिणपन्थीदेखि लिएर चरम वामपन्थीसम्म, उग्र नवउदारवादीदेखि लिएर सोभियत-मोडल समाजवादका पक्षधरसम्म अनि सङ्घीयताका विरोधीदेखि लिएर जातीय सङ्घीयताका हिमायतीसम्मको प्रतिनिधित्व भएको संविधान सभाबाट संविधान निर्माण गर्नु निश्चय नै सहज थिएन । संविधान निर्माणका क्रममा कतिपय सम्झौता भएका छन् । सबैका चासोलाई समेट्ने प्रयत्न गर्दा कतिपय विरोधाभाष, अस्पष्टता या कमजोरी पनि संविधानमा परेका हुन सक्छन् । त्यसैले हाम्रो संविधान सम्पूर्ण रुपमा त्रुटि कमजोरीरहित छ भन्ने होइन । तर त्यतिबेला जस्तो राजनीतिक शक्ति सन्तुलन थियो, संविधानका विभिन्न प्रश्नमा राजनीतिक तहमा मात्रै होइन समाजको आधारभूत तहसम्मै जसरी गहिरो विभाजन देखापरेको थियो र विरासतमा प्राप्त कतिपय जटिलताहरूसमेत थिए, त्यस पृष्ठभूमिलाई नियाल्दा

* पूर्व परराष्ट्रमन्त्री

जसरी हामीले लोकतान्त्रिक, अग्रगामी र प्रगतिशील अन्तरवस्तुको संविधान निर्माण गर्न सक्यौँ, त्यो आफैंमा युगान्तकारी छ । संविधानको प्रस्तावनादेखि धाराधारामा समाजवादी 'फ्लेभर' सहजै अनुभूत गर्न सकिन्छ ।

संविधानको प्रस्तावनामा 'लोकतान्त्रिक मूल्य र मान्यतामा आधारित समाजवादप्रति प्रतिबद्ध रही समृद्ध राष्ट्र निर्माण गर्ने' लक्ष्य निर्धारण गरिएको छ । संविधानको धारा ४ मा नेपाल राज्यको चरित्र 'समाजवाद उन्मुख' भनेर उल्लेख गरिएको छ भने धारा ५० 'राज्यको निर्देशक सिद्धान्त' मा 'समाजवाद उन्मुख स्वतन्त्र र समृद्ध अर्थतन्त्र निर्माण गर्ने' आर्थिक उद्देश्य तय गरिएको छ । लामो छलफल, विवाद र वैचारिक बहसपश्चात् संविधानमा अभिलिखित यी विशेषता नेपाली जनता र विशेष गरी श्रमजीवी वर्गका लागि असाध्यै मूल्यवान छन् । माथि उल्लेख गरिएको संविधान सभाको बनौट,'संविधानवाद'बाहेक संविधानलाई अन्य सबै राजनीतिक वाद या विचार धाराबाट निरपेक्ष राखिनुपर्छ भन्ने तर्क र त्यसकै आधारमा 'समाजवाद' शब्द उल्लेख गर्नु हुँदैन भन्ने आग्रह, अनि संविधान निर्माणका क्रममा मुलुकमा जातीय, भाषिक, सांस्कृतिक या भौगोलिक 'पहिचान' का मुद्दाले राज्यको चरित्र रुपान्तरण र श्रमजीवी वर्गका मुख्य सरोकारलाई नै ओझेलमा पारिरहेको पृष्ठभूमिमा यत्तिको संविधान निर्माण हुनु असाधारण कुरा हो । संविधानले प्रत्याभूत गरेका मौलिक हक, सामाजिक न्याय, समावेशी शासन प्रबन्ध तथा समाजवाद उन्मुख विशेषता जस्ता प्रावधान निकै सान्दर्भिक छन् । यस संविधान निर्माणले नेपाललाई लोकतान्त्रिक, प्रगतिशील, लोककल्याणकारी तथा समाजवाद उन्मुख राष्ट्रहरूको परिवारमा आबद्ध गरिदिएको छ ।

**संविधान कार्यान्वयनका आठ वर्ष**

यसै वर्ष असोज ३ बाट नेपालको संविधानले आठ बर्से यात्रा सम्पन्न गरेर नवौं वर्षमा प्रवेश गर्दै छ । यी आठ वर्षमा हाम्रो यात्रा कस्तो रह्यो ? संविधान कार्यान्वयनमा हामीले कति प्रगति गऱ्यौं ? संविधानले निर्दिष्ट गरेको बाटोमा मुलुक कसरी अगाडि बढिरहेको छ ? आज नागरिकहरूमा जेजस्ता गुनासा र असन्तुष्टि देखा परेका छन् तथा समाज अशान्त जस्तो देखिइरहेको छ, यसो हुनुका पछाडि के संविधानमा रहेका कुनै विषय जिम्मेवार छन् ? कि यो समस्या मूलतः संविधान कार्यान्वयन र त्यो कार्यान्वयन गर्ने पात्रहरूको भूमिकाका कारण पैदा भएको हो ? अर्को शब्दमा भन्दा समस्या संविधानको हो कि यसको कार्यान्वयनको ? यी प्रश्नको विवेचना गर्नका लागि संविधान दिवस तथा राष्ट्रिय दिवस एउटा उपयुक्त सन्दर्भ हो भन्ने मलाई लाग्छ ।

संविधानले तय गरेको आठ बर्से यात्रातिर फर्केर हेर्दा यसबिचमा महत्वपूर्ण उपलब्धि हासिल भएको सहजै देख्न सकिन्छ । संविधानको स्वीकार्यताको दायरा बढेर आज यो सर्वस्वीकार्य दस्तावेजका रुपमा स्थापित हुनु निकै उल्लेखनीय छ । संविधान जारी हुँदै गर्दा मधेस केन्द्रित दलहरूसहित केही पक्ष संविधान निर्माणको प्रक्रियाबाट अलग भएका थिए । संविधान जारी भएको दिनलाई 'कालो दिन' भन्दै तराई-मधेसमा हिंसाको दुःखद शृङ्खला सुरु गरिएको थियो । संविधान निर्माणमा अग्रणी भूमिका खेल्ने नेकपा (एमाले) लाई त केही समय तराई-मधेसमा 'प्रवेश निषेध' समेत पनि घोषणा गरिएको थियो । तर समयक्रममा असन्तुष्ट पक्ष संविधानलाई स्वीकार गर्दै निर्वाचनमा सहभागी भए र पटक-पटक सरकारमा समेत सहभागी भए । तत्कालीन संविधान सभामा रहेका तर संविधान निर्माण प्रक्रियाबाट अलग भएका सबै पक्ष आज संविधानको मूलप्रवाहमा आबद्ध भएका छन् । अझ थप, संविधान मात्रै होइन, समग्र राष्ट्रको भौगोलिक अखण्डतालाई समेत अस्वीकार गर्दै तराई-मधेसमा पृथकतावादी अभियान सञ्चालन गरिरहेको पक्षसमेत

चन्द्र-सूर्य अङ्कित राष्ट्रिय झण्डा र संविधानको सर्वोच्चतालाई स्वीकार गर्दै लोकतान्त्रिक बाटोमा आइपुगेको छ । विस्तृत शान्ति सम्झौता र संविधान निर्माणसँगै 'नेतृत्वले क्रान्तिको बाटो छाडेको' आरोप लगाएर 'निरन्तर क्रान्ति' का नाममा हिंसात्मक बाटो अख्तियार गरेको समूहसमेत हिंसालाई परित्याग गर्दै आज शान्तिपूर्ण र लोकतान्त्रिक बाटोमा समाहित हुन पुगेको छ । यसरी आज नेपालको संविधान सबैका लागि मान्य, साझा र मार्गदर्शक मूल कानुन बन्न पुगेको छ ।

नेपालको संविधानले राज्यको पुनर्संरचना गर्दै मुलुकलाई सङ्घीय ढाँचामा लैजाने व्यवस्था गरेको थियो । हामीले संविधान जारी भएको दुई वर्षभित्रै तीनै तहको निर्वाचन सम्पन्न गऱ्यौं । निर्वाचनको एक वर्षभित्रै तीनै तहका सरकार स्थापित र क्रियाशील भए । सङ्घीयताका कानुनी, वित्तीय र प्रशासनिक पक्षहरूको कार्यान्वयनसँगै सङ्घीयता गतिशील भयो । निश्चय नै, अझ पनि केही कानुनी र प्रशासनिक पक्षहरूलाई पूर्णता दिन बाँकी छ, र स्रोतका सम्बन्धमा कतिपय गुनासा विद्यमान छन् । सङ्घीय ढाँचा अवलम्बन गरेका प्रायः सबै मुलुकहरूले सामना गर्नु पर्ने यी स्वाभाविक समस्या हुन् । तर संविधान जारी भएको तीन वर्ष बित्दानबित्दै सङ्घीयता पूर्ण कार्यान्वयनमा आउनु संविधान कार्यान्वयनमा हासिल अर्को उल्लेखनीय उपलब्धि हो ।

संविधानले नागरिकका मौलिक हकको दायरालाई निकै विस्तार गर्दै नागरिक र राजनीतिक अधिकार मात्र होइन, आर्थिक, सामाजिक र सांस्कृतिक अधिकारहरूलाई पनि प्रत्याभूत गरेको छ । मौलिक अधिकारका तेस्रो र चौथो पुस्ताका विभिन्न विषयसमेत समेटेको नेपालको संविधान मौलिक अधिकारका दृष्टिले निकै अग्रगामी र प्रगतिशील छ । संविधानले 'नेपालको स्वतन्त्रता, सार्वभौमसत्ता, भौगोलिक अखण्डता र स्वाधीनतालाई अक्षुण्ण राख्दै मौलिक हक तथा मानव अधिकारको संरक्षण र सम्वर्धन, राज्यका निर्देशक सिद्धान्तको अनुसरण तथा राज्यका नीतिहरूको क्रमशः कार्यान्वयन गर्दै नेपाललाई समृद्ध तथा समुन्नत बनाउने राज्यको दायित्व हुनेछ' भन्ने स्पष्ट व्यवस्था गरेको छ । संविधानमा उल्लिखित राज्यका निर्देशक सिद्धान्त, नीति र दायित्व कार्यान्वयनका सम्बन्धमा गरेका काम र प्राप्त उपलब्धिसहितको वार्षिक प्रतिवेदन नेपाल सरकारले राष्ट्रपति समक्ष पेश गर्ने, राष्ट्रपतिले त्यस्तो प्रतिवेदन प्रधानमन्त्री मार्फत सङ्घीय संसद समक्ष पेश गर्ने र राज्यका निर्देशक सिद्धान्त, नीति र दायित्वको प्रगतिशील कार्यान्वयन भए नभएको अनुगमन र मूल्याङ्कन गर्न सङ्घीय संसदमा कानुनबमोजिम एक समिति रहने व्यवस्थासमेत संविधानले गरेको छ ।

संविधानमै मौलिक हकको कार्यान्वयनका लागि आवश्यक पर्ने कानुनी प्रबन्धहरू संविधान जारी भएको तीन वर्षभित्र गरिसक्नुपर्ने व्यवस्थाअनुरुप निर्धारित समयमै शिक्षा, स्वास्थ्य, आवास, खाद्य, सामाजिक न्यायलगायत हक र बालबालिका, जेष्ठ नागरिक लगायतसँग सम्बन्धित अधिकारको कार्यान्वयनका लागि १६ वटा कानुन बनेका छन् । संविधानसँग बाझिने कैयौं कानुनहरू संशोधन गरिएका छन्, संविधानको कार्यान्वयनका लागि आवश्यक पर्ने दर्जनौं नयाँ कानुनको निर्माण गरिएको छ । राज्यका निर्देशक सिद्धान्त, नीति र दायित्वको प्रगतिशील कार्यान्वयनमा के कति प्रगति भयो भन्ने सम्बन्धमा नियमित रुपमा संसदमा प्रतिवेदन प्रस्तुत भइरहेको छ र संसदको सम्बन्धित समितिले यसको अनुगमन गर्दै सरकारलाई आवश्यक निर्देशन दिने कामसमेत गरेको छ ।

संविधानको प्रस्तावनामा 'बहुजातीय, बहुभाषिक, बहुधार्मिक, बहुसांस्कृतिक तथा भौगोलिक विविधतायुक्त

विशेषतालाई आत्मसात् गरी विविधताबिचको एकता, सामाजिक सांस्कृतिक ऐक्यबद्धता, सहिष्णुता र सद्भावलाई संरक्षण एवम् प्रवर्धन गर्ने', 'वर्गीय, जातीय, क्षेत्रीय, भाषिक, धार्मिक, लैंगिक विभेद र सबै प्रकारका जातीय छुवाछूतको अन्त्य गर्ने', 'आर्थिक समानता, समृद्धि र सामाजिक न्याय सुनिश्चित गर्ने' र 'समतामूलक समाजको निर्माण गर्ने' सङ्कल्प गरिएको छ। यसका लागि 'प्रतिस्पर्धात्मक बहुदलीय लोकतान्त्रिक शासन प्रणाली, नागरिक स्वतन्त्रता, मौलिक अधिकार, मानव अधिकार, बालिग मताधिकार, आवधिक निर्वाचन, पूर्ण प्रेस स्वतन्त्रता तथा स्वतन्त्र, निष्पक्ष र सक्षम न्यायपालिका र कानुनी राज्यको अवधारणालगायतका लोकतान्त्रिक मूल्य र मान्यतामा आधारित समाजवादप्रति प्रतिबद्ध रही समृद्ध राष्ट्र निर्माण गर्ने' लक्ष्यसहित 'दिगो शान्ति, सुशासन, विकास र समृद्धिको आकांक्षा पूरा गर्ने' अठोट गरिएको छ ।

संविधान बनाइरहँदा कतिपय साथीहरूले नेपाल जस्तो सीमित साधनस्रोत भएको देशले अधिकारहरूको यति ठुलो भारी बोक्न सक्छ र ? भन्ने तर्क गरेका थिए र तत्काल जति गर्न सकिन्छ, त्यति कुरा मात्रै उल्लेख गरौं भन्ने आशय व्यक्त गरेका थिए । तर एक युगमा एक चोटी आउने संविधान सभाले भविष्यसम्म र भावी पुस्ताका लागि समेत मार्गदर्शन गर्नुपर्छ भन्ने सोचका साथ लोककल्याणकारी, सामाजिक न्याय र समाजवाद उन्मुख राज्यको प्रबन्ध गर्‍यो । संविधानको यस मर्म र भावनाको कार्यान्वयनका लागि सामाजिक सुरक्षा र न्यायको दायरालाई यसबिचमा निकै विस्तार गरिएको छ। आज करिब ६० लाख नागरिकहरू कुनै न कुनै हिसाबले सामाजिक सुरक्षाको दायराभित्र समेटिएका छन् । प्रतिष्पर्धामा जान नसक्ने उमेर समूह, समुदाय र वर्गलाई प्रत्याभूत गरिएका यस सामाजिक सुरक्षाले नागरिकलाई धेरै हदसम्म भरोसा दिने काम गरेको छ । वृद्धि भएको सामाजिक सुरक्षा भत्ता, स्वास्थ्य बीमा, भूमिहीनलाई आवास, योगदानमा आधारित सामाजिक सुरक्षा र बालबालिकाहरूलाई दिवा खाजा जस्ता व्यवस्थाले समाजमा ल्याएको परिवर्तन सहजै अनुभूत गर्न सकिन्छ ।

संविधानको व्यवस्थाअनुसार यतिबेला सङ्घीय संसद तथा प्रदेश सभामा एक तिहाइ र स्थानीय तहमा ४० प्रतिशत महिला सहभागी छन् । निर्वाचित निकायमा मात्रै होइन, सार्वजनिक प्रशासन, सुरक्षा निकाय र शिक्षा क्षेत्रमा समेत महिला सहभागिता उल्लेख्य रुपमा बढेको छ। दलित र अन्य आरक्षित समूहको सहभागितामा पनि उल्लेख्य वृद्धि भएको छ। उनीहरूका सरोकार राष्ट्रिय कार्यसूची बनेका छन् र तिनलाई कसैले पनि इन्कार गरेर अगाडि बढ्न सक्ने स्थिति छैन । भेदभाव विरुद्धका कानुनहरूलाई थप कठोर बनाइएको छ ।

**संविधान कार्यान्वयनका चुनौती**

संविधानमा उल्लेख गरिएको 'समाजवाद उन्मुख' राज्यको परिभाषा के हो ? समाजवादतिर उन्मुख राज्यलाई साँच्चै नै समाजवादी राज्यमा रुपान्तरण गर्न पूरा गर्नुपर्ने दायित्व के हुन् ? यसको बाटोमा आइपर्ने चुनौती के हुन् ? 'समाजवादी उन्मुख अर्थतन्त्र' को निर्माण कसरी हुन्छ ? हामीले स्थापना गर्न खोजेको समाजवाद कस्तो हो ? समाजवाद प्राप्तिको यस प्रक्रियामा श्रमजीवी वर्गको भूमिका के हुन्छ ? यस्ता बिषयमा स्पष्टता आवश्यक छ। कतिपय मुलुकमा 'समाजवाद' शब्दलाई कतिपय शासकहरूले आफ्नो अलोकतान्त्रिक शासनलाई वैध ठहर्‍याउन दुरुपयोग गरिरहेका दृष्टान्त पनि पर्याप्त छन्। संविधानमा समाजवादी लक्ष्य तय गर्ने तर त्यस दिशामा सार्थक र योजनाबद्ध प्रयासलाई अगाडि बढाउन सकिएन भने जनताको बढ्दो आकाङ्क्षा र यथास्थितिवादी अवस्थाका बिचमा नयाँ द्वन्द्व सिर्जना हुने जोखिम पनि उत्तिकै हुन्छ ।

सभ्यताको विकाससँगै समाजमा सम्पत्तिको अत्यधिक केन्द्रीकरण, वर्ग विभाजन, आर्थिक शोषण र सामाजिक विभेद पनि सहउत्पादनका रुपमा जन्मिए । यिनले स्वाभाविकै रुपमा द्वन्द्व, हिंसा र विकृतिलाई निम्त्याए । यिनबाट आक्रान्त मानव जातिलाई पीडाबाट मुक्त गरेर समतामूलक, विभेदरहित र आदर्श समाज निर्माणका खातिर इतिहासमा विभिन्न प्रयाश हुँदै आए । विभिन्न मनीषिहरूले यस सम्बन्धमा परिकल्पना गरे । बुद्धको शान्ति र सङ्घ- समाज, जैनको अहिंसा, थोमस मुरको युटोपिया, रोबर्ट ओवेनको सहकारी एवम् प्रुधोंको राज्य र निजी सम्पत्तिविहीन समाजको परिकल्पना यिनै प्रयासका शृङ्खला थिए । तर समाज विकासका चालक आर्थिक नियममाथि आधारित हुन नसकेका यी आदर्श कल्पना व्यक्ति विशेषको सदाशयपूर्ण प्रयासले मात्रै सफल हुन सकेनन्, सार्थक परिणाम ल्याउन सकेनन् । कार्ल मार्क्सले समाज विज्ञानका नियमहरूको वैज्ञानिक विश्लेषण गर्दै समाजवादको ठोस मार्गचित्र अगाडि सारेपछि नै समाजवाद एउटा आन्दोलन, एउटा सुस्पष्ट लक्ष्य र अपरिहार्य गन्तव्यका रुपमा स्थापित भयो । मार्क्सको सबैभन्दा ठुलो योगदान हो- उनले समाजवाद निर्माणमा आर्थिक कारकहरूको गहन विश्लेषण गर्दै यसलाई आदर्श परिकल्पनाबाट व्यावहारिक यथार्थमा रुपान्तरित गरे । 'व्यक्तिको स्वतन्त्रता नै सिङ्गो समाजको स्वतन्त्रताको पूर्वशर्त' भन्ने मान्यताका आधारमा समाजवादी भविष्यको रुपरेखा अगाडि सारे ।

तर स्कुलिङको भिन्नताका कारण विगतमा समाजवादप्रतिको बुझाइ, प्रयोग र बाटोमा एकरुपता रहेन । एकथरि समाजवादीहरूले खास ऐतिहासिक सन्दर्भमा रुसमा विकसित भएको समाजवादको एकदलीय मोडल र अति केन्द्रीकृत आर्थिक ढाँचालाई नै अन्तिम सत्य जसरी प्रस्तुत गरे भने कतिपय शासकहरूले समाजवादको लोकप्रियतालाई आफ्नो जनविरोधी शासन व्यवस्थालाई ढाकछोप गर्न वैधताको रक्षाकवचका रुपमा प्रयोग गरे । तर यी समस्या समाजवादी सिद्धान्तका कमजोरीहरू थिएनन् । प्रयोगका त्रुटि या प्रयोक्ताका गल्तीकै कारण मानव जातिको युगौं पुरानो सपना र अपरिहार्य गन्तव्यका रुपमा रहेको समाजवादको महत्ता कम हुँदैन ।

आज सीमित व्यक्तिहरूका हातमा विश्वको आधाभन्दा बढी सम्पत्तिको केन्द्रीकरण, आर्थिक विषमताको गहिरिँदो खाडल, बेरोजगारी, गरिबी, अभाव र द्वन्द्व, आतङ्कवादको बढ्दो चुनौती र पर्यावरणीय विनाशले मानव जातिलाई चुनौती दिइरहेको छ । नवउदारवादी आर्थिक ढाँचाले श्रमिकहरूको जीवनलाई दुष्कर बनाइरहेको छ । करार श्रम, आउट सोर्सिङ, अनौपचारिक क्षेत्रको विस्तार, मितव्ययिता र खर्च कटौतीका नाममा सामाजिक सुरक्षामा व्यापक कटौती र ट्रेड युनियन अधिकारमा नियन्त्रण जस्ता विषयले श्रमिकहरूको व्यक्तिगत जीवनमा ठुलो प्रतिकूलता खडा गरिरहेको छ । समाजवादको अपरिहार्यता बढ्दै गएको छ ।

समाजवादका नाममा विगतमा भएका गलत प्रयोगको साङ्गोपाङ्गो चिरफार र गल्तीहरूबाट शिक्षा नलिई समाजवादले सफलता प्राप्त गर्न सक्दैन । अबको समाजवाद लोकतान्त्रिक मूल्यसहितको समाजवाद हो । श्रमलाई उत्प्रेरणासहितको आर्थिक प्रणालीको समाजवाद हो । गरिबीको समान वितरणको होइन, समृद्धिसहितको समाजवाद हो । लोकतान्त्रिक बाटो र शान्तिपूर्ण माध्यमबाट अधिकतम जनपरिचालन गर्दै, राज्यमा श्रमिक वर्गको वर्चस्व विस्तार गर्दै हासिल गरिने गन्तव्य हो । समाजवाद कुनै सुन्दर बिहानीमा अचानक प्राप्त गरिने चमत्कार होइन, यो यात्रा र गन्तव्यको समष्टि हो । समाजवाद केवल आर्थिक प्रणाली मात्रै होइन, यो सांस्कृतिक रुपान्तरण, नयाँ मूल्य निर्माण र नयाँ आदर्श स्थापनाको प्रक्रिया पनि हो । समाजवादी लक्ष्यका लागि हामीले लामो र कष्टकर यात्रा तय गर्नुपर्ने छ ।

तर माथि उल्लिखित अधिकारहरूको व्यावहारिक कार्यान्वयन र समाजवादको आधार निर्माणका लागि उत्पादक शक्तिको विकास, आर्थिक वृद्धि र आत्मनिर्भरता अपरिहार्य विषय हुन्। संविधानले प्रत्याभूत गरेका अधिकारहरू जनतासमक्ष पुऱ्याउन राज्यको क्षमतामा ठुलो वृद्धि आवश्यक पर्छ। सबल राष्ट्रिय अर्थतन्त्रको विकास गरेर मात्रै हामी राज्यलाई जनताका अधिकारको रक्षा र सामाजिक न्यायको प्रबन्ध गर्न सक्षम तुल्याउन सक्छौं। संविधानमा उल्लिखित मौलिक अधिकार, सामाजिक न्याय र सामाजिक सुरक्षाको प्रभावशाली कार्यान्वयन हुन सकेन भने अधिकार खोज्ने जनता र अधिकार प्रत्याभूत गर्न नसक्ने राज्यबिच नयाँ द्वन्द्व उत्पन्न हुन्छ। त्यसले या त समाजमा अराजकता सिर्जना गर्छ, या यी अधिकारहरू कार्यान्वयन हुन नसक्ने रहेछन् भन्दै तिनलाई कटौती गर्ने र राज्यलाई पश्चगामी दिशातिर धकेल्ने स्थिति पैदा हुन्छ।

यतिबेला नेपाली समाजको मुख्य चुनौती भनेको नै परम्परागत कृषि पेशाबाट मुक्त भएर सहर आइपुगेको तर सहरले रोजगारी दिन नसकेको ठुलो उत्पादक शक्तिको व्यवस्थापन कसरी गर्ने भन्ने हो। प्रतिवर्ष झण्डै ५ लाखको हाराहारीमा श्रमबजारमा आइपुग्ने तर मुलुकमा मुस्किलले एक लाख मात्रै रोजगारी सिर्जना हुन सक्ने कमजोर अर्थतन्त्रलाई कसरी रुपान्तरण गर्ने भन्ने हो। लोकतन्त्रले ह्वात्तै बढाएको सामाजिक चेतना र आकाङ्क्षा तर राज्यको एकदमै कमजोर 'डेलिभरी क्षमता' बिचको अन्तरविरोधलाई कसरी व्यवस्थापन गर्ने भन्ने हो। यसमा जोडिएर आउँछ भूराजनीति, जहाँ नेपालको स्वतन्त्र र सार्वभौम हैसियत एवम् आत्मनिर्भर र समृद्ध बन्ने चाहनालाई नपचाउने पक्षहरू छन्।

हाम्रो जस्तो मुलुकमा आर्थिक विकासका लागि राज्यको नेतृत्वदायी भूमिका अपरिहार्य हुन्छ। सामाजिक क्षेत्र, पूर्वाधार र महत्वपूर्ण आर्थिक क्षेत्रमा राज्यको लगानी बिना हाम्रो जस्तो मुलुकमा राष्ट्रिय अर्थतन्त्रको जग नै बस्न सक्दैन। विगतमा विश्वव्यापीकरण र उदारीकरणको हावामा बगेर सार्वजनिक क्षेत्रमा राज्यको लगानीलाई निकै कमजोर तुल्याइएको छ। सामाजिक क्षेत्रमा समेत राज्यको लगानी कटौती भएको छ। यसले गर्दा शिक्षा, स्वास्थ्य, खानेपानी जस्ता आधारभूत सेवासमेत श्रमजीवी जनताको पहुँचबाहिर पुगेका छन्। त्यसैले आर्थिक क्षेत्रमा राज्यको लगानी अभिवृद्धि र नेतृत्वदायी भूमिकाको विकास अत्यावश्यक छ। राज्यको नेतृत्वदायी र नियामक भूमिकालाई निजी क्षेत्रको विकासको बाधक ठान्ने र राज्यको भूमिका सीमित गरेमा मात्रै निजी क्षेत्र बलियो बन्छ भन्ने भ्रमबाट मुक्त हुन जरुरी छ।

छरिएको सानो पुँजीलाई एकत्रित गरेर उत्पादनमूलक क्षेत्रमा प्रवाह गर्न, रोजगारी वृद्धि गर्न र कृषि एवम् साना उद्योगको विकासमा सहकारीहरूको भूमिका निर्णायक हुन सक्छ। निजी क्षेत्रको निर्वाध विकास त सबल अर्थतन्त्र निर्माणका लागि अपरिहार्य नै छ। प्रगतिशील कर प्रणालीका माध्यमबाट आर्थिक विषमता न्यून गर्ने संविधानको व्यवस्था यस अर्थमा निकै महत्वपूर्ण छ। त्यसैले न्यायोचित वितरणसँग जोडिएको तीब्र वृद्धि र सामाजिक न्यायसहितको आर्थिक विकास हामीले हिँड्नुपर्ने बाटो हो। संविधानले यस विषयमा स्पष्ट मार्गदर्शन गरेको छ।

राजनीतिक अस्थिरता,लामो द्वन्द्व र सङ्क्रमणकाल तथा लगानीका लागि उचित वातावरणको अभावमा हाम्रो म्यानुफ्याक्चरिङ उद्योग खुम्चिंदै गएको छ। यसले स्वदेशी उद्यमीहरूलाई निराश र श्रमिकहरूलाई बेरोजगार बनाएको छ, मुलुकको परनिर्भरता पनि झनझन बढाउँदै लगेको छ। उत्पादन सम्बन्धको रुपान्तरण र उत्पादक शक्तिको विकासको निम्ति गर्नुपर्ने दायित्व हो- राज्यको नेतृत्व, पहल र मार्गदर्शनमा योजनाबद्ध औद्योगिक विकास र राष्ट्रिय अर्थतन्त्रको उत्थान। राज्यको प्रभावशाली उपस्थितिले निजी क्षेत्रलाई पनि

अगाडि बढ्ने वातावरण निर्माण गर्ने छ । यो काम गर्न सकिएन भने राज्य समाजवाद उन्मुख होइन, पराश्रयी र परान्मुख बन्दै जाने छ ।

यी सबै दायित्व पूरा गर्न मुलुकमा राजनीतिक स्थायित्व अपरिहार्य हुन्छ । राजनीतिक स्थायित्वले मात्रै नीतिगत निरन्तरता र पूर्वानुमान गर्न सक्ने स्थितिको प्रत्याभूति दिन्छ । यसले मात्रै निर्णयको कार्यान्वयनलाई सुनिश्चित गर्छ । यसो हुन सकेमा मात्रै आन्तरिक र बाह्य लगानी वृद्धि भई रोजगारीका अवसर सिर्जना हुन्छन् । राजनीतिक अस्थिरताले नीतिगत अन्यौल सिर्जना गर्छ । त्यसले कार्यान्वयन पक्ष फितलो बनाउँछ । भविष्यका बारेमा पूर्वानुमान गर्न नसकिने भएपछि व्यावसायिक जोखिम बढ्छ र लगानीलाई निरुत्साहित गराउँछ । यसो हुन थालेपछि राज्य कमजोर हुँदै जान्छ र बिचौलिया, दलाल र अवसरवादी जस्ता गैरराज्य पक्षहरूको बिगबिगी बढ्दै गएर सुशासन र सेवाप्रवाहमा चुनौती खडा हुन्छ । यसले मुलुकको सार्वभौमसत्ता, राष्ट्रियता, राष्ट्रिय हित र स्वाभिमानमा समेत चुनौती खडा गर्छ ।

आज हामी यिनै चुनौतीसँग जुध्िरहेका छौं । संविधान निर्माण गर्न निर्णायक भूमिका खेलेका दलहरू विभाजित हुँदा र संविधान निर्माणको अविभाज्य पक्षलाई निषेध गर्ने हानिकारक कदम चाल्दै गर्दा संविधानको धरातल कमजोर हुन थालेको छ । कुनै पनि लोकतान्त्रिक प्रणाली आफैंमा साध्य होइन, यो त जनताका आकाङ्क्षा पूरा गर्ने माध्यम हो, साधन हो । तर लोकतान्त्रिक प्रणालीका माध्यमबाट समृद्धि र सुखका जनताका चाहनालाई पूरा गर्नमा केन्द्रित हुनुको सट्टा सत्तास्वार्थमा केन्द्रित हुँदै जाँदा जनता र शासन व्यवस्थाबिचको दूरी बढ्न थालेको आभाष हुँदै छ । लोकतन्त्रको रक्षाको सबैभन्दा ठुलो कवच जनताको स्वेच्छिक समर्थन हो । त्यो त्यतिबेला मात्रै सम्भव हुन्छ, जतिबेला लोकतन्त्रले 'डेलिभरी' दिन्छ । अर्थात्, सरकारले जनताका अपेक्षाबमोजिम काम गर्न सकेमा मात्रै लोकतन्त्रप्रति जनताको अपनत्व विस्तार हुन्छ र लोकतन्त्र सुरक्षित हुन्छ । पछिल्लो समय राजनीति यसमा चुक्दै गएको र संविधानले परिकल्पना गरेभन्दा भिन्न विकृति झाँगिदै जाँदा संविधानलाई मन नपराउनेहरूले जनमत निर्माण गर्ने ठाउँ पाइरहेको देखिएको छ । संविधानका विरुद्ध विभिन्न पश्चगामी, विखण्डनकारी र अतिवादी सलबलाहट देखा पर्न थालेका छन् ।

निश्चय नै, यी समस्या संविधानले सिर्जना गरेका होइनन् । संविधान कार्यान्वयन गर्ने पात्रहरूमा देखा परेका अत्यधिक सत्तामोह, जनतासँग गरेका बाचा बिर्सने विकृत अभ्यास, सत्ता स्वार्थका लागि अवाञ्छित शक्ति केन्द्रसँग पनि लहसिने प्रवृत्ति र आन्दोलनको धरातलबाट बढ्दै गएको दुरीले यस अवस्थाको सिर्जना गरेको हो ।

भर्खरै हामीले संविधान सभाका अध्यक्ष सुवासचन्द्र नेम्वाङलाई गुमायौं । दुई दुई वटा संविधान सभाको अध्यक्षता गर्ने दुर्लभ अवसर पाउनुभएका स्वर्गीय सुवासचन्द्र नेम्वाङले संविधान निर्माणमा कति महत्वपूर्ण योगदान गर्नुभएको थियो भन्ने कुरा सबैका सामु स्पष्ट छ । उहाँको योगदानको प्रभाव समाजमा कति गहिरो गरी परेको थियो भन्ने कुराको प्रतिबिम्ब उहाँलाई अन्तिम श्रद्धाञ्जली दिन पङ्क्तिबद्ध भएको जनताको विशाल उपस्थितिबाटै स्पष्ट भएको छ । संविधान निर्माणमा निर्णायक भूमिका खेल्नुहुने तिनै सुवास नेम्वाङले संविधान जारी भइसकेपछिको संविधान सभाको अन्तिम बैठकमा भन्नुभएको थियो ।

'संविधान राम्रो भएर मात्र पुग्दैन । यसको कार्यान्वयनकर्तामा इमान्दारी र प्रतिबद्धता हुन जरुरी छ । संविधानले शासन पद्धतिका सिद्धान्तहरू तय गर्छ । संविधानले वुद्धि विवेक र क्षमता भने बाँड्न सक्दैन । तसर्थ संविधान राम्रो भएर मात्र हुँदैन । संविधानको सहज र प्रभावकारी कार्यान्वयनका लागि राजनीतिक

नेतृत्वले विवेकशील भई क्षमता प्रदर्शन गर्न सक्नुपर्दछ । ....संविधान निर्माणमा देखिएको दलहरूबिचको एकता यसको कार्यान्वयनमा पनि देखियोस् भन्ने मेरो सादर आग्रह छ ।'

नेपालको संविधानले आठ वर्ष पूरा गरेर नवौं वर्ष प्रवेश गरिरहेको परिप्रेक्ष्यमा उहाँका यी भनाइहरूलाई गम्भीरतापूर्वक ग्रहण गर्दै संविधानको कार्यान्वयनमा निष्ठापूर्वक लाग्नु आवश्यक देखिन्छ ।



# संघीयतामा सुधारसहितको अभ्यास आवश्यक



✍ डा. खिमलाल देवकोटा*

**स्वीटजरल्याण्डमा संघीयताको असल अभ्यास**

हालसालै मैले स्वीटजरल्याण्डको संघीयतालाई नजिकबाट नियाल्ने अवसर पाँए। अघिल्लो सातामात्र उनीहरूले संघीय संविधान जारी गरेको १७५ औ वार्षिकोत्सव मनाए। भूगोलमा नेपालको कर्णाली प्रदेश भन्दा अलिकति मात्र ठुलो स्वीटजरल्याण्डको जनसङ्ख्या ८७ लाख मात्र छ। यति सानो देशमा पनि २६ वटा प्रदेश छन। २१३६ वटा स्थानीय सरकार छन। स्वीटजरल्याण्डमा प्रदेशलाई क्यान्टोन र स्थानीय तहलाई कम्युनस भनिन्छ। तर कम्युनसहरू नगरपालिकाका रुपमा परिचित छन। १२ सेप्टेम्वर १८४८ मा संघीयतामा गएको स्वीटजरल्याण्ड १७५ वर्षसम्म टसकोमस भएको छैन। तर, नेपालले ७५ वर्षको दौरानमा ७ पटक संविधान परिवर्तन गरिसक्यो। एउटा खालको शासन व्यवस्था अंगाल्ने अनि पूर्णता प्राप्त नगर्दै फेरि अर्को शासन व्यवस्थामा जाने खेलहरू नेपालमा धेरै भयो। नेपाललाई विभिन्न खालका शासन व्यवस्थाको प्रयोगशाला बनाइयो। तर स्वीटजरल्याण्डले १७५ वर्षदेखि एउटै शासन व्यवस्था अंगालेको छ, उही संघीय संविधान छ। तर स्वीटजरल्याण्डले जनताको भावनाको कदर गर्दै पटक-पटक संविधानमा सुधार भने गर्दै लगेको छ। यस अवधिमा उसले दुईपटक (सन १८७४ र सन १९९९) संविधानमा ठुलो सुधार पनि गऱ्यो। संविधानको कुनै एउटा धारामा चित्त बुझेन भने तुरुन्त सुधार गरिहाल्ने परिपाटी स्वीटजरल्याण्डमा रहेछ। हामीकहाँ संविधानको एकाध धाराहरूमा समस्या भएमा पुरै च्यात्ने, शासनव्यवस्थानै परिवर्तन गर्ने जुन प्रचलन छ। त्यो घातक र प्रत्युत्पादक छ। विकास र सुशासनलगायतमा नेपाल पछाडि परेको कारण पनि यही हो। संविधान गतिशील दस्तावेज हो। जनताको भावनाअनुसार सुधार गर्न सकिएन भने शासन व्यवस्था मात्रै हैन सिङ्गो राष्ट्र नै कमजोर हुन्छ भन्ने धारणा स्वीस समुदायमा छ।

---

* माननीय सदस्य, राष्ट्रिय सभा

**नेपालमा संघीय शासनप्रणालीको समीक्षा**

संविधान दिवसको अवसरमा मैले उल्लिखित प्रसङ्ग किन अघि सारेको पनि हो भने हामीले संघीय शासन व्यवस्था अँगालेको एक दशक पनि भएको छैन । २०७२ मा संविधान जारी गरेतापनि यसको कार्यान्वयन २०७४ मा भएको तीनै तहको निर्वाचन पश्चात मात्र भएको हो । यो संविधान जारी भएपछि धेरै खालका उपलब्धीहरू भएका पनि छन् । कतिपय उपलब्धीहरू संसारलाई देखाउने र सुनाउने खालका पनि छन् ।

संविधानले निर्देशित गरेको संघीय शासन व्यवस्थामा प्रवेश पश्चात अहिले तराई/मधेश लगायत सिङ्गो मुलुकमा शान्ति छाएको छ । माओवादी १० वर्षे जनयुद्ध, मधेश आन्दोलन लगायतका कारण आफनो गाँउ/ठाँउ छाडेका मानिसहरू घर बस्ति र समुदायमा फर्केका छन् । केन्द्रमा केन्द्रीय सरकार र स्थानीयमा स्थानीय सरकार मात्र भएपुग्छ । किन चाहियो प्रदेश भन्नेहरू पनि छन । त्यस्तो भन्नेहरूले बुझ्न र मनन गर्न जरुरी छ । स्थानीय तहले मात्र समस्याको समाधान दिन्थ्यो/हुन्थ्यो भने हिजोका स्थानीय निकायहरूले किन दिएनन ? किन ती स्थानीय निकायहरूको चुनाव २०-२० वर्षसम्म हुन सकेन ? किन गाँउघरका नागरिकहरूलाई गाविस सचिव खोज्दै सदरमुकामतिर दौडिन पर्‍यो ? नागरिकलाई सानो तिनो काम र समस्याको पोको बोकेर किन सदरमुकाम र काठमाडौ सम्म धाउनुपर्ने स्थिति सिर्जना भयो/गरियो ? निर्वाचित जनप्रतिनिधिले चलाउनुपर्ने स्थानीय राज्यसक्ता किन कर्मचारीले मात्र चलाउनुपर्ने परिस्थिति आइपर्‍यो ? हाम्रा गाँउहरू किन सुनसान जस्तै भए ? राज्यका अधिकांस अंगहरू किन गाँउसम्म जान हिम्मत गरेनन् ? राजधानीलगायत ठूला-ठूला शहरहरूमा बस्नेहरू पनि किन असिनपसिन भए ? कतै वम पडकिन्छ भन्ने त्रासलगायतका कारण किन उनीहरूको निद्रा राम्रोसँग लागेन ? हाम्रो उद्योग व्यवसाय लगायतको आर्थिक स्थितिमा किन निरन्तर ओरालो लागिरहयो ? केन्द्रिकृत अधिकारलाई कानुन वमोजिम विकेन्द्रिकृत गर्न भनेर ल्याइएका विकेन्द्रीकरण, निक्षेपण जस्ता शासन सुधारका कार्यक्रमहरूको कार्यान्वयन किन भएन ? उच्चपदस्थ कर्मचारीहरू किन सिंहदरवारभन्दा बाहिर गएनन/जान मानेनन ? सुदुरपूर्व, सुदुरपश्चिम लगायत दूरदराजका नागरिकहरूको विकास निर्माण र सेवाप्रवाह, आदिसँग सम्बन्धित योजनाहरू काठमाडौका तारे होटलहरूमा मात्र बसेर किन गरियो ? शासन व्यवस्थामा कुनै खास-खास जाति, समुदाय र वर्गको मात्र वाहुल्यता किन रहयो ? अहिल आएर संघीयता किन चाहियो ? केन्द्रिय सरकार र स्थानीय सरकार मात्र भएपुग्छ भन्नेहरूले यी सवालहरूको उत्तर खोजे पुग्छ । यी सवालहरू सामन्ती, निरंकुश, केन्द्रिकृत र एकात्मक राज्यव्यवस्था लगायतका कारणले पनि सृजित भएका हुन् ।

वर्तमान संविधानअनुसार लागू भएको शासनव्यवस्थाका कारण लामो समयदेखि अवरुद्ध स्थानीय तहको निर्वाचन संभव भएको छ । नागरिकले आफ्नो घरदैलोमा निर्वाचित स्थानीय सरकार पाएका छन । आफना गुनासा पोख्ने जनप्रतिनिधि पाएका छन । केही अपवाद बाहेक स्थानीय तहमा विकासको लहर आएको छ । हिजो मुस्किलले रु ३० लाख पनि वित्तीय स्रोत नचलाउने स्थानीय तहले अहिले रु अर्ब भन्दा वढी वित्तीय स्रोत परिचालन गरिरहेका छन । मेरै हातबाट करिब १० वर्ष तत्कालिन स्थानीय निकायहरूका लागि अनुदान वितरण लगायतमा प्राविधिक सहयोग गरेको अनुभव छ । जिविसले पनि मुस्किलले दुई-तीन करोड मात्र निशर्त अनुदान प्राप्त गर्दथे । तर अहिले त स-साना स्थानीय तहले पनि करोडौ निशर्त अनुदान (समानीकरण अनुदान) प्राप्त गरिरहेका छन् ।

सदरमुकाममा केन्द्रित केही विकासे कार्यालयहरू अहिले गाँउमा पुगेका छन् । काठमाडौमा केन्द्रित मन्त्रालय, विभाग लगायतका केही निकायहरू प्रदेशमा झरेका छन् । करि एक लाख निजामती कर्मचारीमध्ये आधा भन्दा वढी स्थानीय तह र प्रदेशमा समायोजन भएका छन् । सिंहदरवारभन्दा वाहिर कहिल्यै नगएका/जान नमानेका उच्च पदस्थ कर्मचारीहरू तल झरेका छन् । उच्च पदस्थ कर्मचारीहरू तल जानु भनेको जनताको घरदैलोसम्म सेवा पुग्नु पनि हो । हो कर्मचारी प्रशासनमा समस्या छ । सरकारले निजामती कानुन जारी गर्न सकेको छैन । त्यो अलग्गै पाटो हो । सरकारको कमजोरी हो । तर यो व्यवस्थाका कारण केन्द्रिय राज्यसत्ताले नचाँहदा नचाँहदै पनि सुधार भएको छ । जनताको सबभन्दा नजिकको सरकार स्थानीय र त्यसपछि प्रदेश सरकार हो भन्ने सन्देश गएको छ । नजिकको सरकारमा नागरिकले टेवल ठटाएर, आँखा जुधाएर काम लिन सक्दछन् र सोहीअनुसार लिएका छन् । तर त्यही कामका लागि सिंहदरवार धाउनुपर्‍यो भने हप्तौ/महिनौ लाग्छ । सिंहदरवारले भूईमान्छेका समस्याहरू राम्रोसँग देख्दैन/सुन्दैन । देख्ने/सुन्ने भनेकै भूई सरकार हुन् । त्यसैले हामीले स्थानीय सरकारसँगै प्रदेश सरकारलाई पनि बलियो बनाउनतर्फ ध्यान दिनुपर्दछ । संघीयतासँग जोडिएका कारण स्थानीय सरकार अधिकार सम्पन्न भएका हुन् भन्ने तथ्य बुझ्न पनि जरुरी छ ।

### समावेसी प्रतिनिधित्वमा उत्कृष्ट परिणाम

हालको शासकीय संरचनाको कारण समानुपातिक, समावेसी सहभागितामूलक प्रतिनिधित्वको अभ्यास शुरु भएको छ । अझ पनि यसमा गर्नुपर्ने कामहरू प्रशस्तै छन । तर पनि साविकको भन्दा धेरै सुधार भएको छ । जस्तो विश्वभरका संसदहरूको साझा संगठन अन्तर व्यवस्थापिका संघको वेबपेजमा राखिएको विवरण अनुसार विश्वभरका संसदमा महिलाको औषत प्रतिनिधित्व २६ प्रतिशत छ । छिमेकी मुलुक भारतको १५ प्रतिशत र चीनको २५ प्रतिशत छ । अमेरिकाको २८ प्रतिशत छ भने नेपालको ३४ प्रतिशत छ । स्थानीय तहमा महिलाको प्रतिनिधित्वको कुरा गर्ने हो भने नेपालमा ४२ प्रतिशत छ । जवकि संयुक्त राष्ट्रसंघका अनुसार जापानमा १३ प्रतिशत, क्यानडामा २७ प्रतिशत, डेनर्माकमा ३३ प्रतिशत छ । २०४९ सालको स्थानीय निकायको निर्वाचनमा महिलाको प्रतिनिधित्व जम्मा शून्य दशमलव ४९ प्रतिशत थियो । अहिले ४२ प्रतिशत पुगेको छ । महिलाको प्रतिनिधित्वको सवालमा यसलाई छलाङ्ग भन्ने कि नभन्ने ? यत्रो उपलब्धी यही संघीयताका कारण हैन ? स्थानीय तहको प्रमुख पदाधिकारी पदमा अनिवार्य रुपमा महिला हुनैपर्ने भन्ने व्यवस्थाका लागि भने थप संर्घष जरुरी छ ।

मैले स्वीटजरल्याण्डको एक विश्वविद्यालयको प्रस्तुतीको क्रममा स्थानीय तहमा महिलाको प्रतिनिधित्व सम्बन्धी संयुक्त राष्ट्रसंघको यूनवुमनको वेभपेजको डकुमेन्ट नै देखाएर स्थानीय तहमा महिलाको सहभागीताको सवालमा तिमीहरू भन्दा पनि हामी अगाडि छौ, यो वेभपेजको विवरण हेर भनेर समेत देखाएको थिए । स्वीटजरल्याण्डको यस्तो सहभागिता ३१ प्रतिशत रहेछ ।

### सकरात्मक पक्ष अरु पनि छन्

यो व्यवस्थाका कारण बसाई सराईमा कमी आएको छ । यसै गरी समस्याहरूको स्थानीयकरण भएको

छ। तत्कालिन व्यवस्थासँग तुलना गर्दा सेवा प्रवाहमा सुधार आएको छ। सानोतिनो कामका लागि केन्द्रमा धाउनुपर्ने परिस्थितिको अन्त्य लगायतका कारण नागरिकहरूले परिवर्तनको अनुभूति गरेका छन् । सकारात्मक प्रतिस्पर्धाको भावनाको विकास भएको छ । पालिका-पालिका, प्रदेश-प्रदेशका बिच सेवा प्रवाह लगायतमा प्रतिस्पर्धा छ। यसो कल्पना गरौ त ? कस्तो कठिन अवस्थाबाट हामी यहाँ आएका छौ। अहिले स्थिति सहज छ भन्दैमा संघीयता चाँहिदैन । प्रदेश चाँहिदैन भन्न मिल्छ रु ल एकछिनलाई मानौ संघीयता चाँहिदैन । अनि जाने कहाँ हो त ? फेरि समाजको कुनै वर्ग र समुदायले आन्दोलन नगर्ला भन्न सकिन्छ र ? आन्दोलनसँगै द्धन्द वढदै गयो भने मुलुकको हालत के होला ?

हालसम्मको नेपालको राजनैतिक इतिहासलाई नियाल्दा थाहा लाग्दछ कि हामीले विभिन्न खालका शाशनव्यवस्थाको अनुभव गरेका छौ। अमेरिकामा करिब अढाई सय वर्षदेखि एउटै शासन व्यवस्था छ। छिमेकी मुलुक भारतमा पनि सन १९५० देखि (त्यसै वेला हामी राणा शासनबाट मुक्ति पाएका हौ) त्यही संविधान, त्यही शासन व्यवस्था छ। स्वीटजरल्याण्डको संघीयतालाई त मैले नजिकबाट नै नियाँले । विश्वविद्यालयका प्राध्यापकहरूले दिएको जानकारी अनुसार १७५ वर्षको दौरानमा दुईपटक मात्र संघीयताप्रति नागरिकहरूको असन्तोष देखापऱ्यो । पहिलो २० औ शताव्दीको शुरुवाततिर विकास र सुशासनको सवालमा र कोभिड-१९ को समयमा व्यवस्थापनको विषयलाई लिएर ।

**स्वीटजरल्याण्ड र नेपालको तुलना र सिकाई**

विकास र सुशासन प्रवर्द्धन लगायत नागरिकको सेवा प्रवाहलाई उच्चतम् प्राथामिकतमा राखेर नै काम गरेकाले स्वीटजरल्याण्ड अहिले धेरै अगाडि छ । स्वीटजरल्याण्डको तुलनामा नेपालको भूगोल करिब चार गुणा र जनसङ्ख्या करिब साढे तीन गुणा ठुलो छ । तर स्वीटजरल्याण्डको प्रतिव्यक्ति आम्दानी नेपालको भन्दा ६९ गुणाले बढी छ । अन्तराष्ट्रिय मुद्रा कोषको सन् २०२३ को अप्रिलमा प्रकाशित तथ्याङ्कअनुसार स्वीटजरल्याण्डको प्रतिव्यक्ति आम्दानी अमेरिकी डलर ९२ हजार एक सय ३१ छ । जबकी सोही तथ्याङ्क अनुसार नेपालको एक हजार तीन सय ३२ डलर मात्र छ। भूगोल र जनसङ्ख्यामा ठुलो आकारको नेपालको जिडिपी धेरै हुनुपर्ने हो। तर नेपालभन्दा कैयौं गुणा जिडिपी स्वीटजरल्याण्डको छ। यस्ता विवरणहरूले हामीलाई निरास त बनाउँदछ नै । सँगसँगै यसबाट हाम्रा नेता र शासकहरूले शिक्षा लिन भने आवश्यक छ ।

वास्तवमा, शासन व्यवस्था आँफैमा कुनैपनि राम्रो हुने हैन । राम्रो बनाउने राजनीतिक दलहरूले हो, सरकारले हो । सरकारको नेतृत्वमा सहयोगात्मक भूमिका नागरिकहरूको हुनु स्वभाविक नै हो । तर दिशाबोध गर्ने, बाटो देखाउने भनेको सरकारले नै हो । जनतालाई सेवा दिने सवालमा हामी चुकेका छौं । हाम्रो सन्दर्भमा यस पाटोको गम्भीर समीक्षा हुन जरुरी छ ।

हामीले विगतमा छोटो समयमै शासन व्यवस्था/संविधान फेरेको फेऱ्यै गर्‍यौं । त्यसैले अब हामीले विभिन्न खालका शासन व्यवस्थाको प्रयोगशाला मुलुकलाई नबनाऔं । निर्वाचन प्रणालीमा कमजोरी छ भने त्यसमा सुधार गरौं । सत्तारुढ माओवादी केन्द्रकै चुनावी घोषणापत्रमा पनि निर्वाचन प्रणालीमा सुधार गर्ने उल्लेख छ । संघीय सांसद र प्रदेश सांसदको सङ्ख्या धेरै छ । प्रतिनिधि सभामा सांसद सङ्ख्या २७५ बाट १६५

र प्रदेशसभा ५५० बाट ३३० कायम गरौं । माओवादीको घोषणापत्रमा पनि यो विषय उल्लेख छ ।

## सिक्नुपर्ने अरु कुरा पनि छन्

हाम्रो सन्दर्भमा एउटै व्यक्ति पटक-पटक सांसद/मन्त्री हुन पाउने व्यवस्थामा परिवर्तन आवश्यक छ । राष्ट्रपति जस्तै प्रधानमन्त्री बन्न पाउने सीमा निर्धारण गरौं । स्वीजरल्याडमा त राष्ट्रपतिको कार्यकाल १ वर्ष मात्र छ । राष्ट्रपतिसहित ७ जनाको मन्त्रीमण्डलले पुरै चार वर्ष शासन गर्ने र ती ७ जनाबाट नै पालैपालो राष्ट्रपति हुने तर संसदको वहुमत चाहिने अभ्यास पनि रहेछ । राष्ट्रपति भएको मानिस उही मन्त्रिपरिषदमा मन्त्री भएर पनि बस्दा रहेछन् । तल्लो ओहदाको जिम्मेवारी लिँदा पनि कुनै हिनतावोध नलिने कस्तो राम्रो राजनैतिक संस्कार । त्यस्तै सांसदलाई मन्त्रिमण्डलमा बर्जित रहेछ । तर राष्ट्रपतिसहित मन्त्रीहरू संसदले निर्वाचित गर्दो रहेछ । सांसदको पद त पार्टटाइम जस्तो रहेछ । वैठकको समयमा वैठकभत्ता र अन्य सामान्य सुविधा बाहेक अन्य तलवभत्ता सांसदले लिने चलन रहेनछ । सांसदहरू आफनो पेशा व्यवसायमा संलग्न हुँदा रहेछन् ।

स्वीजरल्याण्डमा सरकारले कुनै विधेयक बनाउनुभन्दा पहिला सरोकारवालाहरूसँग घनिभूत छलफल गर्दोरहेछ । संसदले पनि यही विधि अपनाउने चलन रहेछ । सरकार र संसदको काममा जनताले सिधै चुनौती दिने (जनमतसंग्रहको माग) हतियार रहेका कारण पनि सरकार र संसद जनताको चाहनाभन्दा एक ईन्च पनि तलमाथि गर्दा रहेनछन् । यसरी संघीयता कार्यान्वयनका सवालमा पनि स्वीटजरल्याण्डलगायतका देशहरूबाट पनि हामीले धेरै कुराहरू सिक्न जरुरी छ ।

## केन्द्रीयकरणको प्रवृत्ति संघीयता विरोधी छ

शासन व्यवस्थालाई चुस्त बनाउने सवालकै चर्चा गर्दा संघ र प्रदेशमा मन्त्रालय, निकायलगायतको सङ्ख्या चुस्त बनाउन आवश्यक छ । संघीय तहमा २२/२२ वटा मन्त्रालय किन चाहियो ? संसदमा बजेटको छलफल हुँदा नै मैले त आधाभन्दा वढी मन्त्रालयले संविधान मिचेको मन्त्रालयगत तथ्यहरू पेश गरेको थिएँ । साविकका गाविसका भन्दा पनि साना योजनाहरू संघीय मन्त्रालयबाट नै कार्यान्वयन गर्ने गरी राखिनु बिडम्वनाको विषय हो ।

संस्थागत संरचनाका सम्बन्धमा चर्चा गर्दा संघमा अहिले पनि करिब ५ दर्जन विभागहरू छन् । ती मध्ये आधा विभागहरू कामविहीन अवस्थामा छन् । ती सबै खारेज गरिनुपर्दछ । तर दूर्भाग्य सरकारले नै खारेज गरेका विभागहरू व्युत्याउने गरी विधेयक ल्याएको छ । जस्तो विद्यालय शिक्षा विधेयकमा साविकमा नै खारेज गरिएको शिक्षा विभाग मात्र हैन जिल्ला शिक्षा कार्यालयसमेत व्युत्याउने गरी विधेयक संसदमा दर्ता गरेको छ । महिला, बालबालिका तथा जेष्ठ नागरिक मन्त्रालय खारेज गरिएका महिला विकास कार्यालयहरू व्युत्याउन जोडबलले लागेको छ । संविधानले राष्ट्रिय वन प्रदेशको अधिकार क्षेत्रमा राखेको छ । तर संघीय सरकार यसलाई छाड्न चाहँदैन । यी र यस्ता गतिविधिहरूले हामीजस्ता अभियन्ताहरूलाई निरास बनाएको छ । यसले, सरकार संघीयताको भावनाअनुसार अगाडि बढेको छैन भन्ने सन्देश दिएको छ । यस्ता कमजोरीहरू सुधार्न भने जरुरी छ ।

संविधानले प्रदेशलाई प्रदेश प्रहरी प्रशासन लगायत शान्ति सुरक्षाको अधिकार दिएको छ । तर अहिलेसम्म

प्रदेशमा प्रहरी समायोजन गरिएको छैन । संविधानले प्रदेश मात्र हैन । स्थानीय तहलाई पनि सरकार मानेको छ । तर प्रदेश र स्थानीय तहले सरकारको अनुभूति गर्न नै पाएका छैनन । कतिपय नेताहरू प्रदेश र स्थानीय तहलाई सरकार मान्न नै तयार छैनन् । संसदमा म नै यिनीहरू संघीय सरकारको मातहतका निकाय हुन जसरी बोल्ने गरेका छन् ।

संविधान राम्रो छ । शासनव्यवस्था उत्तम छ मात्र भन्यौ तर कमीकमजोरीहरू सुधार्न लागेनौ भन्ने निश्चित छ कि यो व्यवस्था नचाहनेहरूको पक्षमा बल पुग्छ । आलोचना र कमीकमजोरीहरू मात्र देखाएर चर्को भाषण गर्नेहरूको पछाडि भिड बढ्दै जान्छ ।

वास्तवमा नागरिकलाई कुनै पनि शासन व्यवस्थासँग कुनै लेनादेना नै छैन । नागरिकको लेनदेना भनेकै रोजगारी हो । विकास हो । सुशासन हो । यो भन्दा पनि महत्वपूर्ण स्थायी शान्ति र विधिको शासन हो । स्थायी शान्ति र विधिको शासनसँग नै विकास, सुशासन, समृद्धिलगायतका आयामहरू जोडिएका हुन्छन् ।

**फेरि पनि प्रशंग स्वीस अभ्यासको**

राज्यका हरेक निकायले जनतालाई सेवा प्रवाह गर्दा सन्निकटताको सिद्धान्तलाई आत्मसाथ गर्नुपर्दछ भन्ने सन्देश मैले स्वीटजरल्याण्डको संविधानमा पाँए । जनताले छिटो/छरितो र सहज तरिकाले कसरी सेवा प्राप्त गर्न सक्छन् भन्ने ध्यान मात्र स्वीटजरल्याण्डको सरकारको छ । नेपाल भन्दा धेरै सानो स्वीटजरल्याण्डको कुल गार्हस्थ उत्पादन नेपाल भन्दा केयौ गुणाले धेरै हुनु नेपालको लागि लज्जाको विषय पनि हो । पहाडि मुलुक हुँदाहुँदै पनि दुरदराजसम्म सडक यातायातसँगसँगै रेल्वे यातायातको सन्जाल छ । पहाडहरूमा सुरुङ्ग त सामन्य जस्तै छ । शहरका सडक, गल्लीहरू सफा र सुन्दर छन् । एक टुक्रा कागज पनि भुँइमा देखिँदैन । शहर बजारका खोला- नाला र नदीहरू एकदम सफा छन् । मध्यशहरका नदीहरू पनि सफा र निला छन् । सडकमा धुलो मैलो केही पनि देखिदैन । मानिसहरू आ-आफनो काममा व्यस्त छन् । शिक्षा, स्वास्थ्य लगायत सामाजिक सुरक्षामा राज्यको प्रत्यक्ष सहयोग र निगरानी छ । राज्यका अंगहरूले स्वस्फूर्त रुपमा काम गरिरहेका छन् । विकास, समृद्धि, शुशासनको प्रत्याभूति छ । लोकतन्त्र र विधिको शासनको उच्चतम प्रयोग स्वीस नागरिकहरूले गरिरहेका छन् । त्यस्तै

प्रत्येक प्रदेशको आफनै संविधान छ । अलग-अलग झण्डा र भाषा छ । तर पनि स्वीटजरल्याण्डको संघीयतामा कुनै समस्या छैन । स्वीस नागरिकहरूमा आफनो धर्म, भाषा, संस्कृति र परम्परामा गहिरो लगाव छ ।

संसदका भित्ताहरूमा सबै प्रदेशका नक्शा/झण्डा हरू छन् । सिङगो संसदले प्रादेशिक र स्थानीय सवाल लगायतका बारेमा आवाज वुलन्द गर्छन । दुबै सदनले सरकारको निर्वाचन गर्छ । कानुन तर्जुमालगायत हरेक सवालमा दुबै सदनको अधिकार र भूमिका बराबर छ भनेर संविधानमा नै छ । तर नेपालको राष्ट्रिय सभालाई सरकार बनाउने सवालमा मात्र हैन कानुन तर्जुमा प्रक्रियामा समेत नजरअन्दाज गरिएको छ । संघीय सरकार र प्रदेश सरकारका कामहरूको सीमारेखा संविधानले नै कोरेको छ । मुलतः संघीय सरकारले कानुन तर्जुमा गर्छ कार्यान्वयन भने प्रदेशले गर्छ । प्रदेशको मातहतमा भएपनि स्थानीय सरकारहरू अधिकारसम्पन्न छन् । स्थानीय सेवा प्रवाह र स्थानीय पूर्वाधार

विकासलगायतका प्राय सबै कामहरू स्थानीय सरकारले नै गर्छन् । एक तहको सरकार अर्को तहको सरकारको अधिकार क्षेत्रमा प्रवेश गर्छ/गरेको छ भन्ने त त्यहाँ चर्चा नै हुदैन ।

## टुंगो कुरा

संघीयताको कार्यान्वयन लगायतका सवालमा स्वीटजरल्याण्डबाट सिक्नुपर्ने विषयहरू धेरै छन् । स्वीस प्रणालीमा प्रदेश र स्थानीय तहले स्वतन्त्र र स्वायत्त तरिकाले काम गर्ने वातावरण पाएका छन् । तर हामीकहाँ संविधानमा लेखिएतापनि प्रदेश र स्थानीय तहलाई अधिकार दिन संघले कन्जुस्याँई गरिरहेको छ । संविधान कार्यान्वयनमा आएको आठ वर्ष पुग्दा पनि निजामती सेवा लगायतका अत्यावश्यक कानुनहरू जारी हुन सकेको छैन । स्थानीय तह र प्रदेशमा कर्मचारी नभएर जनताले सेवा पाउन सकिरहेका छैनन् । तर संघीय तहमा कर्मचारीहरू कामविहीन अवस्थामा छन् ।

स्थानीय र प्रदेशका अधिकार क्षेत्रका ससाना योजना तथा कार्यक्रमहरू पनि संघले आफै गर्ने किसिमले बजेट ल्याउने गरेको छ । वित्तीय संघीयता, प्रशासनिक संघीयता र राजनीतिक संघीयतामा गर्नुपर्ने सुधारहरू अझै धेरै छन् । नागरिकस्तरबाट र खासगरी प्रदेश र स्थानीय स्तरबाट उठेका सवालहरू सम्बोधनमा संघीय सरकार लाग्न जरुरी छ । यसै गरी प्रदेश र स्थानीय तहले पनि नागरिकको अपेक्षाअनुसार काम गर्नुपर्दछ । संविधान जारी गरेको छोटो अवधिमा उपलब्धीहरू पनि प्रशस्तै भएका छन् । सँगसँगै समस्याहरू पनि छन् । उपलब्धीहरू संस्थागत गर्दै समस्याहरू समाधानमा निरन्तर लाग्न भने जरुरी छ । समस्या, गुनासा र चुनौती छ भन्दैमा व्यवस्था नै खराव हो भन्नु आफ्नो खुट्टामा आँफैले बन्चरो हान्नुजस्तै हो । शासन व्यवस्था सुधार गर्नमा नागरिकको भन्दा सरकारको नै जिम्मेवारी धेरै हुनेहुँदा सरकार गम्भीर हुन भने जरुरी छ ।



# संविधान कार्यान्वयनका अवसर र चुनौती



✍ खिमलाल देवकोटा*

**पृष्ठभूमिः**

संविधान सभाबाट संविधान जारी भएको आठौँ वर्ष पूरा भएको छ । २००७ सालदेखि जनताका निर्वाचित प्रतिनिधिहरूबाट संविधान निर्माण गर्ने सपना झण्डै ७० वर्षपछि २०७२ सालमा पूरा भएको हो । संघीयता, गणतन्त्र धर्म निरपेक्षता र समावेशिता नयाँ संविधानका महत्वपूर्ण उपलब्धि हुन् । संविधान जारी भएपछिका आठ वर्षमा महत्वपूर्ण उपलब्धिहरू भएका छन् । तीन तहको निर्वाचन भै पहिलो कार्यकाल सम्पन्न गरी दोस्रो कार्यकालसमेत आरम्भ भै तिब्रतामा कार्यरत छन् । तीन वटै तहले आफूलाई निर्धारण गरिएको क्षेत्राधिकारभित्र रही कानुन बनाउने, बजेट बनाउने नीति योजना बनाउने र कार्यान्वयन गर्ने जस्ता कामहरू उल्लेख्य रुपमा सम्पन्न गरेका छन् । यतिका महत्वपूर्ण उपलब्धिसहित संविधान सभाबाट बनेको संविधानको कार्यान्वयनको यो चरणमा पनि कतिपय मामलाहरू भने थाति छन् । राज्य संरचनाहरूलाई संघीयकरण गर्ने, संघीयताको मर्मबमोजिम राज्य सञ्चालन गर्ने र जनतामा जगाइएका आकांक्षा र अपेक्षाको परिपूर्ति गर्नुपर्ने जस्ता आजको प्रमुख चुनौती रहेका छन् । यिनै चुनौतीहरूको चर्चा गर्ने प्रयास यस आलेखमा गरिएको छ ।

संविधान कार्यान्वयन भनेको संविधानले परिकल्पना गरेका कानुनहरूको निर्माण, संविधानका बारेमा नागरिक शिक्षा र संविधान पालनाको प्रतिबद्धता अर्थात संविधानवादमा अटल विश्वास अनिवार्य शर्त हुन[1] भन्ने कुरा केन्याको संविधान कार्यान्वयनका सम्बन्धमा विकास गरिएको मोडेल थियो । दक्षिण अफ्रिकाको संविधान कार्यान्वयन गर्ने सन्दर्भमा समान्य कानुनी प्रक्रियाभन्दा अघि बढेर उत्तरदायित्व र तर्कसंगतताको विकासमा

1 https://vision2030.go.ke/project/development-of-laws-to-implement-the-constitution/

* संविधान सभा सदस्य तथा वरिष्ठ अधिवक्ता

जोड दिने कुरा, जनताप्रति जिम्मेवार कानुनी अभ्यासको विकास, दक्षिण अफ्रिकाको विविधताको सम्मान र जनताको कल्याणको कुरालाई केन्द्रमा राख्ने[2] काम गर्‍यो । भारतको संविधान कार्यान्वयन गर्दा सर्वप्रथम प्रहरी प्रशासन र कर्मचारीतन्त्रको नयाँ कानुन निर्माणको माध्यमबाट प्रतिस्थापन, सिभिल सर्भेन्टहरूका लागि संविधानको कार्यान्वयनका लागि व्यापक प्रशिक्षण सञ्चालन गर्ने[3] काम गर्‍यो । यसैका माध्यमबाट संविधान कार्यान्वयनलाई सहजीकरण गर्ने, सरल बनाउने र संविधान कार्यान्वयनको सुनिश्चितता खोज्ने काम गर्‍यो । भारतको संविधानका बारेमा भन्ने गरिन्छ ।

The Constitution which is still in force has been amended over 90 times making it one of the most frequently amended constitutions in the world. It is also known to be one of the longest and most detailed in the world with 395 articles and 10 appendixes called schedules. Extensively modeled on western legal and constitutional practice.[4]

भारत, केन्या र दक्षिण अफ्रिकाको अनुभवका तुलनामा नेपालको संविधान कार्यान्वयनको प्रक्रिया संविधानले संस्थागत गरेका महत्वपूर्ण उपलब्धिहरूको कार्यान्वयन हो भन्न सकिन्छ । यसमध्ये मुलुकको संघीयकरण, गणतान्त्रीकरण, समावेशीकरण र धर्मनिरपेक्षीकरण मुख्य मामला पर्दछन् । यसका लागि व्यापक प्रशिक्षण, जनचेतना र अभिमुखीकरण जस्ता कार्यक्रम छाडेर नेपाल संविधानबमोजिमका कानुन निर्माण गर्ने उपायमा मात्रै केन्द्रित भएको पाइन्छ ।

**अवसर र चुनौतीको द्वन्द्वात्मक सम्बन्ध**

“Challenge” is defined as “an invitation to compete in a fight, contest, or competition.” And “opportunity” is defined as “a chance, especially one that offers some kind of advantage.” It also says that an opportunity is a combination of “favorable” circumstances or situations.[5]

उपर्युक्त द्वन्द्वात्मक सम्बन्धका आधारमा नेपालको संविधान कार्यान्वयनका अवसर र चुनौतीको अध्ययन गर्न आवश्यक छ । एकात्मक राज्यलाई अन्त्य गरी संघात्मक बनाउने कुरा, राजतन्त्रात्मक व्यवस्थाको अन्त्य गरी गणतन्त्रात्मक बनाउने कुरा, एवम् एकल हिन्दू अधिराज्यको ठाउँमा धर्म निरपेक्ष राज्य घोषणा गर्ने कुरा एकल जाति भाषा धर्म र वर्गको वाहुल्य भएको समाजलाइ परिवर्तन गरी समावेशी राज्य निर्माण गर्ने कुरालाई संस्थागत गर्ने कुरा यस संविधानको महत्वपूर्ण उपलब्धि हो । यस उपलब्धिलाई व्यवहारमा रुपान्तरण गर्न, संविधानको मर्मबमोजिम कार्यान्वयन गर्न र संविधानलाई बढीभन्दा बढी कामयावी दस्तावेज

2 https://www.pulp.up.ac.za/edited-collections/the-implementation-of-modern-african-constitutions-challenges-and-prospects

3 https://www.historydiscussion.net/history-of-india/indian-constitution-farming-implementing-and-structure/688

4 https://constitutionnet.org/country/india

5 https://naturallysavvy.com/blog/problem-vs-challenge-vs-opportunity/

बनाउने अवसर यतिबेला छ । जति बढी यस संविधानलाई कार्यान्वयन गर्न सक्यो त्यति नै बढी जनताका अपेक्षा पूरा हुने कुरा निश्चित छ । जति प्रभावकारी ढङ्गले संविधानको कार्यान्वयन गर्न सक्यो त्यति नै बढी जनताका अपेक्षा परिपूर्ति गर्ने संभावना छ । जति बढी यो संविधान कार्यान्वयन हुन सक्यो त्यति नै यो संविधान जनपक्षीय हुने संभावना छ । तसर्थ यस संविधानको कार्यान्वयन नै जनपक्षीय राजनीतिको अंग बन्न पुगेको छ । यति महत्वपूर्ण अवसर यतिबेला प्राप्त छ ।

अवसरसँगै चुनौतीसमेत विद्यमान छ । संविधानले संस्थागत गरेको राजनैतिक उपलब्धि खोसिने, सुदृढ नहुने र कार्यान्वयन नगर्ने चुनौती पनि सँगसँगै छन् । प्राप्त अवसरहरू चुम्न सके ती अवसर हुन् तर तिनलाई चुम्न सकिएन भने ती चुनौतीमा बदलिन्छन् । यसैगरी चुनौतीहरूको समाना गर्न सकियो भने ती चुनौतीहरू अवसरमा बदलिन्छन् । अवसर र चुनौतीको यो द्वन्द्वात्मक सम्बन्धलाई राजनीतिले आत्मसात गर्न सक्दा चुनौतीहरू अवसरमा बदल्ने र अवसरहरूलाई चुम्ने काम गर्न सकियो भने परिणाम हासिल हुने छ ।

यिनै अवसर र चुनौतीसँग जोडिएका नेपालको संविधान कार्यान्वयनका विषयहरू यसप्रकार उल्लेख गर्न सकिन्छ । यी अवसरलाई चुम्न सक्दा जनताका अपेक्षा परिपूर्ति हुने र अवसर चुम्न नसकी ती अवसरहरू चुनौतीमा बदलिँदा प्राप्त उपलब्धिहरू पनि खोसिन सक्ने खतरा रहन्छ । यसै गम्भिरतालाई आंकलन गरी ती गम्भीर तर अवसर र चुनौतीको दोसाँधमा रहेका विषयहरूलाई यसप्रकार उल्लेख गर्न सकिन्छ ।

**गणतान्त्रीकरणको अवसर**

संविधान सभाबाट जारी भएको यो संविधानको सबैभन्दा ठुलो उपलब्धि भने राजतन्त्रको अन्त गरेर गणतन्त्रको घोषणा गर्नु हो । अढाई सय वर्ष पुरानो शाहवंशीय राजतन्त्रको अन्त र गणतन्त्रको स्थापना नेपाली जनताको अपेक्षाको विषय थियो । सो अपेक्षा परिपूर्तिका लागि लामो समयदेखिको संघर्ष त्याग र वलिदानका कीर्तिमानहरूको भूमिका सर्वाधिक महत्वको छ । गणतन्त्र प्राप्तिका लागि नेपालमा कम्युनिष्ट पार्टीको गठन भएको हो । कम्युनिष्ट पार्टीको गठनदेखि नै निरन्तर राजतन्त्र विरोधी आन्दोलनहरूले गति लिएका हुन् । आरम्भमा गणतन्त्रको उद्देश्य राखेर गठन भएको नभए पनि नेपाली कांग्रेस पार्टीले समेत समय समयमा राजासँग संघर्ष गरेको इतिहास साक्षी छ । राजाबाट सबैभन्दा प्रताडित भैकन पनि राजाको आवश्यकता छ भन्ने सोच नेपाली कांग्रेस पार्टीमा भएका कारणले पटक पटक राजासँगको सम्झौता गर्न पुगेको हो । कम्युनिष्ट पार्टीमा पनि टुटफुट विभाजन र राजापरस्त नीतिका कारण राजतन्त्र विरोधी आन्दोलनले गति लिन नसकेको साँचो हो । कांग्रेस र कम्युनिष्टहरू राजासँग टकराव लिने नीति लिँदा गणतन्त्रको वातावरण बन्ने राजासँग सम्झौता गर्दा त्यो वातावरण भत्कने अवस्था बन्न पुगेको पनि साँचो हो ।

राजा, राणा र कांग्रेसको दिल्ली सम्झौतापश्चात राजा त्रिभुवनले भाषण गरे अबको नेपालको शासन व्यवस्था जनताद्वारा निर्वाचित वैधानिक सभाद्वारा गठित सभाले बनाएको विधानबमोजिम गणतन्त्रात्मक हुने छ । तर त्यो अवसर राजनैतिक दल र तिनका नेताले छोप्न सकेनन् । बरु तीन चौथाइको नेतृत्व गरेको निर्वाचित सरकारलाई अपदस्त गर्ने राजा महेन्द्रको कदमलाई प्रतिवाद गर्न सकेन । त्यसबखत राजाको त्यस कदमको प्रतिवाद गर्न सकेको भए सम्भवतः राजतन्त्रको अन्त र गणतन्त्रको स्थापना त्यतिबेलै साकार हुने थियो । यसैगरी २०३६ साल २०४६ साल सबै आन्दोलनहरू चरम उत्कर्षमा पुग्ने अन्तत राजासँग

सम्झौतामा आन्दोलन टुँगिने भएका कारण गणतन्त्र सम्भव भएन ।

पछिल्लो चरणमा जब माओवादीले जनयुद्धको घोषणा गऱ्यो तब मात्रै राजतन्त्र विरुद्धको आन्दोलनले गति लिने काम भयो । अन्ततः गणतन्त्रले साकार रुप प्राप्त गरयो । यसका लागि अन्तरिम संविधानको निर्माण सो संविधानले राजतन्त्रात्मक संविधानका रुपमा रहेको २०४७ सालको संविधानको खारेजी महत्वपूर्ण कार्य थियो । त्यसै अन्तरिम संविधानमा टेकेर संविधान सभाको निर्वाचन र निर्वाचित संविधान सभाको पहिलो बैठकबाट राजतन्त्रको अन्त र गणतन्त्रको घोषणा संभव भयो ।

अबको चुनौती सोको प्रभावकारी कार्यान्वयनमा छ । राजतन्त्रको अन्त र गणतन्त्रको घोषणापश्चात पनि समाज गणतान्त्रिक हुन सकेन भन्ने आलोचना भइरहन्छ । अझै एउटा राजा फालेर सत्र थरी राजा पाल्नुपर्ने अवस्थाको सिर्जना भयो भन्ने टिप्पणी पनि यदाकदा सुन्न पाइन्छ । यसका साथै राजतन्त्रको अन्त गरी गणतन्त्रको स्थापना भयो । राजाका ठाउँमा राष्ट्रपति निर्वाचन गरेर राखियो तर राजा र राष्ट्रपतिको जीवन व्यवहारमा भिन्नता देख्न पाइएन भन्ने आलोचनाका स्वरहरू बाक्लै सुनिन थालेका छन् ।

केन्द्रमा राष्ट्रपति र प्रदेशमा प्रदेश प्रमुखको संस्कार, संस्कृति एवम् जीवन व्यवहार राजाको भन्दा कम भएन । यसैको सिको मन्त्री र निर्वाचित पदाधिकारीहरूसम्मै हुन पुग्यो । यो पक्ष दुःखद पक्ष हो र यसको रुपान्तरण आजको आवश्यकता हो । गणतान्त्रिक चेत र संस्कारको विकास र समाजको गणतान्त्रिक संस्कृतिसहितको रुपान्तरण आजको आवश्यकता हो ।

**संघीयकरणको अवसर**

एकात्मक शासन व्यवस्थालाई अन्त गरी संघीय शासन प्रणाली अवलम्बन गर्ने संविधानको मूल मर्म हो । 'सामन्ती निरंकुश केन्द्रिकृत र एकात्मक राज्य व्यवस्थाले सिर्जना गरेका सबै प्रकारका विभेद र उत्पीडनको अन्त गर्दै...' भन्ने संविधानको प्रस्तावनाको यो बन्दोबस्तले संघीयताको औचित्य पुष्टि गर्दछ । नेपालको सन्दर्भमा एकात्मक राज्यको अन्त र संघीयताको अवलम्बन राज्यलाई लोकतान्त्रीकरणको एक प्रक्रियासमेत हो । आधारभूत वर्गका जनताको राज्यशक्तिमा पहुँचको अभाव विकास निर्माणका विषयसमेत पहुँचका भरमा निर्धारण हुने अवस्था, राज्यबाट प्राप्त गर्ने सेवामा केन्द्रको हालीमुहाली एकात्मक राज्यका समस्या थिए । अवसरजति केन्द्र र नेतामा दायित्वजति स्थानीय जनतामा हुने अवस्था थियो । यसै अवस्थालाई अन्त गर्न संघीयता अवलम्बन गरिएको हो । त्यसो त संघीयता भयो भने देश टुक्रिन्छ भन्ने एकाथरी र अर्काथरी संघीयता भएन भने देश एकताबद्ध हुनै सक्दैन भन्ने विवाद र बहसका बिचमा नेपाली संघीयता स्वीकार गरिएको हो । कस्तो संघीयता र कसरी सञ्चालन गर्ने संघीयता भन्ने बारेमा बहस अत्यन्त कम र संघीयताको पक्ष र विपक्षमा बहस बढी भएका कारणको परिणाम पनि हाम्रो संघीयता हो । अझ खोलेर भन्नुपर्दा संघीयताका बहस नाम, सङ्ख्या र सीमानामा बढी केन्द्रित तर अधिकारको सूचीमा विल्कूल बेवास्ता संविधान निर्माणका बखतको वास्तविकता थियो । यसकै परिणामस्वरुप पहिचान र सामर्थ्यका आधारमा संघीयता भनियो तर संघीय संरचना निर्माण गर्दा न पहिचान न सामार्थ्यले पुष्टि गर्न सक्ने अवस्था भयो । संघीयता भरसक नस्वीकार्ने स्वीकार्नै पऱ्यो भने विकृत र नाम मात्रको स्वीकार गर्ने मनोविज्ञान संविधान निर्माण गर्दाका बखत नै सक्रिय थियो । त्यही मनोविज्ञानका खेलाडीहरू अहिले सतहमा छन् । ती खेलाडीहरूको मनोविज्ञान र तिनले पारेको संघीयता विरोधी हर्कत र त्यसको अन्तर्य बुझेर तिनको

व्यवस्थापन आजको अवसर र चुनौती दुवै हो ।

संघीयताका कारणले आज ७५३ स्थानीय तह, ७ प्रदेश र संघ गरी ७६१ ठाउँमा कानुन बन्ने बजेट बन्ने, नीति योजना बन्ने र कार्यान्वयन हुने अवस्था आइपरेको छ । हिजो दुर दराजको योजनासमेत सिंहदरबारमा बन्थ्यो । विकास योजना जसको चाहना हो उसको जानकारी बिना नै बन्ने गर्दथ्यो । बजेट बाँडफाँटको हालत पनि त्यसै प्रकारको थियो । तर आज त्यो अवस्था छैन । हरेक ६७४३ वडा आफैंमा विकास योजना छनोट गर्न सक्षम छन् । ७५३ पालिका आफनो बजेट आफैं बनाउँछन् । आफना कानुन आफैं बनाउछन् र सानातिना मुद्दा मामिलासमेत न्यायिक समितिमार्फत आफैं समाधान गर्छन् । स्थानीय सेवा प्रवाहमा अब स्थानीय जनताले सिंहदरबारमा पहुँच पुऱ्याउन पर्दैन । वास्तवमा संघीयताका कारणले शासन व्यवस्थामा लोकतान्त्रीकरणसमेत भएको छ । जनता आफैं शासक भएका छन् । आफ्नो कानुन आफैं बनाउने, आफैं संशोधन गर्ने, आफ्नो बजेट आफैं बनाउने आफ्नो विकास आफैं गर्ने, करका दरहरू आफना प्रतिनिधिहरूमार्फत आफैं निर्धारण गर्ने समेतका अधिकारले सम्पन्न भएका छन् । यो अवस्था स्थानीय हुँदै प्रदेशका हकमा समेत लागु भएको छ । यो अवस्थाको सम्प्रेषण आजको राजनीतिको मूल अवसर हो । यसका बाबजुद पनि संघीयकरण गर्न नदिन एकात्मक मानसिकता प्रभावी छ । संघीयकरणका लागि बन्नुपर्ने कानुनहरूको अभाव छ । संघीयकरणका लागि बाँडफाड गरिएको अधिकारको निर्वाध प्रयोग आजको समस्या बनेको छ । संघले अधिकार छाडन नचाहने स्थानीय र प्रदेशले लिन नसक्ने अवस्थाका कारणले कैयन समस्या देखापरेका छन् ।

समन्वय, सहकार्य र सहअस्तित्व संविधानले स्वीकार गरेको संघीयताको सिद्धान्त हो । यस सिद्धान्तलाई व्यवहारमा उतार्न कैयन चुनौतीहरू छन् । ती चुनौतीको सामना गर्दै चर्चामा आएका समस्याहरूको समाधान गर्ने र प्राप्त अवसरहरूलाई चुम्ने अवसर यतिबेलाको राजनीतिलाई प्राप्त छ । तीन तहबिचको समन्वयलाई व्यवस्थित गर्न संविधान र कानुनले खडा गरेका संयन्त्रहरूको क्रियाशीलता आजको अर्को चुनौती बनेको छ । आवश्यक कानुन निर्माण तिनको कार्यान्वयन, संघीयता सफलीभूत पार्न आवश्यक संयन्त्रहरूको क्रियाशीलतामा जोड आजको आवश्यकता हो ।

**समावेशीकरणको अवसर**

गणतन्त्र, संघीयता र धर्मनिरपेक्षतासँगै समावेशीकरण यस संविधानको महत्वपूर्ण उपलब्धि हो । हिजो एकल जातीय वर्चश्व कायम थियो । आज समावेशिता राजनीतिको विशेषता बन्न पुगेको छ । आधा जनसङ्ख्या भएको महिलाको उपस्थिति राज्यका हरेक संरचनामा शून्यप्राय थियो । आज त्यो अवस्थाको अन्त भै कम्तिमा एकतिहाइ उपस्थिति अनिवार्य बनेको छ । यो प्रतिशतलाई बराबरीमा पुऱ्याउन राज्यले संयुक्त राष्ट्र संघीय दिगो विकास लक्ष्यमार्फत प्रतिबद्धता व्यक्त गरिसकेको छ । प्रशासनयन्त्र समावेशी बन्ने प्रक्रियामा छ । सरकारीबाहेक निजी क्षेत्रमा समेत समावेशीकरणको अवस्थामा उल्लेख्य रुपमा परिवर्तन भएको छ । यो संविधानका यी महत्वपूर्ण उपलब्धि हुन् । यसको सम्प्रेषण ठिक ढङ्गले हुन सकिरहेको छैन । भएका उपलब्धि सम्प्रेषण गर्ने अवसर आज प्राप्त छ ।

यसैगरी समावेशीकरण नचाहने मनोविज्ञान र पात्रहरू हिजो थिए, आज पनि छन् हिजो सुशुप्त थिए, आज ती सक्रिय भएका छन् । तिनीहरू समावेशीकरण पनि उल्टाउन चाहन्छन् । यो आजको चुनौती हो ।

त्यसैले भएका उपलब्धिको सम्प्रेषण गर्ने, बाँकी उपलब्धि हासिल गर्ने र समावेशीकरणलाई उल्टाउन खोज्ने प्रवृत्तिलाई परास्त गर्ने अवसर र चुनौती दुवै आजको राजनीतिमा उपलब्ध छ।

**धर्मनिरपेक्षतावादी अभियानको अवसर**

धर्म निरपेक्षता नेपालको संविधानको अर्को महत्वको विषय हो। नेपाल हिन्दू अधिराज्य थियो। नेपाली जनता भने बहुधार्मिक छन्। 'विविधतामा एकता नेपाली समाजको विशेषता थियो। तर यसका विपरीत राज्यले जबर्जस्त हिन्दू अधिराज्य घोषणा गरेको थियो। हिन्दूबाहेकको अन्य धर्मावलम्वीहरूले हिन्दू अधिराज्य भनिएका कारणले यो देश मेरो हो भन्न सक्नेसम्म अवस्था पनि थिएन। यो संविधानले धर्म व्यक्तिको आस्था र विश्वासको विषय हो, राज्यको कुनै धर्म हुँदैन। राज्य आफैंमा धर्म निरपेक्ष हुन्छ भन्ने सत्यलाई यो संविधानले स्वीकार गरेको छ। यसै तथ्यका आधारमा नेपाल धर्म निरपेक्ष घोषणा भएको हो। यो सत्यलाई उजागर गर्ने अवसर प्राप्त छ। चुनौती भने परिवर्तन उल्टाउन चाहनेहरू नै हुन। परिवर्तन उल्टाउन चाहनेहरूले नेपाललाई धर्मनिरपेक्ष घोषणा गरेको प्रति आपत्ति जनाएका छन्। उनीहरू धर्मनिरपेक्षतासहित संघीयता गणतन्त्र र समावेशितासमेतलाई उल्टाउन चाहन्छन्। यो चुनौती हो। परिवर्तनका उपलब्धि उल्टाउनेहरूका विरुद्ध सामना गर्नै प्रतिवाद गर्ने र प्राप्त उपलब्धिलाई अझ बढी प्रवर्धन गर्ने चुनौती र अवसर सँगसँगै प्राप्त छ।

**अन्तमा**

संविधान एक जीवित दस्तावेज हो। यसको निरन्तर परिस्कार संशोधन र परिमार्जन भैरहन्छ। नयाँ संविधान तत्काल लागु गर्नुपर्ने व्यवस्थाहरूको कार्यान्वयनदेखि दीर्घकालसम्म लागु गर्दा हुने प्रावधानहरूसम्म संविधानमा समेटिएका हुन्छन्। कैयन प्रावधानहरू तत्काल जारी गर्नासाथ लागु गर्न जरुरी हुन्छ भने कैयन प्रावधानहरूले कार्यान्वयन गर्न समय लिने गर्दछन्। यसै वास्तविकतालाई मध्यनजर राख्दै संविधानको कार्यान्वयनमा समय तालिका बनाउन र तदनुकुल कार्यान्वयन गर्न जरुरी छ। नेपालको सन्दर्भमा संविधानमा व्यवस्थित प्रावधानहरूको कार्यान्वयन कानुन निर्माणका आधारमा[6] गर्ने काम पनि यदाकदा बाँकी छ भने संविधानको मर्ममा सहमत असहमत भएकै आधारमा त्यसलाई कार्यान्वयन गर्ने वा नगर्ने मनोविज्ञानले काम गरेको छ। यसका बाबजुद पनि कानुन निर्माण गरेर कार्यान्वयन गर्ने संवैधानिक व्यवस्थाहरू आफनो गतिमा छन् भने सहमत वा असहमत भएका व्यवस्थाका प्रावधानहरू कार्यान्वयन गर्न र नगर्न प्रत्यक्ष अप्रत्यक्ष प्रयत्नहरू हुने गरेका छन्। यस कुराको पहिचान गर्दै कार्यान्वयनलाई सहज बनाउन दत्तचित्त भै लाग्न जरुरी छ।

**सन्दर्भ सामग्रीः**

..........नेपाल सरकार, कानुन, न्याय तथा संसदीय मामिला मन्त्रालय, कानुन किताब कम्पनी, *नेपालको संविधान,* बबरमहल काठमाडौँ।

..........नेपाल सरकार, कानुन, न्याय तथा संसदीय मामिला मन्त्रालय, कानुन किताब कम्पनी, *संघ, प्रदेश र स्थानीय तह (समन्वय तथा अन्तर सम्बन्ध) ऐन २०७७,* बबरमहल काठमाण्डौ।

6 Federal, Provincial and Local(coordination and Interrelation) Act 2077.

...........................Government of Kenya, Constitution of Kenya (2010), Online version available in http://www.kenyalaw.org:8181/exist/kenyalex/actview.xql?actid=Const2010

***.........................Government of India, Constitution of India as on May, 2022, Online version, available in https://legislative.gov.in/constitution-of-india/***

***.........................Government of South Africa, Constitution of South Africa,(1996) Online version available in https://www.gov.za/documents/constitution/constitution-republic-south-africa-1996-1***

***Book and Articles***

Fabre, Cécile, 'The Implementation of Constitutional Social Rights', *Social Rights Under the Constitution: Government and the Decent Life* (Oxford, 2000; online edn, Oxford Academic, 1 Nov. 2003), https://doi.org/10.1093/0198296754.003.0006, accessed 9 Sept. 2023.

Dev, J. (2022). Nepal's Constitutional Development and the Challenges of Constitution Making. In T. Ginsburg & S. Bisarya (Eds.), Constitution Makers on Constitution Making: New Cases (Comparative Constitutional Law and Policy, pp. 194-211). Cambridge: Cambridge University Press. doi:10.1017/9781108909594.006

***Websites:***

https://vision2030.go.ke/project/development-of-laws-to-implement-the-constitution/

https://www.pulp.up.ac.za/edited-collections/the-implementation-of-modern-african-constitutions-challenges-and-prospects

https://www.historydiscussion.net/history-of-india/indian-constitution-farming-implementing-and-structure/688

https://constitutionnet.org/country/india

https://naturallysavvy.com/blog/problem-vs-challenge-vs-opportunity



# समृद्धिको मार्गमा अग्रसर भरतपुर महानगर



✍ रेनु दाहाल*

पवित्र नारायणी नदी किनार तथा प्रसिद्ध धार्मिकस्थल देवघाटधामको काखमा अवस्थित भरतपुर महानगरपालिका ऐतिहासिक, सामाजिक, आर्थिक, राजनीतिक, धार्मिक तथा साँस्कृतिक पहिचानका साथ मुलुककै अग्रणी नगरीका रुपमा रहेको छ। २०३५ सालमा तत्कालीन भरतपुर गाउँ पञ्चायत र नारायणगढ गाउँ पञ्चायतलाई मिलाई भरतपुर नगर पञ्चायतका रुपमा रही २०४८ सालदेखि भरतपुर नगरपालिकाको रुपमा स्थापित भएकोमा नेपाल सरकार मन्त्रिपरिषद्को मिति २०७१/०८/१६ को निर्णयले यस भरतपुर नगरपालिकालाई आसपासका पाँच गाउँ विकास समिति मंगलपुर, फूलबारी, गीतानगर, शिवनगर र पटिहानीलाई समावेश गरी भरतपुर उपमहानगरपालिकामा स्तरोन्नति गरिएको थियो। पुनः नेपाल सरकार मन्त्रिपरिषद्को मिति २०७३/११/२७ को निर्णयले यस भरतपुर उपमहानगरपालिकामा नारायणी नगरपालिका, चित्रवन नगरपालिका र कविलास गाउँ विकास समितिसमेत थप गरी भरतपुर महानगरपालिकामा स्तरोन्नति भएको हो।

नेपालको संविधानमा भएको व्यवस्थाबमोजिम तीन तहको संघीय शासन पद्धतिअन्तर्गत स्थानीय सरकारका रुपमा रहेको भरतपुर महानगरपालिका आफैंमा अधिकार सम्पन्न छ। यस महानगरपालिकामा पहिलो पटक जननिर्वाचित नगरप्रमुखको रुपमा मेरो नेतृत्वमा नगर उपप्रमुख पार्वती शाह ठकुरी, वडा अध्यक्ष, कार्यपालिका सदस्य एवम् सम्पूर्ण वडा सदस्यहरू र जुझारु कर्मचारी संयन्त्रसहितको टिमले भरतपुर महानगरपालिकाको विकास र समृद्धिको राष्ट्रिय मानक निर्माण गरेको तथ्य हामी सबैमा सर्वविदितै छ र यो मानक अन्य स्थानीय सरकारका लागिसमेत अनुकरणीय बनेको छ।

नतिजामा विश्वास राख्दै जनमुखी काम गरेर जनताको अपार विश्वास आर्जन गर्न सफल मेरो टिमले

---

* नगर प्रमुख, भरतपुर महानगरपालिका

महानगरपालिकाको विकास तथा सुशासनको गतिलाई थप तिब्रता दिने प्रतिज्ञा गरेको छ। पहिलो कार्यकालमा प्राप्त उपलब्धिलाई संस्थागत गर्दै आमनागरिकलाई सुशासनको पूर्ण प्रत्याभूतिका साथ गुणस्तरीय तथा सर्वसुलभ सेवामार्फत खुशी बनाउने अभियानमा महानगर अहोरात्र खटेको छ।

भरतपुर महानगर आफ्नो विकासको यात्रामा संघ र प्रदेश सरकारसँग भएको सहकार्य, साझेदारी, सद्भाव एवम् सहयोग प्रति सदैव आभारी छ र अबको विकासको यात्रामा पनि निरन्तर सहकार्य, सहअस्तित्व, समन्वय तथा साझेदारी गर्दै संघीय शासन पद्धति संस्थागत गराउन अहोरात्र खटिएको छ। सम्माननीय प्रधानमन्त्री पुष्पकमल दाहाल 'प्रचण्ड'ज्यूको अटुट साथ र सहयोग एवम् महानगरबासी जनताको गहिरो विश्वास र उदाहरणीय सहभागिताबाट सञ्चालित ठुलाठुला महानगरीय गौरवका आयोजनाहरू महानगरको विकासमा कोसेढुंगा सावित हुनेमा ढुक्क हुन सकिन्छ।

दोस्रो कार्यकालका लागि पनि जनताको अपार विश्वास र मायाका साथ नेपाल आमाकी छोरी र मुलुकका महानगरपालिकाहरूमध्ये महिला नगर प्रमुखको रुपमा सुन्दर नगरी भरतपुरको नेतृत्वमा अनुमोदित हुने अवसर पाउँदा गौरव लाग्ने गर्दछ। अत्यन्त सहयोगी र सक्रिय नगर उपप्रमुखज्यसहितका सिंगो जनप्रतिनिधि र इमान्दार एवम् कर्तव्यनिष्ठ कर्मचारी संयन्त्रसहितको साथ र सहयोगमा थुप्रै उल्लेखनीय काम गरिएको छ।

**महत्वपूर्ण उपलब्धि**

मुलुकका ६ वटा महानगरपालिकाहरू मध्ये Medical city तथा शैक्षिक हवको विशेषता बोकेको भरतपुर महानगरपालिकाले पारदर्शी, जवाफदेही तथा विकास प्रक्रियामा नगरवासीको सार्थक एवम् उल्लेखनीय सहभागिताको सुनिश्चितताबाट मात्र महानगरपालिकाले राखेको Motto "मध्य नेपालको सुन्दर शहर : समृद्ध र सुसंस्कृत भरतपुर महानगर" पूरा हुने कुरामा विश्वस्त छौं। यसै कुरालाई दृष्टिगत गर्दै महानगरपालिकाले गर्दै आएको अनुरकणीय कार्य तथा सिकाइसमेतलाई प्राप्त उपलब्धिको रुपमा लिपिबद्ध गर्ने प्रयास गरिएको छ।

**शहरी सौन्दर्य एवम् पूर्वाधार विकासः**

महानगरभित्र सडक-सञ्जाललाई विस्तार एवम् व्यवस्थित गर्दै महानगरीय रिङ्गरोड, लिङ्करोडसहित महानगरपालिकामा ६२२ कि.मि. नयाँ पीच सडक, १६४ कि.मि. ग्राभेल र २६.५ कि.मि. ढल निर्माण कार्य सम्पन्न भएको छ। महानगरपालिकाले अत्याधुनिक तथा सुविधा सम्पन्न भौतिक पूर्वाधार निर्माणसँगै शहरी सौन्दर्यलाई सँगसँगै अघि सारेको छ। तीन स्थानमा स्मार्ट शौचालय निर्माण, साइकल लेनसहितको सुविधासम्पन्न सडक, सुविधासम्पन्न सिटिहल, Smart street lighting तथा व्यावसायिक गतिविधिलाई एकीकृत गर्नको लागि बहुउद्देश्यीय भवन निर्माण जस्ता कार्य केही दृष्टान्तको रुपमा रहेका छन।

**विकासमा सहभागिता**

विकासमा सरोकारवालाको सार्थक सहभागिताबाट अपनत्वबोध कायम भई विकास निर्माणमा गुणस्तरीयता तथा टिकाउपूर्ण विकास हुने कुरामा कसैको दुईमत रहँदैन। यस्तै प्रकारको विकासको मोडेल भरतपुर महानगरपालिलकामा पाउन सकिन्छ। विकास निर्माणमा ७० प्रतिशतसम्म जनसहभागिता उठ्ने गरेको

पाइन्छ। आ.व. २०७९/०८० मा लगभग ४० करोड नगद तथा श्रमदानवापत जुट्नु र लगानी तथा सहभागिताको लागि उत्प्रेरित हुनु यसको ज्वलन्त उदाहरण हो।

**विज्ञताको उपयोग**

महानगरपालिकाले राष्ट्रिय तथा स्थानीय तहमा ख्याति प्राप्त तथा विशिष्ट व्यक्तित्वहरूको रोष्टर तयार गरेको छ। महानगरपालिकालाई जुन क्षेत्रमा आफुलाई विज्ञताको आवश्यकता पर्दछ सो क्षेत्रका प्राज्ञिक तथा विषय विज्ञसँग छलफल, अन्तरक्रिया तथा राय सुझावको आधारमा Situational analysis गरी उपयोग गर्ने गरेको छ। सो कार्यबाट Mature decision हुनुको साथै Knowledge sharing and transfer हुदै जाने परिपाटिको विकास भएको छ। साथै महानगरपालिकाले महानगरको Vision paper तथा आन्तरिक नियन्त्रण निर्देशिका सभाबाट परिमार्जनसहित पारित गरेको अवस्था छ। यद्यपि यसको व्यावहारिक कार्यान्वयन हुँदै गरेको अवस्था छ।

**वित्तीय सुशासन र सेवा प्रवाह**

आ.व. २०७४/०७५ सम्मको पुरानो बेरुजु रकम रु. ६५ करोड रहेकोमा पछिल्लो आ.व. २०७८/०७९ सम्मको कुल बेरुजु रकम रु. १ अर्ब ४४ करोड कायम हुन आएको छ। उक्त रकममा पेश्की बेरुजूसमेत समावेश भएको हो। पछिल्लो आ.व. २०७८/०७९ मा मुलुकको ६ वटा महानगरपालिकामा सबैभन्दा कम बेरुजु कायम गरी आर्थिक सुशासन कायम गर्ने महानगरको रुपमा परिचय बनाउन सफल रहेको छ। सेवा प्रवाहलाई प्रविधिमैत्री बनाउदै लगिएको छ। वडा कार्यालयलाई सेवा वितरणको एकाइको रुपमा र नगर कार्यपालिकाको कार्यालयलाई नीति निर्माण तथा सहजीकरण केन्द्रको रुपमा प्रशासनिक विकेन्द्रीकरणको अभ्यास गरी सेवा प्रवाहमा प्रभावकारिता अभिवृद्धि गर्दै लगिएको छ।

**न्यायिक समितिको प्रभावकारी कार्यसम्पादनः**

स्थानीय सरकार सञ्चालन ऐन, २०७४ को दफा ४६ देखि ५३ सम्मको अधिकार क्षेत्र तथा न्याय सम्पादन प्रक्रियाका सम्बन्धमा नगर उपप्रमुखज्यूको सक्रियतामा स्थानीय तहको संस्थागत क्षमता स्वमूल्याङ्कनमा १०० प्रतिशत अंक हासिल गर्न सफल हुनुले भरतपुर महानगरपालिकाको न्याय सम्पादनको काम प्रभावकारी रहेको देखिन्छ।

**स्वास्थ्य तथा सामाजिक विकासः**

(क) महानगरपालिकाले महिला, बालबालिका, अपाङ्गता भएका व्यक्ति, असहाय, द्वन्द्वपीडित तथा आर्थिक सामाजिक रुपमा पछाडि परेका वर्ग तथा समुदायका लागि देहायका सहयोगात्मक सेवा प्रदान गर्दै आइरहेको छ।

(ख) सुत्केरी महिलाहरूका लागि स्वास्थ्य संस्थासम्म लैजादा निःशुल्क एम्बुलेन्स सेवा वा यातायात खर्च प्रदान गर्ने गरिएको छ।

(ग) सामुदायिक विद्यालयमा अध्ययनरत विपन्न छात्राहरूका लागि विगत तीन आ.व.देखि निःशुल्क

साइकल वितरण गर्दै आइरहेको छ ।

(घ) महानगरबासी महिलाहरूबाट सरकारी स्वास्थ्य संस्थामा जन्मने छोरीहरूका लागि छोरी बीमा कार्यक्रम सञ्चालन गरिएको छ ।

(ङ) अपाङ्गताको (ग) वर्गका व्यक्तिहरूका लागि निःशुल्क स्वास्थ्य बीमा कार्यक्रम सञ्चालन गरिएको छ ।

(च) अन्ठाउन्न वर्ष उमेर पूरा भएका महिला स्वास्थ्य स्वयम्सेविकाहरूका लागि नगद रु.५० हजारसहित सम्मानजनक बिदाई गर्ने व्यवस्था गरिएको छ ।

(ज) जनयुद्ध तथा सबै प्रकारका आन्दोलनमा मृत्यु भएका वा बेपत्ता पारिएका व्यक्तिका परिवारका सदस्यलाई जीविकोपार्जनका लागि मासिक दुई हजारका दरले आर्थिक सहायता प्रदान गर्ने गरिएको छ ।

(झ) प्रजनन रुग्णता एवम् पाठेघरको मुखको क्यान्सर स्क्रिनिङ्गको कार्यक्रम नियमित रुपमा सञ्चालन गर्ने गरिएको छ ।

(ञ) महिला बालबालिका एवम् अपाङ्गता भएका व्यक्तिहरूको अधिकार संरक्षण संवर्द्धन तथा सेवा प्रवाहका लागि हालसम्म १० वटा मापदण्ड तथा कार्यविधि तर्जुमा गरिएको छ ।

**खानेपानीमा सहुलियत**

स्थानीय तहको दोस्रो आवधिक निर्वाचनमा निर्वाचित भएपश्चात प्रतिमहिना सात हजार लिटरसम्म खानेपानी उपभोग गर्ने नगरबासी उपभोक्ताहरूको महसुल छुट गर्ने व्यवस्था गरिएको छ ।

**वातावरण तथा विपद् व्यवस्थापन**

(क) सरसफाइ तथा विपद् व्यवस्थापनका कार्यमा प्रत्येक वडामा रहेका टोल विकास संस्थालाई Functional बनाउँदै लगिएको छ ।

(ख) महानगरपालिका स्तरमा मुलुककै पहिलो आपतकालीन कार्यसञ्चालन केन्द्र स्थापना र सञ्चालन गरिएको छ ।

**कला तथा साहित्य**

(क) महानगरपालिका स्तरमा पहिलो प्रज्ञा प्रतिष्ठान गठन र सञ्चालन (प्राज्ञसभा, प्राज्ञ परिषद् तथा सचिवालय व्यवस्था) गरिएको छ ।

(ख) साहित्यकार/कलाकारहरूलाई साहित्य सिर्जनामा प्रोत्साहन गर्न तीन वटा महानगर प्रज्ञा सम्मान तथा छ वटा प्रज्ञा पुरस्कार स्थापना र वितरणको कार्यलाई निरन्तरता दिइएको छ ।

(ग) नारी स्रष्टालाई मात्रै लक्षित गरी वागीश्वरी प्रज्ञा पुरस्कार स्थापना र वितरणको कार्य प्रारम्भ गरिएको छ ।

(घ) स्रष्टाका पाण्डुलिपि प्रकाशन गर्न कार्यविधि तर्जुमा गरी प्रोत्साहन स्वरुप लेखकलाई नगद सहायता

प्रदान गर्ने कार्यको थालनी गरिएको छ ।

## कृषि तथा पशुपन्क्षी विकास

भरतपुर महानगरपालिकाले प्रतिलिटर दुधमा रु. ३ अनुदानलाई निरन्तरता दिनुका साथै पशुपंक्षी बीमा कार्यलाई प्रभावकारी बनाएको छ। यसले गर्दा उत्पादन वृद्धि भएको महानगरपालिकाको तथ्याङ्कले देखाउँछ। कृषि सूचना नियन्त्रण प्रणालीमार्फत सबै सूचना प्राप्त हुने र कृषि उपजलाई विषादीरहित बनाउनको लागि परीक्षण प्रयोगशालालाई आधुनिक तथा सुविधासम्पन्न (प्रयोगशालाबाट अर्गानो फस्फेट तथा कार्वोमेट परीक्षण भइरहेको) बनाउँदै लगेको छ। कृषिमा आधुनिकीकरण तथा यान्त्रीकरण गर्न विभिन्न मेसिनरी यन्त्र उपकरण वितरण गरेको छ।

## शिक्षा क्षेत्र

(क) महानगरको शिक्षा नीति र शिक्षाक्षेत्रको दस वर्षीय आवधिक योजना तर्जुमा गरी कार्यान्वयनमा ल्याइएको छ।

(ख) सबै अवस्थाका र अपाङ्गता भएका बालबालिकाको शिक्षाको हक सुनिश्चित गर्न अटिजम् अपाङ्गता भएका बालबालिकाका लागि २०७८ मा भरतपुर वडा न. १० मा सम्भवतः देशमै पहिलो भरतपुर बालमन्दिर अटिजम् विशेष विद्यालय र २०८० मा मस्तिष्क पक्षघात भएका बालबालिकाका लागि आदर्श माध्यमिक विद्यालय भरतपुर वडा न. २६ मा मस्तिष्क पक्षघात स्रोतकक्षा स्थापना गरी सञ्चालनमा ल्याइएको छ।

(ग) लक्षित समूहका बालबालिकालाई महानगर छात्रवृत्ति, बालबालिकासँग मेयर कार्यक्रममार्फत न्यानो कपडा वितरण, अपाङ्गता भएका विद्यार्थीलाई सहयोगी सामग्री वितरणको व्यवस्था गरिएको छ।

(घ) अनाथ र सडक बालबालिकाको आवासीय सुविधासहित शिक्षाका लागि एस.ओ.एस. हर्मन माइनर विद्यालय र नागरिक प्रहरी साझेदारी जस्ता संस्थाहरूसँग सहकार्य गरिएको छ।

(ङ) गुणस्तरीय सिकाइ वातावरण निर्माणका लागि सबै सामुदायिक माध्यमिक विद्यालयहरूमा गणित प्रयोगशाला स्थापना, आधारभूत तहमा विषयगत सिकाइ सामग्री उपलब्ध गराई प्रयोगको व्यवस्था मिलाइएको छ।

(च) स्थानीय विषयको कक्षा १-८ सम्मको पाठ्यक्रम निर्माण (हाम्रो गौरव, हाम्रो भरतपुर) गरी विद्यार्थीलाई महानगरको इतिहास, भाषा-संस्कृति, रहनसहन, पेसा व्यवसाय, वातावरण संरक्षणलगायतका विषयमा व्यावहारिक ज्ञान र व्यवहारकुशल सिप सिकाइमा जोड दिइएको छ।

(छ) शिक्षाको गुणस्तर सुधारका लागि वडा तहलाई जिम्मेवार बनाउन वडा शिक्षा समिति गठन गरी वडा स्तरबाट समेत कम्तीमा १०% बजेट शिक्षामा विनियोजन गर्ने नीति कार्यान्वयनमा छ।

(ज) संस्थागत विद्यालयले नियमानुसार उपलब्ध गराउनुपर्ने १०% छात्रवृत्तिलाई पारदर्शी बनाउनुका साथै कक्षा ११ र १२ मा महानगरबाट निष्पक्ष र पारदर्शी विधिबाट छनोट गरी विपन्न, जेहेन्दार र छात्राहरूलाई प्राथमिकतापूर्वक छनोट गरी छात्रवृत्ति उपलब्ध गराइएको छ।

(झ) सामुदायिक विद्यालयमा न्यूनतम् सङ्ख्यामा शिक्षक व्यवस्था गर्न एक कक्षा एक शिक्षकको नीति अवलम्बन गरी महानगरको स्रोतबाट १४० जना युवा स्वयम्सेवक नियुक्त गरी गुणस्तरीय शिक्षण सिकाइको व्यवस्था मिलाइएको छ ।

(ञ) शिक्षा क्षेत्रको विकासका समग्र प्रयासबाट विगत पाँच वर्षको अवधिमा सामुदायिक विद्यालयमा विद्यार्थी सङ्ख्या करिब ६ हजारले वृद्धि भएको छ ।

**युवा तथा खेलकुद**

(क) युवामा सकारात्मक सोच र उद्यमशीलता प्रवर्धन गर्न सफल उद्यमी युवा सम्मानको थालनी गरिएको छ । वातावरण संरक्षण र सामाजिक सुधारका क्षेत्रमा युवा संस्थाहरूसँग समन्वय र सहकार्य गरिएको छ । युवा स्वयम्सेवक परिचालनलाई प्राथमिकता दिइएको छ ।

(ख) खेलकुदको विकासका लागि 'एक वडा एक खेलमैदान' र एक 'विद्यालय एक खेलमैदान'को अवधारणाअनुसार खेल पूर्वाधार विकासका साथै खेल प्रतियोगिता र खेलाडी प्रोत्साहन गरिएको छ ।

(ग) देशकै गौरवको आयोजनाका रूपमा निर्माणाधीन गौतमबुद्ध अन्तर्राष्ट्रिय क्रिकेट रङ्गशालाको निर्माणमा देखिएको समस्या समाधान गरी निर्माण कार्य सुचारू गरी सम्पन्न गर्न संघ सरकार समक्ष आवश्यक पहल गरिएको छ ।

**सामाजिक तथा रोजगारीको क्षेत्र**

महानगरपालिकाले भौतिक विकाससँगै सामाजिक विकासलाई पनि उत्तिकै महत्वमा राखी कार्य अघि बढाएको छ । ठुलो सङ्ख्यामा फरकफरक विधामा तालिम प्रदान गरी रोजगारीसँग तादात्म्य कायम गरेको छ । यस आ.व.देखि निजी क्षेत्रसँगको सहकार्यमा रोजगार बैंकको अवधारणालाई अघि सारिएको छ । साथै सहगोगापेक्षी सडक मानवरहित महानगरपालिका घोषणा गरी नेपालको पहिलो महानगरपालिकाको रुपमा आफूलाई स्थापित बनाउन सफल भएको छ ।

**पर्यटन प्रवर्धन**

महानगरपालिकाले संघ सरकार र प्रदेश सरकारको पर्यटकीय गन्तव्यको सूचीमा परेका पर्यटकीय गन्तव्यहरूका अलावा धार्मिक, सांस्कृतिक, प्राकृतिक तथा ऐतिहासिक महत्वका दृष्टिले प्रसिद्ध स्थानहरूलाई पर्यटकीय गन्तव्यको रुपमा पहिचान गरी संघ, प्रदेश, निजी क्षेत्र, नागरिक समाज र महानगरबासी जनताको साथ र सहयोगमा सन् २०२४ लाई "घुमौं भरतपुर" भन्ने नारासहित भरतपुर भ्रमण वर्षको रुपमा मनाउने निर्णय गरेको छ जसले आन्तरिक एवम् बाह्य पर्यटकहरूलाई आकर्षित गरी पालिकाको मात्र नभएर मुलुककै आर्थिक क्षेत्रमा सकारात्मक सुधार गराउने विश्वास लिइएको छ ।

**अबको कार्यदिशा**

निर्वाचनको समयमा महानगरबासी जनता समक्ष राखेका प्रतिबद्धताहरू इमान्दारिताका साथ पूरा गर्ने समयमा हामी आइपुगेका छौं । हाम्रो प्रतिबद्धतानुसार शिक्षा क्षेत्रको रुपान्तरण गरी गरिखाने सीपमूलक

प्राविधिक शिक्षाको सुनिश्चिता गर्ने, महानगरपालिकालाई हरियाली सुन्दर र लगानीमैत्री सहरको रुपमा विकास गर्ने, मेडिकल सिटी गुणस्तरीय शिक्षाको हव तथा दिगो विकासमैत्री पूर्वाधारको सहरका रुपमा विकास गरी देशका स्थानीय तहहरूको आदर्श बेञ्चमार्कको रुपमा स्थापित गर्ने सपना र योजना रहेको छ। यसका लागि हामीलाई विगतमा जस्तै संघ र प्रदेश सरकारको अटुट विश्वास, सदभाव र सहयोग आवश्यक परेको छ। महानगरपालिकाको प्राथमिकतामा परेको व्यवस्थित ढल विकास सञ्जाल निर्माण, राप्ती तथा नारायणी नदीको तटबन्धको पूर्णता, गौतम बुद्ध अन्तर्राष्ट्रिय क्रिकेट रंगशालाको पूर्णता, एयरपोर्ट विस्तार, महानगरपालिकाको प्रशासकीय भवन निर्माण कार्यलाई पूर्णता, नारायणीमा सिग्नेचर पुल तथा पश्चिम चितवन र नवलपरासी जोड्ने पक्की पुल, शीत भण्डार निर्माण, राप्ती तटबन्ध, ओभरहेड ब्रीज, ट्राफिक लाइट, स्मार्ट सडक बत्ती जडान, नगर स्तरीय पार्क, व्यवस्थित पशु वधशालालगायत गौरवका परियोजनाहरूको समयमै निर्माण सम्पन्न गर्नका लागि स्रोत सुनिश्चितता सम्बन्धमा संघ तथा बागमती प्रदेश सरकारलाई अनुरोध गरिएको छ। त्यसैगरी महानगरपालिकाको दिगो फोहोर व्यवस्थापनको लागि विस्तृत अध्ययन गरी देखिने गरी काम पूरा गर्ने मेरो कार्यकालको प्रमुख लक्ष्य रहेको छ।

**अन्त्यमा,**

उल्लेखित पूर्वाधार विकासका दृष्टान्त तथा शिक्षा, स्वास्थ्य, सुशासन र कोरोना महामारीलगायतका विपद् व्यवस्थापन, पर्यटन प्रवर्धन एवम् आर्थिक-सामाजिक विकासमा भएका कार्यलाई संस्थागत गर्नु एवम् महानगरपालिकाको विकास र समृद्धिको यात्रामा हातेमालो गर्दै अघि बढ्नु वर्तमान समयको माग र महानगरबासी जनताको अभूतपूर्व विश्वासप्रतिको सच्चा सम्मान हो। यसप्रति म र मेरो नेतृत्वको जनप्रतिनिधि तथा कर्मचारी संयन्त्र पूर्ण प्रतिबद्धताका साथ निरन्तर अगाडि बढिरहने छ।



# नेपालको संविधान र संवैधानिक निकाय




✍ टंकमणि शर्मा*   ✍ चन्द्र कान्त भण्डारी**

### १. नेपालको संवैधानिक विकासक्रम

आधुनिक नेपालको संवैधानिक विकासक्रम हेर्दा पहिलोपटक वि.स. २००४ मा नेपाल सरकार वैधानिक कानुन जारी भएको देखिन्छ। त्यसपछि वि.स. २००७ सालको राजनीतिक परिवर्तन पश्चात नेपाल अन्तरीम शासन विधान, २००७ लागू भयो। यी दुई विधान राजनीतिक संक्रमणकालको लागि बनाइएका कानुनहरू थिए। वि.स. २०१५ साल फागुन १ गते पहिलो संविधान स्वरुप 'प्रजालाई सर्वतोन्मुखी प्रगति गर्न तथा आफ्नो व्यक्तित्वको उच्चतम विकास गर्न समर्थ तुल्याउन र सँदा प्रजाको इच्छाको कदर गरी चल्ने एक कुशल तथा संवैधानिक राजतन्त्रात्मक ढङ्गको सरकारको व्यवस्थाबाट राजनैतिक स्थिरता ल्याई राजनैतिक, सामाजिक र आर्थिक न्याय तथा राष्ट्रको एकता कायम गर्न' भन्ने व्यहोरा प्रस्तावनामा उल्लेख गरी नेपाल अधिराज्यको संविधान, २०१५ जारी भयो।

तर वि.स. २००७ सालको राजनैतिक उपलब्धीलाई खारेज गरी वि.स. २०१९ पौष १ गते 'नेपाल अधिराज्य र नेपाली जनताको सर्वोत्तम हित र समुन्नतिको निमित्त लोक सम्मतिको अनुकूल शासन व्यवस्था चलाउनु वाञ्छनीय भएको र त्यस्तो व्यवस्था जनजीवनमा आधारित, राष्ट्रिय प्रतिभा र परम्परा सुहाउँदो, तलैदेखि उठी सम्पूर्ण जनताको क्रियाशील सहयोग पाउने र विकेन्द्रीकरणको सिद्धान्तलाई अंगाल्ने दलविहीन प्रजातान्त्रिक पञ्चायत प्रणालीद्वारा मात्र सम्भव छ भन्ने हाम्रो दृढ विश्वास भएको' भन्ने व्यहोरा प्रस्तावनामा उल्लेख गरी नेपालको संविधान, २०१९ जारी गरियो।

---

* नेपालका पूर्वमहालेखापरीक्षक

**नायव महालेखापरीक्षक, महालेखापरीक्षकको कार्यालय

दलविहीन पञ्चायती व्यवस्था विरुद्ध वि.स. २०४६ मा भएको जनआन्दोलनको माध्यमबाट संवैधानिक परिवर्तन गर्ने जनादेशबमोजिम प्रत्येक नेपाली नागरिकको आधारभूत मानव अधिकार सुरक्षित गरी स्वतन्त्रता र समानताको आधारमा नेपाली जनताकाबिच भ्रातृत्व र एकता कायम गरी बालिग मताधिकार, संसदीय शासन प्रणाली, संवैधानिक राजतन्त्र तथा बहुदलीय प्रजातन्त्रलाई सुदृढीकरण गर्न र स्वतन्त्र एवम् सक्षम न्याय प्रणालीको व्यवस्था गरी कानुनी राज्यको अवधारणालाई साकार पार्न भन्ने व्यहोरा प्रस्तावनामा उल्लेख गर्दै वि.स. २०४७ साल कात्तिक २३ गते नेपाल अधिराज्यको संविधान, २०४७ जारी भयो ।

वि.स. २०४७ मा बहुदलीय व्यवस्था पूनर्सथापना भएतापनि तत्पश्चात् भएका राजनैतिक गतिविधि तथा खास गरी १० वर्षे सशस्त्र संघर्षको परिणामस्वरुप तत्कालीन राजनीतिक दलहरूले देशमा विद्यमान वर्गीय, जातीय, क्षेत्रीय, लैंङ्गिक समस्याहरूलाई समाधान गर्न राज्यको अग्रगामी पुनर्संरचना गर्ने सङ्कल्प गर्दै तथा नेपाली जनताको आफ्नो लागि आफै संविधान बनाउन पाउने र भयमुक्त वातावरणमा संविधान सभाको स्वतन्त्र र निष्पक्ष निर्वाचनमा सहभागी हुन पाउने आधारभूत अधिकारको प्रत्याभूति गर्दै राजतन्त्रको विधिवत् अन्त्य गरी नेपाल एक संघीय, लोकतान्त्रिक गणतन्त्रात्मक राज्य भएको घोषणा गर्दै हालसम्मका क्रान्ति र आन्दोलनबाट प्राप्त उपलब्धिहरूलाई संस्थागत गर्न संविधान सभाबाट नयाँ संविधान नबनेसम्मको लागि राजनैतिक सहमतिबाट नेपालको अन्तरिम संविधान, २०६३ जारी भयो । यसै संविधान अन्तर्गत रही वि.स. २०६४ र वि.स. २०७० मा दुईपटक निर्वाचित भएको संविधान सभाबाट राष्ट्रहित, लोकतन्त्र र अग्रगामी परिवर्तननका लागि नेपाली जनताले पटकपटक गर्दै आएका ऐतिहासिक जन आन्दोलन, सशस्त्र संघर्ष, त्याग र बलिदानको गौरवपूर्ण इतिहासलाई स्मरण एवम् सहिदहरू तथा बेपत्ता र पीडित नागरिकहरूलाई सम्मान गर्दै सामन्ती, निरंकुश, केन्द्रीकृत र एकात्मक राज्यव्यवस्थाले सृजना गरेका सबै प्रकारका विभेद र उत्पीडनको अन्त्य गर्दै बहुजातीय, बहुभाषिक, बहुधार्मिक, बहुसांस्कृतिक तथा भौगोलिक विविधतायुक्त विशेषतालाई आत्मसात् गरी विविधता बिचको एकता, सामाजिक सांस्कृतिक ऐक्यबद्धता, सहिष्णुता र सद् भावलाई संरक्षण एवम् प्रवर्धन गर्दै बर्गीय, जातीय, क्षेत्रीय, भाषिक, धार्मिक, लैंगिक विभेद र सबै प्रकारका जातीय छुवाछूतको अन्त्य गरी आर्थिक समानता, समृद्धि र सामाजिक न्याय सुनिश्चित गर्न समानुपातिक समावेशी र सहभागितामूलक सिद्धान्तका आधारमा समतामूलक समाजको निर्माण गर्ने संकल्प गर्दै संघीय लोकतान्त्रिक गणतन्त्रात्मक शासन व्यवस्थाको माध्यमद्वारा दिगो शान्ति, सुशासन, विकास र समृद्धिको आकांक्षा पूरा गर्न संविधान सभामार्फत २०७२ साल असोज ३ गते हालको नेपालको संविधान (२०७२) जारी भएको हो ।

## २. संवैधानिक निकायको परिभाषा र भूमिका

नेपालको संविधानको धारा ३०६ (१) (ठ) मा “संवैधानिक निकाय” भन्नाले यस संविधानबमोजिम गठन गरिएका अख्तियार दुरुपयोग अनुसन्धान आयोग, महालेखा परीक्षक, लोकसेवा आयोग, निर्वाचन आयोग, राष्ट्रिय मानव अधिकार आयोग, राष्ट्रिय प्राकृतिक स्रोत तथा वित्त आयोग, राष्ट्रिय महिला आयोग, राष्ट्रिय दलित आयोग, राष्ट्रिय समावेशी आयोग, आदिवासी जनजाति आयोग, मधेशी आयोग, थारू आयोग र मुस्लिम आयोग सम्झनु पर्छ भनी किटानी नाम सहित परिभाषित गरिएको छ । यस अघिका संविधानहरूमा संवैधानिक निकायहरूको व्यवस्था भएता पनि परिभाषा उल्लेख भएको थिएन ।

संवैधानिक निकायहरूको भूमिका र काम, कर्तव्यलाई दृष्टिगत गर्दा लोकतान्त्रिक शासन पद्धतिलाई मजबुद बनाउन राज्यका मुख्य अंगहरू व्यवस्थापिका, न्यायपालिका र कार्यपालिकाबाट स्वतन्त्र रहने गरी खास कार्यक्षेत्र तोकी संविधानमा व्यवस्था गरिएका सार्वजनिक संस्थाहरू नै संवैधानिक निकाय हुन । विभिन्न मुलुकमा त्यहाँको शासन पद्धति मुताविक गठन गरिने यस्ता संवैधानिक निकायहरूलाई कतिपय मुलुकमा ''चौथो शाखा" अर्थात् (Fourth Branch Institutions) वा तटस्थ अभिभावक संस्था (Neutral Guardian Institutions1) को रुपमा पनि चिनिन्छ । यस्ता सार्वजनिक संस्थाहरूले खास गरी लोकतान्त्रिक मूल्य मान्यता अनुरुप सार्वजनिक निष्ठा, पारदर्शिता र जवाफदेहिता प्रवर्धन गर्दै सुशासन कायम गर्न महत्वपूर्ण भूमिका निर्वाह गर्दछन् ।

### ३. नेपालको संविधानमा संवैधानिक निकायहरूको व्यवस्था

नेपालमा विभिन्न समयमा जारी भएका हाल सम्मका दुई वैधानिक कानुन र पाँच संविधानमा तात्कालिक आवश्यकता अनुरुप संवैधानिक निकायहरूको व्यवस्था हुँदै आएको देखिन्छ । नेपालको अन्तरिम संविधान, २०६३ बमोजिम भएको संविधान सभाको चुनाव पश्चात् संविधान सभाबाट जारी भएको नेपालको संविधानमा देहाय अनुसार १३ संवैधानिक निकायको व्यवस्था भएको देखिन्छ ।

(१) अख्तियार दुरुपयोग अनुसन्धान आयोग (भाग २१, धारा २३८)
(२) महालेखा परीक्षक (भाग २२, धारा २४०)
(३) लोक सेवा आयोग (भाग २३, धारा २४२)
(४) निर्वाचन आयोग (भाग २४, धारा २४५)
(५) राष्ट्रिय मानव अधिकार आयोग (भाग २५, धारा २४८)
(६) राष्ट्रिय प्राकृतिक स्रोत तथा वित्त आयोग (भाग २६, धारा २५०)
(७) राष्ट्रिय महिला आयोग (भाग २७, धारा २५२)
(८) राष्ट्रिय दलित आयोग (भाग २७, धारा २५५)
(९) राष्ट्रिय समावेशी आयोग (भाग २७, धारा २५८)
(१०) आदिवासी जनजाति आयोग (भाग २७, धारा २६१)
(११) मधेशी आयोग (भाग २७, धारा २६२)
(१२) थारू आयोग (भाग २७, धारा २६३)
(१३) मुस्लिम आयोग (भाग २७, धारा २६४)

यस अघिका संविधानहरू मध्ये नेपाल सरकार वैधानिक कानुन, २००४ मा प्रधान जाँचकी (दफा ६२) र दरखास्त परिषद (दफा ६५) गरी दुई संवैधानिक निकायको व्यवस्था भएको थियो । नेपाल अन्तरीम शासन विधान, २००७ मा नेपालका नियन्त्रक (कन्ट्रोलर) महालेखापरीक्षक (अडिटर जनरल) (दफा ६०), पब्लिक सर्भिस कमिसन (दफा ६४) र निर्वाचन (चुनाउ) आयोग (कमिसन) (दफा ६९) गरी तीन संवैधानिक निकायको व्यवस्था भएको देखिन्छ । त्यसैगरी नेपाल अधिराज्यको संविधान, २०१५ मा

1 De Smith 1964

लोक सेवा आयोग (धारा ५९) र महालेखापरीक्षक (धारा ६१) गरी दुई र नेपालको संविधान, २०१९ मा अख्तियार दुरुपयोग निवारण आयोग (धारा ६७), महालेखा परीक्षक (धारा ७५), लोक सेवा आयोग (धारा ७७) र निर्वाचन आयोग (धारा ७८क.) गरी चार निकायको व्यवस्था भएको देखिन्छ ।

नेपाल अधिराज्यको संविधान, २०४७ मा अख्तियार दुरुपयोग अनुसन्धान आयोग (धारा ९७), महालेखा परीक्षक (धारा ९९), लोक सेवा आयोग (धारा १०१) र निर्वाचन आयोग (धारा १०३) गरी चार संवैधानिक निकायको व्यवस्था गरिएको थियो । नेपालको अन्तरिम संविधान, २०६३ मा अख्तियार दुरुपयोग अनुसन्धान आयोग (धारा ११९), महालेखा परीक्षक (धारा १२२), लोक सेवा आयोग (धारा १२५), निर्वाचन आयोग (धारा १२८) र राष्ट्रिय मानव अधिकार आयोग (धारा १३१) गरी पाँच संवैधानिक निकायको व्यवस्था भएको थियो ।

## ४. संवैधानिक निकायसँग सम्वन्धित विविध पक्षहरू

(**क**) **संस्थागत संरचना** : नेपालको संविधान (२०७२) मा व्यवस्था गरिएका १३ संवैधानिक निकायहरू मध्ये ६ निकायहरूको व्यवस्था संविधानको छुट्टाछुट्टै भागमा गरिएको छ भने बाँकी ७ निकायको हकमा अन्य आयोगहरू भन्ने एउटै भागमा व्यवस्था छ । उक्त १३ संवैधानिक निकाय मध्ये एकल नेतृत्व रहने गरी महालेखापरीक्षकको व्यवस्था भएको छ भने अन्य १२ संवैधानिक निकायमा अध्यक्ष वा प्रमुख आयुक्त वा प्रमुख निर्वाचन आयुक्तसहित अन्य सदस्य रहने गरी आयोगको खाकाबमोजिमको संस्थागत व्यवस्था भएको देखिन्छ । लोक सेवा आयोगको हकमा संघमा एक लोक सेवा आयोग हुने र प्रत्येक प्रदेशमा प्रदेश लोक सेवा आयोग रहने व्यवस्था छ । प्रदेश लोक सेवा आयोग गठन, काम, कर्तव्य र अधिकार प्रदेश कानुनबमोजिम हुने र सो प्रयोजनका लागि संघीय संसदले कानुन बनाई आधार र मापदण्ड निर्धारण गर्ने व्यवस्था छ । संघीयता कार्यान्वयनको हालको अनुभव बिचार गरी संस्थागत संरचना पुनरावलोकन गर्नु पर्ने दखिन्छ ।

(**ख**) **नियुक्ति प्रक्रिया** : सवै संवैधानिक निकायका पदाधिकारीहरूको नियुक्ति राष्ट्रपतिले संवैधानिक परिषद् को सिफारिसमा गर्ने व्यवस्था रहेको छ । नेपालको संविधानको धारा २८४ मा प्रधानमन्त्रीको अध्यक्षतामा प्रधानन्याधीश, प्रतिनिधिसभाको सभामुख, राष्ट्रिय सभाको अध्यक्ष, प्रतिनिधिसभाको बिपक्षी दलको नेता र प्रतिनिधिसभाको उपसभामुख रहने संवैधानिक परिषद्को ब्यवस्था छ । संवैधानिक परिषद् (काम, कर्तव्य, अधिकार र कार्यविधि) ऐन,२०६६ को दफा ६ मा परिषद्को बैठकसम्बन्धी कार्यविधि तोकिएको छ । सो ऐन अनुसार संवैधानिक निकायका पदहरूमा सर्वसम्मत रुपमा नियुक्तिको परिकल्पना गरिएको थियो । विगतमा अध्यादेशबाट ऐनको उक्त प्रावधान संशोधन गरी बहुमतबाट सिफरिस गर्ने व्यवस्था गरियो । हाल उक्त ऐन संघीय संसदमा विचाराधिन अवस्थामा रहेको छ । हालै सर्वोच्च अदालतको प्रधान न्यायाधिश नियुक्ति गर्दा सर्वसम्मतरुपमा सिफारिश भई नियुक्त भएको अवस्था छ । अन्य पदाधिकारीहरूको हकमा समेत सर्बसम्मत हुने अवस्थामा सिफारिस हुन सक्ने अन्यथा सिफारिस गर्नसमेत समस्या पर्ने अवस्था देखिएको छ ।

बिश्वका अन्य देशमा संवैधानिक निकाय वा यस्तै प्रकारका निकायहरूमा उपयुक्त व्यक्ति सिफारिसका लागि

विभिन्न प्रबन्धहरू रहेका छन । तीमध्ये द्विदलीय प्रबन्ध (Bipartisan appointment mechanism), समावेशी नियुक्ति प्रणाली (Inclusive appointment mechanism), उच्च बहुमतको प्रणाली (Super majority appointment mechanism), अन्तर निकाय सिफारिस प्रणाली (Inter-institution appointment mechanism), संवैधानिक परिषद (Constitutional council or commission) जस्ता प्रणाली रहेका छन । नेपाल, श्रीलंका, फिजी जस्ता देशमा संवैधानिक परिषद रहेको छ। कतिपय देशमा सत्तापक्षको प्रधानमन्त्री र विपक्षी दलको नेताको सहमतीमा सिफारिस गर्ने प्रबन्ध भएको देखिन्छ। कतिपय अवस्थामा नियुक्ती हुने पदहरू भागबण्डा गरेर पनि सहमतीमा नियुक्ति गर्ने प्रचलन रहेको छ। बेलिज, डोमिनिका, बहमास जस्ता देशमा यो प्रचलन रहेको छ। हाम्रो सन्दर्भमा संवैधानिक परिषदको संरचना अनुसार सहमती र भागवण्डा दुवै पद्धतीको प्रचलन रहेको सार्वजनिक हुने गरेको छ।

समावेशी वा सन्तुलित राजनीतिक प्रणालीअन्तर्गत संसदलाई एक निर्वाचक मण्डलको रुपमा लिएर संसदमा भएका दलहरूको प्रतिनिधित्वको समानुपातिकताको आधारमा सहमति र समझदारीमा नियुक्तिको लागि उम्मेदवार सिफारिस गरिन्छ। कोलम्बियामा त्यहाँको संसदलाई निर्वाचक मण्डलको रुपमा मानिन्छ। अष्ट्रियामा पनि यो प्रचलन रहेको छ । त्यस्तै उच्च बहुमतको आधारमा नियुक्ती गर्ने प्रणालीअन्तर्गत संसदको दुईतिहाई बहुमतबाट संवैधानिक निकायका पदाधिकारी नियुक्त गरिन्छ । पोर्चुगलमा अम्बुडसम्यानलगायतका केही पदहरू संसदको दुईतिहाई बहुमतले स्वकिृत गर्नु पर्दछ। त्यस्तै बुल्गारिया र हंगेरीमा समेत केही पदहरूमा यस्तो प्रबन्ध छ ।

अन्तरनिकाय सिफारिस प्रणालीअन्तर्गत साधारणतया राष्ट्रपतिले कुनै ब्यत्तिलाई नियुक्ति गर्ने अनि संसदबाट अनुमोदन गर्ने प्रणाली हो। यो प्रणाली केन्यालगायत विश्वका कतिपय मुलुकमा रहेको छ। त्यस्तो प्रणालीमा संसदले सिफरिस गरेर राष्ट्रपतिले नियुक्ति गर्ने वा सूचीकृत गरेका मध्येबाट संसदमा सिफरिस गरी ती मध्येबाट राष्ट्रपति समक्ष नियुीक्तको लागि पठाउने प्रचलन छ। नेपालको सन्दर्भमा संवैधानिक परिषद्बाट सिफारिश भएपश्चात् नेपालको संविधानको धारा २९२ बमोजिम संसदीय सुनुवाई गरी राष्ट्रपतिसमक्ष नियुक्तिको लागि सिफारिश गर्ने व्यवस्था छ ।[२]

(ग) **पदावधि र पुनर्नियुक्ति** : सवै संवैधानिक निकायका पदाधिकारीको पदावधि ६ वर्ष वा ६५ वर्ष उमेर पूरा हुने मध्ये जुन पहिले हुन्छ सो अनुरुप हुने व्यवस्था छ। संविधानको छुट्टाछुट्टै भागमा व्यवस्था गरिएका ६ संवैधानिक निकाय र एउटै भागमा व्यवस्था गरिएका ७ मध्ये राष्ट्रिय महिला आयोग, राष्ट्रिय दलित आयोग र राष्ट्रिय समावेशी आयोगसहित ३ संवैधानिक निकायमा एक पटक नियुक्त भइसकेको व्यक्ति पुनर्नियुक्ति हुन नसक्ने व्यवस्था छ भने आदिवासी जनजाति आयोग, मधेशी आयोग, थारु आयोग र मुस्लिम आयोग सहितका ४ संवैधानिक निकायको हकमा यस सम्बन्धमा संविधानमा उल्लेख भएको छैन । यी ४ निकायको पदाधिकारीको योग्यता, पद रिक्त हुने अवस्था, पारिश्रमिक र सेवाका शर्तहरू, काम कर्तव्य अधिकार सम्बन्धी अन्य व्यवस्था संघीय कानुन बमोजिम हुने व्यवस्था गरिएको छ ।

---

2 Independent Regulatory and Oversight (Fourth-Branch) Institutions, Constitution-Building Primer No.19, 2019

विगतमा संवैधानिक निकायका पदाधिकारीहरूको पदावधि हालको भन्दा केही फरक भएको र पुनर्नियुक्ति समेत हुन सक्ने व्यवस्था रहेको देखिन्छ। संवैधानिक निकायका पदाधिकारीहरू पदावधि पश्चात् कुनै पनि सरकारी सेवाको लागि ग्राह्य नहुने व्यवस्था छ। विश्वका अधिकांश मुलुकमा यस्तो प्रचनल रहेको छ तर उमेरको हद रहेसम्म सेवा निरन्तर रहने वा पुनर्नियुक्ति हुन सक्ने व्यवस्था रहेको देखिन्छ। नेपालको सन्दर्भमा संवैधानिक निकायका पदाधिकारीहो हकमा ६ वर्षे पदावधि वा ६५ वर्ष उमेर जुन पहिला हुन्छ सो लाई मानिन्छ। विगतका संविधानमा संवैधानिक निकायका पदाधिकारीहरूको सेवा, शर्त, सुविधा सर्वोच्च अदालतका न्यायाधीश सरह हुने व्यवस्था रहेको देखिन्छ। हाल सर्वोच्च अदालतका न्यायाधीशको पदको निश्चित अवधि तोकिए छैन। निजहरू ६५ वर्षको उमेर सम्म बहाल रहने व्यवस्था छ। तर संवैधानिक निकायका पदाधिकारीहरूको हकमा यस्तो व्यवस्था छैन। त्यसैले संवैधानिक निकायका पदाधिकारीहरूको पदावधि तोकिएको उमेरको हदले भ्याउने सम्म कायम गर्न वा पुनर्नियुक्ति गर्न उपयुक्त देखिन्छ।

विभिन्न मुलुकमा संवैधानिक निकायका प्रमुख र अन्य पदाधिकारीहरूको पदावधि फरक फरक रहेको पाईन्छ। उदाहरणको लागि संयुक्त राज्य अमेरिकाको कम्प्ट्रोलर जनरलको पदावधि १५ वर्ष, क्यानाडाको महालेखापरीक्षक र बेलायतको कम्प्ट्रोलर एण्ड अडिटर जनरलको पदावधि १० वर्ष, बंगलादेशको कम्प्ट्रोलर एण्ड अडिटर जनरलको पदावधि ५ वर्ष, भारतको कम्प्ट्रोलर एण्ड अडिटर जनरलको पदावधि ६ वर्ष, पाकिस्तानको अडिटर जनरलको पदावधि ४ वर्ष रहेको छ। नेपालको सन्दर्भमा संवैधानिक निकायका पदाधिकारीहरूको सेवा शर्तको पुनरावलोकन गर्दा अन्य सरकारी सेवामा ग्राह्य नहुने विषयलाई समेत ध्यान दिई उमेरको हदले भ्याए सम्म पुनर्नियुक्ति गर्न सक्नेतर्फ विचार गर्नु उपयुक्त देखिन्छ।

(घ) **योग्यता र अनुभव** : संवैधानिक निकायको कार्य प्रकृतिअनुसार शैक्षिक योग्ताहरू फरक फरक रहेका छन। लोक सेवा आयोगको हकमा तोकिएको विषयमा स्नातकोत्तर उपाधि चाहिने र अन्यको हकमा तोकिएको विययमा स्नातक उपाधि हासिल गरेको हुनुपर्ने व्यवस्था छ। महालेखापरीक्षकको हकमा व्यवस्थापन, बाणिज्यशास्त्र वा लेखामा स्नातक उपाधि प्राप्त गरी वा चार्टर्ड एकाउन्टेन्सी परीक्षा उत्तीर्णलाई समेतलाई मान्यता दिएको देखिन्छ। संविधानको भाग २७ मा उल्लेख भएका ७ आयोगहरू मध्ये ३ आयोगको अध्यक्षको हकमा मात्र स्नातक उपाधि आवश्यक पर्ने उल्लेख छ भने वाकी ४ आयोगको हकमा योग्यता संघीय कानुनबमोजिम हुने उल्लेख छ।

संविधानको छुट्टाछुट्टै भागमा व्यवस्था भएका ७ संवैधानिक निकाय मध्ये निर्वाचन आयोग बाहेकका निकायको हकमा सम्वन्धित क्षेत्रको विषयमा २० वर्षको अनुभव चाहिने उल्लेख छ। भाग २७ मा उल्लेख भएका अन्य आयोगहरूको हकमा सम्वन्धित क्षेत्रमा १० वर्षको कार्य अनुभव चाहिने व्यवस्था गरिएको छ।

लोक सेवा आयोगको हकमा कम्तीमा ५० प्रतिशत सदस्यहरू कम्तीमा २० वर्ष वा सो भन्दा बढी कुनै सरकारी सेवामा रहेका व्यक्तिहरू मध्येबाट नियुक्ती गर्नु पर्ने व्यवस्था छ। महालेखापरीक्षकको हकमा नेपाल सरकारको विशिष्ट श्रेणीमा काम गरेको अनुभवलाई समेत मान्यता दिईएको छ।

(ङ) **प्रतिवेदन प्रणाली** : नेपालको संविधानको धारा २९४ बमोजिम संवैधानिक निकायहरूले आफूले गरेको काम कारवाहीको वार्षिक प्रतिवेदन राष्ट्रपतिसमक्ष पेश गर्ने र राष्ट्रपतिले प्रधानमन्त्रीमार्फत त्यस्तो प्रतिवेदन संघीय संसदसमक्ष पेश गर्न लगाउने व्यवस्था छ। उक्त प्रतिवेदनमा खुलाउनु पर्ने कुराहरू संघीय

कानुनबमोजिम हुने व्यवस्था छ । प्रत्येक प्रदेशको काम कारवाहीको सम्बन्धमा अलग अलग प्रतिवेदन तयार गरी प्रदेश प्रमुख समक्ष पेश गर्न सक्ने व्यवस्था समेत रहेको छ ।

महालेखापरीक्षकको हकमा स्थानीय तहहरूको समेत लेखापरीक्षण गरी राय सहितको प्रतिवेदन जारी गरिने भएकोले सो प्रतिवेदन पेश गर्ने छलफल गर्ने सम्बन्धमा संविधानमा स्पष्ट व्यवस्था छैन । लेखापरिक्षण ऐन, २०७५ मा केही व्यवस्था गरिएको छ। अन्य केही मुलुकहरूमा महालेखापरीक्षकबाट जारी हुने लेखापरीक्षण प्रतिवेदनहरू सिधै संसदको सभामुख समक्ष पेस भई छलफल हुने व्यवस्था रहेको देखिन्छ । तर नेपालमा वार्षिक प्रतिवेदन राष्ट्र प्रमुख समक्ष पेश गरी सरकार प्रमुखमार्फत संसदमा पठाउने व्यवस्था छ । लेखापरीक्षणको प्रभाव वृद्धि गर्न प्रतिवेदन गर्ने प्रणालीमा समेत सुधार गर्नुपर्ने देखिन्छ ।

विगतमा संवैधानिक निकायले पेश गर्ने वार्षिक प्रतिवेदन र सोमा समेट्नुपर्ने कुराहरू सम्बन्धित संवैधानिक निकायको भागमा उल्लेख भएको थियो भने वर्तमान संविधानमा एकमुष्ट धारा २९४ मा उल्लेख भएको देखिन्छ । साथै संवैधानिक निकायको वार्षिक प्रतिवेदनमा समेट्नु पर्ने कुराहरू संघीय कानुनबमोजिम हुने गरी व्यवस्था गरिएको छ। विभिन्न संवैधानिक निकायहरूको कार्य प्रकृति अनुसार प्रतिवेदन गर्नु पर्ने भएकोले संविधानमा सो अनुसार सम्बन्धित संवैधानिक निकायको व्यवस्था गरिएको भागमा नै प्रतिवेदनमा समावेश गर्नुपर्ने विषयहरू समेत उल्लेख गरी प्रतिवेदन प्रणालीमा सुधार गर्न उपयुक्त हुन्छ ।

संवैधानिक निकायले संविधान बमोजिम पेश गर्नुपर्ने वार्षिक प्रतिवेदन संवैधानिक पदाधिकारी नियुक्त नभएको अवस्थामा कर्मचारीबाट कार्यवाहक भई कार्यसञ्चालन गर्ने जिम्मेवारी लिएका व्यक्तिबाट पनि प्रतिवेदन पेश गर्ने प्रचलन रहेको देखिन्छ । यसले गर्दा संवैधानिक निकायमा पदाधिकारीहरू नियुक्त नगर्दा पनि काम चलिराखेकै छ भन्ने प्रवृत्ति विकास भएको छ। विगतमा यस्ता उदाहरण थुप्रै छन । २०६३ देखि २०७० सम्म करिब सात वर्ष महालेखापरीक्षक पद रिक्त रहदा कार्यवाहक महालेखापरीक्षकबाट बार्षिक प्रतिवेदन पेश भएका छन। अन्य संवैधानिक निकायहरूमा समेत यो अवस्था आएको छ। महालेखापरीक्षकको प्रतिवेदनको सम्बन्धमा लेखापरीक्षण ऐन २०१८ मा अन्य कार्यहरू मातहत कर्मचारीले गरेपनि बार्षिक प्रतिवेदन महालेखापरीक्षकले नै पेश गर्ने पर्ने बाध्यत्मक व्यवस्था रहेको थियो । पछिल्लो समयमा यस्तो व्यवस्था हटाइएको छ ।

संवैधानिक निकायहरूले संविधानबमोजिम प्रस्तुत गर्ने प्रतिवेदन संवैधानिक निकायको प्रतिवेदन भएकोले संविधानबमोजिम नियुक्ति भएका पदाधिकारीले मात्र प्रतिवेदन पेशगर्ने ब्यवस्था गरिनु पर्दछ। संवैधानिक निकायको गरिमा कायम गर्न तथा संवैधानिक पदाधिकारीहरूलाई बढी जिम्मेवार बनाउनका लागि समेत यस्तो व्यवस्था गरिनु जरुरी छ। यस व्यवस्थाले संवैधानिक निकायका पद रिक्त हुनु अगावै वा रिक्त हुनासाथ संवैधानिक निकायका पदाधिकारी नियुक्त गर्न दवाव सिर्जना हुन जाने देखिन्छ । हुन त संविधानमा संवैधानिक निकायका पदाधिकारीको पद रिक्त हुनु एक महिना अगावै सिफारिस गर्नुपर्ने व्यवस्था छ । यस्तो संवैधानिक व्यवस्था हुँदासमेत लामो समयसम्म नियुक्ति नगरी रिक्त रहने गरेको अवस्था छ । यसमा सुधार हुनुपर्दछ । यसैगरी संवैधानिक निकायहरूले प्रतिवेदन पेस गर्ने समयावधिसमेत संविधानमा तोकिनु उपयुक्त हुनेछ । उदाहरणको लागि संसद समक्ष बजेट पेस गर्नको लागि प्रत्येक वर्षको जेष्ठ १५ गते तोकिएकोले

जसरी पनि सो दिन संघीय संसद समक्ष बजेट पेस हुने गरेको छ । यस्तो व्यवस्था नहुँदा विगतमा बजेट पेस गर्नसमेत समस्या रहेको थियो । नेपालको संविधान २०१९ मा संवैधानिक निकायहरूले पेश गर्ने वार्षिक प्रतिवेदन सामान्यतया प्रत्येक वर्ष जेष्ठ महिनाभित्र पेश गर्ने व्यवस्था भएको देखिन्छ तर अन्य संविधानहरूमा सो प्रावधान रहेको देखिदैन ।

(**च**) **प्रतिवेदन कायान्वयन** : संवैधानिक निकायहरूले राष्ट्रपतिलाई पेस गरेका वार्षिक प्रतिवेदनहरू यथा समयमा कार्यान्वयनको व्यवस्था मिलउन नसकेमा मात्र ती निकायहरूको प्रभावकारिता अभिवृद्धि गर्न सकिन्छ । त्यसैगरी समयमै प्रतिवेदनहरू कार्यान्वयनमा आए मात्र यस्को सान्दर्भिकता रहने र जिम्मेवार पदाधिकारीहरूलाई जवाफदेही बनाउन सकिन्छ । तर हाम्रो परिप्रेक्ष्यमा संवैधानिक निकायका प्रतिवेदनहरू समयमा कार्यान्वयन र छलफल नहुने अवस्था रहेको छ । कतिपय अवस्थामा राष्ट्रपति र प्रदेश प्रमुख समक्ष पेश गरिएका प्रतिवेदनहरू लामो अवधिसम्म पनि संघीय संसद र प्रदेश सभामा पेश नभएको अवस्था पनि रहेको छ । कतिपय पेश भएका प्रतिवेदन लामो समयसम्म छलफल नभएको अवस्था छ । संसदीय समितिहरूमा प्रतिवेदनहरू छलफल भई यथा समयमा निष्कर्षमा पुग्नुपर्ने देखिन्छ । साथै संवैधानिक निकायका प्रमुख र पदाधिकारीहरू संघीय संसदको प्रतिनिधि सभा प्रति जवापदेही हुने र सम्बन्धित समितिले सुझाव निर्देशन दिनेसमेत व्यवस्था छ । यस व्यवस्थालाई प्रभावकारी रुपमा कार्यान्वयनमा ल्याउनु पर्दछ । यसैगरी सरकारी संयन्त्रहरू पनि प्रतिवेदनमा उल्लेख गरिएका कैफियत सुधार गर्न र सुझावहरू कार्यान्वयन गर्न उदासिन रहेको अवस्था छ । जसले गर्दा प्रत्येक वर्ष आर्थिक प्रशासनिक अनियमितता र बेरुजु बढदो क्रममा रहेको र फछ्र्यौटको स्थिति घट्ेको अवस्था छ । यस्मा सुधार हुनुपर्दछ ।

(छ) **स्वायत्तता र स्वतन्त्रता** : संवैधानिक निकायहरूको प्रभावकारिता अभिवृद्धि गर्न ती निकायहरू र पदाधिकारीहरूको वित्तीय, प्रशासनिक र कार्यात्मक पक्षहरूमा पर्याप्त स्वायत्तता र स्वतन्त्रताको व्यवस्था गर्नु आवश्यक हुन्छ । संवैधानिक निकायका पदाधिकारीहरूको सेवा, शर्त र सुविधाका विषयहरूमा संवैधानिक व्यवस्था मार्फत सुनिश्चितता गरिएको भएता पनि संवैधानिक निकायहरूको कार्यमा प्रभावकारिता ल्याउन आवश्यक पर्ने वित्तीय स्रोत प्राप्ति र उपयोग, कर्मचारी प्रशासनलगायतका विषयमा पर्याप्त स्वायत्तता र स्वतन्त्रता दिने गरी प्रबन्ध गर्नुपर्ने देखिन्छ ।

(**ज**) **सेवा, शर्त र सुविधा** : संवैधानिक निकायका पदाधिकारीहरूको पारिश्रमिक, सेवाको शर्त र सुविधा सम्बन्धी ऐन, २०५३ मा व्यवस्था गरिएको छ र उक्त ऐन जारी भएको २७ वर्षसम्म पनि समय सापेक्ष अद्यावधिक हुन सकेको छैन । कतिपय संवैधानिक निकायका पदाधिकारीहरूलाई नेपाल सरकारको पटके निर्णयबाट थप भत्ता सुविधाहरू प्रदान गरेको देखिन्छ । संवैधानिक निकायका पदाधिकारीहरूलाई प्रदान गरिने सेवा सुविधालाई कानुन मै व्यवस्थित गर्नु पर्दछ ।

(**झ**) **संवैधानिक निकायको सङ्ख्या र स्वरुप** : नेपालको संवैधानिक इतिहास हेर्दा तत्कालीन आवश्यकताअनुसार दुई वटादेखि १३ वटासम्म संवैधानिक निकायहरूको व्यवस्था भएको देखिन्छ । वर्तमान संविधानको भाग २७ मा उल्लिखित ७ संवैधानिक निकायको सम्बन्धमा संघीय संसदले यो संविधान प्रारम्भ भएको मितिले दश वर्षपछि पुनरावलोकन गर्ने व्यवस्था रहेको छ । यसैगरी एकल महालेखापरीक्षक हुने

देखि प्रमुखसहित ५ जना भनि निश्चित सङ्ख्यामा पदाधिकारी रहने वा बढीमा वा यतिसम्म (चारजनासम्म) सदस्य रहने गरी पदाधिकारीको व्यवस्था भएको देखिन्छ ।

विश्वका आधुनिक संविधानमा खासगरी सरकारका मुख्य अंगहरू व्यवस्थापिका, कार्यपालिका र न्यायपालिकाबाट स्वतन्त्र रहने गरी राष्ट्र सेवक कर्मचारी भर्नालगायतका कार्य गर्न लोक सेवा आयोग, निष्पक्ष निर्वाचनकालागि निर्वाचन आयोग, न्यायिक नियुक्ति सम्बन्धी कार्य गर्न न्याय सेवा आयोग, आम नागरिकको गुनासो सुन्न र आवश्यक कार्य गर्न अम्बुड्सम्यान, सार्वजनिक लेखाको परीक्षण र वित्तीय अनुशासन कायम गर्न महालेखापरीक्षक, भ्रष्टाचार नियन्त्रण र अनुसन्धानका लागि अनुसन्धान आयोग, मानव अधिकारको प्रवर्धन र सम्वर्धनका लागि मानव अधिकार आयोग, लैंगिक समनाता, अल्पसङ्ख्यक समुदायहरूको अधिकार संरक्षणको लागि सोसम्बन्धी आयोग वा निकायहरू रहने गरेका छन् ।[३]

मुलुकले अपनाएको संघीय लोकतान्त्रिक गणतन्त्रात्मक शासकीय स्वरुपको हालसम्मको अनुभव समेत बिचार गरी संवैधानिक निकायको सङ्ख्या, तिनमा रहने पदाधिकारी र स्वरुपमासमेत समयानुकूल पुनरावलोकन गर्ने तर्फ ध्यान दिनुपर्ने देखिन्छ ।

(ञ) **संवैधानिक निकायहरूको प्रभावकारिता** : संवैधानिक निकायको काम कारवाही र यसको प्रभावकारिता सम्बन्धमा संसदलगायत विभिन्न मञ्चहरूमा प्रश्न उठने गरेको छ । कतिपय संवैधानिक निकायमा नियुक्त हुने पदाधिकारी विगतमा सरकारी सेवामा रहेर अवकास प्राप्त व्यक्तिहरू नै हुने गरेको, कतिपयले पदाधिकारीहरूमा संविधानले अपेक्षा गरेको उच्च नैतिक चरित्र नदेखिएको, निष्पक्ष रुपमा कार्य सम्पादन गर्न नसकेको जस्ता प्रश्नहरू उठने गरेका छन् । सम्बन्धित संवैधानिक निकायको कार्य प्रकृतिको प्राविधक ज्ञान तथा अनुभव भएको र व्यवस्थापकीय तथा नेतृत्व कौशल भएका सम्बन्धित क्षेत्रमा उल्लेख्य योगदान गरी समाजमा प्रतिष्ठा आर्जन गरेका र उच्च नैतिक चरित्र र निष्ठा भएका व्यक्तिहरूको सूची तथार गरी सार्वजनिक बहससमेत गरी नियुक्त गर्न सकेमा संवैधानिक निकायको प्रभावकारिता अभिवृद्धि हुन जाने देखिन्छ ।

संवैधानिक निकायका काम कारवाहीमा प्रभावकारिता ल्याउनका लागि संवैधानिक निकायहरूले स्वयम् प्रयास गर्नुको अतिरिक्त संसद र संसदीय समितिहरू र सरकारका निकायहरूबाट समेत उत्तिकै सहयोग र समन्वय तथा सहकार्य गर्न जरुरी छ । संवैधानिक निकायहरू प्रभावकारी बनाउने भनेको अति कृयाशील भई सरकारी काम कारवाही नियन्त्रण र ठप्प पार्ने वा आफ्नो अस्तित्वलाई लोप हुने गरी निष्क्रिय रहने पनि होइन । यसले अति सक्रियता र निष्क्रियताको बिचको सन्तुलन मिलाई कार्य गर्नुपर्छ । संवैधानिक निकायहरू सार्वजनिक निकायबाट भएका वा हुन् । काम कारवाहीलाई थप व्यवस्थित गरी सुशासन कायम गर्नमा सहयोगी भूमिका निर्वाह गर्ने संवैधानिक जिम्मेवारी पाएका निकायहरू हुन । हाल नेपालका अधिकांश संवैधानिक निकायहरूको कामकारवाही अपेक्षकृतरुपमा प्रभावकारी नभएको गुनासो र टिप्पणीहरू सार्वजनिक रुपमा आएका छन् । विगतका अनुभवलाई आत्मसात् गर्दै यी निकायहरूले आफनो कार्यप्रणाली

---

3 Independent Regulatory and Oversight (Fourth-Branch) Institutions, Constitution-Building Primer No.19, 2019

व्यवस्थित बनाउनु पर्दछ । यी निकायका प्रमुख, पदाधिकारी र यस्ता निकायमा काम गर्ने कर्मचारीहरूले नै उच्च नैतिक आचरण प्रदर्शन गरी अरुको लागि उदाहरण बन्न सक्नुपर्दछ ।

**५. अन्तमा,**

नेपालको सबै संविधानहरूमा व्यवस्था गरिएका संवैधानिक निकायहरूबाट तत्कालिक परिस्थितिअनुरुप शासन व्यवस्थामा प्रभावकारिता ल्याउने अपेक्षा गरेको पाइन्छ । मुलुक संघीय शासन प्रणालीमा गएसँगै वर्तमान संविधानको प्रस्तावनामा उल्लेख भएका विषयअनुरुप आम नागरिकको जीवनस्तरमा सकारात्मक परिवर्तन ल्याउन संवैधानिक निकायहरूको महत्वपूर्ण भूमिका हुन्छ । तसर्थ संवैधनिक निकायहरूबाट अपेक्षित परिणाम प्राप्त गरी प्रभावकारिता बढाउन माथिको प्रकरणमा उल्लिखित संवैधानिक निकायसँग सम्बन्धित विवध पक्षहरूमा समयानुकूल सुधार हुन आवश्यक देखिन्छ ।


सन्दर्भ सामग्रीः

(१) नेपालको संविधान (२०७२)

(२) नेपालको अन्तरिम संविधान, २०६३

(३) नेपाल अधिराज्यको संविधान, २०४७

(४) नेपालको संविधान, २०१९

(५) नेपाल अधिराज्यको संविधान, २०१५

(६) नेपाल अन्तरिम शासन विधान, २००७

(७) नेपाल सरकार वैधानिक कानुन, २००४

(८) सवैंधानिक परिषद् (काम,कर्तव्य,अधिकार र कार्यविधि) ऐन,२०६६

(९) संवैधानिक निकायका पदाधिकारीहरूको पारिश्रमिक, सेवाको शर्त र सुविधासम्वन्धी ऐन, २०५३

(१०) Independent Regulatory and Oversight (Fourth-Branch) Institutions, Constitution Building Primer No. 19, 2019

(११) Developing More Independent and Effective Constitutional Bodies: Problems and Prospects, National Democratic Institute, 1998

(१२) विभिन्न संवैधानिक निकायका वार्षिक प्रतिवेदनहरू




# नेपालमा प्रशासनिक संघीयता : एक समीक्षा



✍ डा. सोमलाल सुवेदी*

### १. परिवेश

नेपालको संविधानले संघीय शासन अङ्गीकार गरी संघीयता कार्यान्वयनमा ल्याएको आठ वर्ष व्यतीत भयो । शासन सञ्चालनको स्वायत्तता, सहकार्यता, सहभागिता र जवाफदेही पद्धतिअन्तर्गत संघीयता एक महत्वपूर्ण आयाम हो । संघीयता बहुतहको शासन प्रणाली हो । दुई वा दुईभन्दा बढी तहमा राज्यशक्ति, अधिकार, स्रोत साधन र जिम्मेवारी बाांडफाँड एवम् निर्धारण गरी तहगत स्वायत्त र जनाफदेही ढङ्गले शासन गर्नु संघीयता हो । सरकारका तहहरूबिच स्वायत्त, साझेदारी, भरोसा, सन्निकटता र लोकतान्त्रिक विधिका आधारमा शासन पद्धसत सञ्चालन गर्नु गराउनु संघीयताको अभिष्ट हो ।

संघीयता एकात्मक प्रणालीभन्दा जटिल व्यवस्था हो । यसको राजनीतिक स्वरुप, परिभाषा अवधारणाात्मक द्विविधाले जटिलता देखाउँछ । यसको ढाँचा, अभ्यास र प्रतिफलमा एकरुपता पाइँदैन । राजनीतिक संस्कार, भौगोलिक अवस्था, जनसङ्ख्याको बनोट, इतिहास, संस्कृति, सामाजिक सक्षमता, संगठनात्मक ढाँचा र व्यवहारमा संघीयता भर पर्दछ । कार्यजिम्मेवारी निर्धारण, राजश्व अधिकार, अन्तरसरकारी वित्तीय हस्तान्तरण र ऋण व्यवस्था संघीयताका मूल अवयव हुन् । राजनीतिक, वित्तीय र प्रशासनिक गरी संघीयतालाई तीन प्रकारमा उल्लेख गर्ने गरेको पाइन्छ । राजनीतिक संघीयतामा विज्ञता, संस्थागत स्मरण, तथ्यांक र प्राविधिक सहयोग प्रशासनिक संघीयताले पुऱ्याउँछ । कार्यजिम्मेवारी निर्धारण र सोको कार्यान्वयन, राजस्व अधिकारको प्रयोग अन्तरसरकारी वित्तीय हस्तान्तरण र सो को उपयोग एवम् ऋण व्यवस्थामा प्रशासनिक संघीयताको अग्रणी भूमिका रहन्छ । नेपालको संविधानले संघीयताका ४ वटा अवयवको व्यवस्था गर्नुका साथै राजनीतिक, प्रशासनिक र वित्तीय संघीयताका सबैजसो पक्ष समेटेको छ । यसै अनुरुप दोस्रो चरणको निर्वाचन भई निर्वाचित पदाधिकारीहरूले ७६१ वटा संघीय इकाइरुपी सरकारहरू सञ्चालन गरिरहेका छन् ।

* पूर्वमुख्यसचिव, नेपाल सरकार

## २. प्रशासनिक संघीयता

राजनीतिक संघीयताले वित्तीय प्रशासनिक संघीयतालाई नेतृत्व गर्दछ । राजनीतिक र वित्तीय अधिकारलाई संविधान र कानुन बमोजिम प्रयोग गराउने संगठनात्मक स्वरुप र विज्ञताका रुपमा प्रशासनिक संघीयतालाई लिन सकिन्छ । कार्यक्षेत्र तथा कार्य निर्धारण भयो, वित्तीय स्रोत व्यवस्थापन पनि भयो तर कार्य सम्पादन गर्ने कर्ता भएन भने त्यसको उपयोग हुँदैन । त्यसैले भनिन्छ कुनै पनि सरकार उसको कर्मचारीको संयन्त्रको क्षमता भन्दा पृथक देखिँदैन । त्यसैले पद्धतिगत विधिसम्मत र प्राविधिक क्षमता सहितको वास्तविक कर्ता प्रशासनिक संघीयता हो । यो व्यावहारिक र क्रियात्मक आयाम पनि हो । David S. Rubostein ले भनेका छन् 'संघीय निकाय Hyencies संघीयताका मुख्य खेलाडठी Kye Players हुन् । ती निकायले कसरी काम गर्दछन्, कसरी तोकिएका कार्यहरू उत्तम ढङ्गले सम्पादन गरी पूरा गर्दछन् भन्ने संघीयताका मर्मस्पर्शी प्रश्न छन् ।" कार्यसम्पादन दक्षता र दिगो प्रतिफल प्रशासनिक संघीयताका महत्वपूर्ण आयाम हुन् । प्रशासनिक संघीयता कस्तो बनाउने भन्ने निर्धारण राजनीतिले गर्दछ । यसको आर्थ प्रशासनिक संघीयता, व्यवस्थापनमा राजनीतिका ज्ञान, सीप, सहयोग र समन्वय अपरिहार्य हुन्छ । प्रशासनिक संघीयता व्यवस्थापनमा जनताका विषय आन्तरिकीकरण गराउन राजनीति बढी सचेत, जानिफकार र निष्पक्ष हुनुपर्छ । प्रशासनिक संघीयता संघीय कानुनले निर्धारण गरेको शक्ति पृथकीकरणको आयामबाट प्रभावित हुन्छ । सरकारका तहगत व्यवस्थाभित्र सहभागितामूलक भूमिका र तहगत शक्ति सन्तुलनलाई सहभागितामूलक भूमिका र तहगत शक्ति सन्तुलनलाई प्रशासनिक संघयिताले बढ्वा दिन्छ । शक्ति सन्तुलन र तहगत अडानको प्रवृत्तिलाई कार्यसम्पादन सहजीकरणको मार्ग निर्देशन गर्ने कार्य राजनीतिक क्षेत्रबाट हुनु आवश्यक हुन्छ । प्रशासनिक संघीयताका आयामहरूलाई निम्नअनुसार उल्लेख गर्न सकिन्छ ।

(क) प्रशासनिक संघीयतालाई शासनको संरचनाका रुपमा ग्रहण गरिन्छ । यो जति सरल, कामयावी र प्रभावकारी हुन्छ त्यति नै संघीयता प्रभावकारी हुन्छ । यसले संस्थागत बहुलतामा कार्यसम्पादन र दक्षता संयोजन गर्न सक्नुपर्छ ।

(ख) तहगत रुपमा संगठनभित्र स-साना कामको समेत बाँडफाँड गरी काम लगाइने भएकोले कार्यगत एवम् संस्थागत बहुलताको रुपमा रहन्छ । ढाँचा निर्माण र कार्यान्वयनमा यो पक्षलाई विशेष ध्यान दिनुपर्छ ।

(ग) क्लिष्ट संरचनाका रुपमा प्रशासनिक इकाइहरूबिच कामको विवरण, राजनीतिक प्रक्रियाबाट आएका पदाधिकारीलाई चुनौती दिने निजामती सेवा र प्रशासनिक प्रक्रिया रहेका हुन्छन् । यी चुनौतीलाई समन्वय गरी सम्बोधन गर्नुपर्छ ।

(घ) सार्वजनिक कार्यसम्पादन र सेवा प्रवाहका लागि प्रशासनिक संस्कार, व्यवसायिकता र विज्ञता महत्वपूर्ण चरित्रका रुपमा हुन्छन् ।

(ङ) प्रशासनिक दक्षता बृद्धि र व्यवसायिकता प्रवर्द्धनमा राजनीतिले सहजीकरण गर्न सक्नु पर्दछ नकि आदेश तामेली ।

(च) आन्तरिक र वाह्य नियन्त्रण पद्धति निर्मित हुन्छ ।

(छ) कानुनी सिद्धान्त, कानुनी साधन कानुनी बहुलता र संस्थागत प्रबन्ध कार्यगत रुपमा महत्वपूर्ण

हुन्छन् । दोहोपना र भूमिकामा चनाखो भै निरन्तर सुधार हुनुपर्छ ।

(ञ) प्रशासनिक संघीयताले विकेन्द्रीकरणलाई रोज्ने उल्लेख गर्दै Robert Schwayer ले प्रशासनिक संघीयताअन्तर्गत केन्द्रले मापदण्ड र गुणस्तर निर्धारण गरी स्थानीय तहले आयोजना कार्यान्वयनको निर्धारण गर्दछन् भनेका छन् । हाम्रो प्रशासन विकेन्द्रीकरणमैत्री हुन् सकेको छैन भने योजना पद्धति सुधार नहुँदा केन्द्रीकरणको साधन बनेको प्रतीत हुन्छ ।

(झ) तहगत एवम् सरकारहरूबिच खाजको प्रतिस्पर्धा जसले सार्वजतिनक क्षेत्रमा दक्षता बढाउँछ । जनताले रोजेका सेवाहरू पाउन सहज हुन्छ ।

(ञ) सार्वजनिक कार्यसम्पादनमा सामाजिक वातावरणलाई आत्मसात गरिएको हुनुपर्छ ।

(ट) राजनीतिक संस्कार र प्रशासनिक संस्कारको अन्तरसम्बन्धले र अन्योन्याश्रितताले प्रशासनिक संघीयताको प्रतिफल बढाउन सघाउँछ ।

(ठ) सबै तहमा सरकार र प्रशासनमा नीति, योजना र कार्यक्रम निर्माण तथा कार्यान्वयनको शक्तिशाली औजार प्रशासनिक संघीयता हो ।

(ड) कार्यकारिणी स्वभाव र Principle of Administrative Connectivity ।

(ढ) कर्मचारी सञ्जाल, समन्वय र सहकार्य एवम् व्यवसायीकरण

**३. नेपालमा प्रशासनिक संघीयता**

नेपालको संविधानले राजनीतिक, वित्तीय र प्रशासनिक संघीयताको संयोजन गरेको छ । संविधानको धारा ५६ ले राज्यको मूल संरचना संघ, प्रदेश र स्थानीय गरी तीन तहको हुने व्यवस्था गरे मुताविक तीनै तहमा निर्वाचित पदाधिकारीहरूले शासन गरेका छन् । नेपालको राज्यशक्तिको प्रयोग संविधान बमोजिम संघीय कानुन प्रदेश कानुन र गाउँसभा वा नगरसभाले बनाउने कानुनबमोजिम हुने प्रष्ट व्यवस्था धारा ५७ मा गरिएको छ । संविधान प्रदत्त तहगत जिम्मेवारी निर्वाह गर्न एकल र साझा रुपले प्रशासनिक संघीयताको व्यवस्थापन सबै तहले गर्न सक्दछन् । तर समान ढाँचा, नीति शर्त र समन्वय र सुधारका लागि संघीय कानुन र सरकार प्रभावकारी हुनुपर्दछ ।

छुट्टै राज्यहरू मिलेर Coming Together नभई अधिकारको विकेन्द्रीकरणमा आधारित संघीयता भएकाले एकात्मक प्रणाली अन्तर्गतका राष्ट्रसेवक कर्मचारीहरूको समेत व्यवस्थापन तथा उपयोग गरी प्रशासनिक संघीयता कार्यान्वयन गर्नु परेकोले संविधानको धारा ३०२ मा प्रदेश र स्थानीय तहमा सरकारी सेवाहरूको गठन र सञ्चालनसम्बन्धी व्यवस्था भएको छ । जसअनुसार प्रदेश र स्थानीय तहमा आवश्यक सेवा प्रवाह गर्न नेपाल सरकारले आवश्यक व्यवस्था गर्नेछ । संविधान प्रारम्भ हुँदाका बखत सरकारी सेवामा कार्यरत राष्ट्रसेवक कर्मचारीलाई नेपाल सरकारले कानुन बमोजिम संघ, प्रदेश र स्थानीय तहमा समायोजन गरी सेवा प्रवाहको व्यवस्था मिलाउने संवैधानिक प्रावधानअनुसार कर्मचारी समायोजन ऐन, २०७५ जारी भई कर्मचारी समायोजन गरिएको छ । नेपालको संविधानले धारा २८५ मा सरकारी सेवाको गठनसम्बन्धी व्यवस्था गरेको छ । सो बमोजिम नेपाल सरकारले देशको प्रशासन सञ्चालन गर्न संघीय निजामती सेवा र आवश्यकताम अनुसार अन्य संघीय सरकारी सेवाहरूको गठन गर्न सक्दछ । त्यस्ता सेवाहरूको गठन, सञ्चालन र सेवाका शर्त संघीय ऐन बमोजिम हुनेछ । संघीय निजामती सेवा लगायतका सबै संघीय सरकारी

सेवामा प्रतियोगितात्मक परीक्षाद्वारा पदपूर्ति गर्दा संघीय कानुनबमोजिम खुला र समानुपातिक समावेशी सिद्धान्तका आधारमा हुनुपर्ने समेत व्यवस्था संविधानमा गरिएको छ । धारा ३०२ को व्यवस्थाका अतिरिक्त प्रदेश मन्त्रिपरिषद्, गाउँ कार्यपालिका र नगर कार्यपालिकाले आफ्नो प्रशासन सञ्चालन गर्न आवश्यकता अनुसार कानुनबमोजिम विभिन्न सरकारी सेवाहरूको गठन र सञ्चालन गर्न सक्ने प्रावधान धारा २८५ मा गरिएको छ। स्थानीय सरकार सञ्चालन ऐन, २०७४ मा प्रशासनिक संगठन र कर्मचारी व्यवस्थाको छुट्टै परिच्छेद राखिएको छ। जसमा हरेक वडाको संगठन संरचना समेतलाई समेटिएको छ। संगठन तथा व्यवस्थापन सर्भेक्षण, कार्यबोझ र स्रोत समेत विश्लेषण गरी गाउँपालिका, नगरपालिका र वडा कार्यालयको दरबन्दी प्रस्ताव गर्नुपर्ने समेत उक्त ऐनमा उल्लेख गरिएको छ। हाम्रो संविधानले संघ, प्रदेश र स्थानीय तहलाई कानुन बनाई तोकिएको अधिकार तथा कार्यजिम्मेवारी कार्यान्वयन गर्न सक्ने व्यवस्था गरेकोले प्रशासनिक संघीयता, संघ, प्रदेश र स्थानीय तीनै तहको कानुन, संगठन संरचना, जनशक्ति, दरबन्दी व्यवस्था र कार्यविधि तथा प्रक्रिया निर्धारित हुँदै क्रियाशील छ।

सरकारका तहबिच कार्यजिम्मेवारी निर्धारण तथा कार्यान्वयनका लागि गरिएको सहकारी संघीयता प्रशासनिक संघीयतमा अझ बढी प्रभावकारी हुनु आवश्यक छ। हाम्रो प्रशासनिक संघीयताको विद्यमान अवस्थालदाई निम्नानुसार उल्लेख गर्न सकिन्छ।

(क) नेपालको संविधानले निर्दिष्ट गरेअनुसार हाल संघ, प्रदेश र स्थानीय तहमा ६७४२ वडा, ७५३ स्थानीय सरकार, ७ वटा प्रदेश र एक संघीय सरकारको प्रशासनिक संरचना क्रियाशील छ। महालेखा परीक्षकको साठीऔं वार्षिक प्रतिवेदन २०७९ मा उल्लेख भए अनुसार आ.व. २०७८/७९ मा संघीय निकायहरू ४०६८, प्रदेश मन्त्रालय तथा निकाय १२१८ स्थानीय तह, समिति, संगठित संस्था र अन्य संस्था गरी जम्मा ६५४६ निकायको लेखा परीक्षण भएको छ। यी सबै तह र संरचनका समान व्यवहार, खर्च, उपलब्धि र जनसन्तुष्टीको अवस्थाले प्रशासनिक संघीयताको स्वरुप र सफलता देखाउँछ।

(ख) नेपालको संविधानलको धारा ३०२ बमोजिम कर्मचारी समायोजन ऐन, २०७५ बनाई संविधान प्रारम्भ हुँदाका बखत कार्यरत राष्ट्रसेवकलाई तीन तह (संघ, प्रदेश र स्थानीय) मा समायोजन गरियो। कर्मचारी समायोजन गर्दा कार्यविस्तृतीकरण प्रतिवेदन अनुरुप तहगत कार्य र कर्मचारीको कार्यविवरण अनुसार स्थानीय तहबाट मिलाउनु उपयोगी हुनेमा सकेसम्म संघमा नै राखेर संघको संरचना बोझिलो बनाइयो। समायोजन गर्दा कतिपय सीप बेमेल हुन गई कार्यसम्पादनमा अपेक्षित दक्षता आउन सकेन। न त समायोजिक कर्मचारी नै खुशी छन् न त कार्य गराउने सम्बन्धित तह नै।

(ग) समग्र संघीय कार्यान्वयनको मति, गति र प्रगति सन्तोषजनक एवम् अपेक्षित प्रतिफलदायी हुन सकेको देखिँदैन। राजनीतिक नेतृत्वले विशेष ध्यान दिन नसक्दा संघीयता कार्यान्वयनमा गतिशिलता आउन सकेन। फलत प्रशासनिक संघीयता शिथिलताबाट गुज्रन पुग्यो भन्नुमा अत्युक्ति नहोला।

(घ) संविधानका अनुसूची ५ देखि ९ सम्मका कार्यजिम्मेवारीहरूमा कतिपय एकल अधिकार समेत दोहोरो परेको, साझा अधिकार कार्यान्वयनको ढाँचा बन्न नसकेको र तहगत एवम् विषय क्षेत्रगत

Sectoral प्रशासनिक संरचना, दरबन्दी आदिको एकीकृत मापदण्ड नबन्दा तीनै तहका संगठन संस्था एवम् दरबन्दी सिर्जना तटर्थ हुन पुगी प्रशासनिक संघीयताको गन्तव्य स्पष्ट नदेखिँदा कार्य सम्पादनमा दक्षता आउन सकेको छैन । यसैगरी तहगत कानुन निर्माणमा गुणस्तरीय विधायनको कमी, क्षमता र वित्तीय स्रोतको तालमेलको कमीले समग्र कार्य न्यूनताको दोष प्रशासनिक संघीयतालाई दिन खोजिएको प्रतीत हुन्छ ।

(ङ) तीन तहमा आवश्यकता, कार्यदक्षता, मितव्ययिता र दिगोपना दृष्टिगत गरी संगठन संरचना दरबन्दी सिर्जना र पदपूर्तिमा विवेकसम्मत र दिगोपनाका पक्षभन्दा तत्काल काम चलाउने प्रबृत्ति हावी छ। एउटै तह र सरकारी संरचना र समानतालाई हेरिदिने पक्ष कमजोर छ। तह तथा विषयगत निकायहरूले पाउनुपर्ने जति महत्व पाउन सकेका छैनन् । तीन तहहरूमा दरबन्दी बढ्ने र संगठन बोझिला बन्दै जाने क्रम जारी छ। संघ यसै पनि बोझिलो थियो तर अझ बोझिलो बनिरहेको छ। कर्मचारी समायोजन गरेपछि पनि उल्लेख्य रुपमा संघमै कर्मचारी रहेका छन् । २०७९ फागुन मसान्तसम्म संघको कुल दरबन्दी ५३३९७ मध्ये प्राविधिकको ३७.१ प्रतिशत र अप्राविधिकको ६२.९ प्रतिशत दरबन्दी रहेको छ। वि.सं. २०५७ मा सार्वजनिक खर्च पुनरावलकेकन आयोगले विषयगत मन्त्रालयबाट डिभिजन कार्यालयहरू बढीमा २५ वटा हुनुपर्छ भनेकोमा अहिले संघीय प्रणालीमा कतिपय निकायका ७७ वटै जिल्लामा पुऱ्याउने प्रयास भएको देखिन्छ । यसरी कार्यजिम्मेवारीमा फरक भए पनि संघीय निकायमा संगठन संरचना र दरबन्दी तथा कार्यालय व्यवस्थामा परिवर्तन आएको पाइँदैन । प्रदेश र पालिकाहरूले पनि कामको खाँचोको वाहानामा संगठन बोझिलो बनाउँदै गएका छन् । दक्षता बढाई उत्पादनमूलक कार्य संस्कृत विकसित गर्न नसक्ने हो भने सञ्चालन खर्च धान्न सकिँदैन । संगठनात्मक अराजकता बढ्ने प्रवल सम्भावना देखिन्छ ।

(च) प्रशासनिक संघीयताले कार्यगत स्वायत्तताको लागि सवल विकेन्द्रीकरण प्रवर्द्धन गर्नुपर्ने हो । तर हाम्रो प्रशासनिक नेतृत्वमा संविधान बमोजिम अधिकार निक्षेपण गर्ने उपायहरूको खोजी गर्ने भन्दा कसरी अधिकार कायमै राखी पुनः केन्द्रीकरण गर्ने भन्ने तिर्सना जागृत देखिन्छ । यो विगतदेखिकै मनोग्रन्थी हो । यसबाट संघीयताले चाहेको प्रशासनिक संघीयताको संस्कार एकरुपता, भरोसा र समन्वयमा विश्वासको संकट कायमै देखिन्छ ।

(छ) राजनीतिक नेतृत्वले प्रशासनिक संघीयताको मार्गदर्शन गरी नेतृत्व गर्न सक्नुपर्ने हो । तर विषयगत मन्त्रालयको समितिमा राजनीतिक नेतृत्वले संघीयतामैत्री निर्णय गरी कार्यान्वयन गराउन सकेको पाइँदैन । स्वयं सोधखोज गरी कुनै क्षेत्र विशेष होइन समग्र प्रशासनिक संघीयताको ढाँचा, कानुन बनाउने क्षमताको कमी राजनीतिक नेतृत्वमा देखिन्छ । स्वतन्त्र विज्ञ, अनुभवी र प्राज्ञको खोजी भन्दा आफ्नै घेरामा रमाउने र त्यही घेराबाट निर्देशित हुने आम प्रवृत्तिले राजनीतिक क्षेत्र ग्रसित छ । कतिपय अवस्थामा राजनीतिक क्षेत्र आफ्ना मान्छेको चपेटामा परी स्वच्छ र विवेकसम्मत निर्णय गर्नमा चुकेको अवस्थाले पनि प्रशासनिक संघीयताले सक्षम र गतिशील हुन नसकेका उदाहरण पनि पाउन सकिन्छ ।

(ज) संघीय शासन पद्धति लागू भएपछि स्थानीय तहमा आधारभूत सेवाको पहुँच र सुनिश्चितता बढेको

छ। कार्यबोझ कम भए पनि संघीय निकायहरूको दक्षता बढ्न सकेको छैन। संघले राजस्व उठाउन नसक्दा स्थानीय तहमा जानु पर्ने कतिपय वित्तीय हस्तान्तरण पूरा भागमा नजाँदा योजना तथा बजेट प्रणाली नै खलबलिएको अवस्था छ। जनताको नजिक सरकार पुगेको र सरकारको अनुभूति दिलाउन केही हदसम्म स्थानीय तह सफल भएका छन्। गुणस्तरीय सेवा प्रवाह गराउन संघ र प्रदेशले दक्षता देखाउन सकेका छैनन्। प्रशासनिक सञ्जाल र सेवा प्रवाहको श्रृङ्खलाले निरन्तरता पाउन सकेको छैन। यसले गर्दा सजिला काम प्रियतावादी र वितरणीय काम सबै तहले गर्ने तर जटिल कार्यहरू पन्छाउने प्रवृत्ति पनि मौजुद देखिन्छ। खोज गर्नेभन्दा यथास्थितिमा रमाउन पुगेको पाइन्छ।

(झ) सार्वजनकि प्रशासनको क्षमता बढाई सेवा प्रवाह र विकास व्यवस्थापनमा गतिशीलता ल्याउन सकिएको छैन। सञ्चालन खर्च बढ्दै जाने पूँजिगत खर्च लक्ष्य अनुरुप खर्च गर्न नसकी आर्थिक अवस्था कमजोर हुन गएको छ। एकातिर सञ्चालन खर्च तीनै तहमा बढ्दै गएको छ भने अर्कोतिर पूँजिगत खर्चको लगानी उत्पादनमूलक क्षेत्रमा जति भई जे जस्तो प्रतिफल आउनु पर्थ्यो आउन सकेको देखिँदेन। संघको अधिकार प्रदेश र स्थानीय तहमा गएपछि सञ्चालन खर्च घट्नु पर्ने हो तर यो खर्च आ.व. २०७६/७७ मा रु ७ खर्ब ८४ अर्ब १४ करोड ८९ लाखबाट आ.व. २०७८/७९ मा रु. ९ खर्ब ५४ अर्ब ३१ करोड ६७ लाख पुगेको देखिन्छ। यसबाट के प्रष्ट हुन्छ भने सञ्चालन खर्च नियन्त्रण गरी मितव्ययीता कायम राख्न विशेष प्रयत्न गर्नुपर्छ।

(ञ) विगतमा जिल्ला सदरमुकाम विकास तथा सेवा प्रवाह केन्द्रका रुपमा लिए। संघीयतापछि पालिका यस्ता केन्द्र भै वडाहरू सेवा प्रदायक इकाइ हुन गएका छन्। यी वडाहरू व्यस्त पनि छन्। तर प्रशासनिक विषयमा पनि राजनीतिक सक्रियता बढी देखिँदा कर्मचारीतन्त्र संकुचन हुन जाने जोखिम देखिएको छ। पालिका र प्रदेशको प्रशासनिक तथा प्राविधिक क्षमता बढाई योजना पद्धतिमा सुधार तथा समन्वय गर्न सकेमा प्रशासनिक संघीयताले अपेक्षित नतिजा देखाउन सक्छ।

(ट) प्रशासन सुधारले प्राथमिकता नपाउँदा शासकीय सुधार हुन सकेको छैन। संघीयता अनुकूल प्रशासन रुपान्तरण हुन सकेको छैन। शक्ति पृथकीकरण, नियन्त्रण र सन्तुलन गराउन प्रशासनिक संघीय अपेक्षित मात्रमा सक्षम हुन बाँकी नै छ। अति राजनीति र बहुमतको निरङ्कुशताले प्रशासनिक संघीयता थला परेको छ। यो आफै उठ्न सक्ने विश्वासका आधार पाइँदैन भने राजनीतिक क्षेत्र प्रशासनलाई व्यावसायिक, सक्षम, दक्ष र पद्धतिगत बनाउन भन्दा आदेश तामेल गर्ने कर्मचारी रोजेर रमाएको छ भन्ने जानिफकारको मत छ।

(ठ) काम, संगठन र जनशक्तिबिच सन्तुलन मिलाउन नसक्दा तहगत र समग्र प्रशासनिक संघीयताको जग मजबूत बन्न सकिएको छैन।

(ड) उपभोक्ता समिति गठन गर्ने समुदायदेखि नेपाल सरकारको मन्त्रिपरिषद्सम्मका हरेक तहमा स्वकीय सचिवालय, सल्लाकार आदिको समानान्तर संरचना छ। यो संरचना जवाफदेही बन्नु पर्दैन तर औपचारिक संरचना भन्दा शक्तिशाली भै प्रशासनिक संघीयता चलाएको छ। यसले गर्दा औपचारिक प्रशासनिक संरचना छायाँमा परी निष्क्रिय हुन पुगेको प्रतीत हुन्छ। यो राजनीतिक संरचना करिब करिब वि.सं. २०४६ देखि नै स्थायी र उही प्रकृतिको छ। यसले राजनीति

र प्रशासन दुवै चलाउँछ। सम्बद्ध कर्मचारीका ट्रेड युनियनहरूले पनि राजनीतिको समानान्तर पद्धतिसँग आवद्ध भै प्रशासनिक संघीयतालाई प्रभाव पारेका छन्। विधि, पद्दति, सुशासन र जवाफदेहीता फितलो हुन पुगेको विज्ञहरू बताउँछन्।

(ढ) संघको नेतृत्वले समानताभन्दा संघमुखी आचरण र व्यवहार देखाउँदा संघ बोझिलो, खर्चिलो, प्रदेश धोल्लो र स्थानीय संरचना विविधतायुक्त हुन पुगेको छ। समन्वय र सहकार्य तथा सहकारी संघीयता क्रियाशील हुन सकेको छैन।

**४. प्रशासनिक संघीयता सुदृढीकरण**

प्रशासनिक संघीयता वास्तविकता हो। नीति, कानुन, योजना, कार्यक्रम र बजेट तर्जुमा एवम् कार्यान्वयनमा अग्रणी भूमिका खेल्ने प्रशासनिक संघीयता, संघीयता कार्यान्वयनको मुख्य साधन हो। राजनीतिक क्षेत्र प्रशासनिक क्षेत्रमा भर नपरी बढी जान्ने र इमान्दार नभएसम्म प्रशासनिक संघीयताको आदर्श ढाँचा र दक्ष कार्यशैली आउँदैन। हाम्रो संघीयता कार्यान्वयनमा प्रशासनिक संघीयताको बुझाइ, काम गराई र जिम्मेवारी मिलिसकेको छैन। काम भइरहेका छ। संगठन संरचना बनिरहेका छन्। दरबन्दी थपिँदै छन्। तर कति उपयुक्त, कामयावी र मिव्ययी छन् भन्ने यक्ष प्रश्न छन्। सुशासन, कानुनको शासन, जवाफदेही र दिगोपनाका दृष्टिले प्रशासनिक संघीयतामा धेरै सुधार गर्नु आवश्यक छ। बढ्दो जनअसन्तुष्टी र संघीयता माथि उठ्न थालेका प्रश्न सम्बोधन गर्न प्रशासनिक संघीयतालाई चुस्त दुरुस्त, कामयावी, नतिजामूलक र जवाफदेही बनाउन पर्ने देखिन्छ। सोको लागि निम्न बमोजिम सुझाव प्रस्तुत गर्न सकिन्छ :

(क) संविधानका अनुसूचीहरू र कानुनी व्यवस्था अनुसार संघ, प्रदेश र स्थानीय तहका एकल अधिकार प्रष्ट गर्ने।

(ख) साझा अधिकारको प्रयोगको ढाँचा र जिम्मेवारी निर्वाह तोकी जवाफदेही पद्दति विकासित गर्ने।

(ग) कार्य विस्तृतीकरण प्रतिवेदन पुनरावलोकन गरी थप प्रष्ट पार्ने र सोबमोजिम प्रशासनिक संरचना, दरबन्दी र कार्यसम्पादन व्यवस्था मिलाउने,

(घ) प्रशासनिक संघीयता बाधा होइन, सहयोगी साधन र मुख्य कर्ता हो भन्ने बुझाई र पद्दतिगत सौंच एवम् जागरण ल्याई राजनीतिक नेतृत्वलाई पनि जवाफदेही बनाउने।

(ङ) संविधान जारी हुने वित्तिकै अध्ययन गरी संघमा सोह्र मन्त्रालय र २७ वटा मात्र विभाग राख्न दिइएका सुझावहरू कार्यान्वयन गराउने।

(च) संगठन संरचना, दरबन्दी व्यवस्थापन, पदपूर्ति र कार्यसम्पादनका दृष्टिले संघीय मन्त्रालयहरू छरिता र सक्रिय बनाई संघीयता कार्यान्वयनमा मन्त्रालयगत जिम्मेवारी तोकी कार्यान्वयन गराउने।

(छ) संघीयता लागू भएपछिको तीनै तहको संगठन संरचना, दरबन्दी, सेवा प्रवाह, विकास व्यवस्थापनको गहन अध्ययन गरी प्रशासनिक संघीयता प्रवलीकरणका उपाय पहिचान र कार्यान्वयन गर्ने। दोहोरो कार्यभार, बजेट र संगठन संरचनामा सुधार गरी कार्य संस्कृति सुदृढ गर्ने।

(ज) प्रशासन सुधारको तहगत योजना र कार्यान्वयन तथा योजना पद्दतिमा सुधार र समन्वय गर्ने,

(झ) तहगत तोकिएका कार्यजिम्मेवारीको खर्चको आवश्यकता अध्ययन गरी वित्तीय सन्तुलन र जवाफदेही पद्दति क्रियाशील बनाउने,

(ञ) तहगत प्रशासनिक सञ्जाल एवम् सेवाश्रृङ्खला कायम गरी सहकारी संघीयता कार्यान्वयन गर्न सक्षम प्रशासनिक संघीयता बनाउने,

(ट) संघीय निजामती सेवा ऐन शीघ्र संसदमा पेश गरी पारित गर्ने । उक्त ऐनमा प्रशासनिक संघीयता सवल बनाउन सक्ने सर्त, मापदण्ड, वृत्ति विकास, व्यावसायिक क्षमता अभिवृद्धि र व्यावसायिक स्वायत्तता सुनिश्चित गर्ने प्रावधानहरू राख्ने । ट्रेड युनियन खारेज गर्ने । खारेज गर्न नसके कार्यालय समयमा ट्रेड युनियनका कार्यक्रमहरू गर्न समय खर्च गर्न नपाउने व्यवस्था गर्ने ।

(ठ) तीनै तहमा बहुसीपयुक्त एवम् प्रविधिमैत्री मेधावी युवाहरूलाई आकर्षित गर्ने गरी पाठ्यक्रम परीक्षण र क्षमता विकासका आयाममा परिमार्जन गर्ने,

(ड) राजनीतिक नेतृत्वका लागि सल्लाहकार सकभर सार्वजनिक संरचनाबाट खोजी राख्ने । यस्ता सल्लाहकारको कार्यविवरण र जवाफेदही तोक्ने । मन्त्रीहरूले मन्त्रालयमा राजनीतिक दलका कार्यकर्ता नभेट्ने । कार्यलय समयमा पूरै मन्त्रालयमा रही कार्यसम्पादन गर्ने गराउने ।

(ढ) स्थायी कर्मचारीको सङ्ख्या बढाउनु भन्दा कार्य वैशिष्ट्यका आधारमा व्यक्ति होइन कि सेवा करारमा दिई छोटो छोटो अवधिका लागि उपयोग गर्ने ।

(ण) प्रशासनिक संरचना मितव्ययी बनाउने । एकीकृत मापदण्ड बनाई दोहोरो संगठन र कार्यक्षेत्र नपर्ने सुनिश्चित गरेर मात्र संगठन संरचना थप हेरफेर र सुधार गर्ने ।

(त) प्रशासनिक संरचना निर्माण गर्दा, थपघट गर्दा र सुधार गर्दा सेवा प्रवाह र विकास व्यवस्थापनलाई मूल आधार मान्ने । संस्थागत कार्यसम्पादनको व्यवस्थापन परीक्षण नियमित रुपमा गर्ने । परीक्षणबाट प्राप्त सुझावको कार्यान्वयन गर्ने ।

(थ) राजनीतिक हस्तक्षेप र अतिक्रमणबाट कार्य वातावरणमा खलल नपुऱ्याउने । कार्य सहजीकरण गर्ने । आफ्नो मान्छेको भ्रमबाट राजनीतिक क्षेत्रमुक्त हुनुपर्छ । क्षमतावान राष्ट्रसेवक कर्मचारीलाई व्यावसायिक स्वायत्तता दिने । व्यावसयिक सीमाभित्र रहेर दिइएका सुझाव, गलत कामको प्रतिरोध, सुशासनको वकालत गर्दा, पदमा रहँदा र निवृत्तपछि राजनीतिक नेतृत्व, उनीहरूका नजिकका कर्मचारी, सल्लाहकार र दलका सञ्चार माध्यमले खेदो खन्ने प्रवृत्तिले कर्मचारी संयन्त्र टाक्सिएको छ । यो पक्षमा सुधार नभई प्रशासनिक संघीयता सदृढ हुन सक्दैन ।

(द) सार्वजनिक प्रशासनलाई सरकारको चौथो शाखा (Branch) भनी व्यवस्था गरिन्छ । तदअनुरुप व्यावसायिक क्षेत्र र प्रणालीका रुपमा तहगत सुदृढीकरण गरी प्रशासनिक संघीयतालाई संघीयता कार्यान्वयनमैत्री बनाउनु पर्ने । संघीयताको मान्यतानुसार प्रशासन संयन्त्र रुपान्तरण हुनुका साथै राजनीतिक नेतृत्वको सकारात्मक सोँच आवश्यक छ । प्रशासनिक संघीयताको कार्यकारिणी स्वभाव मनन गरी क्षमता निकास र व्यावसायिक सुधार अपरिहार्य छ ।

**सन्दर्भ सामग्री**

- डा. सोमलाल सुवेदी, नेपालमा संघीयता, अनुभव, अवलोकन र अनुभूति, पैरवी प्रकाशन, २०७८ ।

- नेपालको संविधान, संविधान सभा सचिवालय, सिंहदरबार, काठमाडौं ।
- आर्थिक सर्भेक्षण, २०७९/८०, नेपाल सरकार, अर्थ मन्त्रालय, सिंहदरबार, काठमाडौं ।
- encyopdia.federalism.org.lindex.phd/public_administration.
- महालेखा परीक्षकको साठीऔँ वार्षिक प्रतिवेदन, २०७९, सारांश, महालेखा परीक्षकको विभाग, काठमाडौं, नेपाल ।
- कार्यविस्तृतीकरण, प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय, सिंहदरबार, काठमाडौं, चैत्र, २०७३ ।
- स्थानीय सरकार सञ्चालन ऐन, २०७४ ।



# नेपालमा संघीय प्रणालीको अभ्यास



✍ **पूर्ण चन्द्र भट्टराई***

### १. पृष्ठभूमि

नेपालमा संघीयताको अभ्यास नौलो अभ्यासमा पदार्पण गरेको पनि आठ वर्ष व्यतित भएको छ। संविधान सभाबाट जारी यो संविधान २०७२ साल असोज ३ गतेदेखि लागू भएको हो। अमेरिकाले १७८७, स्वीटजरल्याण्डले १८४८, ब्राजीलले १८९१, जर्मनीले १९१९, भारतले १९५० देखि संघीय शासन प्रणालीको अभ्यास गरिरहेका छन्। संघीय प्रणाली अवलम्बन गरेका अन्य मुलुकको अभ्यास हेर्दा नेपाल संघीय शासन प्रणालीको अभ्यासको प्रारम्भिक चरणमा छ।

संघीय शासन प्रणालीका राजनीतिक, प्रशासनिक र वित्तीय पाटाहरू हुन्छन् जसको सिलसिलाबद्ध र एकीकृत प्रयासबाट संघीय प्रणालीको कार्यान्वयन प्रभावकारी हुन सक्छ। यसै परिप्रेक्षमा विगत आठ वर्षको संघीय शासन प्रणाली कार्यान्वयन अभ्यासको लेखाजोखामा यो आलेख केन्द्रित छ।

### २. राजनीतिक संघीयता

संघीयता कार्यान्वयन मूलतः राजनीतिक मुद्दा हो। संघीयताको आधारभूत सिद्धान्त भनेको राज्यको शक्ति र अधिकारलाई एउटै ठाउँमा केन्द्रित नगरी राज्यका विभिन्न संरचनाहरूमा आदर्शतम बाँडफाँड गरिने मान्यता हो। राज्यसत्ता र शक्तिको वितरण तथा अधिकारको बाँडफाँड राजनीतिक प्रतिबद्धताबाट सृजित हुन्छ। मुलुकको नेतृत्व र संविधानले दिएको अधिकारको अभ्यास तीनै तहका निर्वाचित प्रतिनिधिहरूबाटै हुने हो। वित्तीय र प्रशासनिक पाटोलाई मार्गनिर्देशित गर्ने, समन्वय र प्रभावकारी बनाउने जिम्मेवारी पनि अन्ततः राजनीतिक क्षेत्रमा नै रहन्छ। राजनीतिक नेतृत्वले नै प्रशासन र वित्तीय प्रणाली सम्बन्धी विधि र प्रणालीको स्थापना गर्छ। यसैले संविधान कार्यान्वयनको मूल विषय नै राजनीतिक पक्षसँग जोडिएको

---

* पूर्वसचिव, नेपाल सरकार

हुन्छ । राजनीतिक क्षेत्रले नै संघीयता कार्यान्वयनका प्रक्रियालाई नेतृत्व र निर्देशित गर्छ ।

राजनीतिक संघीयतामा मूलतः (१) संविधानअनुसार राज्यको पुनःसंरचना, (२) निर्वाचित निकायहरूको स्थापना र क्रियाशीलता, (३) विधि र प्रक्रियाको स्थापना, (४) अन्तरतह समन्वय र विवाद व्यवस्थापन, (५) संघीय ढाँचामा राजनीतिक दलको संरचना निर्माणजस्ता मुख्यमुख्य विषयहरू पर्छन् ।

संघीय प्रणालीको कार्यान्वयनको क्रममा राजनीतिक पाटोमा केही महत्वपूर्ण कार्य सम्पादन भएका छन् । नेपालको संविधानअनुसार राज्यको पुनःसंरचनाको कार्य सम्पन्न भएको छ । मुलुकमा तीन तहका सरकारका संरचनाहरू गठन भएका छन्, जस अनुसार संघका अलावा ७ प्रदेश, ७७ जिल्ला, ७५३ स्थानीय तह र स्थानीय तहअन्तर्गत ६,७४३ वडा कार्यालयहरूको संरचना स्थापना भएको छ ।

संविधानअनुसार निर्वाचनबाट तीनै तहका व्यवस्थापिकाको निर्माणको साथै सरकारहरू गठन भई क्रियाशील भएका छन् । संवैधानिक संरचनाअनुरूप, राज्यका तीनै तहबाट संघीयताको अभ्यास भइरहेको छ । नागरिकलाई राज्यका तीनै तहमा नेतृत्व चयन, परीक्षण र मूल्याङ्कन गर्ने अवसर प्राप्त भएको छ । जनताको घरदैलोको सरकारका रूपमा स्थानीय तहको दरिलो उपस्थिति देखिएको छ ।

संविधान कार्यान्वयनका क्रममालागि करिब ११० वटा विषयमा संघीय, करिब २२ वटा विषयमा प्रदेश र करिब ६ (अत्यावश्यक) वटा विषयमा स्थानीय तहका कानुनको तर्जुमा गर्नुपर्ने गरी पहिचान भएको थियो । यस्तै, मौजुदा ३१५ भन्दा बढी ऐन तथा करिब २७० को सङ्ख्यामा रहेका नियमावलीहरूलाई समेत संविधान अनुकूल बनाउनुपर्ने (कानुन न्याय तथा संसदीय मामिला मन्त्रालय, २०७३) भनी पहिचान भएको थियो । यीमध्ये हालसम्म संघीय ऐन ३४०, प्रदेश कानुन २१३ (मलेप प्रतिवेदन,२०७७) र औसतमा दर्जनभन्दा बढी स्थानीय कानुनहरू बनेका छन् । यसै गरी धेरै पुराना कानुन संविधानअनुकूल बनाउने कार्य पनि भइरहेका छन् । मौलिक हक कार्यान्वयन तथा अन्य केही आधारशिला कानुनहरूको निर्माण भएको छ । प्रदेश र स्थानीय संघीय मापदण्डका आधारमा प्रशस्त विधि प्रणालीहरू निर्माण भएका छन् ।

संविधानले अन्तरतह समन्वयका लागि अन्तरप्रदेश परिषद, अन्तरसरकारी वित्त परिषद्, राष्ट्रिय समन्वय परिषद्, प्रदेश समन्वय परिषद्जस्ता संरचनाहरू प्रक्रियामा गएका छन् । विवादका कतिपय विषयमा संवैधानिक बेन्चसमक्ष मुद्दाका रूपमा प्रस्तुत भइरहेका छन् ।

मुख्य राजनीतिक दलका संगठनहरूसमेत संघीयताअनुकूल पुनःसंरचित भएका छन् । संघ, प्रदेश, स्थानीय तह र कतिपय राजनीतिक दलले त वडा तहसम्मै संरचनाहरू निर्माण गरेका छन् ।

### ३. **वित्तीय संघीयता**

सरकारका तहहरूका बिच अधिकारको बाँडफाँड अनुसार जम्मेवारी निर्वाह गर्न अधिकारका साथै वित्तीय शक्ति र जिम्मेवारीको पनि बाँडफाँड गरिएको हुन्छ । जसमा राजस्व स्रोत उठाउने, उठेको राजस्व खर्च गर्ने र यससम्बन्धी प्रशासन तथा नियमन गर्ने जस्ता विषय पर्दछन् । संघीय एकाइहरूबिच आ आफ्नो जिम्मेवारी अनुसारको कार्यसम्पादन गर्न वित्तीय स्रोत साधनको व्यवस्थापन गर्नु पर्ने भएकाले वित्तीय सङ्घीयतालाई संघीय प्रणालीमा आत्माको रूपमा लिने गरिन्छ ।

वित्तीय सङ्घीयताका चार आधार स्तम्भ रहेका हुन्छन् । यी आधारस्तम्भअन्तर्गत सरकारका विभिन्न् तहहरूबिच कार्यजिम्मेवारी/खर्चको बाँडफाँड (Expenditure Assignment), राजश्व अधिकारको

बाँडफाँड (Revenue Assignment) वित्तीय हस्तान्तरण (Inter-governmental fiscal transfer) र सार्वजनिक ऋणको (Borrowing) उपयोग र नियमन पर्दछन् ।

नेपालको संविधानले वित्तीय सङ्घीयताका उपरोक्त चारवटै स्तम्भलाई समाहित गरेको छ । संवैधानिक व्यवस्थाअनुसार वित्तीय सङ्घीयताका महत्वपूर्ण आधारशिलाहरू स्थापित भएकाछन् । यस अवधिमा तीनै तहका सरकारले कर तथा सेवाशुल्क लगायतका राजश्व अधिकारको प्रयोग गरेका छन् । वित्तीय सङ्घीयताको संस्थागत आधार प्रदान गर्ने संवैधानिक अङ्गको रूपमा रहेको राष्ट्रिय प्राकृतिक स्रोत तथा वित्तीय आयोगले अनुदान, वित्तीय हस्तान्तरण, राजश्व बाँडफाँड, आन्तरिक ऋण जस्ता विषयमा आधार, मापदण्ड स्थापना गरेको छ । समानीकरण, सशर्त, समपूरक र विशेष अनुदान, राजश्व बाँडफाँड (प्राकृतिक स्रोतको आय समेत) प्रणाली सुचारू भएको छ । नेपाल सरकारले प्रदेश र स्थानीय तहलाई संघीय बजेटको करिब एक तिहाइ रकम वित्तीय हस्तान्तरण गरेको छ । तीनै तहका सरकारले संविधानले प्रदान गरेको अधिकारको दायराभित्र रही आ-आफ्नो कानुनअनुसार आर्थिक/वित्तीय अधिकारको प्रयोग गरेकाछन् ।

**४. प्रशासनिक संघीयता**

मुलुकले अवलम्बन गरेको राजनीतिक प्रणालीबाट सार्वजनिक प्रशासन परिचालित हुन्छ । मुलुकले अवलम्बन गरेको संघीय प्रणालीको कार्यान्वयन गर्नु सार्वजनिक प्रशासनको जिम्मेवारी र दायित्व हो । राज्यको स्थायी अङ्गको रूपमा संविधान कार्यान्वयनमा सार्वजनिक प्रशासनको महत्त्वपूर्ण भूमिका हुन्छ । यसैले संघीयता कार्यान्वयनमा प्रशासनिक संघीयकरणको पाटोलाई महत्त्वका साथ हेरिने गरिन्छ । आमरूपमा राज्यको पुनर्संरचनाअनुसार प्रशासनिक पुनर्संरचना गरी राज्य सञ्चालनको कार्यलाई सुव्यवस्थित गर्ने कार्यलाई प्रशासनिक संघीयताको रूपमा बुझ्ने गरिन्छ । प्रशासनिक संघीयतामा मुख्यतः(क) कार्य (Function), (ख) कार्यसंयन्त्र (Functionaries) सबै (ग) रकम/वित्त स्रोत (Fund) पर्दछन् । यसका लागि सार्वजनिक प्रशासनको सुव्यवस्थित संघीयकरण आवश्यक हुन्छ ।

संविधान जारी भएसँगै प्रशासनिक संघीयताको पाटोलाई संस्थागत गर्न केही महत्त्वपूर्ण कार्य भएका छन् । एकात्मक ढाँचाको सार्वजनिक प्रशासन संघीय ढाँचामा रूपान्तरण भएको छ । संघ, प्रदेश र स्थानीय तहमा कर्मचारी समायोजन लगभग सम्पन्न् भएको छ । प्रदेश लोक सेवा आयोगहरूले प्रदेश र स्थानीय तहको दरबन्दी अनुसार पदपूर्ति थालेका छन् । यसले संविधानअनुसार सम्बन्धित तहका सरकारप्रति जवाफदेही र उत्तरदायी कर्मचारीतन्त्रको जग बसाल्ने कार्यसमेत गर्नेछ । संघीय एकाइहरूबिचको सम्बन्धलाई व्यवस्थित गर्न अन्तर प्रदेश परिषद्, राष्ट्रिय समन्वय परिषद्, राष्ट्रिय वित्त परिषद्, प्रदेश समन्वय परिषद्जस्ता समन्वयकारी संस्थागत संरचनाहरू बनाइएका छन् । राष्ट्रिय समन्वय परिषद्को बैठकले केही महत्वपूर्ण कार्यदिशा तय गरेको छ ।

संविधानको अधिकारसूची अनुसार कार्यविस्तृतीकरण, स्थानीय सरकार सञ्चालन ऐन, संघ प्रदेश र स्थानीय तहको कार्यजिम्मेवारीमा पर्ने विकास कार्यक्रम तथा आयोजना वर्गीकरण तथा बाँडफाँड सम्बन्धी मापदण्ड आदिले तीनै तहका सरकारहरूले सम्पादन गर्नुपर्ने कार्यजिम्मेवारीलाई धेरै हदसम्म स्पष्ट गरिसकेका छन् ।

राष्ट्रिय नीति र योजनाका आधारमा तीनै तहका सरकारले आवधिक तथा वार्षिक योजना निर्माण, बजेट तर्जुमा, आर्थिक अधिकारको प्रयोग गरेका छन् भने, कार्यजिम्मेवारीअनुसार संघबाट प्रदेश र स्थानीय तहमा

केही आयोजना हस्तान्तरणसमेत भएका छन् ।

**५. समस्या**

**(क) राजनीतिक संघीयताको पाटोमा देखिएका समस्या**

नेपालले संघीय प्रणालीको कार्यान्वयनमा राजनीतिक दलहरूले लिनुपर्ने जति स्वामित्व र अपनत्व पाउन सकेको छैन । प्रदेश राजनीतिक र वित्तीय दुवै हिसाबले कमजोर रहँदा संघीयता कार्यान्वयनमा यसको भूमिका फैलिन सकेको छैन, कार्यसम्पादनबाट पनि प्रदेश सरकारले खासै पहिचान दिन सकेको छैन । संघीय प्रणालीका लागि आन्दोलन र वकालत गर्ने दलहरूको राजनीतिक उपस्थिति कमजोर र आवाज मलिन बनेकोछ भने सोचमा पनि यदाकदा विचलन देखिने गरेका छन् ।

संविधानको अधिकारसूची अन्तर्गत साझा अधिकारहरू विभिन्न तहका एकल अधिकारसँग दोहोरिएका छन् । साझा अधिकारबारे स्पष्ट हुने गरी कानुन बन्न् सकेको छैन । हालै राष्ट्रिय सभा विधायन व्यवस्थापन समितिले गरेको अध्ययनमा संविधान कार्यान्वयनका क्रममा संघले १५१, प्रदेशले २४ र स्थानीय तहले ६ वटा गरी १८१ वटा कानुनहरू तर्जुमा गर्नु पर्नेमा कतिपय आधारभूत कानुनहरू तर्जुमा हुन नसकेको उल्लेख गरेको छ । एकात्मक शासन प्रणालीमा जारी भएका कतिपय कानुनहरू अझै पनि संघीय प्रणालीअनुकूल हुन सकेका छैनन् । संविधान जारी भएपश्चात् तर्जुमा भएका दर्जनौं कानुनसमेत प्रदेश र स्थानीय तहको संवैधानिक अधिकारसँग बाझिएका छन् । कतिपय कानुन बने पनि राजनीतिक इच्छाशक्तिका कारण कार्यान्वयनमा आउन सकेका छैनन् । प्रहरी समायोजन सम्बन्धी ऐन बनेर पनि कार्यान्वयन हुन सकेको छैन । कतिपय ऐनहरू (मौलिक हक, अन्तरतह समन्वय आदि) तर्जुमा भएको लामो समय व्यतीत हुँदासम्म पनि नियमावली नबन्दा कार्यान्वयनमा आउन सकेका छैनन् ।

**(ख) वित्तीय संघीयताको पाटोमा देखिएका समस्या**

वित्तीय सङ्घीयताका कार्यान्वयनमा समस्या र अवरोधहरू कम छैनन् । संविधानमा कर सम्बन्धी एकल अधिकार एक भन्दा बढी तहमा दोहरिएका छन् । प्रदेशको राजश्व अधिकार अत्यन्त संकुचित रहेको छ ।

सरकारका तहगत कार्यजिम्मेवारी र स्रोतका बिच तादात्म्यताको अभाव छ, स्रोत संघमा र जिम्मेवारी प्रदेश र स्थानीय तहमा कार्यजिम्मेवारीअनुसार स्रोत साधन हस्तान्तरण हुन सकेको छैन । संविधानले कार्यजिम्मेवारीहरू प्रदेश र स्थानीय तहमा हस्तान्तरण गरेता पनि स्रोत महत्वपूर्ण राजश्व स्रोतहरू संघमा नै रहेको छ ।

स्थानीय र प्रदेश तहले आन्तरिक ऋण उठाउन प्रयोग गर्ने मौद्रिक औजार तयार भइनसकेको र यसको व्यवस्थापन तथा उपयोग सम्बन्धी प्रणाली स्थापित हुन सकेको छैन । हाल स्थानीय तहहरूले नेपाल सरकार र नगर विकास कोषबाटमात्र ऋण प्राप्त गर्न सक्दछन् ।

नेपाल सरकारले वित्तीय हस्तान्तरणमा सन्तुलन कायम गर्न सकेको छैन । नेपाल सरकारले प्रदान गर्ने वित्तीय अनुदानमा समानिकरणको हिस्सा बढी हुनु पर्नेमा ससर्त अनुदानमा बढी भार दिएको छ । समानिकरण अनुदान जुन प्रदेश र स्थानीय तहले आफ्नो विकास योजनाका प्राथमिकताअनुसार स्वायत्त ढङ्गले प्रयोग गर्न सक्दछन्, यसको हिस्सा ४२ प्रतिशत मात्र रहेको छ । अनुदान र वित्तीय हस्तान्तरणका सूचकहरूमा

पनि सन्तुलन मिल्न नसकेको भनि असन्तुष्टी व्यक्त हुने गरेका छन् ।

प्रदेश र स्थानीय तहका सरकारहरू संविधानप्रदत्त राजश्व अधिकारको उपयोग गरी स्रोतको जगेर्ना, खर्च क्षमता अभिबृद्धि र स्रोतको कुशलतम उपयोगमा सुधार गर्न सकिरहेका छैनन् । प्रदेश र स्थानीय सरकारहरू आफ्नो आम्दानी बढाउने प्रयत्नभन्दा संघीय अनुदानप्रति बढी लालायित देखिन्छन् । यसले परनिर्भरता बढ्नका साथै संघीय तह बढी हावी हुने हुन्छ । कुनै स्थानीय तह कर नै लगाउन नमान्ने कोही जथाभावी कर लगाउन उद्वेलित हुने प्रवृत्ति छ ।

**(ग) प्रशासनिक संघीयताको पाटोमा देखिएका समस्या**

संघीयता कार्यान्वयनका क्रममा प्रशासनिक संघीयताको गति निकै सुस्त छ । सार्वजनिक प्रशासन सम्बन्धी भूमिकाको बुझाइमा पनि अलमल देखिन्छ । विधानले निर्धारण गरेको संघ, प्रदेश र स्थानीय तहको अधिकारको सूची, कार्यजिम्मेवारी र संगठन संरचनाबिच तादात्म्य मिल्न सकेको छैन । संघीय संरचना अत्यन्त ठुलो, प्रदेशको एकदमै सानो र स्थानीय तहको कार्यजिम्मेवारी अनुकूल हुन सकेको छैन । संघीय संरचना थपिँदै जाने क्रम जारी छ, अझै रोकिइसकेको छैन । संघमा अधिक कर्मचारी तर न्यून कामले गर्दा अन्य तहमा हस्तान्तरण हुनुपर्ने कार्यहरूमा अवरोध बनेको छ । यसले अन्तर-सरकारी विवादको आकारसमेत बढाइरहेको छ । प्रदेश र स्थानीय तह पनि काम र खर्च क्षमता अनुसार दरवन्दी पुनरावलोकन हुन सकेको छैन । प्रदेश मन्त्रालयहरूको सङ्ख्या अनपेक्षित रूपमा बढेको छ । अनावश्यक समिति, आयोग, परिषद्, बोर्ड, प्राधिकरण, विकास समितिहरूको गठन, विस्तारले गर्दा दीर्घकालीन दायित्व उच्च रूपमा बढ्दो छ । कतिपय स्थानीय तहले बजेट स्वीकृत नै नगरी, विनियोजन ऐन र आर्थिक ऐनसमेत नबनाई खर्च गर्ने र कर उठाउने गरेका छन् ।

विधिको शासन कार्यान्वयन गर्नुपर्ने जिम्मेवारी पाएको निजामती सेवा आफैं विधिसम्मत रूपमा सञ्चालित हुने पर्खाइमा छ । कर्मचारीको सेवा सञ्चालन सम्बन्धी कानुनी आधार "संघीय तहमा निजामती सेवा ऐन" गर्भमै छ । सरकारी सेवा सञ्चालन सम्बन्धी राष्ट्रिय मापदण्ड नबन्दा प्रदेश र स्थानीय तहले बनाएका कानुनहरूबिच तादात्म्य हुन सकेको छैन । स्थानीय कर्मचारीको सेवा सञ्चालन सम्बन्धी कानुन तर्जुमामा प्रदेश र स्थानीय तहबिच विवाद बल्झदै गएको छ । प्रदेश र स्थानीय तहहरूले आफ्नो प्रशासन सञ्चालनका लागि आफू खुसी कानुन तर्जुमा हुँदा भविष्यमा सार्वजनिक प्रशासनमा झनै गन्जागोल नहोला भन्न् सकिन्न् । कानुनको अभावमा स्थानीय सेवा व्यवस्थापनमा समस्याहरू देखिएका छन् । हाल संघमा बढुवा प्रणाली निरन्तर र सुचारु रहे पनि प्रदेश र स्थानीय तहमा कर्मचारीको वृत्ति विकास नै अवरुद्ध छ । सार्वजनिक प्रशासनको उच्च तहमा प्रशासनिक अस्थिरता हट्न सकेको छैन । प्रदेश र स्थानीय तहहरूले आफ्ना प्रमुख सचिव, सचिव र प्रमुख प्रशासकीय अधिकृतहरू कहिले आउँछन् र कहिले सरुवा हुन्छन् भन्ने् भेउ पाउने अवस्थासम्म छैन । प्रशासन संयन्त्र तदर्थवादमा चलिरहेको छ ।

संविधानअनुसारको अन्तरप्रदेश परिषद् तीन पटक बसे पनि दुई वर्षयता कुनै बैठक बसेको छैन । परिषद्को दोस्रो बैठकले संघीयता कार्यान्वयन सम्बन्धमा स्वीकृत गरेको २९ बुँदे काइयोजना करिबकरिब लावारिस बनेको छ । प्रदेश समन्वय परिषद् एकाध प्रदेशले बनाए पनि विषयगत विशेष समितिहरू क्रियाशील हुन सकेका छैनन् ।

तीनै तहका विकास आयोजना सम्बन्धमा राष्ट्रिय योजना आयोगले बनाएको मापदण्डको पालना संघीय तहबाटै हुन सकेको छैन । प्रदेश र स्थानीय तहको कार्यजिम्मेवारीमा पर्ने आयोजनासमेत संघमा राख्ने, केन्द्रीकृत आयोजना वितरण प्रणाली यथावत् राख्ने प्रवृत्ति यथावत् हुनुका साथै प्रदेशको रातो किताबसमेत संघको सिको गर्दै "हजारे आयोजना" ले सुन्निएका छन् । तीन तहका सरकारका विकास योजनाहरूमा अन्तरसम्बन्ध र परिपूरकताको अभाव खट्किँदो छ ।

### ६. निष्कर्ष

मुलुकले २००७ सालपश्चात् विभिन्न् राजनीतिक प्रणालीको अभ्यासमा धेरै समय व्यतीत गरेको छ । नेपालले अनेकौं आरोह-अवरोह र लामो एकात्मक शासन प्रणालीपश्चात् संघीय प्रणालीको अवलम्बन गरेको छ । अब संघीयता मुलुकको भविष्यसँग जोडिइसकेको छ । जनताले चुनेको संविधान सभाले जारी गरेको संविधानको सफल कार्यान्वयन गर्नु सवैको सामुहिक जिम्मेवारी हो । मुलुकको दिगो शान्ति, सुशासन, विकास र समृद्धिका लागि संघीयतालाई सफल पार्नुको विकल्प छैन ।

संघीयता कार्यान्वयनको नेतृत्व राजनीतिक तहबाटै हुनुपर्दछ । राजनीतिक दलहरूका गतिविधि र सरकारका क्रियाकलापमा संघीयताप्रतिको प्रतिबद्धता झल्किनुपर्छ । संघीय प्रणालीलाई दिगो र दरिलो बनाउन राजनीतिक संघीयतासँगै वित्तीय र प्रशासनिक संघीयता सन्तुलित ढङ्गले अगाडि बढ्नुपर्छ । सुरुका दिनमा केही भ्रम उत्पन्न भए, केही अलमल भयो तर समय अझै बितिसकेको छैन । यस अवधिमा भएका संघीय अभ्यासको मूल्याङ्कन गरी कमीकमजोरी सच्याउँदै, विगतका अनुभवबाट पाठ सिक्दै संघीयकरणका बाँकी कार्यहरू सिलसिलावद्ध रूपमा समयमै पूरा गरेर संघीय प्रणालीलाई सबल बनाउन ध्यान केन्द्रित गर्नुपर्छ ।

### सन्दर्भ सामग्री


१. शर्मा, पीताम्बर (२०७५), संघीयताको अभ्यास, समस्या र सम्भावना, नेपाल वैकल्पिक अध्ययन समाजको गोष्ठीमा २०७५ फागुन ५ मा प्रस्तुत कार्यपत्र ।

२. नेपालको संविधान (२०७२), काठमाडौं : कानुन किताब व्यवस्था समिति ।

३. नेपालको संघीय शासन प्रणाली, संघीयता अध्ययन केन्द्र नेपाल प्रशासनिक प्रशिक्षण प्रतिष्ठान (२०७७) ।

४. नेपालमा वित्तीय संघीयता, अवधारणा र अभ्यास (२०७८), संघीय मामिला तथा सामान्य प्रशासन मन्त्रालय ।

५. कार्यविस्तृतीकरण (२०७३), प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय, चैत्र २०७३ ।

६. संघीयता र प्रशासनिक पुनर्संरचनाः प्रशासन (सार्वजनिक प्रशासनसम्बन्धी पत्रिका), सामान्य प्रशासन मन्त्रालय ।

७. प्रशासनिक संघीयताको बाटो (२०७९), कान्तिपुर दैनिक (दृष्टिकोण) १९ साउन, २०७९ ।

८. वित्तीय संघीयताको तगारो (२०७९), अन्नपूर्ण पोष्ट दैनिक, (अभिमत) ९ श्रावण, २०७९ ।

९. संघीयता कार्यान्वयनको अवस्था, चुनौती र अबको बाटो (२०७९), कामाद, Vol.23 No.1,

Issue 36 2022-2079 ।

१०. संघीयता कार्यान्वयनका आयाम (२०८०), कान्तिपुर दैनिक (दृष्टिकोण) ६ आसार, २०८० ।

११. राष्ट्रिय सभा, विधायन व्यवस्थापन समिति (२०८०) संविधानअनुसार बन्न बाँकी कानुनहरूको प्रतिवेदन ।

१२. राष्ट्रिय सभा, संघीयता कार्यान्वयन अध्ययन तथा अनुगमन संसदीय विशेष समितको प्रतिवेदन, २०७९ ।

१३. संघीय मामिला तथा सामान्य प्रशासन मन्त्रालय, दस वर्षे रणनीतिक योजना (२०७७), संघीय मामिला तथा सामान्य प्रशासन मन्त्रालय ।



# नेपालको संविधानः अर्थदर्शन, पद्धति, प्रणाली र गन्तव्य



✍ डा.चन्द्रमणि अधिकारी*

## १. पृष्ठभूमि

संविधान शब्द आफैंमा एउटा गहकिलो शब्द हो । यो शब्द अगाडि आउनासाथ भूगोल, जनसङ्ख्या, मतदाता, राज्य, संसद, सरकार, नागरिक, नागरिकका लोकतान्त्रिक अधिकार, विश्वव्यापी मानव अधिकार, न्यायव्यवस्था, अर्थदर्शन, आर्थिक कार्यप्रणाली, राज्य र राज्यशिक्तको बाँडफाँडका कुरा मानसपटलमा आउँछन् । लोकतान्त्रिक संविधानले समग्र राज्य प्रणालीलाई एउटै सुत्रमा बाँधेर नागरिकको सार्वभौम अधिकार र देशको अखण्डतासमेत जोगाई राख्न सक्छ भन्ने मान्यता र विश्वास रहेको छ। संविधान भनेको आदर्श, सिद्धान्त, प्रणाली, पद्धति र व्यवहार मिश्रित पोको हो । असली संविधानले देशको मूल वा आधारभूत कानुनको रुपमा कार्य गर्दछ । यसले राज्यको संरचना र स्वरुप, संस्थागत व्यवस्था, ती संस्थाका जिम्मेवारी र अन्तरसम्बन्ध, संस्था सञ्चालनका सिद्धान्त, पद्धति र प्रणालीसमेतका सम्बन्धमा प्रबन्ध गर्दछ । यसले लिङ्ग, जाती, समुदाय, संस्कृति, भूगोल, वर्ग र समाजलाई पनि चिनेको हुन्छ । साथै यसमा राजनीतिक, प्रशासनिक र स्रोत सम्बन्धी अधिकारका सम्बन्धमा पनि आवश्यक कुरा लेखिएको हुन्छ । यस दृष्टिले हेर्दा संविधान आर्थिक, सामाजिक, राजनीतिक, कानुनी र सांस्कृतिक सम्झौताको दस्तावेज हो । यो राज्यको सार्वभौमसत्ताको अधिकार प्रयोग गर्ने नागरिकहरूबाट निर्माण र अनुमोदन गरिएको राज्य सञ्चालनको लागि सम्झौता हो ।

संविधान सिद्धान्ततः लिखित र अलिखित दुवै किसिमका हुने भएता पनि एक्काइसौं शताब्दीमा अब अलिखित संविधानको सङ्ख्या थप हुने सम्भावना छैन । यद्यपि संयुक्त अधिराज्य र न्युजिल्याण्ड अहिले अलिखिति संविधान वा भनौं त्यहाँको राजनीतिक तथा सामाजिक मान्यता, परम्परा, सम्झौता, सम्मिलन

---

* पूर्वसदस्य, राष्ट्रिय योजना आयोग

र संसदका माइन्युटहरूबाट चलिरहेका छन् । तर अहिलेको राजनीतिक चेतना र आर्थिक समुन्नतिको आकांक्षाले कुनै पनि देशमा स्पष्ट दर्शन र सिद्धान्त बोकेको संविधानको माग गर्दछ, संकल्पसहितको लिखित प्रतिबद्धता खोज्दछ ।

नेपालको संविधान निर्माणमा पनि यस धारणाले काम गरेको छ । नेपालको संविधानले निश्चित राजनीतिक, आर्थिक तथा सामाजिक दर्शनलाई अंगिकार गरेको छ । गणतन्त्र, सङ्घीयता, बहुल विचार, कल्याणकारी राज्य व्यवस्था र समाजवाद उन्मुख अर्थतन्त्रको बाटो हुँदै दीर्घकालमा गएर समातामूलक समाजको निर्माणको लक्ष्यतर्फ निर्देशित देखिन्छ । आवधिक निर्वाचन, मानव अधिकार र मौलिक हक अधिकारको सुनिश्चितता, स्वतन्त्र न्यायपालिका, समावेशिता आदि नेपालको संविधानले अंगिकार गरेका चरित्र हुन् । यसले संसदीय प्रणालीमा सामाजिक न्याय र बहुलतालाई स्पष्ट रुपमा स्थान दिएर समाजवादमा जाने दार्शनिक र संवैधानिक ढोका खोलिदिएको छ । केही कुरामा सामान्य असहमतिबाहेक दार्शनिक तथा सैद्धान्तिक दृष्टिले संविधानमा खासै कमी रहेको देखिँदैन, बरु यसलाई सही र सलामत ढङ्गले कार्यान्वयनमा लैजाने तथा यसको असल अभ्यासलाई राज्यको दैनिकी बनाउने विषयमा गर्नुपर्ने धेरै कामहरू भने गर्न बाँकी छन् । त्यसमा पनि सङ्घीयताको सही, मितव्ययी, उत्पादनमूलक र आत्मनिर्भरतातर्फ उन्मुख प्रयोग अहिलेको अपरिहार्य आवश्यकता हो ।

### २. अर्थ दर्शन

संविधान आफैंमा एक दार्शनिक दस्तावेज भएकाले नेपालको संविधान (२०७२)ले पनि आर्थिक समानता, समृद्धि र सामाजिक न्यायको आधारमा समतामूलक समाजको निर्माण गर्ने प्रतिबद्धता जाहेर गर्दै समाजवादप्रति प्रतिबद्ध रही समृद्ध राष्ट्र निर्माण गर्ने प्रतिबद्धता जाहेर गरेको छ (प्रस्तावना) । यद्यपि प्रतिबद्धता स्वतः पूरा हुने कुरा होइन । यसको लागि त्यसैअनुरुपका पद्धति र प्रणाली तथा राज्य सञ्चालकहरूको संकल्प र संकल्पअनुसारको व्यवहारको आवश्यकता पर्दछ । प्रस्तावनामा उल्लिखित प्रतिबद्धता पूरा गर्न सहयोग होस भनी संविधानको मूल खण्डमा पनि आर्थिक समुन्नति र समृद्धि राष्ट्रिय हितको आधारभूत विषय हुने कुरा उल्लेख गरेको छ (धारा ५) भने हरेक नागरिकले मानवोचित जीवन जीउन पाउने अवस्थालाई सुनिश्चित गर्ने प्रयोजनका लागि सम्पत्ति, स्वच्छ वातवरण, शिक्षा, स्वास्थ्य, रोजागारी, श्रम, खाद्य, आवास, सामाजिक सुरक्षा र उपभोक्तासमेतका हक अधिकारको व्यवस्था गरिएको छ (धारा २५, ३०, ३१, ३५, ३३, ३४, ३६ ,३७, ४३ र ४४) । यसबाहेक दलित, महिला, बालबालिका र जेष्ठ नागकिको हकलाई पनि पृथक पृथक धारा (३८, ३९, ४० र ४१) मा समावेश गरिनुले संविधान निर्माताले यी वर्गको हितको विषयलाई विशेष महत्व दिएको प्रष्ट हुन्छ । यसका अतिरिक्त सामाजिक न्यायको लक्ष्य हासिल गर्ने प्रयोजनका लागि संविधानले सो विषयलाई नै मौलिक हकको विषय बनाएर एक फरक धारामा आर्थिक सामाजिक वा शैक्षिक दृष्टिले पछाडि परेका महिला, दलित, आदिवासी, जनजाती, मधेशी, थारु, मुस्लिम, पिछडावर्ग, अल्पसङ्ख्यक, सीमान्तकृत, अपागंता भएका व्यक्ति, किसान, श्रमिक, उत्पीडित तथा पिछडिएका क्षेत्रका नागरिक र आर्थिक रुपले विपन्न खस आर्यसमेतका व्यक्ति, वर्ग र समुदायले समानुपातिक समावेशी सिद्धान्तका आधारमा विशेष अवसर, लाभ, सुविधामा पहुँच र संरक्षण पाउने व्यवस्थासमेत गरेको देखिन्छ

(धारा ४२) । यद्यपि यी सबै धाराको कार्यान्वयनको लागि विशेष, कार्यक्रम, प्रयास र ठुलो धनराशीको आवश्यकता पर्दछ ।

यसरी हेर्दा मौलिक हकसँग सम्बन्धित कतिपय नीति तथा कानुनको निर्माण भएता पनि त्यसअनुसारको संरचना र स्रोतको जोहो गर्न बाँकी छ । पर्याप्त र योग्य जनशक्तिको परिचालन र व्यवस्थापन, आवश्यक भौतिक संरचनाको निर्माण, जनप्रतिनिधि तथा कर्मचारीको क्षमता विकाससमेतका काममा आंशिक मात्र प्रगति भएको छ । नागरिकका मौलिक हकलाई चलन गराउने कार्यमा कुन निकायको भूमिका कति हुने भन्ने विषयमा स्पष्टताको अभाव छ । जस्तै सामाजिक सुरक्षाका नाममा राज्यका तीन वटै तहबाट साधन विनियोजन र वितरण गर्ने काम त भएको छ तर त्यसमा समन्वयात्मक तरिकाले कार्यक्रमहरू ल्याइएका छैनन् । सही र वास्तविक रुपले लक्षित वर्गमा पुऱ्याउन अझै मेहनत गर्नुपर्ने अवस्था छ । यसरी समाजका सबै वर्ग, समुदाय, क्षेत्र र तप्काका नागरिकलाई असल र मानवोचित जीवन सहित बाँच्न र उन्नति गर्न पाउने अधिकार संविधानले दिँदादिँदै पनि आम नागरिकले त्यस खालको अवसर, लाभ, सुविधामा पहुँच र संरक्षण पाएको अनुभुति पूर्णरुपमा गर्न सकेका छैनन । यस्तो अवस्था रहनु कुनै पनि दृष्टिबाट उचित मान्न सकिन्न । यसका लागि संविधानको मर्मअनुसारका राज्य सञ्चालनको प्रबन्ध र त्यसअनुसारको आवश्यक स्रोतको व्यवस्था गर्नु राज्य र सरकारको दायित्व हो । संविधानले नागरिकको जीवनको आर्थिक सामाजिक समुन्नतिको लागि हक अधिकारको प्रबन्ध मात्र गरको छैन यसले ती अधिकारको प्रचलनको संवैधानिक हक र कार्यान्वयनको लागि चाहिने कानुन बनाउने समय अवधिसमेत तोकेकोमा अधिकांश ऐन कानुनहरू तर्जुमा भै सकेका छन् । यद्यपि तिनको कार्यान्वयन र अभ्यासको विषयमा भने कतिपय प्रणाली र कार्यविधिगत व्यवस्था गर्नुका साथै आवश्यक स्रोतको परिचालन गर्ने विषयमा भने थुप्रै काम गर्न बाँकी छ ।

मौलिक हकका अतिरिक्त संविधानले राज्यको निर्देशक सिद्धान्त, नीति तथा दायित्वका सम्बन्धमा पनि स्पष्ट रुपमा उल्लेख गरेको छ (भाग ४, धारा ४९) । यसले निर्देशक सिद्धान्तको माध्यमद्धारा राज्यको राजनीतिक, सामाजिक, सांस्कृतिक तथा आर्थिक उद्देश्य समेत स्पष्ट पार्ने प्रयास गरेको छ । यसअनुरुप हेर्दा सार्वजनिक, निजी र सहकारी क्षेत्रको सहभागिता तथा विकासमार्फत उपलब्ध साधन र स्रोतको अधिकतम परिचालनद्वारा तीब्र आर्थिक वृद्धि हासिल गर्दै दिगो आर्थिक विकास गर्ने तथा प्राप्त उपलब्धिहरूको न्यायोचित वितरण गरी आर्थिक असमानताको अन्त्य गर्दै शोषणरहित समाजको निर्माण गर्न राष्ट्रिय अर्थतन्त्रलाई आत्मनिर्भर, स्वतन्त्र तथा उन्नतिशील बनाउँदै समाजवाद उन्मुख स्वतन्त्र र समृद्ध अर्थतन्त्रको विकास गर्ने राज्यको आर्थिक उद्देश्य रहेको देख्न सकिन्छ (धारा ५०.३) । यसको अर्थ हो, संविधानले लोक कल्याणकारी सिद्धान्तमा आधारित राष्ट्रिय अर्थव्यवस्थाको माध्यमबाट देशलाई अगाडि बढाउने मनसुवा राखेर संयुक्त साझेदारीमा जोडदिँदै गरिबी, बेरोजगारी, पछौटेपन, असमानता र परनिर्भरता घटाउनेतर्फ विकासका प्रयासहरू केन्द्रित गर्दै सामाजिक न्याय, आर्थिक वृद्धि तथा न्यायोचित वितरणमा आधारित आर्थिक सामाजिक विकासको परिकल्पना गरेको देखिन्छ ।

संविधानमा उल्लिखित यी सिद्धान्त, नीति तथा दायित्व कार्यान्वयन गरी माथि उल्लिखित यस्ता लक्ष्य र उद्देश्य हासिल गर्न थप स्रोत साधनको आवश्यकता पर्दछ । आवश्यक स्रोत साधनको परिचालन तथा व्यवस्थापन गर्ने गराउने दायित्व पनि सङ्घीय सरकारको हो । यद्यपि राज्यको संरचना र राज्यशक्तिको

बाँडफाँडको दृष्टिबाट हेर्दा प्रदेश तथा स्थानीय सरकार पनि यी दायित्वबाट पर भाग्न पाउँदैनन्, बरु अनुपातिक रुपमा दायित्व कमबेसी हुन सक्दछ। संविधानले उल्लेख गरेका राज्यका नीतिहरूलाई मूलतः दुई वर्गमा बाँड्न सकिन्छ। पहिलो श्रेणीमा आर्थिक र विकाससँग सम्बन्धित अर्थ, उद्योग, वाणिज्य, कृषि, विकास, प्राकृतिक साधन स्रोत र पर्यटनसँग सम्बन्धित नीति पर्दछन्। बाँकी नीतिहरू भने शासन व्यवस्था, न्याय र दण्ड, नागरिकका आधारभूत आवश्यकताको परिपूर्ति, समानता र सामाजिक न्याय, समावेशीकरण, अन्तर्राष्ट्रिय सम्बन्ध, सांस्कृतिक रुपान्तरण तथा राजनीतिक विषयसँग सम्बन्धित छन्।

### ३. राज्यशक्तिको बाँडफाँड र अर्थ पद्धति

संविधानको भाग पाँच राज्यको संरचना र राज्यशक्तिको बाँडफाँडसँग सम्बन्धित छ। संविधानले नेपाललाई सात वटा प्रदेशसहित राज्यका तीन तह रहने गरी सङ्घीय गणतन्त्र घोषणा गरेको छ (धारा ५६)। यसले राज्य संरचना र राज्य शक्तिको बाँडफाँड पनि सङ्घीय पद्धतिअनुसार नै गरेको छ। संविधानले संघ, प्रदेश र स्थानीय समेतका तीन तहले नेपालको स्वतन्त्रता, सार्वभौमिकता, भौगोलिक अखण्डता, स्वाधिनतासमेतका विषयको संरक्षण गर्नुपर्ने दायित्व पनि सम्झाएको छ। यो भागले राज्यको संरचना र शक्तिको बाँडफाँडको कुरा गरिरहँदा आर्थिक पक्षको पनि ख्याल गरेको छ, अर्थात् आर्थिक र प्राकृतिक स्रोतको बाँडफाँडको विषय र पद्धतिको रेखा पनि कोरेको देखिन्छ। यद्यपि त्यसमा सुधारका गुन्जायस हुँदै नभएको होइन। त्यसैले संविधानको यस भागले स्रोतको बाँडफाँडको प्रबन्ध र व्यवस्थापन त्यहीअनुसार हुने गरी राज्य सञ्चालनको पद्धति र प्रणालीको परिकल्पना गरेको देखिन्छ। संविधानले नागरिकहरूको शिक्षा, स्वास्थ्य, वातावरण, श्रम, रोजगारी, खाद्य र सामाजिक सुरक्षासमेतका मौलिक हक सम्बन्धी व्यवस्थामा विस्तार गरेर नागरिकहरूलाई यस्ता विषयमा आधारभूत अधिकारको पत्याभूति गर्दै सामाजिक न्याय दिने विशेष लक्ष्य लिएको सन्दर्भमा राज्यको संरचना र राज्य शक्तिको बाँडफाँड पनि त्यसैअुनसार व्यवस्था गरेको हुँदा आर्थिक पद्धति पनि त्यही अनुकूल हुने परिकल्पना गर्नु स्वभाविक हो।

अहिले नेपालमा एक संघ, सात वटा प्रदेश र सात सय त्रिपन्न वटा स्थानीय तह वा स्थानीय सरकार अस्तित्वमा छन्। तीन वटै तहलाई कार्य र राजस्व सम्बन्धी जिम्मेवारी पनि दिइएको छ (धारा ५७ अनुसूची ५,६ र ८)। संघ र प्रदेश तथा संघ, प्रदेश र स्थानीय तहबिचको साझा अधिकारको व्यवस्था पनि छ (धारा ५७, अनुसूची ७ र ९)। स्थानीय तहलाई समेत संविधानले करीब दुई दर्जन जति कार्य जिम्मेवारी दिएको छ। संघ र प्रदेशको सङ्ख्या संविधान (धारा ५६, अनुसूची ४) मा नै उल्लेख छ। राज्यको दोस्रो तहमा सातवटा प्रदेश रहने व्यवस्था छ। स्थानीय तहको सङ्ख्या र सिमाना निर्धारण भने सङ्घीय कानुनअनुसार भएको छ।

नेपालको संविधान घोषणा भै लागु भएसँगै राज्यको पुनःसंरचना गर्ने सिलसिलामा साविकमा स्थानीय निकायको रुपमा चिनिने नगरपालिका र गाउँ विकास समितिहरू अहिले नगरपालिका (नगरपालिका, उपमहानगरपालिका र महानगरपालिका) र गाउँपालिकाका नामले स्थानीय तहमा परिणत भएका छन्। साविकको स्थानीय संरचनाको समायोजनपछि तिनले स्थानीय तहका रुपमा राज्यको इकाईको दर्जा पाएर संवैधानिक आधारमा सरकारको हैसियतसमेत प्राप्त गरेका छन्। स्थानीय तहले एकल ढङ्गले र नेपाल

सरकार एवम् प्रदेशसँग मिलेर प्रयोग गर्ने गरी दुई किसिमका आर्थिक एवम् राजस्व सम्बन्धी जिम्मेवारी प्राप्त गरेका छन् (धारा ५७, अनुसूची ८ र ९) । प्रदेशलाई पनि एक्लै प्रयोग गर्ने र मिलेर प्रयोग गर्ने साझा अधिकार प्राप्त छ (धारा ५७, अनुसूची ६, ७ र ९) । संविधानअनुसार संघ, प्रदेश र स्थानीय तहले आफुलाई प्राप्त अधिकारको सिमाभित्र रही तत् तत् विषयमा नीति बनाउने, निर्णय गर्ने, योजना तथा बजेट निर्माण गर्ने, कानुन बनाउने, कार्यान्वयन गर्ने र अनुगमन तथा मूल्याङ्कन गर्नेसमेतका कार्य गर्न सक्दछन् (धारा ५९) । संघले साझा सूची र आर्थिक अधिकारका अन्य विषयमा प्रदेश समेतलाई लागु हुने गरी नीति, मापदण्ड र कानुन बनाउन सक्दछ भने तीन वटै तहले आआफ्नो तहको बजेट बनाउने कार्य गर्नुपर्दछ । त्यस्तै गरी संविधानले तीन वटै तहले प्राकृतिक स्रोतको प्रयोग वा विकासबाट प्राप्त लाभको समन्यायिक वितरणको व्यवस्था गर्नुपर्ने र त्यस्तो लाभको निश्चित अंश रोयल्टी, सेवा वा वस्तुको रुपमा परियोजना प्रभावित क्षेत्र र स्थानीय समुदायलाई कानुन बनाएर वितरण गर्नुपर्ने गरी आर्थिक र अन्यस्रोत तथा त्यसबाट प्राप्त लाभको वितरणको पद्धतिसमेत अंगिकार गरेको छ (धरा ५९)।

यी कुराहरूका अतिरिक्त राजस्व स्रोतको बाँडफाँडको विषयगत पद्धतिसमेत संविधानमा नै उल्लेख छ (धारा ६०) । राज्यका तीन वटै तहले आफ्नो अधिकार क्षेत्रमा परेका राजस्व शीर्षकअन्तर्गत संविधान तथा सङ्घीय कानुनअनुसार कर लगाउन र ती स्रोतहरूबाट राजस्व उठाउन सक्दछन् । साझा सूचीमा परेका र अन्य तहको सूचीमा नपरेका विषयमा कर लगाउने र उठाउने अधिकार संघलाई प्राप्त छ। संघ अथवा नेपाल सरकारले संकलन गरेको राजस्व तीन तहबिच न्यायोचित ढङ्गले वितरण गर्ने दायित्व संघ वा नेपाल सरकारको हो । संविधानले राष्ट्रिय प्राकृतिक तथा वित्त आयोगको सिर्जना पनि गरेको छ (धारा २५०, २५१) । प्रदेशले संघबाट र स्थानीयले संघ र प्रदेशबाट प्राप्त गर्ने वित्तीय हस्तान्तरणको परिमाण आयोगले गरेको सिफारिसबमोजिम हुन्छ । संघले प्रदेश र स्थानीय तहलाई र प्रदेशले स्थानीय तहलाई खर्च आवश्यकता र राजस्व क्षमताको आधारमा वित्तीय समानीकरण अनुदान वितरण गर्नुपर्दछ । यसबाहेक प्रदेश र स्थानीय तहले ससर्त, समपूरक र विशेष अनुदानको रुपमा पनि वित्तीय स्रोत प्राप्त गर्न सक्ने व्यवस्था गरिएका छन् । यी विषयको कार्यान्वयनको लागि अन्तर सरकारी वित्त व्यवस्थापन ऐन २०७४, राष्ट्रिय प्राकृतिक तथा वित्त आयोग ऐन २०७४, आर्थिक कार्यविधि तथा वित्तीय उत्तरदायित्व सम्बन्धी ऐन २०७६, स्थानीय सरकार सञ्चालन ऐन २०७४ र केही नियमावलीहरू बनेका छन् । राज्य शक्तिको संविधानद्वारा नै यसरी बाँडफाँड भएको व्यवस्थालाई नै सिद्धान्तमा आधारित सङ्घीय शासकीय प्रणाली भन्न सकिन्छ । यस दृष्टिबाट हेर्दा नेपालले सहकारितामा आधारित दोस्रो पुस्ताको सङ्घीयता अवलम्बन गर्ने प्रयास गरेको देखिन्छ । यसैलाई पुष्टि गर्दै संघ, प्रदेश र स्थानीय तहबिचको सम्बन्ध सहकारिता, सहअस्तित्व र समन्वयको सिद्धान्तमा आधारित हुने कुरा उल्लेख गरेको छ (धारा २३२) र तीन तहबिच समन्वय कायम गराउन भूमिका खेल्नुपर्ने गरी विभिन्न संस्थाहरूको सिर्जना पनि गरेको छ ।

### ५. आर्थिक कार्यप्रणाली

नेपालको संविधानले अर्थ राजनीतिक दर्शन नीतिगत पद्धतिको व्यवस्था मात्र गरेको छैन । यसले दर्शन, सिद्धान्त र पद्धतिको कार्यान्वयनका लागि तीन तहका राज्य इकाई तथा सरकारहरूले अपनाउनुपर्ने आर्थिक

कार्यप्रणालीको खाकासमेत प्रस्तुत गरेको छ । आर्थिक कार्यप्रणालीअन्तर्गत कर लगाउने र उठाउने, सञ्चित कोषको स्थापना, परिचालन तथा व्यवस्थापन, सञ्चित कोषबाट व्यय हुने रकम, सञ्चित कोषमाथि व्ययभार पर्ने रमकहरू, राजस्व र व्ययको अनुमान, सम्बन्धित तहको व्यवस्थापिकामा आय व्ययको प्रस्तुति, विनियोजन ऐन, पूरक अनुमान, पेश्की खर्च, उधारो खर्च र आकस्मिक कोषको स्थापना र परिचालन तथा आर्थिक कार्यविधि सम्बन्धमा कानुन बनाउनेसमेतका विषय पर्दछन् । संविधानले तीनवटै तहको आर्थिक कार्यप्रणाली बारे छुट्टा छुट्टै व्यवस्था गरेको छ (भाग १०, भाग १६, भाग १९) । यसका अतिरिक्त सरकारका तीन तह र राज्यका सबै अंगले गरेको आय व्ययको स्वतन्त्र रुपले परीक्षण गर्न महालेखा परीक्षकको व्यवस्था पनि संविधानमा छ । यस संस्थाले सार्वजनिक संस्था तथा कोष (तीनै तहमा रहेका) र ती कोषहरूबाट विनियोजन तथा वितरण भएका रकम तथा तीनवटै तहले प्राप्त गर्ने राजस्व एवम् दायित्वको लेखा कानुनबमोजिम नियमितता, मितव्ययिता, कार्यदक्षता, प्रभावकारिता र औचित्यतासमेतको विचार गरी परीक्षण गरी त्यसको वार्षिक प्रतिवेदन राष्ट्रपतिमार्फत सङ्घीय संसदमा प्रस्तुत गर्दछ । यसले सार्वजनिक आय र व्ययका सम्बन्धमा कार्यकारीले पालना गरेको जिम्मेवारीको स्तर र अवस्था थाहा भई त्यसमा सुधारको बाटो पहिल्याउन सहज हुन्छ । यस संस्थाले आफ्नो कार्य गरिरहेको पनि छ (भाग २२) ।

यसरी संविधानले राज्यको लक्ष्य, गन्तव्य र उद्देश्य तथा त्यस्ता गन्तव्य र लक्ष्य प्राप्त गर्ने सम्बन्धी अर्थ दर्शन, पद्धति, प्रणाली र कार्यविधि सम्बन्धी धेरै पक्षको व्यवस्था गरे पनि त्यसको सही र यथार्थपरक कार्यान्वयनको सम्बन्धमा गर्नुपर्ने कुराहरू धेरै बाँकी छन् । यस्ता सबै किसिमका आर्थिक, वित्तीय तथा संस्थागत संरचनाको निर्माण गरी संवैधानिक व्यवस्थालाई पूर्णरुपले व्यवहारमा उतार्नु अहिलेको सर्वोपरी प्राथमिकता हो जुन कार्यको लागि ठुलो धनराशीको माग हुन्छ र भैरहेको पनि छ । तसर्थ थप स्रोतको परिचालन र परिचालित स्रोतको गुणस्तरीय उपयोगबिच सन्तुलन कायम गर्नु पनि त्यतिकै आवश्यक छ ।

## ६. प्रगति, अवस्था र उपलब्धि

### ६.१ प्रगतिको अवस्था

समयलाई पछाडि फर्केर हेर्दा विगत तीन दशकअघि र अहिलेको अवस्था तुलना गरेर हेर्ने हो भने राजनीति, अर्थनीति, सामाजिक व्यवस्था, शिक्षा, स्वास्थ्य, यातायात, सूचना प्रविधि, उद्योग, वाणिज्य समेतका क्षेत्रमा धेरै परिवर्तन भएको देख्न सकिन्छ । शास्त्रीय र दर्शनको दृष्टिले राजनीति फेरिएको छ, लोकतन्त्र, गणतन्त्र र सङ्घीयता प्राप्त भएको छ, देशलाई समाजवादतर्फ लैजाने कुरा भएको छ । हिजोका गाउँहरूले पनि आज सरकारको हैसियत प्राप्त गरेका छन् । स्रोत र साधन गाउँमा पुग्ने प्रणाली स्थापित भएको छ । साक्षरताको प्रतिशत ४५ बाट प्रतिशत ७६ प्रतिशत पुगेको छ भने ६० प्रतिशतभन्दा कम रहेको माध्यमिक तहको भर्नादर ९० प्रतिशतभन्दा माथि पुगेको छ र ९५ प्रतिशत परिवार कुनै न कुनै किसिमको शौचालय प्रयोग गर्दछन् । विगतमा जम्मा दुई लाख लाइन टेलिफोन र ३५ जिल्लामा टेलिफोन पुगेको अवस्थामा सुधार आई टेलिफोन तथा मोबाइलको सङ्ख्या चार करोडबाट नाघेको छ भने इन्टरनेट जोडेको सङ्ख्या तीन करोड ७० लाख पुगेको छ । गाउँगाउँमा बिजुली पुगेको छ, विद्युत जडित क्षमता २५३ मेगावाटबाट २२०० मेगाबाट पुगेको छ भने, विद्युतमा पहुँच पुग्ने परिवारको प्रतिशत १५ बाट ९४ प्रतिशत पुगको छ ।

तीन हजारको हाराहारीमा रहेको कालोपत्रे सडकको लम्बाई १६ हजार कि.मि. नाघेका छ भने सडकको कूल लम्बाई ३४ हजार कि.मि.पुगेको छ। बिस वटा जिल्ला सदरमुकाम सडक सन्जालबाट बन्चित रहेको अवस्थाबाट अहिले ७३२ स्थानीय निकाय र ७६ जिल्ला सदरमुकाम सडक सञ्जालमा जोडिएका छन् । साठी प्रतिशतभन्दा कम परिवारले खानेपानी सुविधा पाएकोमा अहिले यो प्रतिशत ९३ पुगेको छ। प्रतिहजार १२० रहेको बाल मृत्युदर २८ मा र प्रति एक लाखमा ४७५ रहेको मातृ मुत्युदर २३९ मा झरेको छ। शिक्षण संस्था, शिक्षक र विद्यार्थीको सङ्ख्या तथा स्वास्थ्य संस्था, स्वास्थ्यकर्मी र सेवाग्राहीको सङ्ख्या पनि कैयौं गुणाले बढेको छ। तर यहाँनेर सेवाको गुणस्तर, लागत र पहुँच बढ्यो कि बढेन भनेर पनि हेर्नुपर्ने हुन्छ।

त्यस्तै गरी गरिबीको रेखामुनि रहेको जनसङ्ख्या ४९ प्रतिशतबाट झरेर १८ प्रतिशत पुगेको छ भने प्रतिव्यक्ति आय १०० बाट १४०० अमेरिकी डलर पुगेको छ। राजस्व परिचालन रु.१९ अर्बबाट करिब रु.१२ खर्ब पुगेको छ भने सरकारको कूल खर्च रु.३३ अर्बबाट बढेर रु. १३ खर्बमाथि पुगेको छ।

## ६.२ उपलब्धि, गुणस्तर र न्यायोचित वितरणको प्रश्न

यसरी तीन दशक पूर्वको र आजका आँकडा हेर्दा थुप्रै उपलब्धि भए झैं देखिन्छ। तर तत्कालीन आँकडासँग दाँजेर निकालिएका सापेक्ष नतिजाले मात्र लक्ष्य प्राप्तिको गन्तव्य हासिल भयो भन्न सकिन्न। अहिले मानिसको चेतना उच्च ढङ्गले बढेको छ। त्यसैले नागरिकले उन्नतिको ग्राफलाई सङ्ख्यात्मक रुपले मात्र हेर्दैन। प्रगति, अवस्था र उपलब्धिलाई त्यसमा रहेको सङ्ख्यात्मक पक्षका साथसाथै गुणात्मक ढङ्गले पनि हेर्दछ, त्यसको लागि तिर्नुपर्ने लागत र त्यसको क्षेत्रगत वितरण वा विस्तार, पहुँच र त्यसमा रहेको न्यायोचित समानताको प्रबन्ध र प्राप्तिको दृष्टिले पनि हेर्दछ। यस दृष्टिबाट हेर्दा राजनीतिक परिवर्तन त भयो तर सुशासनको पक्ष प्रभावकारी नभएको, निर्वाचन प्रणाली महंगो भएको र राजनीति सेवाबाट पेशामा रुपान्तरण हुँदै गएको विषयलाई पनि गंभिरतापूर्वक लिनुपर्ने भएको छ। गाउँमा साधन पुग्ने अवस्था सिर्जना भए पनि त्यसको प्रभावकारी र दक्षतापूर्वक प्रयोग हुन बाँकी छ। सडकसमेतका भौतिक पूर्वाधारको सङ्ख्या बढे पनि त्यसमा सुरक्षा, सुविधा, गुणस्तरीयता र मितव्यीयता तथा प्रतिस्पर्धात्मक चरित्र कमजोर भएकाले लम्बाई र परिमाण बढे पनि सडक विस्तारले जनजीवनमा अपेक्षाकृत सकारात्मक योगदान दिन सकेको छैन। शिक्षण तथा स्वास्थ्य संस्थाहरूको सङ्ख्यात्मक विस्तार उल्लेखनीय भए पनि जनशक्ति, भौतिक पूर्वाधार, उपकरण र सामग्रीसमेतको कमीले नागरिकले पाउनुपर्ने गुणस्तरको सेवा दिन सकिएको छैन। बजेट र खर्चको अंक उल्लेखनीय रुपमा बढे पनि त्यही अनुपातमा विकास खर्च बढेको छैन। आम्दानी बढेको देखिएता पनि तुलनात्मक रुपमा व्यक्तिको क्रयशक्ति बढेको छैन, बरु कतिपय वर्गको क्रयशक्ति घटेको छ। अर्को कुरा उन्नति र प्रगतिलाई आफ्नै देशको आंकडासँग मात्र तुलना गरेर पुग्दैन। यस विषयमा विश्वका विकसित तथा विकासोन्मुख देशका जनताको आय र जीवनस्तर कस्तो छ, यदि उन्नत छ भने त्यहाँ किन उन्नत भयो भनेर समेत हेरिन्छ। त्यसरी हेर्दा नेपाल निकै पछाडि छ। प्रतिव्यक्ति आय छिमकी देशहरूभन्दा पनि कम छ। निकासी बढ्न सकेको छैन। एउटै देशको ठुलो भूभाग बाँझो छ, १५ वर्षदेखि ५९ वर्ष समूहका करिब ४५ लाख युवा देशबाहिर छन्। देशसँगको व्यापारिक केन्द्रीकरण बढेर गएको छ।

अब हामीले अरुले गरेका उन्नतिको कारण बारे जान्नुपर्छ। चार दशक अगाडि हाम्रै स्तरमा रहेका दक्षिण कोरिया र मलेशियाले प्रगति कसरी गरे, चीन यस अवधिमा आर्थिक शक्तिको रुपमा अगाडि आउन कसरी सफल भयो, तीन दशकको अवधिमा कसरी उसले ८० करोड मानिसलाई गरिबीको चंगुलबाट बाहिर निकाल्यो, भुटान सानो देश भएर पनि उसले प्रतिव्यक्ति आय कसरी हाम्रोभन्दा बढी बनाउन सक्यो, बंगलादेशको पछिल्लो आर्थिक सामाजिक प्रगतिको आधार के हो, भारत सन १९९० को दशकको अप्ठेरोबाट उँभो लाग्दै विश्वको पाँचौं आर्थिक शक्ति कसरी बन्न पुग्यो, उत्तर युरोपका देशहरूले भ्रष्टाचारलाई कसरी न्यून बिन्दुमा राख्न सके र ती देशले नागरिकलाई कसरी आर्थिक सामाजिक न्याय दिन सफल रहेका हुन् भनेर घोत्लिनुपर्ने अवस्था छ। हामीले पनि आफ्नो प्रगति र उन्नति यसै पृष्ठभूमिको आलोक र स्तरमा खोज्नुपर्ने भएको छ।

### ७. निष्कर्ष

यस आलेखले माथि प्रस्तुति गरेका विषय र विश्लेषणलाई हेर्दा अब के के गर्ने भन्दा पनि कसरी गर्ने भनेर कार्यान्वयन र अभ्यासको पक्षलाई बढी प्रभावकारी, दक्ष, प्रतिस्पर्धी, पारदर्शी र सुशासित बनाई नतिजामूलक बनाउनुपर्ने देखिन्छ। यसका लागि हाम्रो कार्यशैली र व्यवहारमा परिवर्तनको आवश्यकता छ, समयमा काम गर्ने बनी विकास गर्नुपर्ने देखिन्छ। काम गर्दा यथार्थपरक काइयोजना बनाएर त्यसलाई पूर्णरुपमा पछ्याउन सके अपेक्षित समय र लागतमा गुणस्तरीय काम गर्न सकिन्छ। यसले राज्यका तीन वटै साझेदारको कार्य क्षमतामा बढोत्तरी हुन्छ। अनि लगानी, उत्पादन, काम, रोजगारी र आयमा पनि बढोत्तरी हुन्छ। युवा देश छोडेर बाहिर जाने क्रम घटेर आउँछ। अहिलेको सन्दर्भमा सङ्घीयताको कार्यान्वयन गर्दा समेत मितव्ययीता र उत्पादनशीलताको पक्षलाई सन्तुलित रुपमा सँगसँगै लैजानु पनि त्यतिकै आवश्यक छ।

अर्को मूल कुरा भनेको समाजवादको दिशा, गति, गन्तव्य र स्वरुपमा पनि हामी बढी स्पष्ट हुनुपर्ने देखिएको छ। संविधानले समाजवाद उन्मुख अर्थव्यवस्थाको माध्यमबाट समृद्धि हासिल गर्ने लक्ष्य राखेको छ। समाजवादप्रति संकल्पित नेपालले समतामूलक समाजको निर्माण गर्ने प्रतिबद्धताका साथ सङ्घीयता अंगिकार गरेको छ। तर अहिले पनि नेपालमा मिश्रित र अर्धनियन्त्रित अर्थव्यवस्थाको केही अवशेष बोकेर पश्चिमी शैलीको पूँजीवाद प्रणालीको अभ्यास गर्ने कार्य हुँदै छ। यसबाट के देखिन्छ भने समाजवाद संविधानमा लेखेर मात्र प्राप्त हुँदैन। यो व्यवहारमा देखिनु पर्दछ। यसको लागि मार्क्सवादले उतिबेला भनेको कुरा जस्ताका तस्तै लागु गर्न खोजेर पनि हुँदैन। मार्क्सवादलाई आधारभूत मार्गदर्शक सिद्धान्तको रुपमा ग्रहण गरे पनि कतिपय पद्धति, संरचना, प्रणाली र प्रक्रिया आफ्नो देशको आर्थिक, सामाजिक र सांस्कृतिक चरित्रअनुसार विकास गर्नुपर्छ। त्यसैले अब हामीले परिकल्पना गरेको समाजवाद उन्मुख व्यवस्था र अर्थव्यवस्था के हो भन्ने व्याख्या र परिभाषा गरिनुपर्दछ। वैज्ञानिक समाजवादको नेपाली चरित्रको स्वरुप निर्माण गरिनुपर्दछ। समाजवादभित्र लगानी, उत्पादन, उत्पादनका संरचना, लाभ र लाभको वितरणको खाका तयार गर्नु आवश्यक छ। यस खाकाभित्र राज्यका तीन तह र नीजि, सार्वजनिक तथा सामुदायिक वा सहकारी पक्षको लगानी, उत्पादन, उत्पादनका संरचना, प्राप्त हुने लाभ र लाभको वितरणमा तिनको के कस्तो भूमिका हुने एवम् यिनीहरूवीचको अन्तरसम्बन्ध कस्तो हुने भन्ने बारे पनि धारणा स्पष्ट पार्नुपर्दछ। अनि त्यसका मान्यता, विशेषता र मापदण्ड स्पष्ट पारेर आआफ्नो समाजवादको मोडेलको

बारेमा विस्तृत व्याख्या गरेर जनता माझ जानु उपयुक्त हुन्छ । निर्वाचनमा जाँदा आफ्नो व्याख्या र संस्करण लिएर जानु आवश्यक पनि छ, किनभने सबै राजनीतिक दलको समाजवादप्रतिको धारणा र व्याख्या पक्कै पनि एउटै होइन होला । त्यसैले पनि आफूले परिकल्पना गरेको समाजवादभित्रको लगानी, उत्पादन, वितरण, उत्पादनका संगठन, आय र सम्पत्ति वितरणको संरचना र मान्यतासमेतका विषयमा राजनीतिक दलहरू स्पष्ट हुनु जरुरी छ । अर्को कुरा, अहिले विश्वमा प्रविधिको विकासले उत्पादन र आयमा वृद्धि भएकाले अर्थतन्त्रमा भएको सिमान्त वृद्धिको प्रतिफल र लाभ सीमित वर्गसमूहमा केन्द्रित छ । नेपालमा पनि त्यस्ता लक्षणहरू देखापरेका छन् । अब समाजवादको कुरा गर्दा यी विषयमा पनि ध्यान पुग्नुपर्दछ ।

**८. सन्दर्भ सामग्री**

.........., नेपालको संविधान, कानुन किताब व्यवस्था समिति, काठमाडौं ।

........, आर्थिक कार्यविधि तथा वित्तीय उत्तरदायित्व सम्बन्धी ऐन २०७६, कानुन किताब व्यवस्था समिति, काठमाडौं ।

........., रीष्ट्रय प्राकृतिक स्रोत तथा वित्त आयोग सम्बन्धी ऐन २०७४, कानुन किताब व्यवस्था समिति, काठमाडौं ।

........., स्थानीय सरकार सञ्चालन ऐन २०७४, कानुन किताब व्यवस्था समिति, काठमाडौं ।

............, अन्तरसरकारी वित्त व्यवस्थापन ऐन, २०७४ कानुन किताब व्यवस्था समिति,बबरमहल, काठमाडौं ।

.........,वार्षिक प्रतिवेदनहरू, रीष्ट्रय प्राकृतिक स्रोत तथा वित्त आयोग, काठमाडौं ।

........., आर्थिक सर्वेक्षणहरू, नेपाल सरकार, अर्थ मन्त्रालय, काठमाडौं ।

........., सार्वजनिक बजेट बक्तव्यहरू, अर्थ मन्त्रालय, काठमाडौं ।

अधिकारी चन्द्रमणि, (२०७०), सङ्घीय नेपालको अर्थ राजनीति, नारेक नेपाल, काठमाडौं ।

अधिकारी चन्द्रमणि, (२०६७), आर्थिक लोकतन्त्र, सङ्घीयता र संविधानवाद, पैरवी प्रकाशन काठमाडौं ।

अधिकारी, चन्द्रमणि, (२०७७), नेपालको कर कानुन (चौथो संस्करण), पैरवी प्रकाशन, काठमाडौं ।

.........., जनगणना २०७८ को नतिजा प्रतिवेदन, राष्ट्रिय तथ्यांक कार्यालय, काठमाडौं ।

.........., नेपालका आवधिक योजनाहरू, भाग १ र भाग २, राष्ट्रिय योजना आयोग, सिहदरबार काठमाडौं ।

अधिकारी, चन्द्रमणि (२०७५), नेपालको सार्वजनिक वित्तः राजस्व तथा कर नीति, पैरवी प्रकाशन, काठमाडौं ।

अधिकारी, चन्द्रमणि, (२०७०), सङ्घीय नेपालको अर्थराजनीति, राष्ट्रिय आर्थिक तथा विकास अनुसन्धान परिषद, काठमाडौं ।

अधिकारी, चन्द्रमणि (२०६०), नेपालको आधुनिक कर प्रणाली, सिद्धान्त र व्यवहार पैरवी प्रकाशन, काठमाडौं ।

Adhikari, Chandra Mani (2020), Dynamics of Fiscal Federalism, Success or Failure? Why and How, Pairavi Prakashan, Kathmandu

Adhikari, Chandra Mani (2009), Choice of Fiscal Federalism in Nepal: Annex of Assessment of Revenue Assignments in Local Bodies, Asian Development Bank, Kathmandu.

Adhikari, Chandra Mani (2009), Choice of Fiscal Federalism in Nepal: Annex of Intergovernment Transfer, Asian Development Bank, Kathmandu.

Adhikari, Chandra Mani (2009), Nepal Public Finance: Revenue and Tax Policy, Pairabi Publication, Kathmandu.

Adhikari, Chandra Mani, (2020), **Fiscal Federalism in Nepal:** Revenue Potential of Provincial and Local Governments and Recommendations to Enhance Own-Source Revenue Generation, IIDS, Nepal



# संविधान दिवसको सन्दर्भ : नेपालको संविधान र समाजवाद उन्मुख आर्थिक समृद्धि



✍ **वामदेव क्षेत्री (घिमिरे)***

नेपालको संविधान २०७२ सालमा घोषणा भयो । संविधानमा उल्लेख भएको स्वतन्त्रता, सार्वभौमिकता भौगोलिक अखण्डता राष्ट्रिय एकता, स्वाधीनता र स्वाभिमान अक्षुण्ण राखी जनताको सार्वभौम अधिकार, स्वायतत्ता र सुशासनको अधिकारलाई आत्मसात गर्दै जनताको प्रतिस्पर्धात्मक बहुदलीय लोकतान्त्रिक शासन प्रणाली, नागरिक स्वतन्त्रता, मौलिक अधिकार, मानव अधिकार, बालिक अधिकार, आवधिक निर्वाचन, पूर्ण प्रेस स्वतन्त्रता, निष्पक्ष र सक्षम न्यायपालिका, कानुनी राज्यको अवधारणालगायतका मूल्य मान्यता स्पष्टरुपमा संविधानमा उल्लेख गरिएको छ । संविधानको प्रस्तावनामै समाजवादप्रति प्रतिबद्धता गरिएको भनिएको छ भने धारा-४ मा नेपाल राज्यको परिभाषा दिने क्रममा समाजवाद उन्मुख र संघीय लोकतान्त्रिक गणतन्त्रात्मक राज्य नै भनिएको छ । यसो भनिराख्दा आज आठ वर्षमा संविधान घोषणा गरी सक्दा पनि हामी महत्वपूर्ण कार्य गर्न सकेका छैनौं र संघीयता पनि पूर्णरुपमा लागु गर्न सकेका छैनौं । यस आलेखमा संविधान सभाबाट संविधान निर्माण, संघीयता र संविधान, देशको पहिचानसहितको संविधान, संविधान र एक्काइसौं शताब्दीको समाजवाद, संविधान, समाजवाद र आर्थिक समृद्धि जस्ता विविध विषयहरू समेटने प्रयास गरिएको छ ।

## १. संविधान सभा र संविधान

अन्तर्राष्ट्रिय प्रचलन हेर्ने हो भने संविधान सभा औपचारिक र अनौपचारिक दुई वटा प्रक्रियाबाट रहेको पाइन्छ । पहिलो तत्काल विद्यमान संविधानअनुसार छानिएका प्रतिनिधिहरू रहेको संविधान सभा गठन हुने गरेको संविधान सभाका प्रतिनिधि चयन गरिन्छ । भारत, अमेरिका, बंगलादेश र पाकिस्तानमा पहिलो प्रक्रिया अवलम्बन गरियो भने दक्षिण अफ्रिकामा दोस्रो प्रणाली अवलम्बन गरियो । हाम्रो देशमा प्रत्यक्ष

* पूर्वउपाध्यक्ष, लुम्बिनी योजना आयोग

जनताबाट निर्वाचित प्रतिनिधिहरूको सभाबाट संविधान निर्माण गर्ने प्रक्रिया अपनाइयो । तर पहिलो संविधान सभाले विद्यमान राजनीतिक शक्तिहरूबिचको वैचारिक द्वन्द्वका कारण संविधान बनाउन सकेन । संविधान भनेको मूल कानुन वा राज्यको चरित्र निर्माण गर्ने पनि हो । समाजमा विद्यमान विभिन्न शक्ति र वर्गको अधिकार बाँडफाँट गर्ने पनि हो तर यस महत्वपूर्ण कार्यमा ती शक्तिहरूबिच समन्वय हुन सकेन । अहिले सान्दर्भिक नभए पनि यस बारे जानकारी हुन जरुरी छ। यस्ता विषयमा घोत्लिँदा मुख्य रुपमा राजनीतिक दलको दृष्टिकोण मात्र नभएर विश्व दृष्टिकोणका कुरा आउछन् । कुन दृष्टिकोणले हामीले संसारलाई हेर्दैछौं भन्ने कुरा दलहरूको चरित्रमा स्पष्ट हुन्छ। यसमा फरक फरक निस्कर्ष र व्याख्या हुन सक्ला। एउटा नवउदारवादी चिन्तन जसले व्यक्ति र निजत्वलाई प्रधान मान्छ। अर्को मार्क्सवादी वा समाजवादी दृष्टिकोण जसले सामूहिकता वा समाजलाई प्रधान मान्छ र व्यक्तिलाई सहायक मान्छ । यी दुई दृष्टिकोणबिच राजनीतिक, समाजशास्त्रीय, अर्थशास्त्रीय, सांस्कृतिक, सौन्दर्यशास्त्रलगायतका विभिन्न क्षेत्रमा बहस र प्रतिस्पर्धा पनि छ। पहिलो संविधान सभाबाट संविधानलाई पूर्णता दिन नसक्नुको मूलकारण यिनी दुवै दृष्टिकोणबिचको द्वन्द्व थियो । हामीले मार्क्सवादी वा समाजवादी दृष्टिकोणले विजय प्राप्त गरेर संविधान सभाबाट संविधान निर्माण गरी २०७२ सालमा घोषणा गर्‍यौं । यो देशको मूल कानुन र राज्यको चरित्रसित जोडिएको छ ।

## २. संघीयता र संविधान

संविधानमा संघीयता लागू गर्ने भनेको उत्पीडित जाति/जनजाति, ऐतिहासिक, भाषिक, सांस्कृतिक पहिचान र अधिकार खोजिएको भएर नै संघीयतामा जाने भनिएको छ। यसको अर्को पक्ष एकात्मक किसिमको राज्य व्यवस्थालाई संघ, प्रदेश र स्थानीय तहको सरकार निर्माण पनि थियो । संविधान सभाबाट संविधान बनाउँदा २०४७ सालकै संविधानका पक्षधर शक्तिहरूको संविधान सभामा बहुमत थियो । त्यसैले अग्रगामी संविधान बन्नमा बाधक हुन्छ कि भन्ने डर पनि थियो । संघीयता, धर्म निरपेक्षता, समावेशी र समानुपातिक एजेण्डा पछि पर्ने खतरा थियो । तर कसैले चाहेर पनि यी एजेण्डा छोड्न कठिन थियो किनकि १२ बुँदे समझदारी, बृहत शान्ति सम्झौता र अन्तरिम संविधानमा राखिएको थियो । त्यसैले संविधान सभाबाट संविधान बनाउँदा मुख्य समस्या संघीयतामा नै थियो । तर पहिचान र सामर्थ्य दुई वटा पक्षलाई समावेश गने निर्णय पहिले भएकोले समस्यामा परेन । अहिलको संविधान समावेशी समानुपातिक चरित्रको संघीय लोकतान्त्रिक गणतन्त्रात्मक संविधान छ। जाति, वर्ग, क्षेत्र, लिङ्गले आफ्नो अधिकार पाएका छन् । तीन तहको सरकार छ, संघीय सरकारले अहिले पनि प्रदेशलाई दिने अधिकार दिएको छैन । कतिपय कानुन बन्न सकेका छैनन् । प्राकृतिक स्रोत-साधन, राजस्व बाँडफाँड, अधिकारको बाँडफाँडमा अझै पनि ढिलाइ हुँदा प्रदेश सरकार केन्द्रप्रति निर्भर भएको देखिन्छ। त्यसैले प्रदेश खारेजीका माग पनि उठेका छन्, यसको कारक तत्व संघीय सरकार नै हो । हामीले संघीयता भनेको खोसिएका अधिकार दिने भनेको हो । विशुद्ध आर्थिक पूर्वाधारका सम्भावनाका कुरा मात्र भएन । संघीयताका सन्दर्भमा सन्तुलित विचार वस्तुनिष्ठताको खाँचो र शक्तिको बाँडफाँडबाट नै अगाडि बढाउनुपर्छ। संविधानले दिएको अधिकार संघीयता कार्यान्वयनको पक्षमा संघीय सरकारले कडा रुपका साथ लागु गरेर मान्नुपर्छ ।

### ३. देशको पहिचानसहितको संविधान

देशको पहिचान स्वाधीनता र सार्वभौमिकताको प्रश्न त्यस देशका जनतालाई अहम प्रश्न बन्छ । नेपाल अठारौं शताब्दिदेखि अहिलेसम्म संसारका करीब दुई दर्जन स्वतन्त्र देशमध्ये एक रहेको र हिमाली भेगमा सबैभन्दा पुरानो देश रहेको नेपालमा राष्ट्रिय स्वाधिनताका विषयमा समेत दलीय, गुठीय र निजी स्वार्थ हावी भएर निरन्तर खिचलो भइरहने र जनता वाक्क दिक्क भएको बेलामा समावेशी समानुपातिक संघीय लोकतान्त्रिक गणतन्त्रको प्रगतिशील संविधान निर्माण गर्नु आफैंमा गर्वको कुरा हो । नेपालीहरूको पहिचान विश्वको कुनै राष्ट्रको भन्दा कम ओजपूर्ण छैन । हाम्रो इतिहास अरु कसैको भन्दा कम समृद्ध छैन । सांस्कृतिक संमयता, विचार र सम्पदामा हामी कमजोर छैनौं । कमी भनेको खाली उचित राज्य प्रणाली र राजनीतिक नेतृत्वको हो । त्यसैमा संविधानमा हामीले देशको कानुन र राज्यको चरित्र प्रदर्शन गरेका छौं । अब देशको राष्ट्रियता मजबुत जगमा उभिनुपर्छ । नेपालको राष्ट्रिय हितमा राष्ट्रियताको इतिहासको आवश्यकतापूर्ति गर्ने र सबै जनताको सहभागितामूलक समावेशी र समानुपातिकतालाई लागु गर्न आवश्यक छ । आर्थिक रुपले कमजोर भए पनि संविधानमा राखिएका मौलिक हकहरू उत्कृष्ट रहेका छन् । संविधानमा राष्ट्रियता र जनतन्त्र दुई व  भिन्न पाटालाई मिलाउन नसक्नु हाम्रो कमजोरी हुने छ । हिजोको एकात्मवादी संविधानले राष्ट्रियताको कुरा गर्ने तर लोकतन्त्रलाई तिलाञ्जली दिने र कताकता एकात्मवादीको कुरा गर्दा फेरि राष्ट्रियताअनुरुप बनेको छ । संविधानले सम्बोधन गर्नुपर्ने थुप्रै कुराहरू थिए तर ती सबै सम्भव भएन । नेपाल तत्कालिन समयमा अविकसित, पिछडिएको, गरिबीको चपेटामा रहेको यर्थाथलाई हृदयंगम गर्दै वर्गीय, जातीय, क्षेत्रीय, लैङ्गिक, भाषिक एवम् सांस्कृतिक विभेदबाट सिर्जित उत्पीडनहरूलाई आत्मसात् गर्दै दलन र असमानता सही नसक्नु सर्वव्यापी थियो । मिचो र विभेदको अनुभूति गरिएको हुनाले यसबाट मुक्ति पाउने विषय अधिकारको रुपमा संविधानमा राख्न खोजिएको थियो । तर सबै सम्भव नभए पनि केही समावेश भएको हुँदा संशोधन गर्दै संविधानलाई समृद्ध पार्दै जान आवश्यक छ ।

### ४. संविधानमा समाजवाद र आर्थिक समृद्धि

नेपालको सन्दर्भमा नयाँ संविधानले समाजवादको व्यावहारिक कार्यान्वयनको ढोका खोलेको छ । नेपालको संविधान (२०७२) ले मुलुकको आर्थिक विकासको सैद्धान्तिक आधार प्रस्तुत गरेको छ भने लोकतान्त्रिक मूल्य र मान्यतामा आधारित समाजवादप्रति प्रतिबद्ध रही समृद्ध राष्ट्र निर्माण गर्ने प्रतिबद्धता व्यक्त गरिएको छ । दिगो शान्ति, सुशासन, विकास र समृद्धिको आकांक्षा पूरा गर्ने अठोट पनि संविधानले लिएको छ ।

संविधानले निर्देशक सिद्धान्तमार्फत तीन वटा प्रमुख उद्देश्यहरू अभिव्यक्त गरेको छ। पहिलो संघीय लोकतान्त्रिक गणतन्त्रात्मक व्यवस्था सुदृढ गर्ने राजनैतिक उद्देश्य, दोस्रो राष्ट्रिय एकता सुदृढ गर्ने सामाजिक एवम् सांस्कृतिक उद्देश्य र तेस्रो सार्वजनिक, निजी र सहकारी क्षेत्रको सहभागिता तथा विकासमार्फत उपलब्ध साधन र स्रोतको अधिकतम परिचालनद्वारा तीव्र आर्थिक वृद्धि हासिल गर्दै दिगो आर्थिक वृद्धि हासिल गर्दै दिगो आर्थिक विकास गर्ने तथा प्राप्त उपलब्धिहरूको न्यायोचित वितरण गरी आर्थिक असमानताको अन्त्य गर्दै शोषणरहित समाजको निर्माण गर्ने राष्ट्रिय अर्थतन्त्रलाई आत्मनिर्भर, स्वतन्त्र तथा उन्नतशील बनाउँदै समाजवाद उन्मुख स्वतन्त्र र समृद्ध अर्थतन्त्रको विकास गर्ने आर्थिक उद्देश्य संविधानअनुरुप

समाजवाद उन्मुख स्वतन्त्र र समृद्ध अर्थतन्त्रको विकास गर्ने आर्थिक उद्देश्यमा संविधानले जोड दिएको छ। यसका साथै शिक्षा, रोजगारी, श्रम, स्वास्थ्य, खाद्य र आवाससम्बन्धी जनताको मौलिक हक जस्ता विषयमा संविधानले गरेको व्यवस्थालाई महत्वपूर्ण मान्न सकिन्छ। यी सबै उद्देश्यहरूको कार्यान्वयनका लागि राजनैतिक नेतृत्वमा स्पष्ट अर्थ-राजनैतिक सोच एवम् व्यवस्थापकीय क्षमताको आवश्यकता पर्दछ।

लामो योजनाबद्ध विकासको इतिहास हुँदाहुँदै पनि केन्द्रीकृत र एकात्मक राज्यसत्ताको संरक्षणमा हुर्किएको सामन्ती समाजको बनावट, विकासमा विभेदता र ठुलो मात्रामा रहेको भौगोलिक विविधता (तराई, पहाड, हिमाल) र प्राकृतिक कठिनाइले नेपालको विकासको सामाजिकीकरण प्रक्रियालाई अवरुद्ध पारेको मान्न सकिन्छ। त्यसैले अहिलेको कार्यभार भनेको संघीय स्वरुपमा राष्ट्रिय औद्योगिक पूँजीवादको विकास गर्दै सहभागितामूलक समाजवादतर्फ उन्मुख रहने खालको मौलिक व्यवस्थाको सूत्रपात गर्नु नै हो।

राजनैतिक अर्थशास्त्रले समाजवाद बारे दुई कुरातर्फ इंगित गर्ने गर्दछ। पहिलो समाजको आर्थिक मूलधार उत्पादन सम्बन्धको सिद्धान्तको छानविन एवम् निरुपण गर्नु। हरेक उत्पादन व्यवस्थामा जबरजस्ती हैन, बरु उदाहरण पेश गरेर एवम् सामाजिक सहायता प्रदान गरेर परिवर्तन ल्याउन सकिन्छ। यसलाई नै समाजवादी समाजको निर्माणमा मार्क्सवादी दृष्टिकोणको मूल आधार मान्न सकिन्छ किनभने नयाँ समाज बनाउने प्रक्रिया एवम् आर्थिक एवम् सामाजिक प्रक्रिया पनि हो। त्यसैले यो सबै बल प्रयोगमा मात्र निर्भर गर्दैन। दोस्रो आर्थिक विकास एवम् योजनाको मोडेल तय गर्नु जसअन्तर्गत योजनाको एक सुसंगत प्रणालीलाई विकेन्द्रीकृत व्यवस्थापन एवम् स्वशासनका माध्यमद्वारा कार्यान्वयन गर्न सकिन्छ र विकास सधैं जनताबाट र जनताका लागि भन्ने भावनाबाट निर्देशित हुन्छ।

अहिले नै क्रान्तिकारी समाजवादको प्रयोग सम्भव हुँदैन किनकि नेपालमा पूँजीवादको विकास भई समाजवादी राजनैतिक क्रान्ति अझै सम्पन्न भैसकेको छैन। त्यसैले अहिलेको आवश्यकता भनेको विकासवादी समाजवादको मोडेल नै हो। समाजवाद उन्मुख विकासको मिश्रित मोडेलले नै अहिले राष्ट्रिय अर्थतन्त्रको द्रुत विकासको आवश्यकता पूरा गर्न सक्दछ जसको विशेषता विकेन्द्रित योजना प्रणाली सहितको योजनाबद्ध अर्थव्यवस्था, सहभागितामूलक अर्थतन्त्र, समाजवादको मोडेल हुन सक्छ जो क्रान्तिकारी समाजवादतर्फ पनि उन्मुख हुन सक्छ। यसमा थप छलफल आवश्यक छ।

नेपालको नयाँ संविधानमा पनि क्षेत्रीय सन्तुलन सहितको समावेशी आर्थिक विकासका लागि क्षेत्रीय विकासको योजनाअन्तर्गत दिगो सामाजिक, आर्थिक विकास रणनीति र कार्यक्रमहरू तर्जुमा गरी समन्वयात्मक तवरले कार्यान्वयन गर्ने नीति अङ्गिकार गरिएको छ। त्यसैले समाज तथा अर्थतन्त्रका सबै पक्षहरू समेटी आर्थिक विकासको प्रयास गर्नु नै समावेशी आर्थिक विकासको प्रमुख ध्येय हुनुपर्दछ जसले दूरदराजका प्रदेश, भौगोलिक क्षेत्र, महिला, जाति, जनजाति र तिनले अपनाउँदै आएका आर्थिक, सामाजिक तथा सांस्कृतिक परिवेशहरूलाई समेत आत्मसात् गर्दै विकासलाई अग्रगति प्रदान गर्न सकोस्।

राजनैतिकरुपमा नेपाल एउटा समावेशी, लोकतन्त्रात्मक समाजवाद उन्मुख, संघीय लोकतान्त्रिक गणगन्त्रात्मक राज्य प्रणाली भएको राष्ट्रमा रुपान्तरण भएको छ। त्यसैले अहिले समाजवाद उन्मुख राष्ट्रिय अर्थतन्त्रको मिश्रित प्रणाली (निजी, सहकारी र सरकारी क्षेत्र समेटिएको) समाजवादी बजार अर्थव्यवस्थालाई नै नेपालको राष्ट्रिय अर्थतन्त्रको सञ्चालन मोडेल मान्न सकिन्छ। जसको प्रमुख उद्देश्य राष्ट्रिय अर्थतन्त्र

(निजी, सहकारी र सरकारी क्षेत्र) को क्षमता अभिवृद्धि गर्नु, कृषि क्षेत्रको विकास, औद्योगिक विकासको आधार तयार गर्नु र राष्ट्रिय प्रतिस्पर्धात्मक क्षमता एवम् अन्तर्राष्ट्रिय स्तरमा राष्ट्रको प्रतिस्पर्धी क्षमता अभिवृद्धि गर्नु हुन आउँछ ।

**निष्कर्ष**

नयाँ संविधानले राजनैतिकरुपमा एउटा युगान्तकारी परिवर्तनलाई संस्थागत गरी नेपाली समाजको समतामूलक र प्रगतिशील सामाजिक एवम् आर्थिक रुपान्तरणका ढोका खालेको छ । राजनैतिक नेतृत्व सही दिशामा अघि बढे मुलुक छिटै विकासको एउटा नयाँ चरणमा प्रवेश गर्ने सम्भावना रहेको छ । संघीय संरचनाको कार्यान्वयन, जनचाहना अनुरुपको विकास र आर्थिक समृद्धिसँगै जनताको मौलिक हकहरूलाई प्रत्याभूत गर्दै कार्यान्वयन गर्नको लागि ठुलो मात्रामा साधन स्रोतको जोहो एवम् व्यवस्थापन गर्नुपर्ने राज्यको दायित्व र जिम्मेवारी पनि थपिएको छ । त्यसैले अब राज्य सञ्चालनको जिम्मा पाएका राजनैतिक दलहरूमा व्यवस्थापन क्षमताको ठुलो विकास हुनु पनि जरुरी देखिएको छ भने उनीहरूमा गुणात्मक रुपमा वैचारिक, आचरणगत एवम् व्यावहारिक रुपान्तरणको आवश्यकता रहेको छ ।

लामो संक्रमणकालपछि आएको संविधानको प्रतिफल प्राप्त गर्न जनता अब धेरै पर्खन र धैर्य गर्न सक्ने अवस्थामा छैनन् । त्यसैले राजनैतिक नेतृत्वको अबको कार्यभार भनेको समुन्नत र न्यायपूर्ण समाजको स्थापनासहितको आर्थिक विकास नै हो । समाजवादीकरणतर्फ उन्मुख आर्थिक क्रान्तिलाई तीब्रता दिएर विकासको समग्र केन्द्र विन्दुमा राखी कठोर मेहनत, परिष्कृत एवम् रुपान्तरित आचरण र राज्य संयन्त्रमा सुशासनको माध्यमबाट उपलब्ध साधन र स्रोतको प्रभावकारी परिचालन, सदुपयोग एवम् व्यवस्थापन सुनिश्चित गर्नु नै अबको अर्थ-राजनैतिक नेतृत्वको प्रमुख दायित्व हुन आउँछ । राजनैतिक दलहरूले युगले सुम्पेको यस नयाँ अभिभाराको स्वीकारोक्ति गर्नुपर्दछ र त्यस अनुकूल आफूलाई तयार पारी अगाडि बढ्नुपर्दछ ।



# मधेश र स्थानीय सरकारको अभ्यास



✍ **चन्द्रकिशोर***

यस आलेखमा संविधान, २०७२ अनुसार प्रदेश सरकार र स्थानीय सरकार कसरी चल्दैछ भन्ने सम्बन्धमा लेखाजोखा गर्ने जमर्को गरिएको छ । संघीयताप्रति विभिन्न कोणबाट भइरहेको प्रहारलाई समेत रेखाङ्कित गरेको छ। संघीयताको माग मधेशको तर्फबाट आएको थियो त्यसैले त्यसको पृष्ठभूमि पनि संक्षिप्तमा राखिएको छ । मुलुकमा सातवटा प्रदेश छन् । मधेश प्रदेशमा प्रादेशिक अभ्यास कसरी भइरहेको छ सोबारेमा यहाँ विवेचना गर्ने प्रयास गरिएको छ ।

**संघीयता संघर्ष**

खलील जिब्रानले लेखेका छन्, "कुनै व्यक्तिको मनोभावलाई यदि बुझ्नु छ भने उसले अहिलेसम्म के हासिल गऱ्यो त्यतातिर नहेर्नुस्, बरु उसले के गर्ने अभिलाषा राखेको छ, त्यतापट्टि बढी ध्यान दिनुहोस् ।" संघीयताका एक स्वप्न द्रष्टा गजेन्द्र नारायण सिंहलाई आदरले "गजेन्द्रबाबु" भनेर सम्बोधन गरिन्थ्यो । गजेन्द्र बाबु ज्युँदै छँदा केकस्ता राजनीतिक उपलब्धी प्राप्त गरेभन्दा पनि आज उनले समाएको गोरेटो समातेर मधेसी राजनीतिले के कस्तो फराकिलो लोकमार्ग निर्माण गर्न पुगेको छ त्यो महत्वपूर्ण हो । गजेन्द्र बाबुको मूल्याङ्कन गर्ने बेला त्यस कालखण्डको समस्याहरूमाथि पनि एक नजर राख्नुपर्छ र आजका समस्याहरूसँग त्यसको तुलना पनि गर्नुपर्छ। अहिलेको जुन मध्यमार्गी मधेसी राजनीति छ त्यो उहाँको सपनाको विस्तार हो । मधेसी राजनीति उहाँको महान गुणहरूको जीवन्त स्मारक बन्न पुगेको छ । त्यसैले पनि अहिले उहाँलाई कसरी सम्झने गरिएको छ, किन सम्झने गरिएको छ, कसले सम्झिराखेका छन् र कहाँ सम्झने गरिएको जस्ता सवालहरू महत्वपूर्ण रहेका छन् । विगतको विवेचना नगरिकन आगतको सुखद चाहना राख्न सकिँदैन ।

आजको मधेसी राजनीति इतिहासको अँध्यारोबाट निस्किएर आएको छ । यो अँध्यारो मामुली थिएन; शताब्दियौँ लामो थियो । शताब्दी लामो अँध्यारो सुरुङमा जो केही मसालहरू बले, त्यसको नाम

* वरिष्ठ पत्रकार

रघुनाथ ठाकुर, पण्डित रामाकान्त झा, मुन्सी दयाशंकर गुप्ता, कुलानन्द झा, दुर्गानन्द झा, डा.लक्ष्मी नारायण, रामजनम तिवारी, श्यामलाल मिश्र, रामचन्द्र मिश्र, गंगाधर झा, रघुनाथ राय, सत्यदेवमणी त्रिपाठीलगायतका थिए ।

यो सूची निकै लामो छ । त्यसैले भन्नु परेको छ मधेसी राजनीतिमा अहिले देखिएका अनुहारहरू "मुहान" होइन, यिनीहरू त "प्रवाह" हुन् । उसो त कतिपयले अहिले मान्ने गरेका छन्, "म जहाँ खडा छु, पङ्क्ति त्यहीँबाट सुरु भएको छ" । मलाई लाग्छ इतिहासको कुनै पनि सरलीकरण तिनकै अस्तित्वलाई चुनौती दिन्छ । हो जसले अन्तिम प्रहार गरे तिनलाई लाग्न सक्छ कि ढुङ्गा मैले नै फोरेको हुँ । तर उसले बिर्सिरहेको हुन्छ कि इतिहासमा त्यो ढुङ्गामाथि अनेकौँ प्रहार गर्नेहरू थिए । यस कुरालाई यसरी पनि भन्न सकिन्छ घरको जगमा छोपिन गएका इँटाहरूलाई जो कोहीले सम्झिँदैन, चिन्दैन, चिनाउँदैन तर उसले छानामा रहेको चम्किलो इँटालाई सम्झिरहेको हुन्छ, सम्झाइरहेको हुन्छ । तत्कालमा देखिएको चिन्ने र चिनाउनेको यो लुकामारी खेल जतिसुकै नै खेलियोस् तर यसले जगका इँटाहरूको अवमूल्यन गर्ने नैतिक साहस राख्दैन ।

तराईमा कांग्रेसको पतनपश्चातको विकट र दुविधाग्रस्त समयमा जुन अडिग, निश्चय र दूरदर्शिताका साथ गजेन्द्रबाबु मधेसी सङ्गठन निर्माण कार्यमा आफुलाई समर्पित बनाए, आजको मधेसी दलहरू तिनै प्रयत्नहरूको परिस्कृत परिणाम हो । गजेन्द्रबाबुलाई केवल मधेसी राजनीतिसँग जोडेर मात्र हेर्न मिल्दैन । उनी नेपालमा लोकतन्त्र स्थापनाका लागि प्रतिवद्ध एक पुराना योद्धा थिए । २००७ सालदेखि जीवन पर्यन्त उनी आफुलाई नेपाली लोकतन्त्रप्रति संघर्षशील व्यक्तिका रुपमा उभ्याए । नेपालको राजनीतिक भूगोलभित्र बस्ने जो कोहीको बिच आपसी सम्बन्धका व्याकरण कस्तो हुने, त्यसै गरी राज्य र नागरिकबिचको सम्बन्ध कसरी सम्मानजनक हुने र नेपालमा गैरबराबरीलाई समाप्त पारी समतामूलक समाज कसरी निर्माण गर्न सकिन्छ, उनी आजीवन त्यसैका लागि चिन्तित देखिए । हो उहाँको कार्यक्षेत्र मधेस रह्यो ।

उहाँ सप्तरीको एउटा सीमान्त गाउँमा जन्मिएर पनि नेपाली जनतालाई बलियो बनाउन चाहन्थे । नेपालमा लोकतान्त्रिक व्यवस्थाअन्तर्गत नयाँ संरचनाको परिकल्पना उनको थियो । नयाँ संरचनाको परिकल्पनाको बहसमा नेपाली राज्य, राज्य सञ्चालनको पक्रिया तथा राज्य र समाजका विभिन्न समूहहरूबिचको आपसी सम्बन्धलाई आधार मानेर अगाडि बढ्नु पर्ने उनको माग थियो । उनी राज्य र सामाजिक समूहहरूको सम्बन्ध तथा भूमिकाको बारेमा व्यापक रुपमा प्रश्न उठाए । उनकाअनुसार नेपाली सन्दर्भमा राष्ट्रिय एकता र सार्वभौमिकतालाई सर्वोपरी राखी राजनीतिक, आर्थिक, सामाजिक एवम् सांस्कृतिक विकास गर्ने अधिकारको रुपमा संघीयतालाई बुझ्नुपर्ने थियो । आज उहाँ बितेको लामो समयपश्चात् नेपाल संवैधानिक रुपमा संघीयतामा प्रवेश गरेको छ । प्रदेश सभाको दोस्रो पटक निर्वाचन भइसकेर नयाँ सरकार बनिसकेको छ । यो भनेको गजेन्द्र नारायण सिंहले हिँड्न खोजेको गोरेटोको सार्थकता हो । निश्चित रुपमा उनी मधेसमा जे जुन प्रकारका प्रदेशहरूको बनावट चाहन्थे र जस्तो संघीयताको अभ्यास गर्न खोजेका थिए त्यस्तो हुन पाएको छैन । तर जे जस्तो रुपको संघीयता आएको छ अब यसबाट देश पछाडि फर्केर जान सक्दैन । संघीयता प्राप्तिमा वि.सं. २०६३, २०६४ र २०७२ को मधेश आन्दोलन र तिनका अभियन्ताहरूको समेत भूमिका छ ।

## नयाँ लिक, नयाँ स्वप्न

संघीयताले नागरिकहरूलाई पहिचानसहित सङ्गठित हुने अवसर दिन्छ। पहिलो कार्यकालका आफ्नै खालका अवसर र चुनौतीहरू थिए । सबै कुरा पहिलो पटक हुँदै थिए । नयाँ लिक कोर्नु थियो । तर अब जिम्मेदारी पाएकालाई केही सहज छ । तर जिम्मेवारीको गुरूत्व कम छैन । मधेश प्रदेशले अब आफ्नो इतिहास, परम्परा, बनावट र बसोबासको आधारमा आफ्नो विशिष्ट पहिचान निर्माण गर्नुपर्छ। आफ्नो सार्मथ्यहरूलाई विस्तार गर्दै यस भेगका नागरिकहरूको राज्यप्रति अपनत्व कसरी वृद्धि गर्ने त्यसका लागि साझा प्रयत्न गरिनुपर्छ । मधेश प्रदेश आफैमा विविधता बोकेको क्षेत्र हो । यो विविधता माझ समन्वयको सुत्रहरूको पहिचान गर्ने बेला आइसकेको छ । काठमाडौंबाट हेर्दा मधेश प्रदेशमा एउटै पहिचान देखिएला तर भुइँ सतहबाट हेर्दा यो पहिचानहरूको मिश्रित प्रदेश हो । यी कुराहरू अहिले पटक पटक भन्नु परेको छ ।

संघीयता भनेको सम्झौता पनि हो । यसमा हुने कुनै पनि निर्णय दबाबकारी हुन सक्दैन, स्वेच्छिक हुन्छ । स्वेच्छिक निर्णय हुनका लागि सरोकारवाला सबै पक्षहरू माझ संवाद हुनुपर्छ । संवादले अपनत्व ल्याउँछ, संवादले समझदारीको निर्माण गर्छ। संघीयता भनेको अत्यन्तै गम्भीर रुपमा विचार गरेर आपसमा "नेगोसिएट" गर्नुपर्ने विषय हो । अर्थात् मधेश प्रदेशमा हुने कुनै पनि व्यापक प्रभावको निर्णयमा प्रादेशिक विमर्श हुनुपर्छ। मधेश प्रदेशले यस्तो परम्पराको सुरुवात गर्नु पर्‍यो जहाँ बृहतर हितमा सबैको स्वार्थ निश्चित छ भन्ने साझा बोध गराओस् । मधेश प्रदेशलाई सफलतापूर्वक चलाउन नभई नहुने कुरा भनेको यस भूगोलभित्रका प्रत्येक पक्ष र पङ्क्तिले आफु सम्मान र सुरक्षित प्राप्त गरेको देखिनु हो ।

मधेश प्रदेशको सम्बन्धमा आम नेपालीमा थुप्रै प्रश्न, आशंका, अस्पष्टता र द्विविधाहरू व्याप्त छन् । प्रदेश सञ्चालनको जिम्मेवारी बहन गर्ने सभासद र राजनीतिक दलका नेता एवम् कार्यकर्ताहरूमा समेत मधेश प्रदेशका सम्बन्धमा थुप्रै जिज्ञासाहरू रहेको पाइन्छ । त्यसैले मधेश प्रदेशबारे यहाँका प्रत्येक बासिन्दा स्पष्ट हुन अत्यन्त जरुरी छ। किनभने यसको टुङ्गो नलागि मधेश प्रदेशले सार्थक र सन्तोषजनक यात्रा गर्न सक्दैन । प्रदेश सभाको सर्वोच्चता र मर्यादा प्रखर रुपमा प्रकट होउन् । विगतमा प्रदेश सभाको भूमिका गुणस्तरयुक्त रहन सकेन । दलहरूले आफ्ना बरिष्ठ कार्यकर्ताहरूलाई प्रदेश सभामा पठाउन रूचाएनन् । पहिला पनि यस्तै भयो, यसपटक पनि यस्तै भयो ।

मधेश प्रदेशका समक्ष चुनौतीहरू कम छैन । प्रदेशको नियन्त्रणमा कुन र कस्तो सुरक्षा संयन्त्र हुने टुङ्गो छैन ? प्रमुख जिल्ला अधिकारीहरूको जवाफदेहिता केन्द्रबाट प्रदेशमा रुपान्तरित भएको छैन, मधेश प्रदेशमा रहेका पूर्वाधारहरूको विकास कसरी गर्ने त्यसको रुपरेखा कसैसँग छैन । पुराना जुन संरचनाहरू छन् त्यसको बारेमा फरक फरक दृष्टिकोणहरू आइराखेको छ । यही निर साझा सहमतिको विन्दु खोजी गर्न विज्ञहरूको भूमिका मह□वपूर्ण हुन्छ । विभिन्न धारणाको सही अध्ययन र दिगो संरचना सुझाउन उनीहरूले आफ्नो विशेषज्ञताको प्रयोग गर्न सक्छन् ।

मधेश प्रदेशको यथार्थ धरातल बुझेर यहाँका मुद्दाहरूलाई सुल्झाउनु, जटिलताहरूलाई व्यवस्थित गर्न, अगामी बाटोलाई सहज बनाउन, प्रादेशिक अभ्यासको अवधारणालाई यस प्रदेशका बासिन्दाहरू माझ देखिने, बुझिने र अनुभूत गर्न सकिने संरचना र पद्धतिमा ढाल्न उत्प्रेरित गर्न सक्ने विज्ञहरूको कमी छैन ।

पहिला त विज्ञहरूले आफ्ना अनुभवलाई सार्वजनिक विमर्शमा ल्याउनु पर्‍यो, आफु पनि लगनशील देखिनु पर्‍यो, त्यसै गरी प्रदेश प्रमुख, प्रदेश सरकार र प्रदेश सभाले परामर्श वा छलफलका निम्ति आफुलाई उदार बनाउनु पर्‍यो । मधेश प्रदेशको जनताको भावनालाई प्रतिनिधित्व गरी गतिलो प्रादेशिक अभ्यास निर्माण गर्ने चुनौतीमा विज्ञहरू सहयोगी हुने अपेक्षा सर्वत्र गरिएको छ । यस अघि राजनीतिक नेतृत्वको अनुकम्पामा दलीय भागबण्डाका आधारमा राजनीतिक नियुक्तिहरू भए परिणामस्वरूप कमसल काम भयो । मन्त्रिमण्डलमा दलित र पहाडी समुदाय अटाउन सकेनन् । दोस्रो कार्यकालमा पहाडे समुदायबाट मन्त्री बनाइए पनि अझै त्यो पूर्ण समावेशी हुन सकेको छैन ।

## गाउँ गाउँमा सिंहदरबार

संविधानमा स्थानीय तहको उल्लेख गरिएको छ । यसरी संविधानमै स्थानीय तहको उल्लेख पहिलो पटक गरिएको थियो । यसले शक्तिको अभ्यासलाई तलसम्म पुर्‍यायो । शक्तिको अवतरण भुइँ तहमै हुने भयो । 'गाउँ गाउँमा सिहंदरबार' भन्ने सङ्कथनले के सपार्‍यो ? भुइँ मान्छेले घर आँगनमा अवतरित सरकारमा आफ्नो कत्तिको स्वामित्व पायो ? सत्ताको लाभ बढिभन्दा बढि मान्छेले पाउन सके कि ? भुइँयाबाटै भावी नेतृत्वको निर्माण हुन सक्यो कि ? दलीय प्रतिस्पर्धाबाट आए पनि विभिन्न दलबाट निर्वाचित हुन आएका जनप्रतिनिधिहरू माझ उदारवादी दृष्टिकोणको निर्माण हुन पुग्यो त ? जनता र सरकारको पारस्परिक सम्बम्धले कस्तो रूप पायो । 'कम समय, कम व्यय' भनिएको सरकारको चाल, चरित्र र चेहरा कस्तो रह्यो ? स्थानीय तहको आवधिक निर्वाचन मात्रले यो संस्थालाई दिगो एवम् प्रभावकारी बनाउँदैन, भुइँमान्छेको सरकार बन्न उपर्युक्त प्रश्नहरूको तटस्थ जवाफ निफन्नै पर्छ ।

स्थानीय सरकार प्रणाली आत्मसात गर्नुको प्रमुख उद्देश्य यसका माध्यमबाट देशका सबै नागरिक आफ्नो लोकतान्त्रिक अधिकार प्राप्त गर्न सक्छन् भन्ने मान्यता हो । लोकतन्त्रको सफलता सत्ताको अभ्यासलाई तलसम्म पुर्‍याउनु हो । स्थानीय स्वशासनको माध्यमबाट नै राजकीय शक्तिको सही अवतरण सम्भव हुन सक्छ । लोकतन्त्रको सही अर्थ हुन्छ सार्थक भागिदारी र उद्देश्यपूर्ण जवाफदेहीता । जीवन्त र मजबुत स्थानीय शासन भागिदारी र जवावदेही दुईवटैलाई सुनिश्चित गर्छ । स्थानीय तहको विशेषता यो हुन्छ कि यो भुइँ मान्छेको नजिकको हुन्छ र यसकारण लोकतन्त्रमा सबैको सहभागिता सुनिश्चित गर्नमा सक्षम हुन्छ । स्थानीय सरकारको क्षेत्राधिकार एउटा विशेष क्षेत्रमा सीमित हुन्छ र तिनकै लागि काम गर्छ जो ति क्षेत्र विशेषका बासिन्दा हुन् ।

संवैधानिक अधिकार प्राप्त स्थानीय तहले विगतको जस्तो केन्द्रको निगाहमा अस्तित्व पाएको होइन । नेपाल राज्य भनेकै संघीय, प्रदेश र स्थानीय तहको सगोल स्वरूप हो । यो विगतमा गरिएको विकेन्द्रीकरणको अभ्यास पनि होइन । संविधानले यसलाई स्वयम्मा सत्ता र शक्तिको केन्द्रका रूपमा परिभाषित गरेको छ । स्थानीय सरकारको निश्चित क्षेत्र, जनसङ्ख्या, संरचना र सत्ता छ । तर अभ्यासमा झ्यालबाट 'केन्द्र' स्थानीय तहमा छिरेर मूलढोकाबाट निस्कियो । दल विशेषको प्रत्याशी छनौटदेखि जनशक्ति र स्रोत दल वा शासनको शीर्ष तहबाटै निर्यात भयो । यसले शासनको अपेक्षित शीर्षासन हुन पाएन । स्थानीय तहको अभ्यासले एक कार्यकाल पूरा गरिसकेको छ ।

एकातिर यो अभ्यास सफल पनि रह्यो, आर्को तिर असफल पनि । यसको सफलता र असफलता यस कुरा माथि निर्भर गर्दछ कि यसलाई कुन उद्देश्यका आधारमा जाँच गरिँदैछ । यदि यस व्यवस्थाको उद्देश्य भुइँ तहमा सरकार तथा राजनीतिक प्रतिनिधित्वको एउटा आर्को प्रणालीको विकास गर्नु थियो भने स्थानीय सरकारको अवधारणा यस उद्देश्य प्राप्तिमा पूर्णतः सफल रह्यो । तर सुशासनलाई तृष्ण तहसम्म नै कायम गर्नु थियो भने त्यसमा असफलता प्राप्त भयो । गाउँ गाउँमा सिहंदरबार भन्ने कथ्यले त्यसका सबै विसंगतिहरू सोझै भुइँमा पुग्यो ।

लोकतन्त्रको स्वाद भुइँ तहमा तबसम्म पुग्दैन जबसम्म भुइँ तहमा उत्पन्न समस्या, प्रस्फुटित आकाङ्क्षा र टुसाउँदै गरेको सपनालाई त्यही कै बासिन्दाहरूद्वारा हल गरिनुपर्छ, व्यवस्थापन गरिनुपर्छ जहाँ त्यसले आकार ग्रहण गरेको छ भन्ने कुरा आत्मसात गरिँदैन । स्थानीय सरकारले नागरिक जीवनको सुविधालाई प्राथमिकता दिन्छ जस्तो बिजुली, सडक, सञ्चार, स्वास्थ्य, पिउने पानी, आवास, सरसफाई, आधारभूत शिक्षा आदि । समयसँगै आम मानिसको जीवन यापनको आवश्यकताहरूको न्यूनतम अवधारणा पनि बदलिएको छ । स्थानीय शासनले जे जुन कार्य गर्नुपर्ने हो त्यसमा निरन्तर वृद्धि भएको छ । उपलब्ध सुविधाहरूको प्रवर्धन एवम् नयाँ सुविधाहरू जुटाउनु तथा भविष्यका सम्भावनाहरूमाथि दृष्टि राख्नु, नागरिक जीवनका शारीरिक, आर्थिक, सामाजिक तथा सांस्कृतिक पक्षलाई गुणस्तरयुक्त बनाउनु स्थानीय शासनको उत्तरदायित्व हो । एकातिर आम नागरिकको जीवनलाई व्यवस्थित बनाउनुपर्ने छ त्यही यसको उद्देश्य लोकतान्त्रिक मूल्यहरूप्रति जागरूक गरेर समाजलाई शासन व्यवस्थासँग सामन्जस्य स्थापित गर्नु हो । तर स्थानीय सरकार कहाँ पुग्यो ?

आजभोलि आम नागरिकको दैनिक जीवनमा स्थानीय शासनको भूमिका प्रान्तीय र केन्द्रीय शासनभन्दा पनि बढी अनुभव गरिएको छ । स्थानीय शासनको कार्य व्यवहारमा निरन्तर अभिवृद्धि भएसँगै यसको आवश्यकता र महत्व बढ्दै जान्छ । जुन प्रकारले आम मानिस राजनीतिक दृष्टिले जागरूक हुँदै आए, राजनीतिक संस्कृति मजबुत हुँदै गयो त्यसले उत्तरदायित्व तथा सहअस्तित्वमा आधारित शासन व्यवस्थाको यो एकाई नागरिक सहभागितालाई थप मजबुत गर्नेछ र भविष्यमा नागरिकहरूको सेवा निष्पादनमा अग्रगामी साबित हुनेछ भन्ने आशा पलायो । परिकल्पनाअनुसार स्थानीय सवालहरूको कुशलतापूर्वक व्यवस्थापन गर्ने हो । हिजो सिंहदरबारसमक्ष स्थानीय सवालहरू सम्प्रेषित हुनै कठिन, त्यहाँ पुगे पनि त्यसको प्रबन्ध कार्य जटिल हुन्थ्यो । माथिबाट एक गाग्रो पानी खन्याउँदा तलसम्म थोपाथोपा मात्र पुग्थ्यो र भनिन्थ्यो; बुझिन्थ्यो शासन भनेकै यस्तै हो । स्थानीय सरकारको अभ्यासले विगतको जटिल एवम् लामो पक्रियालाई सहज र सरल बनाउन हस्तक्षेप गरेको छ । यसबाट केन्द्र वा प्रदेशको कार्यभारलाई कम बनायो ।

लोकतन्त्रको सफलता यस कुरामा निर्भर गर्दछ कि आम मान्छेले सार्वजनिक क्षेत्रमा कत्तिको चासो देखाउँछ । यस्तो चासो स्वयम् संस्थाद्वारा एवम् स्वयम् नागरिकहरूमा उत्पन्न हुनु पर्दछ । पछिल्ला अभ्यासले देखाएको तथ्य हो आम मान्छेलाई जिज्ञासु बनाएको छ । आफ्नो छेउछाउको विकास निर्माण वा सेवा सुविधाबारे के, किन, कसरी, कति भनेर जान्न चाहन्छन्, खोतल्न अघि सर्छन् । स्थानीय जनप्रतिनिधिबाट लुकाइएका तथ्यहरूबारे प्रश्न गर्छन् । कतै कमसल काम भयो वा जे हुनु पर्दथ्यो त्यो भएन, जे भनिएको थियो त्यो गरिएन भने त्यसको लेखाजोखा राख्ने पवृत्ति बढेको छ । सबैभन्दा नोटिसमै लिने कुरा आम मान्छेमा उजागर गर्ने साहस पलाउँदै आएको छ । अरू केही नभए सामाजिक सञ्जालमा राख्छन्, त्यस्तै परे

अख्तियारमा उजुरी हाल्छन् । स्थानीय शासन जनताको नजिकको भएको हुनाले आम नागरिकलाई लाग्दछ उसले यसको असल प्रबर्धनका लागि अधिक दबाब दिन सक्छ । स्थानीय सरकारले राजनीतिक शिक्षणलाई भुइँ तहमा पुऱ्यायो । आम नागरिक राजनीतिक रूपमा सजग बन्दै आए । करहरूको औचित्य, निर्वाचनको तरिका र शासनको कार्यलाई बुझ्न थालियो ।

कर्मचारीको सङ्ख्या बढेजस्तो देखिए पनि स्थानीय तहमा जनशक्तिको विस्तारले राज्यले प्रदान गर्ने सेवा सहज भयो । यसले राज्य र नागरिकको सम्बन्धलाई आयामित गर्न सघायो । स्थानीय सरकारसँग कसरी लाभ लिने सामन्जस्य वा उसँग मिलेर कसरी सहकार्य गर्ने चेतना विस्तारित हुँदै गएको छ । सुशासनले स्वशासनको मर्मलाई मूर्तरूप दिन्छ । स्थानीय सरकारले स्थानीय इतिहास, संस्कृति, रैथाने ज्ञान, मातृभाषा, पारम्परिक सीप, सम्पदाको संरक्षण, सदुपयोग र सुविस्तार त गर्छ नै पालिकास्तरका सूचना, तथ्याङ्कहरू प्रदेश तथा संघीय सरकारलाई उपलब्ध गराउन सक्छ जसले ती सरकारहरूले आफ्नो नीति तथा कार्यक्रम बनाउँछ । जसमा एकीकृत रूपमा सम्पूर्ण राष्ट्रको हित निहित रहन्छ । ती सरकारहरूका नीति तथा योजना सफल बनाउन स्थानीय शासनले पूरक एवम् पोषणको काम गर्छ । हो पहिलो कार्यकालमा समग्रमा यी अपेक्षाहरू पूरा हुन सकेन् ।

स्थानीय सरकारले लोकतन्त्रको प्राथमिक पाठशालाको काम गर्छ । स्थानीय स्वशासनको अनुपस्थितिमा लोकतन्त्र भुइँ तहमा मजबुत हुन सक्दैन । स्थानीय शासनको तौरतरीका जति श्रेष्ठ हुन्छ त्यस क्षेत्रका बासिन्दा त्यतिकै सुखी र सम्पन्न हुन्छ । स्थानीय स्वशासन एउटा स्वतन्त्र राष्ट्रको शक्तिको आधार हो । संविधान निर्माण ताका स्थानीय तह निरूपणको जुन द्वन्द्व थियो त्यो आज पनि छँदैछ । सबै दल केन्द्रबाटै उम्मेदवार छनौट वा गठबन्धन थोपर्न उध्यत छन् । यथार्थमा "भुइँ मान्छेको सरकार" मन्त्र जप गरिए पनि स्थानीय तह घाइते भएर छटपटिँदैछ ।

### फू गरेर संघीयता ढल्दैन

लोकतन्त्रको विशेषता नै हो यो जनमतमा चल्ने गर्छ । जनमतको प्रकटीकरण विभिन्न माध्यममार्फत हुन्छन् । जनादेश र मतादेश दुवैले संघीयताको अनुमोदन गरिसकेको छ । अर्थात जनआन्दोलनमार्फत राज्यको पुनर्संरचना गरी संघीय शासन प्रणालीमा रूपान्तरित गर्ने कार्यभार भयो । त्यसै गरी चालू संविधान निर्माण गरिँदा जुन राजनीतिक मूल्य र संरचना आत्मसात गरियो । त्यसलाई फेरी निर्वाचनमार्फत जनस्वीकृति प्रदान गरियो । तसर्थ प्राप्त उपलब्धिहरूलाई संस्थागत गर्न चुकिएको विगतको कमजोरीलाई सच्याउँदै संघीयताका आधारभूत विश्वासहरूलाई स्थापित गर्ने कार्यभार कुशलतापूर्वक सम्पादन गर्नु आजको दायित्व हो ।

राजतन्त्रको विधिवत अन्त्य गर्दै संघीय लोकतन्त्र स्थापना र अभ्यासको क्रम जारी रहनु सुखद् उपलब्धी भए पनि हाम्रो अन्तिम लक्ष्य संघीयताको माध्यमबाट न्यायपूर्ण र समतामूलक समाजको स्थापना गर्नु हो । यसै मान्यताबाट अभिप्रेरित हुँदै नेपाली संघीयताले सामाजिक आर्थिक रूपान्तरणमा ध्यान पुऱ्याउन आवश्यक छ । प्रादेशिक अभ्यासले नेपालमा संवैधानिक परिवर्तनका साथै राज्यको बनोटमा परिवर्तन ल्यायो, यसको स्वरूप र चरित्रमा रूपान्तरण ल्याउन खोज्दैछ । तर यो यात्रा सहज छैन । कुनै कोणबाट खास विचारको प्रक्षेपण हुनुमात्रले संघीय अभ्यास रोकिदैन । यो लामो संघर्ष र मन्थनपछि आएको हो । संघीयता कसैले

‘फू’ गर्दैमा ढल्ने होइन ।

तर को किन संघीयता मास्न उद्यत छन् ? त्यसको लेखाजोखा त हुनैपर्छ । लोकतन्त्रमा सबै कुराको हिसाब किताब हुन्छ । संघीयताको साटो विकेन्द्रीकरण गर्नुपर्ने, समावेशिताको साटो क्षमता बढाउनुपर्ने तर्क आउन सक्छ । तर यस्तो सुगा रटाई लामो कालसम्म टिक्दैन । यस्ता सुगावाणी प्रथम पटक सुन्दा “प्रिय” लाग्छ तर पटक पटक उही भाष्यसँगै किर्तन हुन थाल्दा त्यो कर्कश लाग्न थाल्छ । अहिले विकेन्द्रीकरणका प्रचारकहरू अपेक्षाकृत विभिन्न कारणले असन्तुष्ट वा उकुसमुकुसमा परेकालाई आकर्षित गर्न तथ्यको अतिशयोक्तिपूर्ण प्रस्तुति गरिरहेको हुँदा त्यो परालको आगो झैं निश्चित समयावधी मै सेलाएर जान्छ । स्वघोषित अग्रगामी शक्तिहरूमाझको अन्योल र अलमलले पनि परिस्थितिलाई अन्यौलपूर्ण पक्कै बनाएको हो ।

संघीयताको मूल खम्बा हो यसले जनतालाई सार्वभौम संवैधानिक र व्यावहारिक रूपमै स्वीकार गर्नु हो । संघीयताको अन्तर्य भनेको जनताले शक्ति आफुसँग छ भनेर अनुभूत गर्न सक्नु हो । जनताले दिने अधिकार मात्र काठमाडौंको सिहंदरबारमा जाने हो । जनताले यस्तै प्रादेशिक अभ्यास खोजेको हो । यो केन्द्रसँग जोडिने सूत्र हो । प्रादेशिक अभ्यास जति प्रभावकारी र सार्थक हुँदै जान्छ नेपालको भौगोलिक र सामाजिक अखण्डता त्यति नै अटूट हुन जान्छ ।

आज जनताका प्रत्येक तप्काबाट आफ्नो स्वार्थ रक्षाको चेतना बृद्धि भएको छ । यस्तोमा अब पनि जनता कसैले छरेको भ्रममा फस्ने छैनन् तर कोही किन संघीयताको विरोधमा बोल्छन्, कोही किन संघीयता मास्न उद्यत छन् ? यो विचारणीय हो । आवेग, प्रतिक्रिया र द्वेषबाट अलि माथि उठ्नै पर्छ । संघीयता भनेको लेनदेनको कुरा हो । यसकारण आफुले भने जस्तो व्यवस्था स्थापना नहुन सक्छ तर प्रादेशिक अभ्यासका लागि केही आधारभूत चरित्र आत्मसात् गरेकै हुनुपर्छ । यसको अभावमा कुनै आन्तरिक राजनीतिक क्षेत्र र स्तरको नाम “प्रदेश” र त्यहाँको निर्वाचित प्रमुखलाई “मूख्यमन्त्री”को पगरी गुठाए पनि त्यस्तो प्रादेशिक अभ्यास आलङ्कारिक हुन्छ । संघीयता एउटा सिद्धान्त हो यसले विश्वव्यापी रूपमा केही मूल्यहरू ग्रहण गरेको हुनुपर्छ । विकेन्द्रित व्यवस्थामा केन्द्रले प्रदान गरेको अधिकारभित्र रहेर काम गर्नुपर्छ तर संघीयतामा केन्द्रले अधिकार दिने नभई प्रदेशहरू संविधानको परिधिभिन्न रही आफ्ना ऐन कानुन आफै बनाएर कार्य गर्न स्वतन्त्र हुन्छन् ।

संघीयताले जनता जहाँ बस्दछन् त्यही ठाउँमा अधिकार दिन्छ । यो तलबाट माथि अधिकार प्रदान गर्ने पद्धति हो । नेपालको संविधानको राम्रो पक्ष के हो भने एकपटक प्रादेशिक अभ्यासमा छिरिसकेपछि आउने दिनहरूमा यसको परिमार्जन र विकास गर्न सकिन्छ । वर्तमान नेपालको प्रमुख राजनीतिक शक्तिहरूले संघीयता स्वीकार गरिसकेका छन् त्यसैले यसको उन्नत हुने सम्भावना खुला छ ।

कसैले संघीयताको आलोचना नै गर्नु हुन्न भन्ने होइन । यसले संघीय अभ्यासको क्रममा देखा परेका कमजोरी, रिक्तता, विरोधाभासलाई सच्याउन प्रेरित गर्छ । कोही संघीयता थप भ्रष्टाचार र आर्थिक भारको स्रोत त कोही अखण्डताको लागि घातक बताउन सक्छन् । तर जो संविधानअनुसार संघीयता कार्यान्वयनमा लागि परे तिनीहरूले के गरे ? प्रत्येक दलले आफ्ना अब्बल कार्यकर्ता र नेताहरूलाई प्रदेश सभाको राजनीतिमा सङ्लग्न गराउनु पर्थ्यो, दलका प्रदेश समितिहरूको त्यस प्रदेश विशेषको सरकार निर्माणमा

भूमिका राख्नु पर्थ्यो तर आजसम्म नेपालका प्रायः सबै दलको ढाँचा ठाडो र केन्द्रीकृत रहँदै आएको छ त्यसको प्रतिच्छाया प्रादेशिक अभ्यासमा गइसक्दा पनि कायम छ । दलको केन्द्रले जे चाहन्छन् त्यही प्रदेशमा तिनका पालकहरूले गर्छन् । चाहे मुख्यमन्त्रीको छनौट होस् वा प्रदेशको नाम वा राजधानी तोक्न । मधेशतिर आहान छ "एकैपटक गाला फुलाउने र हाँस्ने काम हुन सक्दैन ।"

राज्यमा रुपान्तरण गर्न खोज्ने तर दलीय संरचना र त्यसअनुसारको स्वरूपलाई सक्षम बनाउन नचाहने प्रवृत्ति अब स्वीकार गर्न मिल्दैन । शासनमा संघीयता खोज्ने तर दलीय संरचनामा केन्द्रीय बर्चश्वको हैकम खोज्ने, यस विरोधाभासले चिताएको गन्तव्यमा पुऱ्याउन सक्दैन । राजतन्त्रअन्तर्गत नेपालको स्थापना र परिपोषण अतिकेन्द्रीकृत एकात्मक राज्यका रूपमा यसरी भयो की सारा प्रशासनिक, सामरिक, राजनीतिक अनि आर्थिक शक्ति काठमाडौं उपत्यका मै केन्द्रित रह्यो । एकात्मक बनोटको त्यही बाछिटा दलीय संरचनाभित्र रह्यो । नेपाली दलहरूभित्र सामन्तवादी चिन्तन र त्यसका हाँगा गहिरोसँग गढेका छन् । कुनै दलले भन्ला हाम्रा दलभित्रको साङ्गठनिक संरचना प्रादेशिक बनोटअनुसार छ तर व्यवहारमा त्यो फगत कागजको फूल पो रहेछ । दलहरूको प्रादेशिक समितिहरू कति प्रभावकारी छन् ? किनभने दल भनेको आधुनिक राजनीतिको जीवनरेखा हो । समाज परम्परागत अवस्थाबाट आधुनिकता तर्फ अग्रसर हुँदा त्यसको सम्वाहकको रूपमा राजनीतिक दलहरूको उदय हुन्छ । लोकतन्त्रका बाहक मानिने दलहरू स्वयं संघीयताका मर्मअनुसार हिँड्नु पर्छ कि पर्दैन भन्ने सवाल यतिखेर मुख्य बहसको विषय बनेको छ । यदि हुनुपर्छ भने दलहरूको सञ्चालनमा संघीयताको संस्थाकरण कसरी गर्न सकिन्छ ? दलहरूको आङ्तरिक संघीयताका सूचकाङ्क के हुन् सक्छन् ? दलभित्र बलियो प्रदेशको खोजी भनेको शक्तिहीन केन्द्रको स्थापना गर्न किमार्थ होइन । दलहरूको बलियो प्रदेश बनाउने सोचाइले स्वायत्तता र स्वशासनलाई सार्थक बनाउँछ ।

सानसनीपूर्ण कुराले त्यसै पनि धेरैको ध्यान तुरून्तै खिच्छ । कोही संघीयता चाहिँदैन भन्दैमा अबको नेपालमा संघीयता हरण हुन सक्दैन । सार्थक संघीयताका लागि के के गर्नु पर्ने हो, कहाँ कति सच्याइनुपर्ने हो त्यसबारे विमर्श चाल्न ढिलो हुँदैन । ०६३ पछिको परिवर्तन नरूचाउनेहरूका तर्क हेर्ने हो भने उनीहरू यसले देश टुक्रिने, खर्चिलो, सामुदायीक ध्रुवीकरण थप्ने, आयातित सोच जस्ता भय त्रास देखाउँछन् । यी तर्क हिजो पनि थियो, आज पनि छ भोलि पनि देखिएला । पात्रहरू फेरिँदै जालान् ।

प्रदेशमा मन्त्रीहरूको छनौट, त्यसको समावेशी बनोट, काम कारबाहीको निगरानी, मितव्ययी तर असरकारी सरकार, योग्य प्रदेश प्रमुखहरूको व्यवस्था, कानुनी, प्रशासनिक तथा आर्थिक जटिलताहरूको छिनोफानो, अन्तर प्रदेश सम्वाद, सङ्घ र प्रदेश सरकारबिच खुला एवम् पारदर्शी सम्पर्क जस्ता प्रयासले यो प्रादेशिक अभ्यास झन् बढी जनप्रिय हुन सक्छ । कतिपयले धर्म त कोही राष्ट्रियताको हौवा पिटेर संघीयतामाथि आक्रमण गर्न खोजे पनि यिनीहरू गणतान्त्रिक लोकतन्त्र विरोधी जमात हुन् । उपलब्ध पद्धतिलाई जनताप्रति उत्तरदायी बनाउने भन्दा प्रायोजित तवरमा असङ्गत पार्ने प्रयास हुँदैछ, यसले लामो समयसम्म मुलुकलाई अन्योलमा राख्ने छ । जे होस् आज नेपाली जनता अत्यन्त सचेत भइसकेका छन्, जुझारू छन् र समयसापेक्ष परिवर्तनका लागि जस्तो सुकै कठिन मार्गमा निर्वाध आवागमन गर्न सक्छन् ।

**चले थे हरि भजन को**

मधेश तिर आहान छ "चले थे हरि भजन को, ओटन लागे कपास" । त्यसको आशय हो कुनै उच्चतम् लक्ष्य बनाएर पनि निम्न तहको काममा संलग्न रहिरहनु । संविधान निर्माणको क्रममा नवजागृत चेतना र अधिकारको खोजीसँगै जाति, भाषा, धर्म, संस्कृति, क्षेत्रका प्राथमिकताहरू बाँझिन थालेका थिए । तर संविधान कार्यान्वयनको यात्रामा धेरै कुराहरू साम्य पार्ने तत्परता चाहिएको थियो त्यसमध्ये मुख्य हो समावेशीकरण ।

हामीले देश जोड्ने संघीय अभ्यासमा छौं । यो केवल संविधानमा भएर हुँदैन । अभ्यासका क्रममा नेपाली समाजको विविधता सम्बोधन हुनु पर्दछ । जनताले देख्ने, सुन्ने र छाम्न मिल्ने प्रादेशिक अभ्यास खोजेको छ । दोस्रो कार्यकालमा सातवटै प्रदेशका मुख्यमन्त्री छानिए तर महिला खै ? भुइँ तहमा व्याप्त चिन्ता छ । बर्चश्वशालीहरू त जसरी पनि केन्द्रमा पहुँच बनाई हाल्छन् । जो बञ्चित थिए तिनलाई प्रदेश चाहिएको छ ।

दोस्रो गठबन्धनको भागबण्डाले गर्दा प्रदेशको मन्त्रिमण्डलमा सङ्ख्या थप घट गरिने खेल फेरी दोहोरिँदैछ । सुशासन भएन भने नयाँ आशा र दृष्टिकोणका ढोका उघार्न सकिँदैन । भुइँ मान्छेको जीवनस्तरमा परिवर्तन ल्याउन सकिँदैन । संघीयता अब केवल मधेशलाई मात्र चाहिएको छैन । नजिकको सरकार हुँदा अरूहरूले पनि पहुँच र प्रतिनिधित्वको अवसर पाउने भए । राजनीति दलसँग आवद्ध कार्यकर्ताहरूको समेत व्यवस्थापन हुने मौका जुऱ्यो । तर मूल पक्ष हो प्रदेशको प्रभावकारिता, विकासको रैथाने मोडेलहरूको खोजीको यत्न ।

आज संघीयताको अस्तित्व मात्र चुनौती व्यहोरिरहेको छैन । यो पनि बुझ्नु त्यतिकै आवश्यक छ कि लोकतान्त्रिक मूल्यहरूको के अवस्था छ ? वस्तुतः लोकतन्त्र एउटा शासन प्रणाली मात्र होइन, यो एउटा सामाजिक दर्शन र वैयक्तिक जीवनदृष्टि पनि हो । संविधानले लोकतान्त्रिक अभ्यासको एउटा लीक कोर्न खोजेको छ तर सत्ता राजनीतिले त्यसलाई फरक धार दिन खोजेको देखिन्छ । नेपाल यस्तो परिस्थितिमा आइपुगेको छ कि अहिले यसले पछाडि होईन अगाडि हेर्नु राम्रो हुन्छ । हिजो आज प्रदेश सरकार र प्रदेश सभा कसरी प्रभावकारी हुनुपर्छ भन्ने बारे संघीयता पक्षधर शक्तिहरू माझ छलफल हुनुपर्छ । समावेशीकरण र सुशासन सङ्कटबाट मुक्त हुनका लागि पूर्व सर्त हुन् ।



# संविधानमा विचार तथा अभिव्यक्ति र प्रेस स्वतन्त्रता

## सीमाहरू तथा अन्तर्राष्ट्रिय कानुनसँग तुलना र कार्यान्वयन अवस्था



✍ **तारानाथ दाहाल***

नेपालको संविधानको प्रस्तावनामा नै पूर्ण प्रेस स्वतन्त्रता हुने भन्ने शब्दावली उल्लेख छ । यो आफैंमा एक विशिष्ट प्रयोग हो । संविधानमा नागरिकका आधारभूत स्वतन्त्रता खण्डअन्तर्गत धारा १७ ले विचार तथा अभिव्यक्ति स्वतन्त्रताको अधिकारलाई मौलिक हकका रूपमा सुनिश्चित गरेको छ ।

धारा १७ (२) (क) मा प्रत्येक नागरिकलाई 'विचार र अभिव्यक्तिको स्वतन्त्रता हुने' उल्लेख गर्दै प्रतिबन्धात्मक वाक्यांशमा त्यस्तो अधिकार भएता पनि त्यस व्यवस्थाले "नेपालको सार्वभौमसत्ता, भौगोलिक अखण्डता, राष्ट्रियता र स्वाधीनतामा वा संघीय एकाइ वा विभिन्न जात, जाति, धर्म, सम्प्रदायबिचको सु-सम्बन्धमा खलल पर्ने, जातीय भेदभाव वा छुवाछुतलाई दुरुत्साहन गर्ने, श्रमप्रति अवहेलना गर्ने, गाली बेइज्जती, अदालतको अवहेलना हुने, अपराध गर्न दुरुत्साहन गर्ने वा सार्वजनिक शिष्टाचार वा नैतिकताको प्रतिकूल हुने कार्यमा मनासिव प्रतिबन्ध लगाउने गरी ऐन बनाउन रोक लगाएको मानिने छैन" भनी सीमाहरू पनि उल्लेख गरिएको छ ।

संविधानमा मौलिम हकमा आमसञ्चार सम्बन्धी छुटै हक राखिएको छ । धारा १९ मा आमसञ्चार सम्बन्धी देहायबमोजिमको हकको हुने व्यवस्था गरिएको छ ः

(१) विद्युतीय प्रकाशन, प्रसारण तथा छापालगायतका जुनसुकै माध्यमबाट कुनै समाचार, सम्पादकीय, लेख, रचना वा अन्य कुनै पाठ्य, श्रव्य, श्रव्यदृश्य सामग्रीको प्रकाशन तथा प्रसारण गर्न वा सूचना प्रवाह गर्न वा छाप्न पूर्व प्रतिबन्ध लगाइने छैन ।

---

* पूर्वसभापति, नेपाल पत्रकार महासंघ

तर, नेपालको सार्वभौमसत्ता, भौगोलिक अखण्डता, राष्ट्रियता वा संघीय इकाइबीचको सु-सम्बन्ध वा विभिन्न जात, जाति, धर्म वा सम्प्रदायबिचको सु-सम्बन्धमा खलल पर्ने, राज्यद्रोह, गाली बेइज्जती वा अदालतको अवहेलना हुने वा अपराध गर्न दुरुत्साहन गर्ने वा सार्वजनिक शिष्टाचार, नैतिकताको प्रतिकूल कार्य गर्ने, श्रमप्रति अवहेलना गर्ने र जातीय छुवाछुत एवम् लैंगिक भेदभावलाई दुरुत्साहन गर्ने कार्यमा मनासिव प्रतिबन्ध लगाउने गरी ऐन बनाउन रोक लगाएको मानिने छैन ।

(२) कुनै श्रव्य, श्रव्यदृश्य वा विद्युतीय उपकरणको माध्यम वा छापाखानाबाट कुनै समाचार, लेख, सम्पादकीय, रचना, सूचना वा अन्य कुनै सामग्री मुद्रण वा प्रकाशन, प्रसारण गरे वा छापेबापत त्यस्तो सामग्री प्रकाशन, प्रसारण गर्ने वा छाप्ने रेडियो, टेलिभिजन, अनलाइन वा अन्य कुनै किसिमको डिजिटल वा विद्युतीय उपकरण, छापा वा अन्य सञ्चार माध्यमलाई बन्द, जफत वा दर्ता खारेज वा त्यस्तो सामग्री जफत गरिने छैन ।

तर, यस उपधारामा लेखिएको कुनै कुराले रेडियो, टेलिभिजन, अनलाइन वा अन्य कुनै किसिमको डिजिटल वा विद्युतीय उपकरण, छापाखाना वा अन्य सञ्चार माध्यमको नियमन गर्न ऐन बनाउन बन्देज लगाएको मानिने छैन ।

(३) कानुनबमोजिम बाहेक कुनै छापा, विद्युतीय प्रसारण तथा टेलिफोनलगायतका सञ्चार साधनलाई अवरुद्ध गरिने छैन ।

यसैगरी संविधानमा सूचनाको हकलाई पनि विशेष रुपमा मौलिक हकमा उल्लेख छ। "संविधानको धारा २७ मा सूचनाको हक प्रत्याभूत गरिएको हो। उक्त धाराअनुसार "प्रत्येक नागरिकलाई आफ्नो वा सार्वजनिक सरोकारको कुनै पनि विषयको सूचना माग्ने र पाउने हक हुने छ। तर, कानुनबमोजिम गोप्य राख्नुपर्ने सूचनाको जानकारी दिन कसैलाई बाध्य पारिने छैन ।"

**संविधानमा व्यवस्था गरिएका सीमाहरू**

| विचार तथा अभिव्यक्ति स्वतन्त्रता अधिकारका सीमाहरू | सञ्चारसम्बन्धी हकका सीमाहरू | सूचनाको हकका सीमाहरू |
|---|---|---|
| ● कानुनबमोजिम गोप्य राख्नु पर्ने सूचनाको जानकारी दिन कसैलाई बाध्य नपारिने | ● सार्वभौमसत्ता<br>● भौगोलिक अखण्डता,<br>● राष्ट्रियता<br>● संघीय एकाइबिचको सुसम्बन्ध खलल पार्ने<br>● विभिन्न जात, जाति, धर्म वा सम्प्रदायबिचको सुसम्बन्धमा खलल पर्ने | ● कानुनबमोजिम गोप्य राख्नु पर्ने सूचनाको जानकारी दिन कसैलाई बाध्य नपारिने |

| | | |
|---|---|---|
| | ● राज्यद्रोह,<br>● गाली बेइज्जती<br>● अदालतको अवहेलना<br>● अपराध गर्न दुरुत्साहन<br>● सार्वजनिक शिष्टाचार, नैतिकताको प्रतिकूल कार्य<br>● श्रमप्रति अवहेलना<br>● जातीय छुवाछुत एवम् लैंगिक भेदभावलाई दुरुत्साहन गर्ने कार्य | |

माथि उल्लिखित संविधानले व्यवस्था गरेको विचार तथा अभिव्यक्ति स्वतन्त्रता उपरको सीमा वा बन्देज लगाइन सक्ने आधारहरू अभिव्यक्ति स्वतन्त्रताको अन्तर्राष्ट्रिय मापदण्डमा व्यवस्था गरिएका आधारहरूभन्दा ज्यादै व्यापक, अस्पष्ट र कम गम्भीर प्रकृतिका देखिन्छन् ।

अन्तर्राष्ट्रिय मापदण्डहरूमा व्यवस्था गरिएको विचार तथा अभिव्यक्ति उपरका सीमाहरू र त्यस्ता सीमाहरूको वैधताको परीक्षण सम्बन्धमा तल चर्चा गरिएको छ ः

**अभिव्यक्ति स्वतन्त्रता सम्बन्धी अन्तर्राष्ट्रिय मापदण्ड**

अभिव्यक्ति स्वतन्त्रताको अधिकारले मानव अधिकारका अन्तर्राष्ट्रिय संयन्त्रहरूको सुरुवाति विकासक्रमदेखिनै सबै अन्तर्राष्ट्रिय तथा क्षेत्रीय संयन्त्रहरूमा महत्वपूर्ण स्थान ओगट्दै आएको छ । त्यसमा पनि विशेषगरी मानव अधिकार सम्बन्धी विश्वव्यापी घोषणा पत्र, १९४८, नागरिक तथा राजनैतिक अधिकार सम्बन्धी अन्तर्राष्ट्रिय घोषणा पत्र, १९६६, मानव अधिकार तथा मौलिक स्वतन्त्रताहरूको संरक्षण सम्बन्धी युरोपेली अभिसन्धि, १९५०, मानव अधिकार सम्बन्धी अन्तर-अमेरिकी अभिसन्धि, १९६९, मानव अधिकार तथा मानिसहरूको अधिकार सम्बन्धी अफ्रिकी बडापत्र, १९८१ आदिले यस अधिकारलाई महत्वपूर्ण स्थान प्रदान गरेका छन् ।

**मानव अधिकारको विश्वव्यापी घोषणा पत्र**, १९४८

संयुक्त राष्ट्रसंघको साधारण सभाद्वारा १० डिसेम्बर १९४८ मा पारित यो घोषणा पत्र अभिव्यक्ति स्वतन्त्रताकाका सम्बन्धमा अवलम्बन गरिएको पहिलो औपचारिक अन्तर्राष्ट्रिय दस्तावेज हो । मानव अधिकारको विश्वव्यापी घोषणा पत्रलाई मानव अधिकारको अन्तर्राष्ट्रिय आलेख (International Bill of Human Rights) पनि भन्ने गरिन्छ । संयुक्त राष्ट्रसंघको साधारण सभाद्वारा पारित यो घोषणा पत्र मानव अधिकारको संरक्षण तथा सम्बर्द्धनका लागि संयुक्त राष्ट्रसंघको एक महत्वपूर्ण उपलब्धिका रूपमा रहेको छ ।

घोषणा पत्रले मानव अधिकारका आधारभूत मापदण्डका रूपमा अभिव्यक्ति स्वतन्त्रतालाई समेटेको छ । जसअन्तर्गत प्रत्येक व्यक्तिलाई बिनाकुनै हस्तक्षेप आफ्नो विचार प्रकट गर्ने, आफूले चाहेको सूचना माग्ने, प्राप्त गर्ने तथा त्यस्तो सूचना कुनै माध्यमद्वारा बिनाबन्देज प्रसार गर्ने स्वतन्त्रता हुन्छ ।

घोषणा पत्रको धारा १९ को व्यवस्थाअनुसार,

'प्रत्येक व्यक्तिलाई विचार तथा अभिव्यक्ति स्वतन्त्रताको अधिकार छ, यस अधिकारमा बिना कुनै हस्तक्षेप आफ्ना मत राख्ने र बिना रोकटोक, कुनै भौगोलिक सीमानाको अधीनमा नरही जुनसुकै सञ्चार माध्यमद्वारा सूचना तथा विचार प्राप्त गर्ने, खोजी गर्ने र प्रसार गर्ने अधिकारसमेत समावेश छ ।'

यसरी धारा १९ मा गरिएको यस व्यवस्थाले विचारको स्वतन्त्रता, सूचनाको हकको स्वतन्त्रता र प्रसारणको स्वतन्त्रतालाई समेट्छ ।

**नागरिक तथा राजनीतिक अधिकार सम्बन्धी अन्तर्राष्ट्रिय अनुबन्ध, १९६६**

अभिव्यक्ति स्वतन्त्रताका सम्बन्धमा नागरिक तथा राजनीतिक अधिकारसम्बन्धी अन्तर्राष्ट्रिय अनुबन्ध, १९६६ मा गरिएको व्यवस्था पनि मानव अधिकारको विश्वव्यापी घोषणा पत्रमा रहेको व्यवस्था सरह नै रहेको छ । विचार, अभिव्यक्ति तथा प्रेस स्वतन्त्रता प्रत्याभूति गर्ने सम्बन्धमा यस दस्तावेजको निकै ठुलो महत्व राख्छ । यस अनुबन्धको धारा १९ ले गरेको व्यवस्थाअनुसार,

- प्रत्येक व्यक्तिलाई बिना कुनै हस्तक्षेप आफ्नो विचार राख्न पाउने अधिकार हुनेछ ।
- प्रत्येक व्यक्तिलाई अभिव्यक्ति स्वतन्त्रताको अधिकार हुने छ, जसअन्तर्गत बिना कुनै बन्देज वा सीमा आफूले चाहेको सूचना तथा विचार खोज्ने, प्राप्त गर्ने तथा त्यस्तो सूचना वा विचार मौखिक, लिखित वा मुद्रित रूपमा वा कलात्मक रूपमा वा आफ्नो छनौटको अन्य कुनै माध्यमद्वारा प्रसारण गर्न पाउने स्वतन्त्रता हुने छ ।

अनुबन्धले अभिव्यक्ति स्वतन्त्रताको अधिकारहरूको प्रयोगमा विशेष कर्तव्य तथा उत्तरदायित्वहरू समावेश हुने व्यवस्थासमेत गरेको छ । त्यस्तो कर्तव्य तथा उत्तरदायित्वअर्न्तगत उल्लेखित अधिकारमा नियन्त्रण गर्न सकिने व्यवस्था पनि अनुबन्धले गरेको छ । अनुबन्धको धारा १९(३) मा त्यस्ता नियन्त्रणहरू कानुनद्वारा स्पष्ट रूपमा व्यवस्था गरिएको र अरूको अधिकार वा प्रतिष्ठाको सम्मानका लागि वा राष्ट्रिय सुरक्षा, सार्वजनिक व्यवस्था, सार्वजनिक स्वास्थ्य वा नैतिकताको संरक्षणका लागि आवश्यक ठानिएको समयमा मात्र लागू हुनसक्छ भन्ने व्यवस्था गरिएको छ ।

२०११ को संयुक्त राष्ट्रसंघ मानव अधिकार समितिले उपरोक्त अनुबन्ध उपरको सामान्य टिप्पणी सङ्ख्या ३४ मा विचार र अभिव्यक्ति स्वतन्त्रता, सूचनाको अधिकारलगायतका अधिकारहरूको व्याख्या गरी यसलाई थप सुदृढ बनाएको छ । यसमा नियन्त्रणको व्यवस्था भएता पनि प्राप्त अधिकारलाई नै धरापमा पार्ने गरी नियन्त्रण हुनु हुँदैन भनी जोड दिइएको छ । अधिकार र सो उपरको नियन्त्रणको सम्बन्ध प्रष्ट हुनुपर्छ र मापदण्ड र अपवाद पनि सोही किसिमको हुनुपर्छ भनी निर्देशनसमेत दिएको छ ।

**अभिव्यक्ति स्वतन्त्रताविरुद्ध लगाइन सकिने बन्देज सम्बन्धी अन्तर्राष्ट्रिय मापदण्ड**

अभिव्यक्ति स्वतन्त्रता अधिकारको अन्तर्राष्ट्रिय मापदण्डहरूको अध्ययनले सिद्धान्ततः अभिव्यक्ति स्वतन्त्रताको अधिकारले व्यक्तिहरूका बिच सूचना तथा विचार आदान-प्रदानसँग सम्बन्धित कुनै पनि कार्यमा राज्यको हस्तक्षेपविरुद्ध सुरक्षा प्रदान गर्ने कुरा स्पष्ट भइसकेको छ । तथापि, अन्तर्राष्ट्रिय कानुनले अभिव्यक्ति स्वतन्त्रताको अधिकार निरपेक्ष वा पूर्ण अधिकार भने होइन भन्ने कुरा स्वीकार गर्छ ।

सामान्यतया अभिव्यक्ति स्वतन्त्रताको उपयोगसँग सम्बन्धित अधिकांश क्रियाकलापहरू हानिरहित नै

हुन्छन् तर सूचना तथा विचारको खोजी, प्राप्ति, र प्रवाहअन्तर्गत समाजलाई हानि गर्न सक्ने किसिमका क्रियाकलापहरू पनि पर्न सक्छन् । यस्ता कार्यको उदाहरणमा कसैको हत्याका लागि गरिएको दुरुत्साहन वा बालबालिकाहरूलाई अश्लील सामग्रीको बिक्री आदि पर्न सक्छ । अन्य व्यक्ति तथा सामाजिक हितमा असर पार्ने त्यस्ता किसिमका अभिव्यक्तिहरूमा आवश्यकताको हदअनुसार बन्देज लगाउन सकिने कुरा अन्तर्राष्ट्रिय कानुनले स्वीकार गरेको छ । अन्तर्राष्ट्रिय संयन्त्रहरूमा त्यस प्रकारको बन्देज लगाउन सकिने आधार र अवस्थाका बारेमा स्पष्ट रूपमा उल्लेख गरिएको छ । त्यस प्रकारको आधार वा अवस्था भए नभएको बारेमा परीक्षण गरिनुपर्ने पनि उल्लेख गरिएको छ ।

**अभिव्यक्ति स्वतन्त्रता विरुद्धको बन्देजको वैधता जाँचका लागि तीनखण्डे परीक्षण**

अभिव्यक्ति स्वतन्त्रतासम्बन्धी अन्तर्राष्ट्रिय मापदण्डहरूले यस अधिकार विरुद्धको हस्तक्षेपलाई निकै गम्भीर रूपमा लिँदै त्यस्तो कुनै हस्तक्षेपलाई निश्चित कठोर सर्तहरू पूरा गरिएका अवस्थामा मात्र अनुमति प्रदान गरेका छन् । अन्तर्राष्ट्रिय मापदण्डअनुसार अभिव्यक्ति स्वतन्त्रताको अधिकार नियम हो भने त्यसविरुद्धका सीमाहरू अपवाद हुन् । नागरिक तथा राजनीतिक अधिकारसम्बन्धी अन्तर्राष्ट्रिय अनुबन्ध १९६६ को धारा १९(३) ले अभिव्यक्ति स्वतन्त्रता विरुद्धको बन्देजको वैधानिकता जाँच्नका लागि परीक्षणको व्यवस्था गरेको छ । धारा १९(३) को व्यवस्थाअनुसार,

> यस धाराको परिच्छेद दुईमा व्यवस्था गरिएको अधिकारहरूको उपयोग सँगसँगै विशेष कर्तव्य र दायित्व पर्छन् । तसर्थ यस अधिकारमा केही नियन्त्रण हुन सक्ने छ, तर त्यस्तो नियन्त्रण कानुनले व्यवस्था गरेका तथा निम्नलिखित हितको संरक्षणका लागि आवश्यक परेको अवस्थामा मात्रै लागू हुने छ ः
>
> (क) अरूको अधिकार तथा प्रतिष्ठाको सम्मानका लागि ।
>
> (ख) राष्ट्रिय सुरक्षा, सार्वजनिक सुव्यवस्था वा सार्वजनिक स्वास्थ्य वा नैतिकताका लागि ।

अन्य प्रमुख मानव अधिकार संयन्त्रहरूमा पनि समान रूपमा व्यवस्था गरिएको यस परीक्षण विधिमा तीन वटा खण्ड रहेको हुनाले यसलाई तीनखण्डे परीक्षणका रूपमा लिइन्छ । तीनखण्डे परीक्षणको पहिलो खण्डअन्तर्गत अभिव्यक्ति स्वतन्त्रतामाथिको त्यस्तो कुनै हस्तक्षेप कानुनअनुकूल हुनुपर्छ । यहाँ 'कानुन अनुकूल हुनुपर्छ' भन्नुको अर्थ कानुनमा व्यवस्था भएअनुरूप हुनुपर्छ, र त्यस्तो कानुन आफैंमा पनि न्यायिक (Just Law) हुनुपर्छ भन्ने हो । त्यसैगरी, दोस्रो खण्डअनुसार त्यसरी कानुनी रूपमा लगाइएको प्रतिबन्धको उद्देश्य अन्तर्राष्ट्रिय कानुनअन्तर्गत वैध मानिएको कुनै निश्चित उद्देश्यको संरक्षण वा सम्वर्धन गर्ने हुनुपर्छ र अन्तिम शर्तअन्तर्गत लागु गरिएको त्यस्तो कुनै प्रतिबन्ध वैध उद्देश्यको संरक्षण र सम्वर्धनका लागि आवश्यक हुनुपर्छ । अभिव्यक्ति स्वतन्त्रतामा प्रत्यक्ष एवम् अप्रत्यक्ष रूपमा बन्देज लगाउने कुनै पनि कानुन वा कदमले उल्लिखित परीक्षणको कुनै एक खण्ड मात्र पनि पालन गर्न नसकेमा त्यस्तो कानुन वा कदम अवैधानिक हुन्छ ।

**परीक्षणको पहिलो खण्ड : त्यस्तो बन्देजको व्यवस्था कानुनमा नै गरिएको हुनुपर्ने**

अभिव्यक्ति स्वतन्त्रता विरुद्धको बन्देजको वैधानिकता सम्बन्धी पहिलो परीक्षण अथवा शर्त भनेको त्यस्तो कुनै हस्तक्षेपसम्बन्धी व्यवस्था कानुनमा स्पष्ट रूपमा उल्लेख भएको हुनुपर्छ भन्ने हो । कानुन लागु गर्ने

सरकारी अधिकारीको स्वेच्छामा त्यस्तो बन्देज लागु हुन सक्दैन, बन्देजका लागि सो समयमा लागु रहेको कुनै कानुन वा नियम हुनै पर्छ भन्ने यो प्रावधान निकै महत्वपूर्ण छ ।

'कानुनमा व्यवस्था गरिएको' भन्ने शर्तको अर्थ बन्देज सम्बन्धी नियम लिखित रूपमा हुनुपर्छ भन्न मात्र खोजिएको होइन । त्यस्तो कुनै कानुन स्पष्ट र निश्चित हुन आवश्यक हुनुका साथै कस्तो किसिमको व्यवहार/कसुरको परिणाम के हुन्छ भन्ने कुरा पनि नागरिकहरूलाई स्पष्ट रूपमा थाहा हुने किसिमको हुनुपर्छ । अस्पष्ट शब्दहरू प्रयोग गरिएका, सो कानुन लागु हुने क्षेत्र अस्पष्ट भएका कानुनले ती मापदण्ड पूरा गर्दैनन् र परिणामस्वरूप कुनै पनि त्यस्ता कानुनहरू अभिव्यक्ति स्वतन्त्रता विरुद्धका गैरकानुनी बन्देज हुन् । उदाहरणका लागि 'समाजमा झगडाको बीउ छर्न', 'राज्यको झुठो चित्रण गर्ने' कार्यमा लगाइएको बन्देजहरू अस्पष्टताका कारण पहिलो खण्डको परीक्षणमा असफल हुन्छन् ।

**परीक्षणको दोस्रो खण्ड : बन्देजको व्यवस्था वैध कानुनी उद्देश्यपूर्तिका लागि**

अभिव्यक्ति स्वतन्त्रतामाथिको बन्देजको दोस्रो आवश्यक तत्व भनेको त्यस्ता प्रतिबन्धले वैध कानुनी उद्देश्य पूरा गर्नुपर्छ भन्ने हो । त्यस्ता वैध कानुनी उद्देश्यहरू के-के हुन् भन्ने कुरा अभिव्यक्ति स्वतन्त्रताका अन्तर्राष्ट्रिय मापदण्डहरूमा स्पष्ट रूपमा उल्लेख भएका छन् । नागरिक तथा राजनीतिक अधिकारसम्बन्धी अन्तर्राष्ट्रिय अनुबन्धको धारा १९(३) को परिच्छेद (क) र (ख) मा त्यस्ता वैध उद्देश्यहरू उल्लेख गर्दै अभिव्यक्ति स्वतन्त्रतामाथिको बन्देजलाई सीमित पार्न खोजिएको छ। साथै महत्वपूर्ण कुरा के हो भने बन्देजका लागि आवश्यक त्यस्ता कानुनी उद्देश्यको सूचीमा सरकारले मनलागि परिवर्तन वा थपघट गर्न पाउँदैन् । सो अनुबन्धमा उल्लिखित वैध उद्देश्यअन्तर्गत अरूको अधिकार तथा प्रतिष्ठाको सम्मान, र राष्ट्रिय सुरक्षा, सार्वजनिक सुव्यवस्था वा सार्वजनिक स्वास्थ वा नैतिकताका लागि मात्र अभिव्यक्ति स्वतन्त्रतामा बन्देज लगाउन सकिन्छ ।

**परीक्षणको तेस्रो खण्ड : त्यस्तो बन्देज लगाउन आवश्यक नै हुनुपर्ने**

परीक्षणको तेस्रो खण्डलाई सामान्य रूपमा हेर्दा स्वयम्सिद्ध तथ्य जस्तो देखिन्छ । यस खण्डको परीक्षणअनुसार यदि त्यस्तो बन्देज साँच्चै आवश्यक छैन भने पहिलो र दोस्रो खण्डअनुरूप त्यस्तो बन्देज वैध उद्देश्य संरक्षणका लागि साँच्चै नै आवश्यक होइन भने कानुनअनुरूप र वैध उद्देश्य पूरा गर्ने किसिमको नै भए पनि परीक्षणको तेस्रो खण्डअनुरूप हुन सक्दैन र त्यसले अभिव्यक्ति स्वतन्त्रताका उल्लंघन गर्छ । अन्तर्राष्ट्रिय मानव अधिकार अदालतहरूले अभिव्यक्ति स्वतन्त्रतामा अनावश्यक बन्देज लगाइएको भनी निर्णय दिएका अधिकांश मुद्दाहरूमा निर्णयको आधार त्यो सम्बन्धित कानुन आवश्यक रहेको नदेखिनु थियो । यसो हुनुको एक महत्वपूर्ण कारण अन्तर्राष्ट्रिय अदालतहरूले अभिव्यक्ति स्वतन्त्रतालाई कुण्ठित गर्ने कुनै पनि कानुन वा व्यवहारका सन्दर्भमा 'आवश्यकता' भन्ने शब्दलाई ग्रहण गर्दा विभिन्न गुणहरूले सम्पन्न हुनुपर्ने मान्नु हो ।

कुनै बन्देज 'आवश्यक' हुनका लागि अभिव्यक्ति स्वतन्त्रतामाथिको त्यस्तो बन्देज सामाजिक आवश्यकता सम्बोधन गर्ने खालको, अभिव्यक्ति स्वतन्त्रतामाथिको उपलब्ध बन्देजहरूमध्ये थोरै हानी पुर्‍याउने खालको र अभिव्यक्ति स्वतन्त्रतामा कमसेकम हस्तक्षेप गर्ने खालको हुनुपर्छ ।

नेपालको संविधानका यस सम्बन्धी व्यवस्थाहरू अन्तर्राष्ट्रिय मापदण्ड र नेपालले गरेका तिनको अनुमोदनअनुसार

हुनुपर्ने एकातर्फ छ भने अर्कोतर्फ यस सम्बन्धी हक कार्यान्वयन गर्न तीनै तहमा बनाइने कानुनहरू पनि अन्तराष्ट्रिय मापदण्डसँग अनुकूल रहनुपर्दछ। साथै, सीमा बन्देजको वैधता सम्बन्धी तीनखण्डे परीक्षणको विधिलाई कानुन तर्जुमामा दिग्दर्शनका रुपमा अवलम्बन गरिनुपर्दछ। किनकी मानव अधिकार र मौलिक हकको परिपालना गर्नु नेपालका तीनै तहको सरकार र विधायिकी संरचनाहको पनि कर्तव्य हो।

**संविधानको अनुसूचीमा सञ्चार अधिकारको बाँडफाँड**

नेपालको संविधानअनुसार राज्यको कार्यकारी अधिकार तीन तहमा बाँडफाँड गरिएको छ। संविधानको अनुसूचीको ५ मा संघको अधिकारको सूची, अनुसूची ६ मा प्रदेशको अधिकारको सूची, अनुसूची ७ मा संघ र प्रदेशको साझा अधिकारको सूची, अनुसूची ८ मा स्थानीय तहको अधिकारको सूची र अनुसूची ९ मा संघ, प्रदेश र स्थानीय तहको अधिकारको सूचीको व्यवस्था गरिएको छ। ती पाँच वटै सूचीमा सूचना तथा सञ्चार र पत्रकारितासँग सम्बन्धित विषयको अधिकार पनि उल्लेख छ।

| अनुसूची ५ (संघीय सरकारको अधिकार) | अनुसूची ६ (प्रदेश सरकारको अधिकार) | अनुसूची ७ (संघ र प्रदेश सरकारको साझा अधिकार) | अनुसूची ८ (स्थानीय तहको अधिकार ) | अनुसूची ९ (तीन तहको साझा अधिकार) |
|---|---|---|---|---|
| रेडियो फ्रिक्वेन्सीको बाँडफाँड, रेडियो र टेलिभिजन | रेडियो, एफ.एम र टेलिभिजन सञ्चालन | सञ्चारमाध्यम सम्बन्धी | एफ.एम सञ्चालन | पत्रपत्रिका |

उपयुर्क्त अधिकार सूचीमा उल्लेख नभएका अन्य विषयहरू अनुसूची ५ मा नै पर्ने स्पष्ट पारिएको छ। यस सूचीलाई स्पष्ट र विस्तृत पार्ने कानुन हालसम्म बनेको छैन। तीनै तहको सरकारको अधिकार क्षेत्रमा परेका विषयमा पनि पहिला संघीय ऐन बन्नु आवश्यक छ। तर यसअनुसार हालसम्म माथि उल्लेख गरिएका अधिकार क्षेत्रसँग सम्बन्धित संघीय ऐन बनेको छैन। त्यसैले अधिकार प्रयोग र व्याख्यामा अन्योल छ। दोहोरो-तेहरो र फरक-फरक मापदण्डका नियमनकारी ऐन, नीति र संस्थाहरू खडा भैरहेका छन्।

**अधिकारको विस्तृतीकरण**

संविधानको यस अधिकार सूचीलाई कार्यान्वयन गर्न नेपाल सरकारले संघ, प्रदेश तथा स्थानीय तहको एकल तथा साझा अधिकार सूचीको बाँडफाँड र विस्तृतीकरण (https://www.opmcm.gov.np/federalism-admin नेपालको संविधानको अनुसूची ५,६,७,८ र ९ मा उल्लिखित संघ, प्रदेश र स्थानीय तहको अधिकारहरूको कार्य विस्तृतीकरण सम्बन्धी नेपाल सरकार मन्त्रिपरिषद्बाट स्वीकृत प्रतिवेदन) तयार गरेको छ। संघीयता कार्यान्वयनका लागि भनी बनाइएको सो सूची तीन तहको सरकारको अन्तरसम्बन्ध सहकारिता, सहअस्तित्व र समन्वयको सिद्धान्तमा आधारित भएकोले सोहीअनुसार तयार गरिएको भनिएको छ। अहिले प्रदेश र स्थानीय तहका सरकारका अधिकारीहरूले यही सूचीलाई आधार मानी आआफ्नो नीति र ऐनहरू बनाइरहेको बताउने गर्दछन्। तर यो विस्तृतीकरण सूचीको संवैधानिक वा

कानुनी हैसियत स्पष्टि छैन ।

अधिकार बाँडफाँड सूचीअनुसार उल्लिखित अधिकारका सूचीहरूलाई निम्न लिखितअनुसार विस्तृतीकरण गरिएको छ :

**सञ्चार/पत्रकारितासँग सम्बन्धित संघीय सरकारको अधिकार र कार्यहरू (अनुसूचीअनुसार)**

अनुसूची ५ को बुँदा नं. ८ को विस्तृतीकरण -

८.१- रेडियो फ्रिक्वेन्सीको बाँडफाँड

  ८.१.१३.- रेडियो यन्त्र प्रयोगको अनुमति र नवीकरण

८.२ - रेडियो, टेलिभिजन तथा अन्य सञ्चारमाध्यम सम्बन्धी

  ८.२.१ - रेडियो, टेलिभिजन, छापा सञ्चार संस्था सम्बन्धी राष्ट्रिय नीति, कानुन, मापदण्ड, योजना निमार्ण, कार्यान्वयन र नियमन

  ८.२.२ - राष्ट्रिय स्तरको टेलिभिजनको अनुमति, नवीकरण र नियमन

  ८.२.३ - राष्ट्रिय स्तरमा प्रसारण हुने वा १००० वाटभन्दा माथिका एफ.एम रेडियो र प्रसारण संस्थाको सञ्जालीकरण, अनुमति नवीकरण र नियमन

  ८.२.६- विदेशी टेलिभिजन च्यानलको डाउनलिङ्क, सिग्नल प्राप्ति र वितरणको अनुमति, नवीकरण र नियमन

  ८.२.७ - अनलाइन मिडियाको नीति, मापदण्ड र नियमन

  ८.२.८ - संघीय रेडियो, टेलिभिजन, छापा सञ्चार र समाचार संस्था सञ्चालन

  ८.२.९ - श्रमजीवी सञ्चारकर्मीको न्यूनतम पारिश्रमिक सम्बन्धी मापदण्ड निर्धारण

  ८.२.१० - सार्वजनिक प्रसारण संस्थाको सञ्चालन

  ८.२.११ - सबै प्रकारका बहुवितरण प्रसारण प्रणालीको अनुमति नवीकरण र नियमन

  ८.२.१२ - स्वदेशी तथा नेपालबाट गरिने विदेशी छापा प्रकाशनको नियमन

  ८.२.१३ - केन्द्रिय प्रेस रजिष्ट्रार सम्बन्धी कार्य

  ८.२.१४ - आमसञ्चार माध्यमहरूको अभिलेख, वर्गीकरण, सहजीकरण र नियमन

  ८.२.१५ -विज्ञापन नीति तर्जुमा, कार्यान्वयन, मापदण्ड निर्धारण र नियमन

  ८.२.१६ -सञ्चारको हकको संरक्षण र सम्वर्धन

८.४ - चलचित्र, सिनेमा हल

  ८.४.१ - चलचित्र र सिनेमा हल सम्बन्धी राष्ट्रिय नीति, कानुन, मापदण्ड तर्जुमा, कार्यान्वयन र नियमन

  ८.४.२ - चलचित्रको विकास र प्रवर्धन

८.५ - सूचनाको हक

  ८.५.१ - सूचनाको हक सम्बन्धी नीति, कानुन, मापदण्ड, कार्यान्वयन र नियमन

**अनुसूची ७ को संघ र प्रदेशको साझा अधिकारमा भएका विषयको विस्तृतीकरण**

१९.१ चलचित्र र सिनेमा हल

१९.१.१ - राष्ट्रिय नीति, कानुन, मापदण्ड र नियमन

१९.१.२ - राष्ट्रभाषा तथा राष्ट्रिय भाषामा चलचित्र निर्माण निर्माण/प्रोत्साहन

१९.१.३ - चलचित्र महोत्सव

१९.१.४ - निर्माण अनुमति प्रदान

१९.१.५ - प्रवर्धन र नियमन सम्बन्धी अन्य कार्य

**अनुसूची ९ मा संघ, प्रदेश र स्थानीय तहमा रहेको साझा अधिकारमा उल्लिखित अधिकारको विस्तृतीकरण**

२.१ - पत्रपत्रिका

२.१.१ - पत्रपत्रिका सम्बन्धी आचार संहिताको मापदण्ड

२.१.२ - सार्वजनिक छापा सञ्चार माध्यमको सञ्चालन र नियमन विस्तार

२.१.३ - संघ स्तरीय पत्रपत्रिकाको अनुगमन, अभिलेख र व्यवस्थापन

**प्रदेशको अधिकार र कार्य विस्तृतीकरण अनुसूची ६ को अनुसार :**

३.१ - रेडियो, एफ.एम, टेलिभिजन

३.१.१ - रेडियो, एफ.एम, टेलिभिजन सञ्चालन सम्बन्धी प्रादेशिक नीति, कानुन मापदण्ड, कार्यान्वयन र नियमन

३.१.२ - एक सय वाटभन्दा माथि एक हजार वाटसम्मको एफ.एम.रेडियो इजाजत र नवीकरण

३.१.३ - प्रदेश स्तरीय विद्युतीय सञ्चारमाध्यम सञ्चालन अनुमति, नवीकरण र नियमन

३.२ - सञ्चार तथा सूचना प्रविधि र आमसञ्चार

३.२.७ - पत्रकार आचार संहिता अनुगमन

३.२.८ - छापा माध्यमको दर्ता, अनुमति, आचार संहिता निर्धारण, अभिलेखाङ्कन, वर्गीकरण, सञ्चालन र नियमन

३.२.९ - अनलाइन मिडिया र प्रविधिमा आधारित सञ्चार माध्यमको दर्ता, नवीकरण, अभिलेख, अनुगमन र नियमन

३.२.१० - अनलाइन मिडिया र प्रविधिमा आधारित सञ्चार माध्यमको दर्ता, नवीकरण, अभिलेख, अनुगमन र नियमन

३.२.११ - प्रेस सूचना प्रवाह, सूचना सामाग्रीको उत्पादन, प्रकाशन र वितरण

३.२.१२ - श्रमजीवी सञ्चारकर्मीहरूको न्यूनतम अनुगमन पारिश्रमिक

३.२.१३ - प्रदेश स्तरीय प्रेस रजिष्ट्रार सम्बन्धी

३.२.१४ - केवुल वितरणको इजाजत नवीकरण र नियमन

३.२.१५ - सञ्चारको हकको प्रादेशिक संरक्षण र संवर्धन

**अनुसूची ७ संघ र प्रदेशको साझा अधिकार अनुसार प्रदेशको कार्य विस्तृतीकरण**

१४.१ - केवुल प्रसारण इजाजत, नवीकरण

१४.२ - पत्रकार आचार संहिता अनुगमन

१४.३ - प्रेस सूचना प्रवाह गर्ने, सूचना सामग्रीहरूको उत्पादन, प्रकाशन र वितरण गर्ने
१४.४ - श्रमजीवी सञ्चारकर्मीहरूको न्यूनतम पारिश्रमिक अनुगमन गर्ने
१९.१ - चलचित्र र सिनेमा हल
१९.१.१ - चलचित्र हल सञ्चालन अनुमति र नियमन
१९.१.२ - चलचित्र निर्माण एवम् प्रदर्शन अनुमति र नियमन

**अनुसूची ८ बमोजिम स्थानीय तहको अधिकार तथा कार्य विस्तृतीकरण**

३. एफ.एम सञ्चालन

३.१ एक सय वाटसम्मका एफएम रेडियो सञ्चालन अनुमति, नवीकरण र नियमन

३.२ स्थानीय केवुल तथा तारविहीन टिभी प्रसारणको अनुमति, नवीकरण र नियमन

**अनुसूची ९ मा उल्लिखित साझा अधिकारको विस्तृतीकरण**

२.७ स्थानीय तहका पत्रपत्रिकाको प्रकाशन अनुमति, अभिलेख र नियमन

प्रस्तुत अधिकारका विस्तृतीकरण सूचीमा सञ्चार र पत्रकारितासँग सम्बन्धित केही विषय अस्पष्ट छन् । जस्तैः संघ र प्रदेशको कार्यक्षेत्रमा उल्लिखित रेडियो र टेलिभिजन सम्बन्धित शब्दावली उस्तै उस्तै छन् । संघ र प्रदेश दुवैमा श्रमजीवी पत्रकारको हक हित र अनलाइन माध्यम सम्बन्धी विषय उल्लेख छ । सञ्चार माध्यमको दर्ता, इजाजत, नवीकरण र सञ्चालन जस्ता विषयमा पनि दोहोरोपन छ । पत्रकार आचार संहिताको विषय पनि दुवै तहमा उल्लेख छ । तीनै तहको कार्यक्षेत्रमा पत्रपत्रिका र एफ.एम उल्लेख छ । यसबाट अधिकारको बाँडफाँडमा अन्योल बढाएको छ । यसमध्ये तीनै तहले गर्ने काममा परेका कतिपय साझा कार्यहरू पनि छन् ।

यस्तो अस्पष्टताले गर्दा प्रदेश र स्थानीय तहले नीति र कानुन बनाउँदा तोकिएको क्षेत्र भन्दा थप अन्य क्षेत्रलाई पनि समेट्न खोजेको छन् । जस्तैः संघीय मामिला तथा सामान्य प्रशासन मन्त्रालयले बनाएको रेडियो तथा एफ.एम सञ्चालन सम्बन्धी नमुना कार्यविधिले पनि इजाजत, नवीकरण तथा विषयवस्तु र प्रसारण सामग्रीलगायतका विषयसमेत नियमन गर्ने पक्ष उल्लेख गरेको छ । यसले कुन विषय कुन तहले नियमन गर्ने भन्ने बारेमा थप अन्योल खडा गरेको छ । यसको निराकरणका लागि आमसञ्चार र पत्रकारिता क्षेत्रको समग्र नियमनका विषय स्पष्ट हुने गरी संघीय ऐन तर्जुमा गर्न आवश्यक छ ।



# महिला र राजनीति
# संविधानले महिलालाई के दियो ?



✍ **बबिता बस्नेत***

**पृष्ठभूमि**

**नालापानी युद्धमा महिलाको सहभागिता**

राष्ट्रका लागि महिलाको प्रत्यक्ष सहभागिताको कुरा गर्दा नालापानी युद्धमा महिलाको सहभागिता रहेको थियो भन्ने बिभिन्न दस्तावेजहरूमा उल्लेख छ । तर ती महिलाहरू को थिए भनेर नाम चाहिँ उल्लेख गरेको पाइएको छैन । सार्वभौमिकता, अखण्डता र मुलुकको राष्ट्रिय सुरक्षासँग जोडिएको नालापानी युद्ध नेपालले बृटिशसँग लडेको पहिलो ऐतिहासिक युद्ध थियो । अमरसिंह थापाको पालामा (सन १८१४, अक्टुबर २२) भएको यो युद्धमा बलभद्रसिंह कुँवर कमाण्डर थिए । अंग्रेजले त्यतिबेला सत्रुलाई पनि वीर भनेर सम्बोधन गरिएको युद्धका रुपमा पनि नालापानीलाई लिइन्छ । अंग्रेजले 'हाम्रा वीर शत्रु बलभद्र कुँवर' भनि लेखेको दस्तावेज अहिले पनि भारतीय लाइब्रेरीहरूमा भेटिएलान् । आफ्ना कमाण्डरलाई वीर बनाउन यो देशमा धेरै महिलाले युद्ध लडे । कहिले घर परिवारसँग, कहिले समाजसँग, कहिले राज्यसँग त कहिले आफैसँग । नालापानी देखि माओवादी सम्मको इतिहास हेर्दा यस्तै देखिन्छ । वीरहरूले महान बन्दै इतिहास रचे, रच्ने क्रममा छन । महिलाहरूको योगदानलाई छायाँमा पार्ने गरिएको छ। नेपालको राजनीतिक इतिहासमा महिलाको योगदान हिजोपनि छायाँमा थियो आज पनि छ ।

**नेपालको राजनीतिमा महिला सहभागिता**

सन १९४७ मा स्थापित नेपाली काँग्रेस र सन १९४९ सालमा स्थापना भएको नेपाल कम्युनिष्ट पार्टी नै नेपालको प्रजातान्त्रिक राजनीतिमा अहिले सम्म प्रभाव पारि रहने राजनीतिक दल हुन् । सन १९३७ मा स्थापना भएको प्रजा परिषद् प्रजातन्त्र प्रप्तिका लागि लड्न भनी गठन भएको पहिलो राजनीतिक दल हो ।

---

* वरिष्ठ पत्रकार

सन् १८४६ देखि १९५१ सम्म १ सय ४ वर्ष चलेको राणा शासनका विरुद्ध आवाज उठाइ मुलुकमा प्रजातन्त्र स्थापनाका लागि स्थापना भएका यी दलहरूमा सुरु देखिनै महिलाको सहभागिता थियो । सन १९४७ जनवरीमा कलकत्तामा सम्पन्न नेपाली काँग्रेसको भेलामा कुमारी लक्ष्मीको सहभागिता थियो भनी बिन्दा पाण्डेले आफ्नो पुस्तक 'वीमेन इन पोलिटिक्स' मा उल्लेख गर्नु भएको छ । सन १९५१ मा विराटनगरमा राणा शासन विरुद्ध प्रदर्शन गरे बापत दिव्या कोइराला, नलिनी उपाध्याय, नोना कोइराला र इन्दिरा आचार्य धनकुटाको जेलमा दुइ साता बसेको पनि पुस्तकमा उल्लेख छ । मोतीदेवी शर्मा पुष्पलालाको नेतृत्वमा गठन भएको नेकपाको संस्थापक सदस्य हुनुहुन्थ्यो । नेपाली काँग्रेस र नेकपा दुवै दलले आफ्नो विधानमा महिला सहभागिताको कुरा उल्लेख गरेका थिए ।

नेपाली काँग्रेसको स्थापनासँगै सोही वर्ष सन १९४७ (विस. २००४ साल) मा मंगलादेवी सिंहको नेतृत्वमा नेपाल महिला संघको स्थापना भएको हो । यसैगरी सन १९४९ (विसं २००६) मा अखिल नेपाल महिला संघको स्थापना भएको हो । यस अघि १९४६ ( विसं २००३) मा रेवन्त कुमारी आचार्यको नेतृत्वमा आदर्श महिला समाज गठन भएको थियो भनी विभिन्न दस्तावेजहरूमा उल्लेख छ । रेवन्त प्रजापरिषद अध्यक्ष टंक प्रसाद आचार्यकी श्रीमती हुनुहुन्थ्यो । सन १९५५ मा काठ्माण्डौ नगर प्रतिनिधिको रुपमा साधना प्रधानको नाम अंकित छ । यसैगरी सन १९५८ (वि.सं. २०१५) मा वीपी कोइरालाको मन्त्री मण्डलमा मन्त्री हुनु भएकी द्वारिकादेवी ठकुरानी नै नेपालको इतिहासमा पहिलो महिला मन्त्री हुन् ।

त्यसपछि पञ्चायतकालमा राजनीतिमा पनि महिलाको सक्रयता बढेको देखिन्छ । सुशिला थापा, शारदा मल्ल लगायतका महिलाहरू मन्त्री बनेका थिए । यता प्रजातन्त्रको माग गर्दै पञ्चायतको विरुद्धमा लडेर विद्रोही महिलाको रुपमा शैलजा आचार्य, मंगलादेवी सिंह, सहाना प्रधान, साधना प्रधान, लिला कोइराला, लक्ष्मी कार्की, सुशिला श्रेष्ठ, सिता खड्काहरू हरू आफ्नै नाम पहिचान बनाई रहेका थिए । यसैगरी २०४६ सालको प्रजातन्त्रे नेपाली महिलाहरूको आफ्नै हैसियत निर्माण गर्नका लागि महत्वपूर्ण मानिन्छ । राजनीतिक रुपमा शैलजा आचार्य, साहना प्रधान, लिला कोइराला लगायतका महिलाहरू पदीय दायित्वमा आए ।

### महिलाको अवधारणाबाट माओवादी आन्दोलन

सन् १९९६ देखि २००६ सम्म भएको दश वर्षे माओवादी आन्दोलन अवधिमो मुलुकको विकास बजेट सुरक्षामा खर्च भयो । लामो समय (२० वर्ष ) सम्म स्थानीय निर्वाचन हुन सकेन । नेतृत्वमा एउटा ठुलो खाडलको सिर्जना भयो । तर महिला सशक्तीकरणको दृष्टिकोणले यो कालखण्ड निकै महत्वपूर्ण रह्यो । माओवादी भित्र लडाकुको रुपमा महिलाको सहभागिताले महिलाले पनि हतियार बोक्न सक्छन भन्ने मान्यता स्थापित गरि दियो । जसका कारण नेपाली सेनाले आफ्नो नीतिमा परिवर्तन गरी महिलाहरू पनि प्रतिस्पर्धाबाट कुनै पनि तहमा जान सक्ने नीति बनायो । विसं २०६२ सालमा तात्कालिन शाही नेपाली सेनाले भर्ना नीतिमा परिवर्तन गरेको हो । त्यतिबेला युद्धरत माओवादीले आफुहरूसँग ४० प्रतिशत महिला लडाकु रहेको बताउने गरेको थियो । यद्यपि पछि सेना समायोजनका बेला ४० प्रतिशत महिला लडाकु थिएनन् । तापनि नेपालको इतिहासमा महिला लडाकु सहितको युद्ध थियो माओवादी युद्ध । सेना समायोजन गर्ने क्रममा माओवादी शिविरमा रहेका १९ हजार ६ सय २ लडाकु मध्ये ३ हजार ९ सय २०

जना महिला थिए । तीमध्ये १५ हजार ६ सय ३० जना केही रकम लिएर स्वेच्छिक रुपमा घर फर्किए भने १ हजार ४ सय २ जना नेपाली सेनामा समायोजनमा परे ।

माओवादी आन्दोलनले एकातिर महिलाले हतियार उठाउन सक्छन भन्ने कुरा स्थापित गऱ्यो भनें अर्कोतिर राजनीतिक रुपमा पनि महिलाको दर्बिलो उपस्थितिलाई प्रमाणित गऱ्यो । सामाजिक रुपमा पनि महिला सशक्तिकरणमा वृद्धि भयो । गाउँ गाउँबाट पुरुषहरू कि त यद्धमा लागे कि त युद्धबाट बच्नका लागि घर छोडेर हिडे । घर छाउँने देखि हलो जोत्ने हुँदै मानिसहरू मर्दा लाश बोक्ने सम्मका काम समेत महिलाले गर्नु पऱ्यो । बाध्यताले महिलाको लैंगिक भूमिकालाई परिवर्तन गरि दियो । घर छाउने, हलो जोत्ने, लाश बोक्ने कामहरू विगतमा पुरुषले मात्रै गर्दै आएका थिए । गाउँघरका ससाना बैठकदेखि, पुल पुलेसो, बाटोघाटो निर्माण लगायतका काममा महिलाहरूको सहभागिता रहन थाल्यो । महिलाहरू सामाजिक कामका साथै राजनीतिमा पनि सहभागी हुन थाले ।

माओवादी युद्धको पृष्ठभूमिबाट आउनु भएकी ओनसरी घर्तीले प्रतिनिधि सभाको सभामुख जस्तो महत्वपूर्ण पदमा आफ्नो कार्यकाल सफलतापूर्वक सम्पन्न गरिसक्नु भएको छ भने रेखा शर्मा अहिले सञ्चार, सूचना तथा प्रविधि मन्त्री हुनुहुन्छ । यसबीचमा धैरै महिलाहरूले संघ र विभिन्न प्रदेशमा महत्वपूर्ण पद सम्हाली सकेका छन् ।

**विसं २०७२ को संविधानले महिलालाई के दियो ?**

'नेपालको संविधान २०७२ ले नेपाली महिलाहरूलाई के दियो?' भनेर हेर्दा बिगतको व्यवस्था र अभ्यासलाई हेर्नुपर्ने हुन्छ । विसं २०४६ सालको प्रजातन्त्रपछि बनेको नेपाल अधिराज्यको संविधान २०४७ ले नेपालमा पहिलो पल्ट महिलाका लागि राजनीतिमा ५ प्रतिशत आरक्षणको व्यवस्था गरेको थियो । राजनीतिमा थोरै आरक्षणको व्यवस्था गरेपनि तात्कालिन शासकीय स्वरुपमा कुनै पनि प्रकारको परिवर्तन गर्ने हिम्मत त के कुरा गर्ने साहस सम्मपनि कसैले गर्न सकेको थिएन । राजाका छोरा राजा हुने तात्कालिन व्यवस्थालाई राजाका पहिलो छोरा वा छोरी भनी लेख्न सक्ने अवस्था प्रजातन्त्रले सिर्जना गर्न सकेन । विसं २०६२/६३ को आन्दोलनपछि बनेको अन्तरिम संविधान २०६३ ले राज्य संरचनामा महिलाको सहभागितालाई लिएर केही महत्वपूर्ण व्यवस्थाहरू गऱ्यो । अन्तरिम संविधान कार्यान्वयनमा आएर मुलुकमा गणतन्त्र घोषणा भएसँगै देशको राष्ट्र प्रमुख महिला पनि हुन सक्ने व्यवस्था स्वतः हुन पुग्यो । जुन व्यवस्थालाई नेपालको संविधान २०७२ ले निरन्तरता दियो । परिणामतः अन्तरिम संविधानले व्यवस्था गरे अनुरुप मुलुकको पहिलो राष्ट्रपति रामवरण बन्नु भयो भने २०७२ सालको संविधान लागु भएपछिको राष्ट्रपति विद्यादेवी भण्डारी बन्नु भयो । यसरी मुलुकको इतिहासमा वर्तमान संविधानकै कारण पहिलो पल्ट महिला राष्ट्राध्यक्ष हुने अवसर प्राप्त भयो । विगतमा यो देशको राष्ट्र प्रमुख हुने सपना पनि देख्न नपाउने महिलाहरूले संविधानकै कारण राष्ट्र प्रमुख हुने अवसर प्राप्त गरे र भविष्यमा पनि गर्नेछन । यद्यपि राष्ट्रपति र उपराष्ट्रपतिमा एक महिला हुनुपर्ने व्यवस्था गर्नबाट भनें यो संविधान चुकेको छ । आगामी दिनमा संविधान संशोधन गर्नु पर्ने अवस्था आएमा सबैभन्दा पहिला यो व्यवस्थाको संशोधन गर्नु पर्नेछ ।

नेपालको संविधानमा 'सबै नागरिक कानुनको दृष्टिमा समान हुनेछन् । कसैलाई पनि कानुनको समान

संरक्षणबाट वञ्चित गरिने छैन ।' भनिएको छ। समानताको हक अन्तर्गत 'सामान्य कानुनको प्रयोगमा उत्पत्ति, धर्म, वर्ण, जात, जाति, लिङ्ग, यौनिक अभिमुखीकरण, शारीरिक अवस्था, अपाङ्गता, स्वास्थ्य स्थिति, वैवाहिक स्थिति, गर्भावस्था, आर्थिक अवस्था, भाषा वा क्षेत्र, वैचारिक आस्था वा यस्तै अन्य कुनै आधारमा भेदभाव गरिने छैन' भनिएको छ। महिला र पुरुषबीचको समानताको हकसँगै यो संविधानको राम्रो व्यवस्था सामाजिक समावेशीकरण सम्बन्धी रहेको छ। जसमा 'सामाजिक रूपले पछाडि परेका महिला, दलित, आदिवासी, आदिवासी जनजाति, मधेशी, थारू, अल्पसङ्ख्यक, अपांगता भएका व्यक्ति, सीमान्तीकृत, मुस्लिम, पिछडा वर्ग, लैंगिक तथा यौनिक अल्पसङ्ख्यक, युवा, किसान, श्रमिक, उत्पीडित वा पिछडिएको क्षेत्रका नागरिक तथा आर्थिकरूपले विपन्न खस आर्यलाई समावेशी सिद्धान्तका आधारमा राज्यको निकायमा सहभागिताको हक हुनेछ' भनिएको छ। यसैगरी 'अपांगता भएका नागरिकलाई विविधताको पहिचान सहित मर्यादा र आत्मसम्मानपूर्वक जीवनयापन गर्न पाउने र सार्वजनिक सेवा तथा सुविधामा समान पहुँचको हक हुनेछ' भनिएको छ। सामाजिक समावेशीकरणका सबै क्लस्टरमा महिलाहरू पर्छन ।

### पुनस्थापित प्रतिनिधि सभाको घोषणा र संविधान

जन आन्दोलन २०६२/०६३ पछि पुनःस्थापित प्रतिनिधिसभाले राज्यका हरेक निकायमा महिलाको तेत्तिस प्रतिशतसहभागिता सुनिश्चित गरिने घोषणा गऱ्यो। विसं २०६३ साल जेठ १६ गते गरिएको महिला सम्बन्धी महत्वपूर्ण घोषणा तात्कालिन सांसद विद्यादेवी भण्डारी प्रस्तावक र सांसदहरू कमलादेवी पन्त तथा नारायणप्रकाश साउद (एनपी साउद) समर्थक रहेको जरुरी सार्वजनिक महत्वको प्रस्तावमा आधारित थियो । विद्या भण्डारी नेकपा एमालेकी सांसद हुनुहुन्थ्यो भने कमला पन्त र नारायणप्रकाश साउद नेपाली काँग्रेसका सांसद हुनुहुन्थ्यो । संसद सचिवालयमा दर्ता गरिएको उक्त जरुरी सार्वजनिक महत्वको प्रस्तावमा लेखिएको थियो "आमा वा बाबु मध्ये कसैको नामबाट पनि सन्तानले नागरिकता पाउन सक्ने कुराको ग्यारेन्टी गर्न, समानुपातिक सहभागिताको लक्ष्यमा पुग्ने कुरालाई ध्यानमा राखि हाललाई कम्तिमा एक तिहाइ महिलालाई राज्यका सबै संरचनामा सहभागिताको ग्यारेन्टी गर्ने, त्यस्तै विभेदकारी कानुनको खारेजी गर्न र महिला प्रति हुने गरेका हिंसाको अन्त्य गर्न जरुरी भएकाले यो जरुरी सार्वजनिक महत्वको प्रस्ताव पेश गरेको छु।" साथै छलफल गर्नु पर्नाको कारण भनी "समान नागरिकको हैसियतले महिलाको समान स्थान हासिल गर्न आवश्यक भएकोले" उल्लेख गरिएको थियो । संसदको उक्त घोषणाका आधारमा कतिपय कानुनहरू बनेर लागु भइ सकेको अवस्था छ भने उक्त घोषणाको भावना नेपालको संविधान २०७२ मा समेत प्रतिविम्ब भएकाले सम्बन्धित कानुनहरू बनेका या बन्ने क्रममा छन । त्यसैले विसं २०६३ साल जेठ १६ गते संसदको उक्त घोषणा नेपालको महिला आन्दोलनका निम्ति निकै महत्वपूर्ण रहेको छ।

### अन्तरिम संविधानले ल्याएको परिवर्तन

सन २००६ (वि.सं. २०६३) को राजनीतिक आन्दोलनपछि मुलुक अर्कै चरणमा प्रवेश गऱ्यो। भूमिगत युद्धमा रहेका माओवादीहरू मुलधारमा आए। वि.सं. २०६३ सालको अन्तरिम संविधानमा राज्य संरचनाका सबै तहमा महिला सहभागिताको कुरा उल्लेख गरियो। जस अन्तर्गत बनेको संविधान सभा निर्वाचन ऐन २०६३ ले संविधान सभामा महिलाको तेत्तिस प्रतिशत सुनिश्चित गऱ्यो। त्यसपछि विसं २०६४ सालमा

निजामती सेवा ऐन संसोधन भयो । यस ऐनमा निजामती सेवाका खुल्ला प्रतियोगिताबाट पदपूर्ति हुने पदहरू मध्ये पैंतालिसप्रतिशत पदमा विभिन्न समुदाय, वर्ग र क्षेत्रका व्यक्तिहरूका लागि आरक्षित गरिएको छ। त्यसरी आरक्षण गरिएको पैंतालिस प्रतिशत लाई शत् प्रतिशत मानेर त्यसमध्ये तेत्तिस प्रतिशत पद महिलाको लागि आरक्षित गरिएको छ। निजामति सेवा प्रवेशको लागि आवश्यक अधिकतम उमेर पैंतिस वर्ष भए पनि महिलाको लागि चालिस वर्ष कायम गरी विशेष व्यवस्था गरिएको छ। महिला कर्मचारी बढुवाका लागि पुरुषको तुलनामा एकवर्ष कम सेवा अवधि भए पनि सम्भाव्य उम्मेदवार हुने व्यवस्था छ। सेवा प्रवेश गरेका नयाँ कर्मचारीहरूको परिक्षण काल एक वर्ष रहेकोमा महिलाहरूको लागि छ महिनामात्र हुने गरी छुट हुने व्यवस्था गरिएको छ।

अन्तरिम संविधानको मूल्य मान्यता अनुरुप प्रहरी ऐन, सशस्त्र प्रहरी ऐन तथा सरकारी निकायका सम्पूर्ण ऐनहरूको संशोधन गरी महिलाको सहभागिता वृद्धि गरियो ।

**संविधानका कारण महिलाको पक्षमा बनेका नीति तथा कानुनहरू**

अन्तरिम संविधान २०६३ र नेपालको संविधान २०७२ को कार्यान्वयनका क्रममा केही लैंगिक उत्तरदायी नीति तथा कानुनहरू बनेका छन । लैंगिक राष्ट्रिय नीतिहरूमा युवा, सहकारी, अनौपचारिक शिक्षा, स्वास्थ्य, लागु औषध, सूचना प्रविधि, निर्वाचन, निजामति सेवा, सूचनाको हक, नेपाली सेना, भूमि, स्थानीय सरकार सञ्चालन, वैदेशिक रोजगार लगायत रहेका छन् । यसैगरी मानव बेचविखन तथा ओसार पसार ऐन, घरेलु हिंसा सम्बन्धी ऐन तथा मुलुकी देवानी संहिता र मुलुकी अपराध संहिता रहेका छन । देवानी र अपराध संहितामा बलात्कार, वैवाहिक बलात्कार, छाउपडी, एसिड, भेदभाव, बाल विवाह, अपमानजन्य व्यवहार लगायतका कुराहरूमा सजायको व्यवस्था गरिएको छ। यसरी हेर्दा हामीलाई कानुनको अब खासै आवश्यक्ता छैन । भइ रहेका कानुनको कार्यान्वयन अहिलेको आवश्यक्ता हो ।

**संविधान सभादेखि प्रदेश सभासम्म**

संविधान सभा निर्वाचन ऐनमै व्यवस्था गरेका कारण दुइ वटै संविधान सभामा महिलाको तेत्तिस प्रतिशत सहभागिता रहेको थियो। त्यसपछि मुलुक संघीय गणतन्त्रात्मक प्रणालीमा गइ सकेपछि सात वटै प्रदेशमा महिलाको तेत्तिस प्रतिशत सहभागिता रहने गरी निर्वाचन ऐनले नै व्यवस्था गरे अनुरुप अहिले संघीय संसद लगायत मुलुकका सात वटा प्रदेशमा महिलाको तेत्तिस प्रतिशत सहभागिता रहेको छ। संवैधानिक व्यवस्था अनुरुप संघीय संसद र सात वटै प्रदेश सभाका उपसभामुखमा महिला रहेका छन । सभामुख या उपसभामुख मध्ये एक जना महिला हुनु पर्ने संबैधानिक व्यवस्था रहेको छ। सात वटा प्रदेश सभा मध्ये एक कर्णालीमा सभामुख र उपसभामुख दुवै महिला रहेको अवस्था छ।

विसं २०७९ को निर्वाचनपछि अहिले स्थानीय तहमा एकचालिस प्रतिशत महिला सहभागिता रहेको छ। जसमा ७९ प्रतिशत महिला उपमेयर र उपाध्यक्षहरू रहेका छन । ४ प्रतिशत महिला नगर प्रमुख छन् भने महिला गाउँपालिका अध्यक्षहरूको सङ्ख्या ३ प्रतिशत रहेको छ। यसैगरी १ प्रतिशत महिला वडाध्यक्षहरू रहेका छन । स्थानीय निर्वाचन ऐनले प्रमुख या उप प्रमुख मध्ये एक महिला हुनु पर्ने व्यवस्था गरेको छ। साथै मिडिया, कानुन लगायतका विभिन्न क्षेत्रमा महिलाको सहभागिता बढ्दो छ। निजामति र सुरक्षा

क्षेत्रमा नीतिनै परिवर्तन गरेर महिलाको सङ्ख्या बढाइँदै लगिएको छ।

प्रायः पतिको नाम, पद र गुणअनुसार महिलाको मान मर्यादा भर पर्ने पृष्ठभूमिबाट मुलुकको सर्वोच्च पद राष्ट्रपति सम्म हुँदा महिलाको हैसियतमा निश्चयनै परिवर्तन आएको छ। महिलाको आफ्नै नाम, पहिचान, पद, प्रतिष्ठा र आत्मसम्मानमा वृद्धि भएको छ। तथापी समान हैसियत कायम गर्नका लागि भने अझै पनि गर्नु पर्ने धेरै छ। मुलतः दोश्रो दर्जाका नागरिकबाट समान हैसियतका नागरिक बनाउनका लागि महिलालाई हेर्ने दृष्टिकोण र गर्ने वयवहारमा परिवर्तनको आवश्यकता छ। संविधानमै या नीति, कानुनमै लिपिबद्ध नभएसम्म कार्यान्वयन नगर्ने प्रवृत्ति रहेकाले संविधानको कार्यान्वयनका क्रममा बन्ने नीति र कानुनहरूमै महिलाको सहभागिता र भूमिकालाई उल्लेख गर्नुपर्ने देखिन्छ।



# नेपालको संविधान र कर्णाली प्रदेश



✍ डा. दीपेन्द्र रोकाया*

**१. विषय प्रवेश**

संघीय लोकतान्त्रिक गणतन्त्र नेपालको संविधान, नेपाली इतिहासमा प्रगतिशील संविधानको मूल दस्तावेज हो । यसमा हामीले चाहेको केही मूल कुरा छुटेका पनि छन् । तर पनि यस संविधानको प्रस्तावनामै 'समाजवाद उन्मुख' भनेर लेखिएको छ । यसैले हामीले चाहेको राज्य व्यवस्थाको लागि प्रस्थान विन्दु हुने ठानेका छौँ ।

नेपालको संघीय संविधान निर्माणमा कर्णालीबासीको समेत रगत र पसिना सिञ्चित भएको छ । यसको प्रमाण माओवादी जनयुद्धमा कर्णालीका युवाहरू नोकरी पाए सरह सहभागी भई पूर्व मेचीदेखि पश्चिम महाकाली पारीको दोधारा चाँदनीसम्म लडेका थिए । यसै भावभूमिमा नेपाली जनताले संघीय संरचना प्राप्त गरेको र संविधान जारी गर्ने बेला पुनः कर्णालीवासी जागेकाले कर्णाली प्रदेश प्राप्त भएको थियो ।

हामीले राजनैतिक परिवर्तनको लागि हत्केलामा जीवन राखेर लडेका थियौं । राज्य व्यवस्था फेर्‍यौं । अब अवस्था फेर्नु छ । यसैबेला यस व्यवस्थाको बिरुद्धमा अफवाह फैलाउनेहरू सल्बलाएको देख्दा अचम्म लाग्छ । किनकि उनीहरू परिवर्तनका विरुद्ध पश्चगामी हावा फैलाइरहेका छन् । यसबारेमा सम्पूर्ण देशभक्त क्रान्तिकारीहरू सचेत हुँदै अहिलेको संघीय राज्य व्यवस्थाको रक्षक भएर विकास गर्न आवश्यक छ । सिंहदरबारको अधिकार गाउँगाउँसम्म त्यतिकै पुगेको होइन । कर्णालीवासीले यसको मर्मबोध गर्नुपर्दछ ।

**२. संघीयताको लाभ**

संघीयताका कारण यो देशमा ७ प्रदेश र ७५३ स्थानीय तह बनेका छन् । कर्णाली प्रदेशमा ७९ वटा स्थानीय

---

* पूर्वसदस्य, प्रदेश योजना आयोग, कर्णाली प्रदेश

तह छन् । यी नजिकका अर्थात् गाउँ घरका सिंहदरबार हुन् । प्रदेशस्तरीय सिंहदरबार वीरेन्द्रनगर सुर्खेतमा छ । प्रदेश सरकार बनेका कारण आर्थिक वर्ष २०७५/७६ मा २८ अर्ब २८ करोड २८ लाख २८ हजार, २०७६/७७ मा ३४ अर्ब २५ करोड ३४ लाख २५ हजार र २०७७/७८ मा ३३ अर्ब ७४ करोड १३ लाख ५३ हजार बजेट विनियोजन भएको थियो ।

यस्तै आर्थिक वर्ष २०७८/७९ मा ३६ अर्ब ५४ करोड ६६ लाख ३६ हजार, २०७९/८० मा ३२ अर्ब ६१ करोड ६१ लाख ६३ हजार बजेट विनियोजन भएको थियो भने २०८०/८१ मा भने ३३ अर्ब ३७ करोड ९७ लाख सात हजार बजेट विनियोजन भएको छ ।

हरेक पालिकाले करिब रु. ३० करोडदेखि साढे एक अर्बसम्म परिचालन गर्न पाएका छन् । हरेक वडाले रु. २० लाखदेखि एक करोडसम्मको बजेट परिचालन गर्न पाएको छ । यसरी हेर्दा कर्णालीमा बजेट आउने आधार बढ्दै गएको छ ।

यसअघि कर्णालीमा कहिल्यै प्राप्त नभएको बजेट संघीयतापछि प्राप्त भएको देखिन्छ । यद्यपि बजेट जनसङ्ख्याजस्तै भूगोलको आधारमा आउनुपर्ने थियो तर यहाँ गरिबी र बिकटताको आधारमा अनुदान सहायता प्राप्त हुँदै आएको छ । तर सो आधारमा कार्य सम्पादन हुन नसक्नु भने अरु सीमा र समस्या रहेका छन् ।

### ३. संघीयताको अभ्यास

प्रदेश सरकार निर्माणको शुरुवातीका दिनहरूमा प्रदेश सभाका लागि निर्वाचित जनप्रतिनिधिहरूले सरकारलाई पुँजीगत बजेटको चालिस वा चौबिस निर्वाचन क्षेत्रमा केन्द्रित भई बराबर बाँड्नुपर्छ भन्ने धारणा राखेको पाइन्थ्यो । सरकारमा रहेका केही मन्त्रीले आफ्नो मन्त्रालयमा रहेका सचिव तथा कर्मचारीलाई साक्षी मात्र बसेका हुन् जसरी सबै योजना आफै लेखेर सही गर्न मात्र लगाउन खोजेको पनि देखिन्थ्यो । यो परम्परा अझै पनि रहेको कुरा सुन्न पाइन्छ । यी दुवै प्रयास गैरजिम्मेवार हुन् ।

योजना तर्जुमाका आफ्नै मानक र प्रक्रियाहरू हुन्छन् । जनप्रतिनिधिहरूले त्यसलाई बेवास्ता गरेका कारण गाउँघरमा विकास किनेको चर्चा खुलेआम सुन्न पाइन्छ । त्यसलाई मौन रुपमा स्वीकार्ने कर्मचारीतन्त्र उदास देखिन्छ । कर्णाली प्रदेशले राखेको दीर्घकालीन लक्ष्यसमेत अलमलाउने गरी साना र छरिएका योजना छनौट गर्ने पद्धति हावी हुनाले यो खुल्ला विकृति छाएको छ । अख्तियार दुरुपयोग अनुसन्धान आयोगलाई गोप्य रुपमा भ्याइ नभ्याई छानविन गर्ने काम मिलेको छ ।

कर्णाली प्रदेशका प्रथम मुख्यमन्त्री महेन्द्रबहादुर शाहीको पालामा यो पंतिकारसमेत सम्मिलित प्रदेश योजना आयोगले प्रथम पञ्चवर्षीय योजना बनाएर कर्णालीको विकासको जग बसालेको थियो । नीति तथा कार्यक्रम, बजेट, विकास खर्च मापदण्ड, आयोजना मापदण्ड, प्रदेश गौरव तथा महत्वका आयोजना र स्थानीय पहिचानका आयोजना मापदण्ड बनेको छ । यसै आधारमा साना र छरिएका आयोजनालाई नियन्त्रणमा लिन बहुवर्षीय आयोजनाको स्रोत सुनिश्चित गर्ने कार्य भएको थियो । हिजोआज प्रदेश सरकारका केही मन्त्रीहरूले बहुवर्षीय आयोजनाका कारण बजेट वितरण गर्न पाइएन भनी गुनासो गरेको सुनिन्छ । उहाँहरूले सरकार निरन्तर चलिरहन्छ भन्ने कुरा बोध गर्दै चालु आयोजनालाई पनि अपनत्व लिन सक्नुपर्दछ ।

पहिले पहिले विकास साझेदारहरूले कर्णालीमा विकास खाने चलन छ भनेको सुन्दा चसक्क हुने गर्दथ्यो । अहिले गाउँ घरमा धेरै पटक फन्को लगाउँदा थाहा भयो कि विकास कार्यक्रममा उपभोक्ता समिति हुन मारामार गर्ने र भ्रष्टाचारको स्रोत त्यही समिति हुनुले विकास साझेदारहरूले यो कुरा भन्न थालेका रहेछन् । हुन त जो विकास कार्यक्रम दिन्छ उसले नै प्रतिशत तोकेर लिने र दिने गर्दा रहेछन् । यसैले विकास नाम मात्रको हुने गरेको रहेछ ।

यो विकास खाने पद्दतिलाई रोक्नुपर्दछ। यसखाले विथिति रोक्न कर्णाली प्रदेश योजना आयोगले ७९ वटै स्थानीय तह र ७१८ वडामा तेस्रो पक्षबाट अनुगमन तथा मूल्याङ्कन गर्ने कार्यविधि बनाएको थियो । तर त्यो लागु हुन पाएन । सरकार सुशासनका लागि जिम्मेवार हुनै पर्दछ ।

कर्णाली दिगो विकास लक्ष्य प्रतिवेदन प्रकाशन भएको छ । त्यसको आन्तरिकीकरणमा जोड दिनुपर्छ । प्रथम पञ्चवर्षीय योजनाको समीक्षा गर्नुका साथै दोस्रो पञ्चवर्षीय योजनाको तयारी गर्ने बेला भयो । यसलाई कागजको बारीमा अक्षरको खेती मात्र ठान्नु हुँदैन । प्रदेश सरकारले त्यसलाई आम कर्णालीवासीको बिचमा पुऱ्याउनै पर्दछ ।

हामी विकास चाहन्छौँ । त्यो विकास नजिकको स्थानीय सरकारले कार्यान्वयन गरोस् । प्रदेश सरकारले पुलको भूमिका निर्वाह गरी केन्द्रसम्म पहुँच स्थापित गरोस् । संघीय सरकारले नीतिगत रुपमा सामाजिक न्याय दिने काम गरोस् । यही मर्मका साथ नेपालको संविधानले तीन तहको सरकारको परिकल्पना गरेको हो भन्नेमा कसैको दुईमत रहन सक्तैन ।

### ४. कर्णालीको प्राथमिकता

तीन जना प्रधानमन्त्री हुन पाएको छिमेकी प्रदेश सुदुरपश्चिमले आठ पटक देशको नेतृत्व गर्न पाएको थियो । सुदुरपश्चिमले केन्द्र सरकारबाट अपनत्व गर्न नपाएर आफ्नो प्रदेशको नामसमेत 'सुदुर पश्चिम' राखेर व्यङ्ग्य गरिरहेको परिप्रेक्षमा कर्णालीले काठमाडौंलाई कति नजिकको मान्न सकेको होला? तुलनात्मक रुपमा विचार गर्न सकिन्छ ।

संविधानले दिएको अधिकार प्रयोग गर्न पाउँदा कर्णाली प्रदेशले आफ्नो आवश्यकताका आधारमा सात प्राथमिकता किटान गरेको छ। भौतिक पूर्वाधार विकासमा पहिलो जोड छ। भौतिक पूर्वाधारभित्र पनि पहिलो प्राथमिकता सडक यातायात पर्दछ। कर्णाली करिडोर र भेरी करिडोर मुख्य हुन् भने मुगु नाग्च्या लाग्ना सडक, राप्ती राजमार्ग, हिमाली पर्यापर्यटक सडक, मध्यपहाडी सडक, मदन भण्डारी सडकका साथै सबै पालिका केन्द्रसम्म पुग्ने सडकको स्तरोन्नति गर्न आवश्यक छ।

जल ऊर्जामा कर्णाली प्रदेश देशकै महत्वपूर्ण क्षेत्रका रुपमा रहेको छ। कर्णाली चिसापानी जलविद्युत आयोजना बनेको भए देशले काँचुली फेरिसकेको हुने थियो । भारत र दरबारको बिचमा असहमति हुनाले रोकियो। आज माथिल्लो कर्णाली त्यही अवस्थामा अलमल परिरहेको छ। बेतन कर्णाली, फुकोट कर्णाली, मुगु कर्णाली, हुम्ला कर्णालीलगायतका जलविद्युत आयोजनाले भविष्य खोजिरहेका छन् ।

यस्तै नलसिंह गाड, जगदुल्ला र भेरी-बबई जलविद्युत आयोजना निर्माणका क्रममा छन्। हालसम्म

टुकीमारासमेत जोडेर हेर्दा कर्णाली प्रदेशमा १२ मेगाबाट मात्र विद्युत उत्पादन भएको छ। कोहलपुर र कैलाली दुवैतिरबाट १३३ केभीको प्रसारण लाइन सुर्खेत आउन थाल्नु र ३३ केभीको प्रसारण लाइन हुम्लाबाहेक अरु जिल्लामा भर्खरै पुगेको देखिनुले विद्युतीकरणको अवस्था स्पष्ट हुन्छ ।

यो पंक्तिकारले केही वर्षअघि कर्णालीको पहाडी चार जिल्लाको बस्ती सम्बन्धी अध्ययन गर्दा अधिकांश बस्ती असुरक्षित रहेको देखिएको थियो । यसैले हामीले साविकका सदरमुकामलाई आर्थिक केन्द्र सहर, चौरजहारी र राकमलाई नयाँ मध्य पहाडी सहर, छिन्चु, चौकुन्या, टालेगाउँ र खिच्चनेमा औद्योगिक सहर, सबै पालिका रहेको ठाउँलाई साना सहर र त्यसमा करीब २०० बस्ती विकास गरे आगामी ५० वर्षलाई सुरक्षित आवासको व्यवस्थापन गर्न सकिने देखिएको छ। यस्तै खेतीयोग्य जमीनमा सिँचाइ र सबै घरमा स्वच्छ खानेपानीको व्यवस्था गर्नुपर्छ ।

संविधानले गास, बास, कपास जस्तै शिक्षा, स्वास्थ्य, रोजगार, खाद्य सुरक्षा र सामाजिक सुरक्षाको ग्यारेन्टी गरेको छ। यसको विकासका लागि 'बालबालिकालाई लगानी, युवालाई रोजगारी र ज्येष्ठ नागरिकलाई सम्मान र सुरक्षा' को व्यवस्था गर्ने कुरा अगाडि सार्नु वान्छनीय हुन्छ। सोहीअनुसार असमान पढाइ तर समान प्रतिस्पर्धा गर्नुपर्ने विद्यमान अवस्थामा हिमाली जिल्लामा आवासीय विद्यालय र पहाड तथा तराइमा नमूना विद्यालयहरू निर्माणमा जोड दिनुपर्छ। हरेक पालिकाले छात्रवृति दिएरै कृषि, भेटनरी, इन्जिनियर, चिकित्सक, वन तथा वातावरण र सूचना प्रविधिका साथै पर्यटन विषयमा स्नातक गराउन आवश्यक छ ।

स्वास्थ्य क्षेत्रको विकासका लागि भौतिक पूर्वाधार निर्माण हुँदै छ। यसैगरी हरेक कर्णालीवासीको स्वास्थ्य बीमा गर्नुका साथै हरेक नागरिकले प्रत्येक वर्ष पूरै स्वास्थ्य अनिवार्य जाँच गर्ने व्यवस्था मिलाउनुपर्छ। शिक्षाको राम्रो जग बस्यो र स्वास्थ्यमा गर्भावस्थादेखि ध्यान दिई आमाको न्यानो हेरचाहमा हुर्केको बालबालिकाले विश्वमा अदितीय प्रगति गर्ने क्षमता राख्न सम्भव हुन्छ। यसले रोजगारको जग बसाल्न सहज हुन्छ। स्वरोजगार र आत्मनिर्भर बन्न सहज हुन्छ। खेल, कला साहित्य र संस्कृतिले अर्कैखाले जागरण ल्याउन मद्दत मिल्दछ ।

यसैगरी कृषिजन्य, पानीजन्य, खानीजन्य, वन पैदावरजन्य र जडिबुटीजन्य उत्पादन र उद्योगले कर्णालीलाई उँभो लगाउने हो। तिनको पहिचान र परिचालन आजको आवश्यकता हो। वातावरण र पर्यटनका दृष्टिकोणबाट कर्णाली प्रदेश वातावरणीय विविधता रहेको प्रदेश हो। यहाँको हिमाल, पहाड र भावरमा प्रकृति, इतिहास तथा कला संस्कृतिको बारेमा पर्यटन गर्न सकिन्छ। विज्ञान प्रविधि, अनुसन्धान र नव प्रवर्तनका क्षेत्रमा ध्यान नदिई भोलिको भविश्य सुनिश्चित गर्न सकिदैन। डिजिटल कर्णालीले विश्वलाई एकै गाउँको रुपमा सहज पहुँच मात्र पुऱ्याउँदैन हरेक किसिमका दुर्गमतालाई सुगमतामा ल्याउन सम्भव छ। सबै काम सुशासनमा आधारित भई पारदर्शी हुनपर्छ ।

उल्लिखित प्राथमिकता आवश्यकतामा आधारित छन्। कर्णाली प्रदेशको मुहार फेर्नुपर्ने छ। तर धेरैलाई कर्णालीमा विकास गर्न सकिदैन कि भन्ने लागेको पाइन्छ। हामीहरू कर्णालीमा निवेदन हालेर जन्मेका होइनौं । तर संयोगले प्राप्त भएको पञ्चतत्वको सम्मान गर्दै कर्णालीको खास आवश्यकता र प्राथमिकतामा आधारित भई विकास गर्नुपर्ने हुन्छ। कर्णालीमा समर्पण भाव जगाउन आवश्यक छ ।

### ५. देखिएको कमी

सरकार भन्नाले हामी धेरैले राजनैतिक नेतृत्व गरेको आधारमा कुरा गर्ने गर्छौं । हामीसँग स्थायी सरकारको रुपमा कर्मचारीतन्त्र छ । कर्मचारीतन्त्रले संविधान, ऐन, नियमावली र कार्यविधिमा टेकेर काम गर्दछ । राजनैतिक र प्रशासनिक नेतृत्व मिलेर खास सरकार बनेको हुन्छ । तर यो कुरा बुझ्न र तालमेल गर्न नसक्दा निरन्तर बगिरहेको हिमनदीबाट ऊर्जा निकाल्न नसके झैं भएको छ ।

प्रदेशको संरचना बने लगत्तै केन्द्र सरकारले प्रदेश सरकार सञ्चालनका लागि शुरुमै अनुभवी सहसचिव पठाउनुपर्दथ्यो । प्रदेश सरकारलाई चाहिने आवश्यक ऐन र प्रदेशमै कार्यसम्पादन मूल्याङ्कन हुने गरी कर्मचारी पठाउनुपर्ने थियो, त्यो भएन । राजनैतिक पार्टीहरूले पनि वरिष्ठ नेताहरू प्रदेशमै केन्द्रित गर्नुपर्दथ्यो । त्यो पनि भएन ।

उपलब्ध जनशक्तिबाट कार्यसम्पादन क्षमता नपुग्दा पनि विनियोजित बजेट लक्ष्यअनुसार कार्यान्वयन हुन सक्दैन । यसमा राजनैतिक नेतृत्वको सुझबुझको खाँचो छ ।(सिंहदरबार) केन्द्रित प्रशासन संरचनाले पनि संघीयतामा मन लगाएर काम गरेको पाइदैन । जति नीति तथा कार्यक्रम बनाइन्छ, त्यसअनुसार बजेट आएको देखिदैन ।

आएको बजेट शत प्रतिशत कार्यान्वयन नहुनुको मूलकारण नीति निर्माण तहदेखि कार्यान्वयन र उपभोक्तामा कहीँ न कहीँ अपनत्व नहुनुसँग सम्बन्धित हुन्छ । यसका साथै, जसरी पनि काम लिने निर्माण व्यवसायीले आधाभन्दा बढी घटेर ठेक्का लिनु पनि हो । यति भन्दै गर्दा नेपाल सरकारको मौजुदा जनशक्तिको कमजोर कार्यसम्पादन पनि कम जिम्मेवार छैन ।

### ६. निष्कर्ष

कर्णालीको मुहार फेर्न सुरुमा भू-धरातल बुझ्नुपर्छ । नीतिगत पहुँच पनि हुनैपर्छ । सोहीअनुसार कार्यान्वयनमा तत्परता देखाउनुपर्छ । विकासका लागि एक गाउँ-एक विकास योजनामा केन्द्रित गर्नै पर्छ । समृद्धिका लागि निजी क्षेत्रलाई प्रोत्साहन दिनुपर्ने हुन्छ । मानव पूँजी निर्माणका लागि एक पालिका सात जनालाई छात्रवृत्ति दिएर स्नातक गराउने अभियान सञ्चालन गर्नै पर्छ । यसमा संघ र प्रदेशले सहयोग गर्नुपर्छ । यसो गर्दा रोजगारीका अवसरहरू सिर्जना हुन सक्छन् । आफ्नो ठाउँ आफैंले विकास गर्ने र विज्ञको आगमन हुने कार्यस्थल बन्न सक्छ ।

कर्णाली प्रदेशको स्वावलम्बी अर्थतन्त्र निर्माण गर्ने विषय देशको भविष्यसँग जोडिएको छ । कुनै बेला अंग्रेजहरूले आगो, पानी र बतासलाई कमारो बनाउन सकेकाले वेलायतको विकास भएको अनुभव गरिए झैं हामीले यतिबेला भरपर्दो राष्ट्रिय सडक कर्णाली करिडोर, राष्ट्रिय विद्युत प्रसारण लाइन र सञ्चार नेटवर्कको पहुँच एकसाथ अघि बढाउन आवश्यक छ । कर्णालीले संविधानप्रदत्त अधिकार अनुसार सामाजिक न्यायको सिद्धान्तमा आधारित विकास र निकास चाहेको छ । विद्यमान अवस्था हेर्दा कर्णाली प्रदेशलाई विशेष प्रदेशको घोषणा गरी विकास केन्द्रित गर्नुपर्ने हुन्छ ।

नेपालमा अझै पनि धुँवा नआउने पर्यटन उद्योगमा केन्द्रित हुनुपर्ने देखिएको छ । यसका लागि 'संसारको

गन्तव्य नेपाल र नेपालको गन्तव्य कर्णाली’ बनाउन आवश्यक छ । हिजो राजनैतिक रुपमा क्रान्तिका लागि गरेको अपिल र आज विकास र समृद्धिका लागि गाउँदेखि सहरसम्म रुपान्तरण र सुदृढीकरण अभियान चलाउन आवश्यक छ । देशको भविष्य संविधानले निर्माण गरेझैँ संविधानको भविष्य कार्यान्वयन क्षमतामा भर पर्दछ । यस विषयमा आम नेपालीले सोच्न सक्नुपर्दछ ।



# न्यायिक समिति र महिला नेतृत्व विकास



✍ डा. सीता ढुंगाना*

मानव सभ्यताको विकासक्रम संघर्षको इतिहास हो । बलियोले निर्धोलाई पेल्ने वा हतियार हुनेले नहुनेलाई आक्रमण गर्ने, घेर्ने मार्ने युगबाट संगठित भएर संघर्ष गर्ने र न्याय प्राप्त गर्ने युगसम्म आइपुगेको छ । अझ भनौं जस्तालाई तस्तै भन्ने वा बदला नै न्याय हो भन्ने अवस्थाबाट व्यवस्थित ढङ्गले गल्तीलाई माफीदेखि सजायसम्मको न्याय दिलाउने परिवेश सिर्जना भएको छ । न्याय निरुपणका विभिन्न विधिको अभ्यासहरूबाट निर्माण गर्दै कार्यान्वयनका क्रममा भेटिएका त्रुटिहरूबाट शुद्धीकरण र सुदृढीकरण गरिएका न्यायिक अभ्यासहरू मानव सभ्यताका न्यायप्रणालीको रुपमा चिनिन्छन् । मानव सभ्यताको विकास क्रममा समाज विकासका चरणअनुसार न्याय प्रणाली पनि भिन्न भिन्न किसिमको रहेको पाइन्छ । आधुनिक मानव सभ्यताको विकासमा न्याय निरुपणको अभ्यासहरूमा पञ्च भलाद्मीदेखि ठुला वा मानिएका व्यक्तिको विवेकलाई न्याय मानिएकोमा विधि, प्रविधि, विज्ञान र विवेकसम्मको संयोजनबाट न्याय निरुपणको अभ्यास भइसकेको तथ्य हामी माँझ छ । सबैको अस्तिव कायम गर्ने विधि नै न्याय हो । त्यसैले न्याय निरुपण गर्ने विविध विकल्पहरूमध्ये मेलामिलापको अभ्यासहरू मानव सभ्यताको विकासक्रमसंगै विकास भएका उत्तम विकल्प हुन् ।

सामन्ती राज्य प्रणालीमा विशेष गरी धर्म सभाहरूबाट, महाजन सामन्त महन्तहरूबाट न्याय प्रदान गरिने अभ्यासहरूलाई राज्य व्यवस्थाको लोकतान्त्रिकरण एवम् रुपान्तरण सँगसँगै व्यवस्थित र वैज्ञानिक विधिबाट न्याय निरुपण हुने अवस्थामा विश्वका धेरै मुलुकहरू पुगिसकेका छन् । विशेष गरी विश्वमा भएका प्रथम र दोस्रो विश्वयुद्ध तथा शीतयुद्ध कालीन अवस्थासँगै विश्व समुदायमा साझा भावनाको विकास, वैश्विक शान्ति एवम् साझा प्रणालीको समता, समानता र न्यायका विषयहरू उठेका हुन् । संसारभरका मानवहरूको समान र विश्वव्यापी अधिकारको बहस सुरु भएको हो । विश्वस्तरीय साझा संस्था र संरचना एवम् साझा

* पूर्वउपाध्यक्ष, गजुरी गाँउपालिका, धादिङ

नीतिको अवलम्बन हुन लागेको हो ।

यिनै वैश्विक परिवेशमा हरेक देशका आफ्नै मौलिक संविधान, कानुन र संहिताहरू निर्माण गरी आधुनिक समाजलाई शान्तिपूर्ण, विवेकी, न्यायपूर्ण र समतामूलक बनाउनका लागि राज्यले मौलिक न्यायप्रणालीहरू निर्माण गरेको छ । यसरी न्यायप्रणाली अवलम्बन गर्ने सवालमा नेपालमा पनि विभिन्न खालका न्याय प्रणालीहरू अभ्यासमा थिए । नेपालको हकमा किरातकालिन न्याय व्यवस्था न्याय क्षेत्रको उषाकाल मानिन्छ । किरात कालमा राजालाई पनि कानुनबाहिर जाने अधिकार थिएन भन्ने कुरा किराती वेदमा उल्लेख गरिएको "ऐन कानुन छाड्ने राजाको दशा पहाडको टाकुरामा भुत्लाबेगरको चरा बसे झैं हुन्छ" भन्ने हरफबाट पनि बुझ्न सकिन्छ र त्यस बखतको ऐन भनेको नै किरात बेद थियो र राजाको तात्कालिन प्रजाको रक्षार्थ पनि राजाको व्यवस्था गरिएको मानिन्छ । सदियौंदेखिको सामन्ती व्यवस्था र वंश परम्परामा आधारित शासन व्यवस्थाको रुपमा रहेको राजतन्त्रको अन्त्य गरी गणतन्त्रको स्थापना र एकात्मक राज्यप्रणालीको सट्टा संघीय शासन प्रणालीको स्थापनासँगै न्याय प्रणालीमा पनि रुपान्तरण आएको छ । नागरिकको भावना र चाहनाअनुसारको संघीय शासन व्यवस्थामा जनताको सबैभन्दा नजिकको सरकारको रुपमा रहेको स्थानीय तहलाई पनि न्यायिक अधिकार प्रदान गरेर नेपालको संविधान, (२०७२) ले नेपालको विद्यमान न्याय प्रणालीमा स्थानीय सरकारलाई न्याय निरुपणको अधिकार सम्पन्न बनाएको छ । न्याय प्रणालीमा जनताको निकटतम निकाय भनेको स्थानीय तहको न्यायिक समिति हो ।

विद्यमान न्याय प्रणालीमा न्यायिक निकाय र अर्धन्यायिक निकायहरूले अभ्यास गरेको न्याय निरुपण अदालत र अर्ध न्यायिक निकायहरूबाट मात्रै हुने गरेकोमा विद्यमान संविधान र स्थानीय सरकार सञ्चालन सम्बन्धी कानुनहरूको जगमा स्थानीय तहको न्यायिक समितिले पनि न्याय निरुपणको अभ्यास गरिरहेको छ । "न्याय नपाए गोर्खा जानू" भन्ने एकताकाको उक्तिलाई अहिले आफ्नै गाउँठाउँमै न्याय निरुपणको व्यवस्था आफैंले छानेका जनप्रतिनिधिहरूको उपस्थितिमा आफ्नै सार्वभौमसत्ताको प्रयोगबाट हुने कुरा न्यायप्रणालीको विकासमा निकै उपल्लो उपलब्धि हो ।

नेपालको संविधानको धारा २१७ अनुसार स्थापित र सञ्चालित हुने न्यायिक समितिले स्थानीय तहमा कानुनबमोजिम आफ्नो अधिकार क्षेत्रका विवादहरू निरुपण गर्न गाउँपालिका र नगरपालिकाका उपाध्यक्ष र उपप्रमुखको संयोजकत्वमा तीन सदस्यीय न्यायिक समिति रहने र अन्य दुई सदस्यहरू गाउँ वा नगर सभाले आफूमध्येबाट निर्वाचित गर्ने व्यवस्था गरेको छ । न्यायिक समितिलाई स्थानीय सरकार सञ्चालन ऐन, २०७४ अनुसार ऐनको दफा ४७(१) अन्तर्गतका विवादहरू मेलमिलापको माध्यमबाट किनारा गर्न प्रयास गर्ने तथा यदि मेलमिलाप हुन नसकेको अवस्था आएमा निर्णय गर्न पाउने अधिकार छ । यसै गरी दफा ४७ (२) अन्तर्गतका विवादहरूको न्याय निरुपण गर्दा मेलमिलापको माध्यमबाट मात्र विवाद समाधान गर्ने क्षेत्राधिकार दिइएको छ । विशेष गरी जनताका तहमा हुने सामान्य विवादहरू पनि न्यायालयसम्म जानुपर्ने हुँदा पीडितहरू थप पीडित हुनुपर्ने अवस्था र वर्गीय हिसाबले कमजोर आर्थिक अवस्था भएको वर्गको व्यक्तिको लागि न्याय झन् विकट हुने अवस्था भएको महसुस गरेर संविधानले स्थानीय तहमा न्यायिक समितिको परिकल्पना गरेको हो । स्थानीय सरकार सञ्चालन ऐन २०७४ को परिच्छेद ८ दफा ४६ देखि

५३ सम्म न्यायिक समितिको काम कारबाहीको बारेमा व्यवस्था गरिएको छ । स्थानीय सरकार सञ्चालन ऐन २०७४ को दफा ४९ (२) ले न्यायिक समितिसमक्ष प्रस्तुत हुने विवादमा पक्षहरूलाई मेलमिलापका लागि प्रोत्साहन गर्नुपर्ने भनेको छ यसबाट पनि के बुझ्न सकिन्छ भने विवाद र विवादको उजुरी दर्तापछि हुने फैसलाले समाजमा आपसी भाइचारा घट्ने भएकोले स्थानीय सरकारलाई समाजमा सकेसम्म विवादका पक्षहरूबिच जित जितको अवस्था सिर्जना गरी आपसमा शान्ति र समन्वय कायम राख्न पनि कानुनले प्रोत्साहन गरेको देखिन्छ । हुन त संविधानको अनुसूची ८ को क्र.स. १२ ले स्थानीय अदालत, मेलमिलाप र मध्यस्थताको व्यवस्थापन आफैं गर्न सक्ने अधिकार स्थानीय तहलाई दिएको छ । यसरी हेर्दा स्थानीय तहको विवाद निरुपण गर्न संविधानले विभिन्न संस्थागत अंगहरूको व्यवस्था गरेको देखिन्छ ।

हरेक समस्या अदालतमै पुग्नुपर्ने खालका हुँदैनन् । कतिपय अन्तरविरोधको तहसम्म मात्रै हुन्छन्, बुझाइका कमजोरीका कारण सिर्जना भएका समस्याहरू हुनसक्छन् र तिनलाई मेलमिलापका माध्यमबाट समाधान गर्न सकिन्छ । एउटै टोल छिमेकमा बस्ने मानिसको बिचमा अदालती प्रक्रिया गरेर, खर्च गरेर, हारजितको अवस्थामा पुग्दा हार्ने वा जित्ने दुवैले पछुताउनुपर्ने र मानवीय सम्बन्धमै द्वन्द्व सिर्जना हुन सक्ने अवस्थाबाट जोगाउनसमेत न्यायिक समितिहरूले काम गर्न सक्ने रहेछन् भन्ने तथ्यहरू न्यायिक समितिका अभ्यासहरूले सिद्ध गरिसकेका छन् । न्यायिक अधिकारलाई जति स्थानीयकरण गर्न सकियो त्यति नै स्थानीय सरकारलाई जिम्मेवार बनाउन सकिन्छ साथसाथै न्यायमा नागरिकको पहुँच वृद्धि गर्न मद्दत पुग्दछ ।

स्थानीय तहमा रहेका न्यायिक समितिहरूले प्रभावकारी ढङ्गले न्याय सम्पादन गर्दा न्याय सर्वोपरि गर्न र छिटो छरितो तरिकाले न्याय प्राप्त गर्न सजिलो हुन्छ । नागरिकलाई निकट स्थलबाट न्याय प्रवाह हुने भएकाले कम खर्चिलो हुन्छ । जनताले आफैंले चुनेका जनप्रतिनिधिबाट न्याय निरुपण कार्य हुने भएकोले पनि स्थानीय तहको न्यायिक सुविधा कानुनी हुनुको साथै व्यावहारिक तवरबाट विवाद निरुपण हुन्छ । तर यति भन्दाभन्दै पनि न्यायालय वा न्यायपालिका जहिले पनि स्वतन्त्र र निष्पक्ष हुनुपर्नेमा कर्ताहरूको आन्तरिक कारण भनौं या बाह्य हस्तक्षेपले भनौं कतिपय बेला स्थानीय तहका न्यायिक समिति संयोजक वा अन्य सदस्यहरूलाई निष्पक्ष कार्य सम्पादन प्रभावित हुन पुगेको पनि पाइन्छ ।

संविधान कार्यान्वयनको सूत्रपात स्वरुप २०७४ सालमा भएको स्थानीय तह निर्वाचन पश्चात ९० प्रतिशतको हाराहारी महिलाहरू गाउँपालिका वा नगरपालिकाको उपाध्यक्ष वा उपप्रमुख भए । उपाध्यक्ष वा उपप्रमुख न्यायिक समितिको संयोजक हुने संवैधानिक र कानुनी व्यवस्थाअनुसार उम्मेद्वार छनौटका समयमा अझै भनौं मतदाताहरूले मत प्रदान गर्ने बेलैमा महिलाहरूलाई न्याय निरुपणको जिम्मेवार अधिकारीको रुपमा हेरिएको थियो । पुरुष प्रधान समाज र प्रमुख पदमा पुरुष उम्मेद्वारीको मानसिकताले गर्दा पनि उपप्रमुखमा महिला उम्मेद्वारी र निर्वाचित हुने तथ्यले निर्वाचन अघि नै न्यायिक जिम्मेवारी धेरै महिलाहरूकोमा आइपुग्ने करिब सत्य थियो । यसै परिवेशमा भएका कतिपय विश्लेषणहरूलाई आधार मान्दै महिला नेतृत्वले सही र ठिक ढङ्गले न्याय निरुपण गर्ने भएकाले पनि यो जिम्मेवारी उपप्रमुखलाई दिइएको हो समेत भनेको सुनियो तर परिस्थिति त्यस्तो थिएन । संविधानले त हरेक स्थानीय तहको प्रमुख वा उपप्रमुखमा महिला अनिवार्य भनेको थियो तर सम्पूर्ण राजनितिक दलहरूले उम्मेद्वारी छनौटमा गरेको विभेदीकरणले देशभर

२०७४ सालमा जम्मा १८ स्थानीय तहहरूमा महिला र २०७९ को निर्वाचनमा जम्मा २५ स्थानीय तहहरूमा मात्र महिला प्रमुख बन्ने स्थिति रह्यो । संविधानले न्यायिक समितिको कार्यकारी अधिकार र अन्य नौ वटा भन्दा बढी समितिको समन्वय भूमिका रहने गरी संयोजक हुने व्यवस्था गरेकोले विगत ६ वर्षदेखि महिलाहरूमा यिनै अधिकारहरूको अभ्यासका कारण र अन्य सामाजिक जिम्मेवारीका कारण महिलाको नेतृत्व क्षमता विकासमा निकै प्रगति हुँदै आएको छ ।

स्वाभाविक रुपमा महिलाहरू धेरै उपप्रमुख भएका कारण र उपप्रमुख न्यायिक समितिको नेतृत्वमा भएका कारण न्याय निरुपणको क्रममा महिला नेतृत्व परिक्षित हुने मौका प्राप्त भयो । एउटाको पक्ष लिन र कसैलाई स्थापित गराउन वा कसैलाई विस्थापित गराउन जति सहज हुन्छ त्योभन्दा कैयौ गुणा कठिन काम दुवैलाई मिलाउनु वा दुवैलाई स्थापित गराउनु हुन्छ । यस्ता कठिन काम सम्पन्न गरेका महिला नेतृत्वहरू स्वाभाविक रुपमा आफ्ना कार्यक्षेत्रमा र कतिपय मुद्दाका विशिष्टताका कारणले कार्यक्षेत्रबाहिर पनि चर्चासहित सफलता प्राप्त गरेका छन् । कतिपय अदालतले फैसला गरेका र फैसला कार्यान्वयनमा प्रहरी परिचालन हुँदासम्म कार्यान्वयन हुन नसकेका केसहरूलाई न्यायिक समितिले मेलमिलापको विधिबाट सुल्झाएको छ । यस्ता तथ्यहरूले न्यायिक समितिको सफलता अझ महिला नेतृत्वको सफलता चिनिएको छ ।

न्यायिक समितिको नेतृत्व, समूह परिचालन, न्याय सम्पादन, घटनास्थल सम्बद्ध तथ्यहरू तथा मेलमिलापको सामाजिक वातावरणका लागि पनि महिला नेतृत्व सिप निकै प्रभावकारी रहेको तथ्यहरूले स्थापित गरेको छ । महिला नेतृत्वलाई घर परिवार र समाजका थुप्रै भावनात्मक पक्षहरूको जगदेखिकै ज्ञान हुनु र सहनशीलता तथा धैर्यताको मात्रा प्राकृतिक ढङ्गले नै प्रचुर भएका पक्षहरू समेत व्यावहारिक रुपमा सिद्ध सावित भएका छन् । न्यायिक समितिको जिम्मेवारी र कार्यक्षेत्रको हिसाबले जति सीमितता भए पनि थुप्रै मेलमिलापका नमुना अभ्यासहरूले समाजमा द्वन्द्व, असमझदारी र झैझगडाको वातावरणमा नै न्यूनीकरणसमेत भएको पाइन्छ ।

न्यायिक समितिमा रहेका महिला नेतृत्वले एउटा प्रणाली विकास गर्नुभएको थियो- इजलास सञ्चालन तथा न्यायिक समितिका कामको प्राथमिकीकरण । तुलनात्मक विश्लेषण गर्ने हो भने २०७९ मा सम्पन्न स्थानीय तह निर्वाचनबाट उपप्रमुख वा उपाध्यक्षहरूमा विगत कार्यकालको भन्दा महिला नेृतृत्व कम आएको छ । संविधानको धारा ३८को उपधारा ४ मा राज्यका सबै निकायमा महिलालाई समानुपातिक समावेशी सिद्धान्तको आधारमा सहभागी हुने हकको व्यवस्था गरिएको भएता पनि २०७९ सालको निर्वाचनमा पाँच दलीय गठबन्धनको कारण उपप्रमुखमा महिलाको सङ्ख्या कम हुन पुग्यो र उपप्रमुखमा पुरुषको सङ्ख्या स्वभावैले बढी भयो । जसका कारण विगतका तुलनामा भन्दा अहिले महिलाका क्षेत्रमा कम नमुना सिर्जनशील अभ्यासहरू भएका छन् । विगतमा भन्दा न्यायिक समितिका कामहरू कम प्राथमिकतामा परेका छन् । केही तथ्यांकहरू र प्रवृत्ति विश्लेषणकै भरमा लेखिएका सम्पूर्ण सवालहरू अन्तिम आधिकारिक र सत्य नहुन सक्छन् तर खोजको विषय बन्न सक्छ । न्याय निरुपणका सवालमा महिला नेतृत्व सफल, प्रगतिशील, निष्पक्ष र व्यावहारिक न्याय प्रदायक भएको २०७४-२०७९ सालको कार्यकालले प्रष्ट भएको छ । समाजमा सही र समयमा नै न्याय प्राप्त हुन्छ भन्ने मनोविज्ञानले नै पनि नेतृत्व विकास, सशक्तिकरण र सबलीकरणमा एउटा महत्वपूर्ण खुट्किलो पार गर्ने छ । न्यायिक समितिका कामहरूले विकास गरेको

महिला नेतृत्व उपप्रमुख वा उपाध्यक्षबाट प्रमुख वा अध्यक्षमा स्वाभाविक रुपमा रुचाइएको र स्थापित भएको प्रमाणित तथ्य हामी माझ छ । राजनीतिक दलीय व्यवस्थामा दलले उम्मेद्वार बनाउनुपर्ने व्यवस्था भएका कारण दलले उम्मेद्वार नै नबनाइएको अवस्थामा बाहेक दोहोऱ्याएर उपप्रमुख उपाध्यक्षमा विजयी हुने वा प्रमुख अध्यक्षमा विजयी हुने महिला नेतृत्व पुरुषको तुलनामा ज्यादा छ । यसको आधार अघिल्लो कार्यकालको कार्यसम्पादन हो । विशेष गरी न्यायिक समितिको नेतृत्वमा रहेर गरिएको न्याय निरुपण नै स्थानीय तहको उपप्रमुखको सङ्ख्यामा महिला धेरै भएको कारण तिनै महिला जनप्रतिनिधिको क्षमता परीक्षणको राम्रो मौका बन्न पुग्यो ।

२०७९ सालको स्थानीय निर्वाचनमा कूल १ लाख ४५ हजार १० जनाको उम्मेद्वारी परेको थियो । देशभरबाट महिला उम्मेद्वार ५५ हजार ६ सय ९९ जना थिए । प्रतिस्पर्धाबाट निर्वाचित भएर स्थानीय तहमा जम्मा १४ हजार ४०२ जना महिला निर्वाचित भएका छन् । अध्यक्ष वा प्रमुख पदमा जम्मा ३ हजार २३८ उम्मेद्वारी परेकोमा महिलाको सङ्ख्या भने जम्मा २२९ मात्र थिए । यसले पनि के देखाउँछ भने दलहरूले प्रमुख पदमा महिलालाई उम्मेद्वारी दिनबाट नै बञ्चित गरेको छ । जसले गर्दा महिलाको नेतृत्व क्षमता वृद्धिमा प्रोत्साहन हुन सकेको छैन । यसरी थोरै उम्मेद्वारहरूमध्येबाट अध्यक्ष वा प्रमुखमा निर्वाचित महिलाको सङ्ख्या जम्मा २५ मात्र रह्यो । त्यस्तै अनिवार्य गरिएको महिलाको सङ्ख्या ६ हजार ७१३, ६९ वटा वडामा महिला वडाध्यक्ष, दलित महिला ६ हजार ५१४ र खुल्लाबाट ४१२ जना महिला निर्वाचित हुन सफल भएका छन् ।

विभिन्न प्राकृतिक या सामाजिक कारणले महिला नेतृत्व पूर्ण छ । घरबाहिर निस्कने महिलालाई घरभित्रको कामले नछोड्ने भएको कारण पनि नेतृत्वमा आउने महिलाहरू दोहोरो भूमिकामा छन् । राजनीतिलगायत हरेक क्षेत्रमा महिला अगाडि आउन ब्यवधानका अग्ला पर्खाल नाघेर आउनुपर्ने स्थिति अझै कायम नै छ । समाजमा महिलामाथि हुने हिंसा र विभेद व्याप्त नै छ । संवैधानिक प्रावधानअनुसार केही अनिवार्य गरिएका पदहरूमा महिलाहरू पुगे पनि प्रमुख जिम्मेवारीमा महिलाको नेतृत्व नस्वीकार्ने प्रवृत्ति झन जकडिँदै आएको छ ।

महिलाको नेतृत्व क्षमता विकासको लागि शैक्षिक, सामाजिक, राजनीतिक क्षेत्रमा महिलालाई सम्मानजनक उपस्थिति गराउनु आजको आवश्यकता हो । केही खास मान्छे मात्र पदमा पुगेर आम महिलाको स्थिति परिवर्तन हुने रहेनछ भन्ने कुराको पुष्टि देशमा लोकतन्त्र पश्चातको विभिन्न कालखण्ड र अभ्यासले देखाइसकेको छ । त्यसैले राज्यले हरेक महिलाको आर्थिक अवस्था उकास्ने योजना तथा कार्यक्रमहरू लागु गर्ने, देशमा रोजगारी क्षमता वृद्धि गर्ने र महिलालाई नेपाल मै सिक्ने र नेपालमै बिक्ने सीप हस्तान्तरण गर्ने काम गर्नुपर्दछ । यी सम्पूर्ण कार्यक्रम तथा व्यवस्थाहरू लागु गर्न र विद्यमान समस्याहरू महिलालाई मुक्त गरी समान समाजको निर्माण गर्न राज्यका सबै संरचनाहरूमा महिलाहरूको अर्थपूर्ण सहभागिता जरुरी छ ।



# स्थानीय विवाद समाधान गर्न न्यायिक समिति : विद्यमान व्यवस्था र वैध अपेक्षा



✍ वसन्त आचार्य*

**सरकार**

सरकार हुन कम्तिमा तीन अङ्ग हुनुपर्छ । व्यवस्थापिका, कार्यपालिका र न्यायपालिका नै सरकारका अनिवार्य तीन अङ्ग हुन् । विश्वव्यापी रुपमा नै सरकार गठनको यो मान्यता स्थापित छ । कुनै सरकार हो वा होइन भन्नाका निम्ति यी कुराहरूको विश्लेषण गरिन्छ । जसरी तीन अङ्ग नभई सरकार हुन सक्दैन त्यसैगरी, पाँच अधिकार निहित नभएको सरकार सरकारको हैसियतमा रहँदैन । सरकारसँग (१) राजनीतिक, (२) प्रशासनिक, (३) न्यायिक, (४) वित्तीय र (५) योजना तथा विकासको अधिकार हुनै पर्दछ । सरकारको अङ्ग हुन न्यायपालिका अनिवार्य भए झैं न्यायिक अधिकार विना न सरकार सार्वभौम हुन्छ, न स्वायत्त र न स्वशासित नै । त्यसैले स्थानीय तह सरकार हो वा होइन भन्ने विषय न्यायिक अङ्ग र न्यायिक अधिकार छ वा छैन भन्ने सन्दर्भले पनि निर्धारण गर्दछ । नेपालको स्थानीय तहहरूमा संविधानतः न्यायिक समिति, स्थानीय अदालत, मेलमिलाप र मध्यस्थताको अधिकार रहनुले सरकार हो भन्न कुनै दुविधा छैन । नेपालको संविधानको अनुसूची ८ मा स्थानीय तहको एकल अधिकार अन्तर्गत न्यायिक संयन्त्र र विवाद निरुपण गर्ने अधिकार रहनुले स्थानीय स्तरका विवादहरू समाधान गर्न स्थानीय सरकारलाई न्यायिक अधिकार रहेको देखिन्छ । त्यसैले सिद्धान्ततः स्थानीय तह सरकार हो ।

स्थानीय, राज्य र संघीय सरकारहरूको प्रमुख लक्ष्य सार्वजनिक व्यवस्था कायम गर्नु, नागरिकको जीवनलाई मद्दत पुर्‍याउने बस्तु र सेवाहरू उपलब्ध गराउनु र आधारभूत स्वतन्त्रता र अधिकारहरूको संरक्षण गर्नु हो ।[1] शान्ति, सुरक्षा, विकास र समृद्धि कुनै पनि सरकारको मुख्य कार्यहरू भित्र पर्दछन् । यी सबै कार्यहरूको

1 ल्यारी एलोवित्ज, सरकारको परिचय, हार्पर पेरेनियल, सन् १९९२, पृ.२ ।

* निर्देशक (कानुन), काठमाडौ महानगरपालिका

अन्तिम लक्ष्य भनेको न्यायपूर्ण समाजको निर्माण गर्नु हो । न्याय प्राप्तिबाट नै राज्य, सरकार र कानुनको औचित्य पुष्टि हुन सक्दछ । वर्तमान लोकतान्त्रिक विश्व परिवेशमा सरकार र कानुन विना राज्य संयन्त्रको परिकल्पना गर्न सकिँदैन । राज्य प्रत्येक नागरिकको लागि असली अभिभावक पनि हो । नागरिकहरूकै लागि नागरिकहरूबाटै चुनिने व्यक्तिहरूबाट जनअपनत्व हुने गरी सरकार सञ्चालन भएको हुन्छ । नेपालका तीनै तहका सरकारहरू यिनै मान्यताहरूबाट निर्देशित हुन जरुरी देखिन्छ ।

**परिवर्तित सन्दर्भमा न्याय व्यवस्था**

बाह्य आक्रमणबाट बच्नु र व्यापार विस्तार गरी समृद्ध बन्नु अमेरिकी संघ निर्माणको मुल आधार थियो । प्रत्यक्ष सहभागितामूलक स्थानीय लोकतन्त्रको अभ्यास गर्नु स्वीस संघीयताको आधार थियो । केन्द्रिकृत शासनलाई विकेन्द्रिकृत गर्नु ब्राजिलको संघीयताको पूर्वाधार हो भने नेपालको संघीयताको आधार केन्द्रमा रहेको राज्य सत्तालाई संघ, प्रदेश र स्थानीय तहमा बाँडफाँड गर्नुका साथै सहभागितामूलक लोकतन्त्र एवम् गणतन्त्र स्थापित गर्नु हो । जाति, भाषा, धर्म, लिङ्ग, भेदभाव तथा जनस्तरमा रहेको असन्तुलनको अन्त्य गरी समाजवाद उन्मुख सुशासनयुक्त समावेशी तथा न्यायपूर्ण समाजको निमार्ण गर्नु पनि नेपाली संघीयताको सारभूत पक्ष मानिएको छ ।[2]

स्वतन्त्र, निष्पक्ष, पहुँचयोग्य, सक्षम र विश्वसनीय न्याय प्रणाली विकास गर्नु वर्तमान नेपालको घोषित क्षेत्रगत सोँच हो ।[3] न्याय प्रशासनलाई छिटो, छरितो, निष्पक्ष, प्रभावकारी र जनउत्तरदायी तथा न्यायिक प्रक्रियालाई सरल, अनुमानयोग्य, जवाफदेही, पारदर्शी र सूचना प्रविधिमैत्री बनाई सबैका लागि न्याय सुनिश्चित गर्दै न्यायपूर्ण समाज निर्माण गर्ने उद्देश्यले वर्तमान नेपालको न्याय प्रणाली निर्देशित छ । तीनै तहका सरकारका अवयवहरूबाट न्यायपूर्ण शासन प्रशासन सञ्चालन गरी न्यायिक प्रक्रियालाई अझै थप प्रभावकारी बनाउन हरेक सरकारहरूले राष्ट्र तथा जनताको समग्र हितमा केन्द्रित हुनुपर्दछ ।

जनस्तरको करिब ७ दशकको सङ्घर्षको परिणामस्वरुप प्राप्त भएको नेपालको संविधानले नेपालको न्याय व्यवस्था तथा राज्यशक्तिको बाँडफाँड गरेको छ । राज्यशक्ति भनेको विधायिकी, कार्यकारी र न्यायिक शक्ति नै मूख्य तीन रुपमा रहेको हुन्छ । जसरी अर्थतन्त्रको तीन खम्वे नीतिको चर्चा गरिन्छ, त्यसैगरी राज्यको मूल शक्ति भनेको पनि ३ अङ्गमा नै विभाजन गर्ने गरिन्छ । राज्यशक्तिको अधिकार पूर्णत विधायकी, कार्यकारी र न्याय व्यवस्थामा विभाजित हुन्छ भने संरचनागत रुपमा नेपालको वर्तमान संविधानको धारा ५६ र ५७ ले राज्यको संरचना संघ, प्रदेश र स्थानीय तहमा रहने व्यवस्था गरेको छ । हरेक तहका शासकीय संरचनाको रुप र प्रभाव उस्तै प्रकारको रहने संविधानले परिकल्पना गरेको छ । संघ, प्रदेश र स्थानीय तहले नेपालको स्वतन्त्रता, सार्वभौमसत्ता, भौगोलिक अखण्डता, स्वाधिनता, राष्ट्रिय हित, सर्वाङ्गीण विकास, बहुदलीय प्रतिस्पर्धात्मक लोकतान्त्रिक गणतन्त्रात्मक संघीय शासन प्रणाली, मानव अधिकार तथा मौलिक हक, कानुनी राज्य, शक्ति पृथकीकरण र नियन्त्रण तथा सन्तुलन, बुहलता र समानतामा आधारित

2 वसन्त आचार्य, स्थानीय सरकारका न्यायिक अधिकारहरू, नेपाल मेलमिलाप जर्नल, मेलमिलाप परिषद्, श्री सर्वोच्च अदालत, २०७५, वर्ष १ अंक १ पृ. ८२ ।

3 पन्ध्रौं योजनाको आधार-पत्र, नेपाल सरकार, राष्ट्रिय योजना आयोग, २०७६, पृ.३०६ ।

समतामूलक समाज, समावेशी प्रतिनिधित्व र पहिचानको संरक्षण गर्ने[4] अधिकार तथा कर्तव्य तोकेको छ। यस संवैधानिक प्रबन्धबाट स्थानीय तह समेत सरकारको महत्वपूर्ण तह बनेको छ र संघ सरकार जत्तिकै जिम्मेवार र जवाफदेही भई संविधानको अनुसूची ८ र ९ मा उल्लेखित अधिकारहरूको प्रयोग गर्न सक्षम बन्नुपर्ने देखिएको छ।

कानुनबमोजिम आफ्नो अधिकार क्षेत्रभित्रका विवाद निरुपण गर्न गाउँपालिका वा नगरपालिकाले प्रत्येक गाउँपालिकामा उपाध्यक्षको संयोजकत्वमा र प्रत्येक नगरपालिकामा उपप्रमुखको संयोजकत्वमा तीन सदस्यीय एक न्यायिक समिति रहने[5] व्यवस्था छ। यस प्रकारको स्थानीय विवाद निरुपण गर्ने न्यायिक समिति संविधानले नै पहिलो पटक व्यवस्था गरेको संरचना हो।

ऐतिहासिक संविधान सभाबाट जारी भएको सर्वाधिक महत्वको वर्तमान संविधानले स्थानीय विवाद निरुपण गर्न न्यायिक विकेन्द्रिकरणको सशक्त माध्यम मेलमिलाप, मध्यस्थता तथा स्थानीय अदालतको स्पष्ट व्यवस्था गरिएता पनि स्थानीय सरकार सञ्चालन ऐन, २०७४ मा भने मध्यस्थता र स्थानीय अदालत सम्बद्ध कुनै व्यवस्था गरेको छैन। संविधान प्रद्दत्त विवाद निरुपण तथा न्याय सम्पादनमा स्थानीय तहको न्यायिक पद्दतिको प्रभावकारी कार्यान्वयन बिना कानुनको शासन, मौलिक हक र मानव अधिकारको संरक्षण तथा प्रबर्द्धन, शान्ति, सुशासन र विकासको माध्यमबाट राष्ट्रिय जीवनको सबै क्षेत्रमा न्यायपूर्ण व्यवस्था कायम गर्न नसकिने तथ्य र तर्क अखण्डित छ, सर्वस्वीकृत छ।[6]

न्याय जनताको सारभूत अधिकार हो। न्याय हराएको समाज न सुरक्षित हुन्छ न त त्यस्तो समाजलाई जनविश्वास नै रहन्छ। राज्य, सरकार, शासन, प्रशासन सबै अवयवहरूको अन्तिम गन्तव्य न्यायपूर्ण समाजको निर्माण गर्नु हो, न्यायपूर्ण शासन सञ्चालन गर्नु हो। न्याय हरेक व्यक्तिको बाच्ने आधारशिला हो। हरपल न्याय पाउने विश्वासले मानिसहरू ढुक्कसँग हिँडडुल गर्न तथा सही कार्य गर्न उत्प्रेरित हुने गर्दछन्। एक सेकेन्ड पनि न्याय पाउने विश्वास गुम्यो भने समाज त्रसित हुन्छ, अन्यौलता पैदा हुन्छ र अकल्पित काटमार, लुटपाट जस्ता जघन्य घटनाहरू घट्न सक्दछन्। त्यसैले भनिन्छ राज्य, कानुन र शासकीय संरचनाको अन्तिम र महत्वपूर्ण गन्तव्य भनेकै न्याय हो। कानुन साधन हो भने न्याय साध्य हो। कुनै पनि राज्य सुशासनयुक्त हुनु वा कानुनी राज्यको सवलता भनेको कानुनको सही प्रयोग गरी न्यायको उच्चतम अवस्थामा पुग्नु हो।[7] न्यायपालिकाको चौथो पञ्चवर्षीय रणनीतिक योजना २०७६/०७७-२०८०/०८१ ले सबैका लागि न्याय सुनिश्चित गर्नुलाई न्यायपालिकाको परिदृश्य तोकेको छ भने छिटोछरितो र गुणस्तरीय न्याय सम्पादन गर्नुलाई योजनाले प्रमुख लक्ष्य मानेको छ। उक्त लक्ष्य प्राप्त गर्न विवाद समाधानका बैकल्पिक उपायहरूको प्रयोगलाई प्रभावकारी बनाउनुलाई योजनाको रणनीतिक उद्देश्यमा उल्लेखित छ।[8] यसबाट

---

4 नेपालको संविधानको धारा ५६(६)।

5 नेपालको संविधानको धारा २१७।

6 पूर्वपाद टिप्पणी २,पृ.८३।

7 वसन्त आचार्य, स्थानीय तहको न्यायिक प्रणाली, २३औं महानगर दिवस स्मारिका, काठमाडौं महानगरपालिका, २०७४ पृ.१।

8 न्यायपालिकाको चौथो पञ्चवर्षीय रणनीतिक योजना (२०७६/०७७-२०८०/०८१), सर्वोच्च अदालत, २०७६, पृ.१४७।

मेलमिलापलाई न्याय सुनिश्चित गर्ने मुख्य उपायको रुपमा उल्लेख भएको बुझ्न सकिन्छ। मुलुकको सर्वोच्च अदालतदेखि जिल्ला अदालतसम्म र अर्धन्यायिक निकायदेखि स्थानीय तहको वडा स्तरसम्ममा मेलमिलाप केन्द्रहरू सञ्चालित भै धेरै प्रकारका विवादहरूमा मेलमिलाप गराउने जुन अभ्यास नेपालमा प्रारम्भ भएको छ, त्यसले विवाद निरुपणमा बैकल्पिक उपायमध्ये मेलमिलाप सर्वश्रेष्ठ उपाय हो भन्ने प्रमाणित हुन्छ। स्थानीय तह जननिकटको तह हो र जनताको अधिकांश साना तिना विवाद निरुपण गर्ने तह हो। यस्तो तहमा मेलमिलाप प्रक्रिया अझ बढी प्रभावकारी र सक्षम हुनपर्छ तवमात्र न्यायको प्रत्याभूति गरी न्यायपूर्ण समाजको परिकल्पनालाई साकार पार्न सकिन्छ।

## स्थानीय सरकारको न्यायिक अधिकार

स्थानीय सरकारको अधिकारको सुनिश्चिततामार्फत स्थानीय शासन पद्दतिलाई सुदृढ गरी स्थानीय तहमा विधायिकी, कार्यकारिणी र न्यायिक अभ्यासलाई संस्थागत गर्न स्थानीय सरकार सञ्चालन ऐन, २०७४ स्थानीय तहको विशेष कानुनको रुपमा जारी भएको संघीय कानुन हो। यस कानुनले स्थानीय तहलाई स्थानीय सरकार नामाकरण गरेता पनि संविधानवमोजिमको सबै अधिकार समेट्न सकेको देखिदैन। स्थानीय सरकार सञ्चालन ऐनमा गरिएका कतिपय कानुनी व्यवस्थाहरू साविकको स्थानीय स्वायत्त शासन ऐन, २०५५ मा भएका व्यवस्था पनि कटौती गरिएको छ।

## न्यायिक समितिको अधिकारक्षेत्र

मेलमिलाप/मध्यस्थता आदि प्रक्रियाबाट विवादको शान्तिपूर्ण निरुपणको लागि स्थानीय सरकारलाई सम्बद्ध कानुनी व्यवस्थाले इजाजत प्रदान गरेको हुन्छ। यसरी साधारण प्रकृतिको स्थानीय तहमै समाधान हुन सक्ने मुद्दाहरूमा सुरु कारवाही र किनारा गर्ने अधिकार स्थानीय सरकारलाई दिनुको पछाडि राज्य/सरकारको अन्तिम उदेश्य न्याय दिनु र त्यो न्याय सरल, शीघ्र र कम शुःल्कमा व्यावहारिक पक्ष समेतको मूल्याङ्कन गरी वास्तविक न्याय निरुपण गर्नु हो।[9] नेपालको संविधानको धारा २१७ ले कानुन बमोजिम आफ्नो अधिकारक्षेत्रभित्रका विवाद निरुपण गर्न गाउँपालिका वा नगरपालिकाले प्रत्येक गाउँपालिकामा उपाध्यक्षको संयोजकत्वमा र प्रत्येक नगरपालिकामा उपप्रमुखको संयोजकत्वमा तीन सदस्यीय एक न्यायिक समिति रहने व्यवस्था गरेको छ। उक्त व्यवस्थाअनुसार कानुनले विवादहरू तोक्नुपर्ने भए बमोजिम निम्न विवादहरूको निरुपण गर्ने अधिकार न्यायिक समितिलाई तोकिएको छ[10] : -

- आली धुर, बाँधपैनी, कुलो वा पानीघाटको बाँडफाँड तथा उपयोग,
- अर्काको वाली नोक्सानी गरेको,
- चरन, घाँस, दाउरा,
- ज्याला मजुरी नदिएको,
- घरपालुवा पशुपंक्षी हराएको वा पाएको,
- जेष्ठ नागरिकको पालन पोषण तथा हेरचाह नगरेको,

9 वसन्त आचार्य र सुवास शर्मा, स्थानीय स्वायत्त शासन, ड्रिमल्याण्ड पब्लिकेसन, अनामनगर काठमाडौं, पहिलो संस्करण, २०७६ पृ. १६।

10 स्थानीय सरकार सञ्चालन ऐन, २०७४ को दफा ४७ (१)।

- नाबालक छोराछोरी वा पति पत्नीलाई इज्जत आमद अनुसार खान लाउन वा शिक्षा दिक्षा नदिएको,
- वार्षिक पच्चीस लाख रुपैँयासम्मको विगो भएको घर बहाल र घर बहाल सुविधा,
- अन्य व्यक्तिको घर, जग्गा वा सम्पतीलाई असर पर्ने गरी रुख बिरुवा लगाएको,
- आफ्नो घर वा बलेसीबाट अर्काको घर, जग्गा वा सार्वजनिक बाटोमा पानी झारेको,
- संधियारको जग्गातर्फ झ्याल राखी घर बनाउनु पर्दा कानुनवमोजिम छोड्नुपर्ने परिमाणको जग्गा नछोडी बनाएको,
- कसैको हक वा स्वामित्वमा भए पनि परापूर्वदेखि सार्वजनिक रुपमा प्रयोग हुँदै आएको वाटो, वस्तुभाउ निकाल्ने निकास, वस्तुभाउ चराउने चउर, कुलो, नहर, पोखरी, पाटी पौवा, अन्त्येष्टी स्थल, धार्मिक स्थल वा अन्य कुनै सार्वजनिक स्थलको उपयोग गर्न नदिएको वा बाधा पुऱ्याएको,
- संघीय वा प्रदेश कानुनले स्थानीय तहबाट निरुपण हुने भनी तोकेका अन्य विवाद, ।

  त्यसै गरी देहायका विवादहरूमा मेलमिलापको माध्यमबाट मात्र विवादको निरुपण गर्ने अधिकार न्यायिक समितिलाई तोकेको छ,[11]
- सरकारी, सार्वजनिक वा सामुदायिक बाहेक एकाको हकको जग्गा अर्कोले च्यापी, मिची वा घुसाई खाएको,
- सरकारी, सार्वजनिक वा सामुदायिक बाहेक आफ्नो हक नपुग्ने अरुको जग्गामा घर वा कुनै संरचना बनाउको,
- पति पत्नी बिचको सम्बन्ध विच्छेद,
- अङ्ग भङ्ग ङाहेकको वढीमा १ वर्षसम्म कैद हुनसक्ने कुटपिट,
- गाली वेइज्जती,
- लुटपिट,
- पशुपंक्षी छाडा छाडेको वा पशुपंक्षी राख्दा वा पाल्दा लापरवाही गरी अरुलाई असर पारेको,
- अरुको आवासमा अनाधिकृत प्रवेश गरेको,
- अर्काको हकभोगमा रहेको जग्गा आवाद वा भोगचलन गरेको,
- ध्वनी प्रदूषण गरी वा फोहरमैला फालेर छिमेकीलाई असर पुऱ्याएको,
- प्रचलित कानुन वमोजिम मेलमिलाप हुनसक्ने व्यक्तिवादी भई दायर हुने अन्य देवानी र एक वर्षसम्म कैद हुनसक्ने फौजदारी विवाद ।

**अधिकार क्षेत्रको प्रयोग**

समितिमा संयोजक उपाध्यक्ष/उपप्रमुख एक र अन्य दुई सदस्य हुन्छन् । समितिको अधिकार क्षेत्रको प्रयोग संयोजक र सदस्यहरूले सामूहिक रुपमा गर्नेछन् । बहुमतको राय समितिको निर्णय हुनेछ। संयोजक र अर्को एक जना सदस्य उपस्थित भएमा विवादको कारवाही र किनारा गर्न सकिने छ। संयोजक बाहेक अरु सदस्यहरूको उपस्थितिमा विवादको किनारा बाहेक अरु कारवाही गर्न सकिने छ। संयोजक पद रिक्त

11 ऐ. दफा ४७ (२) ।

भएमा न्यायिक समितिका दुई जना सदस्यको सहमतिमा कारवाही र किनारा गर्न सकिने छ। समितिका संयोजक वा सदस्यको निजी सरोकार वा स्वार्थ गासिएको वा नाताभित्रको व्यक्तिको विवाद भएमा कारवाही र किनारा गर्न हुँदैन। गाउँसभा वा नगरसभाबाट तोकिएका अन्य ३ जना सदस्यहरूबाट त्यस्तो विवादमा कारवाही र किनारा गर्नुपर्दछ।

स्थानीय सरकार सञ्चालन ऐन, २०७४ को दफा ४७(२) अन्तर्गतको विवादमा पक्षले स्थानीय तहमा नआई सिधै अदालतमा मुद्दा दायर गर्न सकिने समेतको वैकल्पिक व्यवस्था दफा ४७(३) ले गरेको छ। दफा ४७(२) मा उल्लेखित विवादहरूमा प्रतिवादी हाजिर भएको मितिले ३ महिनाभित्र मेलमिलापको माध्यमको प्रयोगबाट विवाद निरुपण गर्नुपर्नेछ। सो समयभित्र विवाद निरुपण नभएमा संवन्धित अदालतमा मिसिलसहित पक्षहरूलाई पठाइदिनुपर्ने कानुनी व्यवस्था रहेको छ। त्यस्ता विवादहरूमा निर्णय गरी निरुपण गर्ने अधिकार न्यायिक समितिलाई प्राप्त नभएको हुँदा मेलमिलापलाई विशेष महत्व दिई अदालतको कारवाहीको क्षेत्राधिकारभित्रको मुद्दाहरू समेतमा प्रारम्भमा न्यायिक समितिलाई मेलमिलाप गराउने अधिकारक्षेत्र रहेको छ।

सभ्य समाजले विवाद समाधानको शान्तिपूर्ण माध्यमलाई रोज्दछ। शान्तिपूर्ण माध्यममा पनि मेलमिलाप पद्दति विवाद समाधानको अनौपचारिक तर अति उत्तम माध्यम हो। कतिपय विवादहरू अनौपचारिक रुपमै स्थानीय निकाय, समुदाय, समाजसेबी, आफन्त र स्थानीय भद्रभलाद्मीहरूले मिलाइ दिएका हुन्छन्। अदालतको कार्यविधि र जटिल कानुनी प्रक्रिया, व्यापक खर्च, अनावश्यक हैरानी र लामो समयसम्म विवाद नटुटिङ्गिनु आदिका कारणले मानिसहरू न्यायका लागि अदालतसम्म पुग्न डराउँछन् र अन्यायमै पिल्सिन वाध्य हुन्छन्।[12] यस्तो अवस्थालाई सम्बोधन गरी विवाद स्थानीय स्तरमा नै समाधान मेलमिलापमार्फत गर्न गराउन स्थानीय सरकार सञ्चालन ऐन, २०७४ को दफा ४७(१) को विवादहरूमा समेत दफा ४९(२) बमोजिम सम्भव भएसम्म मेलमिलापको माध्यमबाट विवाद निरुपण गर्न प्रोत्साहित गर्नुपर्ने व्यवस्था गरेको छ। यसबाट स्थानीय तहको विवाद निरुपण गर्न गठित न्यायिक समितिको प्राथमिक र प्रारम्भिक कार्य मेलमिलाप गराई प्रभावकारी रुपमा विवादको निरुपण गर्नु हो। न्यायिक समितिले आफू समक्ष आएका विवादमा औचित्यका आधारमा प्रतिवादीको चल अचल सम्पति तथा बैंकमा रहेको सम्पत्ति समेत आवश्यकता अनुसार रोक्का राख्न तथा फुकुवा गर्नसक्ने देखिन्छ।

स्थानीय सरकार सञ्चालन ऐनको दफा ४९(१०) ले प्रत्येक वडामा मेलमिलाप केन्द्र गठन गर्नुपर्ने प्रबन्ध गरेबाट हरेक वडा तहमै मेलमिलापको माध्यमबाट विवाद निरुपण गर्ने न्यायिक संयन्त्रको विकास हुने देखिन्छ। हरेक स्थानीय तहमा न्यायिक समिति रहनु, न्यायिक समिति आफैले पनि मेलमिलापको माध्यमबाट विवाद निरुपण गर्न प्राथमिकता दिनुपर्ने र वडा वडा तहमा मेलमिलाप केन्द्रहरू सञ्चालनमा ल्याउनुले समुदायस्तरमा/स्थानीय जनताको निकटतम राज्य संयन्त्रको रुपमा स्थापित वडा तहमा नै मेलमिलापले संस्थागत हुन पाउने भएको छ। सानातिना विवादमा मेलमिलापको माध्यमको प्रयोगबाट न्याय

12 वसन्त आचार्य, स्थानीय निकायद्धारा विवाद समाधान : मेलमिलाप प्रभावकारी माध्यम, कानुन द्वैमासिक अंक ५४, १५ पुस २०६२, पृ. ५८।

दिनु आफैमा अति सुन्दर पक्ष हो । यस पुनीत कार्यमा स्थानीय सरकारको सक्रियता र सहभागिता अझ सुनमा सुगन्ध मान्न सकिन्छ ।

**अन्तरिम संरक्षणात्मक आदेश सम्बन्धी व्यवस्था**

न्यायिक समितिले तत्काल आदेश जारी गरी पाउँ भनी पेश भएको निवेदन उपर प्रारम्भिक छानविन गरी निवेदकको माग उचित लागेमा स्थानीय सरकार सञ्चालन ऐन, २०७४ को दफा ४९(८) बमोजिम पति पत्नीविचको सम्बन्ध, ज्येष्ठ नागरिकको संरक्षण, नाबालक सन्तान वा आश्रित व्यक्तिको हितको लागि तत्काल अन्तरिम संरक्षणात्मक आदेश जारी गर्न सक्नेछ । यस्तो अन्तरिम आदेश जारी गर्दा निवेदकको माग तत्काल सम्बोधन नगरे भविष्यमा निवेदकको हक प्रचलन गराउन कठिनाइ हुने र अन्तरिम संरक्षणको आदेश जारी नगर्दा व्यक्तिको जीवनको सुरक्षामा नै समस्या उत्पन्न हुने जस्ता गम्भिर र संवेदनशील अवस्था देखिनु पर्दछ । [13] यस्तो आदेश पीडितको हकहित संरक्षण गर्न तत्काल आवश्यक देखेमा समितिले जारी गर्न सक्ने हुन्छ । त्यस्तो आदेशमा आवश्यकताअनुसार निम्न कुराहरू समेटिने छन्ः[14]

(क) पीडितलाई बसी आएको घरमा बसोबास गर्न दिन, खान लाउन दिन, कुटपिट नगर्न र शिष्ट व्यवहार गर्न,

ख) पीडितलाई चोट पटक लागेको भए उपचार गराउन,

ग) पीडितलाई अलग बसोबास गराउनु पर्ने देखेमा सो प्रबन्ध गर्न र अलग बस्दा भरण पोषणको व्यवस्था गर्न ।

घ) पीडितलाई गाली गलौज नगर्न, धम्की नदिन वा असभ्य व्यवहार नगर्न ।

ङ) पीडितको हित र सुरक्षाका लागि अन्य उपयुक्त आवश्यक व्यवस्था गर्न ।

**न्यायिक समितिको निर्णय कार्यान्वयन सम्बन्धी व्यवस्था**

न्यायिक समितिबाट भएको अन्तिम निर्णयको प्रमाणित प्रतिलिपि ३५ दिनभित्र सम्बन्धित पक्षलाई उपलब्ध गराउनु पर्नेछ । निर्णयमा चित्त नबुझ्ने पक्षले सम्बन्धित जिल्ला अदालतमा पुनरावेदन गर्न सक्नेछ । समितिबाट भएको निर्णय कार्यपालिकाको कार्यान्वयन गर्नु गराउनु पर्ने दायित्व हुनेछ । साथै समितिले गरेको निर्णय, मिलापत्र, मिसिल कागजात, अभिलेख व्यवस्थित र सुरक्षित राख्नुपर्ने कानुनी व्यवस्था रहेको छ ।

**न्यायिक समितिको संयोजक तथा सदस्यहरूको आचार संहिता**

- पक्षपात नगर्ने,
- नाता र सरोकार भएका व्यक्तिहरूको मुद्दामा निर्णय नगर्ने,
- स्वच्छ सुनुवा गर्ने,
- कानुनको पालना गर्ने,
- डरधम्की, प्रभाव वा प्रलोभनमा निर्णय नगर्ने,

13 वसन्त आचार्य, विवाद समाधानको सर्वश्रेष्ठ उपाय, मेलमिलाप, सबैका लागि : सधैंका लागि, ड्रिमल्याण्ड पब्लिकेसन, अनामनगर काठमाडौं, प्रथम प्रकाशन, २०७६, पृ.२९८ ।

14 स्थानीय सरकार सञ्चालन ऐन, २०७४ को दफा ४९(८)

- इजलासमा बस्दा मर्यादा लायक पोसाक लगाउने, एवम्
- सुनुवामा बस्दा बिचमा संयोजक र दाँया वाँया सदस्यहरू बस्ने ।

**न्यायिक समितिको महत्व**

- स्थानीय स्तरमा न्याय सम्पादन,
- न्याय सरल, सहज, छिटो र कम शूल्कमा,
- व्यावहारिक न्याय, वास्तविक न्याय,
- आफुले निर्वाचित गरेका जनउत्तरदायी प्रतिनिधिबाट न्याय प्रवाह,
- मेलमिलापलाई विशेष प्रोत्साहित गर्ने प्रणाली,
- अनौपचारिक माध्यम,
- स्वच्छ सुनुवाको सुनिश्चितता ।

**न्यायिक समितिले पालना गर्नुपर्ने मूलभूत मान्यताहरू**

- न्यायिक समिति स्वतन्त्र र निर्भिक हुनुपर्दछ,
- न्यायिक समितिका काम कारबाही पारदर्शी हुनुपर्दछ,
- न्यायिक समितिका संयोजक र सदस्यहरू नैतिक चरित्रवान हुनुपर्दछ,
- न्यायिक समितिका संयोजक र सदस्यहरू सक्षम र योग्य हुनुपर्दछ,
- न्यायिक समितिले कुनै आग्रह पूर्वाग्रह नराखी स्वच्छ र निष्पक्ष कार्य गर्नुपर्दछ,
- न्यायिक समिति हकदैयाबारे सचेत हुनुपर्दछ,
- न्यायिक समिति हदम्यादबारे सचेत हुनुपर्दछ,
- न्यायिक समितिले समन्यायको दृष्टि राख्नुपर्दछ र विवादका पक्षहरूलाई सम्मान गर्नुपर्दछ ।

**न्यायिक समितिको पदाधिकारीको अपेक्षित भूमिका**

- आफ्नो पदीय मर्यादा कायम राखी कार्य सम्पादन गर्ने,
- निष्पक्षता, तटस्थता, स्वच्छता, पारदर्शिता र सदाचारलाई सार्थक न्यायको रुपमा आत्मासात गर्ने,
- कानुन, कानुनका मान्य सिद्धान्त, आधारभूत मूल्य मान्यता, नजिर, न्यायिक मन र विवेकको उच्च प्रयोग गर्ने,
- उच्च नैतिक आचरण प्रदर्शन गर्ने,
- आफ्नो नातागोता, आफन्त वा सम्बन्ध जोडिएका व्यक्तिहरूको विवाद निरुपणमा सहभागी नहुने ,
- न्याय गरेको भन्दा पनि न्याय परेको तर्फ केन्द्रित हुने ,
- कानुनी राज्य र कानुनको शासनको परिपालनामा ध्यान दिने ,
- स्वतन्त्रता, समानता र समताको अवधारणाअनुरुप न्यायलाई समेत आत्मासात गर्ने,
- न्यायोचित सदव्यवहारलाई उच्च स्थान दिने,
- "तथ्यमा आधारित सत्य"लाई न्यायको सूत्र मानी विवाद निरुपण गर्ने,
- लाभ-लाभको मान्यताअनुरुपको मेलमिलाप माध्यमलाई सस्थागत गर्ने र प्राथमिकतामा राख्ने,

- लोकतन्त्र, मानव अधिकार, कानुन बमोजिमको प्रक्रियालाई विशेष महत्व दिने,
- कानुन साधन हो भने न्याय साध्य । सधै न्याय पर्दैछ कि मर्दैछ भन्नेतर्फ सचेत भै न्याय मर्ने कार्य कुनै हालतमा नगर्ने,
- प्राकृतिक न्यायको सिद्धान्त, निष्पक्षताको सिद्धान्त, स्वच्छ सुनुवाई, समन्याय, हकदैया, हदम्याद, सामाजिक सौहार्दता, पक्षहरूको मर्यादा, आत्मसम्मान र सहभागिताको सिद्धान्तलाई हमेसा अनुसरण गर्ने ,
- लैङ्गिक न्याय, वातावरणीय न्याय, उपभोक्ता न्याय र दिगो विकासलाई टेवा पुग्ने गरी कार्य सम्पादन गर्ने,
- बालबालिका, जेष्ठ नागरिक, महिला, उत्पीडित समुदाय, लोपोन्मुख वर्ग , दलित, सामाजिक वहिस्करणमा परेका व्यक्ति तथा समुदायलाई विशेष ध्यान दिई राज्य निर्देशित नीति, कानुन कार्यान्वयनमा जोड दिने,
- घरेलु हिंसा, अशान्ति, अनियमितता, अभावबाट मुक्ति पाउने प्रत्येक व्यक्तिको अधिकार हो भन्ने दर्शनबाट निर्देशित हुने,
- शोषण, दमन, अन्याय अत्याचार, भ्रष्टाचार जस्ता समाज र राज्य विरुद्धका कार्यहरूलाई निरुत्साहित गर्ने,
- आफ्नो संस्कृति, संस्कार, भद्रता, सम्मान, पारम्परिक प्रेम र स्नेह, सत्कर्म, सत्चरित्र, सदाचार, राष्ट्रप्रतिको निष्ठा, समाज कल्याण, इमान्दारिता, भरोसायोग्य व्यक्तित्व, सहयोगी मन, सार्वजनिक चासो र सामाजिक विकास तथा कल्याणलाई सधै प्रश्रय दिने,
- उच्च मर्यादा, उदारता, तत्परता, इमान्दारितायुक्त निष्ठा र दयालुपनलाई प्रवर्धन गर्ने,
- न्याय पीडितलाई क्षतिपूर्ति दिलाउने भराउनेतर्फ लक्षित हुने,
- न्याय भनेको सत्य हो, सत्य खलबलिए समाजमा विनाश निम्त्याउँछ भन्ने बचनलाई न्याय सम्पादनमा सधैव मनन गर्ने,
- “दुराचारीलाई दण्ड, सदाचारीको रक्षा” भन्ने मर्मस्पर्शी भनाइलाई आत्मासात गर्ने ।

**प्रचलित कानुन तथा स्थानीय न्याय प्रणालीमा सुधारको वैध अपेक्षा**

(क) जननिकटको स्थानीय तहमा संविधानको अनुसूची ८ ले व्यवस्था गरेको मध्यस्थता प्रणाली र स्थानीय अदालतको न्यायिक संरचनाको व्यवस्था ऐनले नगर्नु र न्यायिक केन्द्रीकरणलाई प्रश्रय दिइएको छ, यसलाई संविधानतः संशोधन गर्न आवश्यक छ ।

(ख) संविधानतः व्यवस्था गरिएको न्यायिक समितिलाई ऐनले दिएको विवाद निरुपणको अधिकारक्षेत्र अत्यन्तै कमजोर हुनु तथा दफा ४७(१) मा मेलमिलाप गराउन उपयुक्त हुने प्रकृतिका विवादहरूमा निर्णय गर्ने र दफा ४७(२) मा उल्लेखित निर्णय गर्न पर्ने प्रकृतिका विवादहरूमा निर्णय गर्ने अधिकार नदिई मेलमिलापको माध्यमबाट मात्र विवाद निरुपण गर्ने र ती विवादहरूमा पक्ष सिधै अदालतमा मुद्दा लिई जान पाउने व्यवस्था गरी न्यायिक समितिलाई नाम मात्रको विवाद निरुपण गर्ने समितिको रुपमा स्थानीय सरकार सञ्चालन ऐन, २०७४ ले कमजोर बनाउको छ, जुन संविधानको व्यवस्था

र भावना विपरित छ, यसमा संशोधन आवश्यक छ ।

(ग) साविकको स्थानीय स्वायत्त शासन ऐन, २०५५ को दफा ३३ र १०१ मा न्यायिक अधिकारअन्तर्गत जग्गातर्फ साँधसीमाना, सन्धिसर्पण, बाटो वा निकास मिचेको मुद्दा, वेठवेगर सम्बन्धी मुद्दा, गरिव कंगालको महलअन्तर्गतको मुद्दा, घर बनाउनेको महलको ८ र ९ अन्तर्गतको मुद्दा, कल्याण धनको महल अन्तर्गतको मुद्दा, नासो धरौटको महलको ५ नं. अन्तर्गतको मुद्दा बाहेक अन्य मुद्दा, अंशवण्डाको १० नं. अन्तर्गतको मुद्दा, अर्काको घरभित्र जवरजस्ती पसेको, वसेको वा पस्न, वस्न खोजेको मुद्दा समेतमा सुरु कारवाही र किनारा गर्ने अधिकार स्थानीय निकायलाई भएकोमा हालको स्थानीय सरकार सञ्चालन ऐनको दफा ४७ मा ती मुद्दाहरू उल्लेख नगरी अधिकारक्षेत्रलाई सङ्कुचन गरिएको छ, यसमा संशोधनको खाँचो छ ।

(घ) स्थानीय सरकार सञ्चालन ऐन, २०७४ को दफा ४७(२) ले मेलमिलाप प्रक्रिया मात्रबाट विवाद निरुपण गर्ने अधिकार तोकिनुबाट स्थानीय तहमा उत्पन्न हुने अधिकांश विवादहरूमा खासै सत्य तथ्य बुझी न्यायिक मन तथा विवेक प्रयोग गरी व्यावहारिक न्याय दिने कार्यमा न्यायिक समितिको भूमिका नरहने, ३ महिनाभित्र मेलमिलाप हुन नसकेमा सक्कलै मिसिलसहित पक्षहरूलाई सम्बन्धित अदालतमा पठाइदिनुपर्ने व्यवस्था भएबाट स्थानीय सरकारको न्यायपालिका हो भनी भनिने न्यायिक समिति र समितिका पदाधिकारीहरूको न्याय सम्पादनमा रहेको कमजोर अवस्थालाई सहजै अनुमान गर्न सकिन्छ । यसलाई पुनर्विचार गरेर सच्च्याउन आवश्यक छ ।

**न्यायिक समितिको पहिलो राष्ट्रिय सम्मेलन**

काठमाडौं महानगरपालिकाको आयोजनामा सम्वत् २०७९ चैत्र १५ र १६ गते काठमाडौंमा देशभरिका न्यायिक समितिका पदाधिकारीहरू करिब १,४४५ जना भेला भएर न्यायिक समितिको पहिलो राष्ट्रिय सम्मेलन भव्यताका साथ सम्पन्न गरे र सम्मेलनबाट एघार बुँदे घोषणा पनि जारी भयो । उक्त घोषणाले पनि न्यायिक समितिको क्षमता विकास गर्ने, क्षेत्राधिकार विस्तार गर्ने र देशभरिका न्यायिक समितिको काम कारवाहीलाई थप प्रभावकारी बनाउन, असल अभ्यास र सफल अनुभव साटासाट गर्न न्यायिक समितिको केन्द्रिय, प्रादेशिक र जिल्लास्तरीय मञ्चहरू गठन गर्न पनि सुझाव गरेको देखिन्छ ।

**अन्त्यमा**

विवादका कुनै पनि पक्षतर्फ नढल्की, कुनै आग्रह वा पूर्वाग्रह नराखी, निष्पक्ष, तटस्थ र न्याय पर्ने गरी स्वच्छ सुनुवाइको माध्यमबाट स्थानीय विवाद निरुपण गर्नु न्यायिक समितिको परम दायित्व हो । असल नियत, न्यायिक मनको प्रयोग र निष्पक्ष तरिकालाई न्यायिक समितिले आफ्नो गहना सम्झी सकभर मेलमिलापबाटै विवादको निरुपण गर्न कानुनले निर्दिष्ट गरेको छ । प्राकृतिक न्यायको सिद्धान्तलाई न्यायिक समितिले न्याय निरुपण गर्दा मार्गदर्शनको रुपमा स्वीकार गर्नुपर्ने हुन्छ । कागजी न्यायभन्दा पनि बास्तविक न्याय पर्नेगरी काम कारवाहीलाई थप व्यवस्थित गर्दै जानुपर्दछ । स्थानीय विवाद निरुपण कार्यविधि जारी गरी न्यायिक समितिले स्थानीय विवादको निरुपणलाई व्यवस्थित, पारदर्शी तथा प्रभावकारी बनाउन वाञ्छनीय देखिन्छ ।



# संविधान र स्थानीय तहका उपलब्धि र चुनौती



✍ अजय अनुरागी*

नेपालको संविधानले मुलुकमा तीन तहको सरकार रहने परिकल्पना गरेअनुसार मुलुक संघीय संरचनामा गएको करीब आठ वर्ष भएको छ। संविधानको भाग- ५ 'राज्यको संरचना र राज्यशक्तिको बाँडफाँड'अन्तर्गत धारा ५६ (१) मा प्रस्टसँग भनिएको छ-"संघीय लोकतान्त्रिक गणतन्त्र नेपालको मूल संरचना संघ, प्रदेश र स्थानीय तह गरी तीन तहको हुने छ।"

तीन तहका सरकारबिच शक्ति बाँडफाँडका क्रममा हाम्रो संविधान र त्यसअन्तर्गत बनेका कानुनहरूले संघपछि स्थानीय तहलाई निकै शक्तिशाली बनाएका छन्। संविधानको अनुसूची ८ ले माध्यमिक तहसम्मको शिक्षा, आधारभूत स्वास्थ्य र सरसफाइ, जग्गा धनी प्रमाण पूर्जा वितरणदेखि स्थानीय सडक, सिंचाइ, स्थानीय कर, नगर प्रहरी, सहकारीदेखि एफ.एम. रेडियो सञ्चालनसम्मको अधिकार स्थानीय तहलाई दिएको छ।

संघीयतालाई अझै परिष्कृत बनाउँदै जाने क्रममा नागरिकले प्रत्यक्षरूपमा लिनुपर्ने प्रायः सेवा स्थानीय तहमै पुऱ्याइएको छ। अधिकार जति बढ्यो, स्थानीय तहमा पुग्ने बजेट पनि त्यही अनुपातमा बढेको छ। त्यसैले स्थानीय तहलाई 'गाउँको सिंहदरबार' समेत भन्न थालिएको छ।

केन्द्रीकृत शासन व्यवस्थामा एउटा सिंहदरबार रहेकोमा अहिले गाउँगाउँमा ७५३ वटा सिंहदरबार पुगेका छन्। स्थानीय तह जनतासँग प्रत्यक्ष जोडिएको गाउँको सरकार हो। त्यहाँबाट प्रवाह हुने सेवा जनताको दैनन्दिन काममा सबैभन्दा पहिला जोडिन्छ। संघ, प्रदेश र स्थानीय तह गरी तीन तहको सरकारको संरचना संविधानमा नै सुनिश्चित भएपछि वडा-वडा, टोल-टोलमा सिंहदरबार पुगेको हो।

फलस्वरूप दैनन्दिन जनताले स्थानीय तहको अन्तिम निकाय वडा कार्यालयबाट नै सिंहदरबारको अनुभूति गर्न थालेका छन्। जन्म दर्ता, विवाह दर्ता, मृत्यु दर्ता, बसाइसराइ, नागरिकताको सिफारिसदेखि अन्य

---

* पत्रकार तथा लेखक

विभिन्न घटना विवरणको कागजात तयार पार्नेदेखि अभिलेख व्यवस्थापनको काम पनि स्थानीय तहबाटै भइरहेको छ । जग्गा दर्ता प्रमाण पूर्जाका लागि सिफारिस गर्नेदेखि अन्य विभिन्न प्रकारका सिफारिसको काम गरेर स्थानीय तहले नागरिकलाई गाउँ मै सिंहदरबारको अनुभूति दिलाउन सफल भएको हो ।

टोलको फोहोरमैला व्यवस्थापन गर्नुपर्ने काम होस् वा अवरुद्ध भएको ढल-नालाको निकासका लागि पनि जनता अहिले स्थानीय तहमा भर पर्नुपरेको छ । खानेपानीको लागि चापाकल वितरणदेखि कृषितर्फ अनुदानमा बीउ, बिजन होस् वा सिंचाइको काम पर्दा पनि पालिकाको वडाले जनतालाई सेवा प्रदान गरिरहेको छ ।

संघीय सरकारको कुनै अनुदान होस् वा प्रदेश सरकारको अनुदानदेखि विकास निर्माणका कामसमेत त्यही स्थानीय तहको संरचनाबाट नै जनताले लाभ लिन पाएका छन् ।

कुनै पनि स्थानीय समस्या आउँदा त्यसको समाधानको लागि पहलकदमी लिने पहिलो निकाय नै स्थानीय तह बनेको छ । यति मात्र होइन, प्राकृतिक विपद् आउँदा जनताको घरदैलोसम्म पुग्ने पहिलो सरकार पनि स्थानीय तह नै बनेको छ । बाढी आउँदा होस् वा पहिरो जाँदा होस्, स्थानीय जनप्रतिनिधिले नै सबैभन्दा पहिले राहत, उद्धारजस्ता कामका लागि अग्रसरता लिएको हुन्छ । जनताले त्यसको प्रत्यक्ष अनुभूति कोभिडमा गर्न पाए ।

विश्वव्यापी रूपमा कोभिड महामारीको संक्रमण फैलिएपछि कामको सिलसिलामा विदेश पुगेका नेपाली होस् वा देशकै अन्य सहरबाट पनि आफनो थातथलोमा फर्किंदाका अवस्थामा जनताले स्थानीय तहको भूमिकालाई प्रत्यक्ष अनुभूति गर्न पाएका थिए । बाहिरबाट आएकाहरूको उचित बासका लागि स्थानीय तहले गरेको क्वारेन्टीन व्यवस्थापनदेखि कोभिडका बिरामीलाई कोभिडको अस्पतालसम्म पुऱ्याउने भूमिका प्रशंसनीय थियो ।

विपद् आउँदा सबैभन्दा पहिले स्थानीय तहका वडा सदस्यदेखि वडा अध्यक्ष हुँदै पालिका प्रमुखसम्मको भूमिकालाई सराहना नै गर्नुपर्छ । नेपालको संविधानले पनि विपद् व्यवस्थापनको अधिकार स्थानीय तहलाई प्रदान गरेको छ ।

स्थानीय तहले पाएको अधिकारकै प्रयोग गरेर कतिपय स्थानीय तह सामुदायिक विद्यालयको खस्किएको गुणस्तर उकास्न प्रयासरत देखिन्छन् । आधारभूत र माध्यमिक शिक्षा हेर्ने अधिकार संविधानले स्थानीय तहलाई दिएको छ । विद्यालयको नियमित अनुगमन गर्नेदेखि शैक्षिक गुणस्तर सुधार गर्नका लागि केही स्थानीय तहले लिएको पहलकदमीलाई उदाहरणको रूपमा लिन सकिन्छ ।

सामुदायिक विद्यालयमा विद्यार्थीलाई टिकाउनका लागि टिफिनमा दिवा खाजा कार्यक्रमदेखि छात्राहरूलाई प्रोत्साहन गर्ने उद्देश्यले साइकल वितरण, शैक्षिक सामग्री वितरणदेखि उच्च शिक्षा अध्ययनका क्रममा एम.बी.बी.एस. अध्ययनका लागि गरिब तथा जेहेन्दार विद्यार्थीलाई छात्रवृति प्रदान गरेका छन् ।

त्यसैगरी कतिपय स्थानीय तहले सामाजिक सुरक्षाका लागि विभिन्न कार्यक्रमहरू ल्याएका छन् । सुत्केरी भत्ता, नवजात शिशुलाई पोषण भत्ता, छोरी जन्मिए भत्तादेखि ज्येष्ठ नागरिकहरूलाई पोशाक वितरणदेखि अन्य विभिन्न किसिमका भत्ता वितरण गरिरहेका छन् ।

माथि उल्लेख गरिएका केही उदाहरण मात्र हुन् । धेरै स्थानीय तहले जनतालाई राहत दिने गरी थुप्रै कार्यक्रमहरू सञ्चालन गरेका छन् । तर, यी सबै राम्रा कामका बाबजुद स्थानीय तहले संविधान प्रदत अधिकारलाई राम्रो तरिकाले उपभोग गर्न पाएका छैनन् ।

नेपालको संविधानले स्थानीय तहलाई विभिन्न अधिकारहरू प्रदान गरेको भए पनि अपेक्षाकृत सफलता भने हासिल हुनसकेको छैन । तीन तहसहितको संघीय लोकतान्त्रिक संविधान जारी भएको आठ वर्षपछि पनि प्रदेश र स्थानीय तहले पाएका अधिकारहरूको पूर्णरुपेण उपयोग गर्न नसक्दा अपेक्षाकृत उपलब्धि देखिएको छैन । त्यसो हुन नसक्नुमा स्थानीय तहका प्रतिनिधि मात्र दोषी छैनन् । संविधान जारी भएपछि पहिलो स्थानीय तहको निर्वाचनबाट चुनिएर आएका जनप्रतिनिधिहरूले आफ्नो अधिकार बुझ्नमै धेरैजसो समय खेर फाले । संविधानप्रदत अधिकारलाई प्रयोग गरेर आफ्नो गाउँ, नगरलाई नमुना गाउँ, नगरको रूपमा विकसित गर्न भने स्थानीय सरकार चुकेकै देखिन्छ । कहिले प्रमुख/अध्यक्ष र उपप्रमुख/उपाध्यक्षबिचको विवाद त कहिले प्रमुख/अध्यक्ष र प्रमुख प्रशासकीय अधिकृतबिचको विवाद, कहिले प्रमुख प्रशासकीय अधिकृत र लेखा अधिकृतबिचको विवादका कारण धेरैजसो स्थानीय तहले काम नै गर्न पाएनन् ।

त्यसैगरी कार्यपालिकामा बहुमत नहुँदा कार्यपालिका सदस्यबिच विवाद हुँदा नगर सभा/गाउँ सभा पनि कतिपय स्थानीय तहले समयमा सम्पन्न गर्न नसक्दा समयमा बजेट समेत विनियोजन हुन सकेन । कतिपय स्थानीय तहको विवाद अदालतसम्म पुग्दा कुनैकुनै स्थानीय तहले सिङ्गो आर्थिक वर्षकै बजेट पनि चलाउन पाएनन् ।

शक्ति पृथकीकरणको सिद्धान्तअनुसार व्यवस्थापिका, कार्यपालिका र न्यायपालिका छुट्टाछुट्टै राज्यको अङ्ग हुन्छ । तर, स्थानीय तहमा भने निर्वाचित पधाधिकारीहरूले व्यवस्थापिका, कार्यपालिका र न्यायपालिकाको एकसाथ अभ्यास गर्न पाएका छन् ।

व्यवस्थापिकाको अभ्यास गर्दै गाउँ सभा/नगर सभा गर्ने गरिएको छ । आगामी आर्थिक वर्षको नीति तथा कार्यक्रम प्रस्तुत गर्नेदेखि बजेटसम्म पारित गर्ने गाउँ/नगर सभा सदस्यहरूबिचको विवादका कारण समयमा हुन नसकेको धेरै घटनाहरू बाहिरिए । कतिपय स्थानीय तहमा प्रमुख/अध्यक्ष नै अल्पमतमा परेको अवस्थामा गाउँ सभा/नगर सभा नै समयमा हुन सकेन ।

महत्वपूर्ण निर्णयहरू कार्यपालिकाको बैठकबाट लिनुपर्ने हुन्छ । तर, कतिपय स्थानीय तहमा प्रमुख/अध्यक्ष नै अल्पमतमा परेका कारण धेरैजसो निर्णयहरू कार्यपालिका बैठकबाट गराउन नसकेको उदाहरणहरू पनि देखिए ।

पालिका प्रमुखहरू विकास निर्माणको काम गर्नुभन्दा पनि माइन्युट लिएर कार्यपालिका सदस्य तथा सभा सदस्यको घरघरमा पुऱ्याएर हस्ताक्षर गराउनमै बढी शक्ति खर्चिएको देखिन्छ ।

त्यसैगरी न्यायपालिकाको समेत काम गर्ने गरी न्यायिक समितिको अधिकार संविधानले स्थानीय तहलाई दिएको छ । सबै स्थानीय तहले उपप्रमुख/उपाध्यक्षको नेतृत्वमा न्यायिक समिति गठन गरेपनि कानुन अधिकृतको अभावमा प्रभवकारी तरिकाले न्याय सम्पादन गर्न सकेको छैन ।

सम्बन्ध विच्छेद, साँध सीमानाको विवाद, जग्गा च्यापेको विवाद, नक्सा विवाद, घर निर्माणको विवाद जस्ता

उजुरीहरू न्यायिक समितिमा पर्ने गरेको छ। न्याय सम्पादन गर्नका लागि आवश्यक तालिमको अभाव, सहजीकरणका लागि जनशक्ति कानुन अधिकृत अभावमा धेरै जसो स्थानिय तहमा न्यायिक समितिले कामै गर्न सकेका छैनन् ।

केही नगरपालिका, उपमहानगरपालिका र महानगरपालिकाहरूमा भने छुट्टै इजलाश नै गठन गरी न्यायिक समितिले न्याय सम्पादन गर्दै आएको पनि छ। तर, न्यायिक समितिले गरेको निर्णय कार्यान्वयन भने हुनसकिरहेको छैन । अदालतले गरेका फैसला कार्यान्वयन नहुँदा अवहेलना मुद्दामा कैद र जरिवाना गर्ने गरिन्छ तर न्यायिक समितिको निर्णय कार्यान्वयन नहुँदा के कस्तो कारवाही गर्ने भन्ने कुनै कानुन नै छैन । त्यसकारण पनि न्यायिक समिति प्रभावकारी हुनसकेको छैन ।

नेपालको संविधानको अनुसूची-८ मा स्थानीय तहको एकल अधिकार सूचीको व्यवस्था गरिएको भए पनि स्थानीय तहले संघीय ऐनको अभावमा प्राप्त अधिकारहरूलाई पनि प्रयोग गर्न पाएका छैनन् ।

संविधानले स्थानीय तहलाई नगर प्रहरी, सहकारी संस्था, एफ.एम. सञ्चालन, स्थानीय सेवाको व्यवस्थापन, स्थानीय तथ्यांक र अभिलेख संकलनको अधिकार प्रदान गरेको छ ।

त्यसैगरी आधारभूत र माध्यमिक शिक्षा, आधारभूत स्वास्थ्य र सरसफाई, स्थानीय बजार व्यवस्थापन, वातावरण संरक्षण र जैविक विविधता, स्थानीय सडक, ग्रामीण सडक, कृषि सडक, सिँचाइसमेतको काम गर्ने अधिकार स्थानीय तहलाई प्रदान गरिएको छ। स्थानीय अभिलेख व्यवस्थापन, घरजग्गा धनी पूर्जा वितरण, कृषि तथा पशुपालन, कृषि उत्पादन व्यवस्थापन, पशु स्वास्थ्य, सहकारी हेर्ने अधिकार पनि स्थानीय तहलाई संविधानले प्रदान गरेको छ ।

ज्येष्ठ नागरिक, अपाङ्गता भएका व्यक्ति र अशक्तहरूको व्यवस्थापन, बेरोजगारको तथ्यांक संकलन, कृषि प्रसारको व्यवस्थापन, सञ्चालन र नियन्त्रण, खानेपानी, साना जलविद्युत आयोजना , वैकल्पिक उर्जा, विपद् व्यवस्थापन, जलाधार, वन्यजन्तु, खानी तथा खनिज पदार्थको संरक्षण, भाषा, संस्कृति र ललितकलाको संरक्षण र विकासको अधिकार पनि स्थानीय तहले पाएको हो ।

स्थानीय कर (सम्पत्ति कर, घर वहाल कर, घर जग्गा रजिष्ट्रेसन शुल्क, सवारी साधन कर), सेवा शुल्क दस्तुर, पर्यटन शुल्क, विज्ञापन कर, व्यवसाय कर, भूमिकर (मालपोत), दण्ड जारिवाना, मनोरञ्जन कर, मालपोत संकलन गर्न पाउने अधिकार स्थानीय तहले पाएको हो ।

त्यसैगरी संविधानको अनुसूची-९ मा संघ, प्रदेश र स्थानीय तहको अधिकारको साझा सूचीसमेत उल्लेख छ ।

सहकारी, शिक्षा, खेलकुद र पत्रपत्रिका, स्वास्थ्य, कृषि, विद्युत, खानेपानी, सिँचाइजस्ता सेवाहरू तीनै तहको साझा सूचीमा राखिएको छ। सेवा शुल्क, दस्तुर, दण्ड जरिवाना तथा प्राकृतिक स्रोतबाट प्राप्त रोयल्टी, पर्यटन शुल्क, वन, जंगल वन्यजन्तु, चराचुरुंगी, जल उपयोग, वातावरण, पर्यावरण तथा जैविक विविधता पनि साझा अधिकारको सूचीमा राखिएको छ ।

खानी तथा खनिज, विपद व्यवस्थापन, सामाजिक सुरक्षा र गरिबी निवारण, व्यक्तिगत घटना, जन्म, मृत्यु,

विवाह र तथ्यांक, पुरातत्व, प्राचीन स्मारक र संग्रहालय, सुकुम्बासी व्यवस्थापन, प्राकृतिक स्रोतबाट प्राप्त रोयल्टी, सवारी साधन अनुमति प्रदान गर्ने अधिकार संविधानले साझा सूचीमा राखेको छ ।

साझा सूचीको अधिकारका विषयमा धेरैजसो स्थानीय तहले अधिकार प्रयोग गर्न नपाए पनि एकल अधिकार क्षेत्रभित्रको कामहरू स्थानीय तहले गरिरहेका छन् ।

गाउँपालिका तथा नगरपालिकाको एकल अधिकार सम्बन्धमा स्थानीय सरकार संचलान ऐन,२०७४ को दफा (११) मा विस्तृत खुलाइएको छ । त्यसैलाई टेकेर स्थानीय तहले आफ्ना कामहरू गरिरहेका छन् ।

हरेकजसो स्थानीय तहले आफ्नै नगर प्रहरी गठन गरी नगरमा परिचालन गरेका छन् । नगर प्रहरीको गठन, सञ्चालन, व्यवस्थापन, नियमन तथा नगर प्रहरी सम्बन्धी नीति, कानुन र मापदण्डको निर्माण तथा कार्यान्वयनदेखि नगर प्रहरीलाई के कामका लागि परिचालन गर्न सकिने व्यवस्थाअनुसार खास गरेर नगरपालिका, उपमहानगरपालिकादेखि महानगरपालिकाहरूले नगर प्रहरी गठन गरी परिचालन गर्दै आएको पाइएको छ ।

२०७४ सालको निर्वाचनपछि धेरैजसो नगरपालिकाहरूले सडक निर्माणका क्रममा हुने बाधा अवरोध हटाउन तथा मापदण्डअनुसार बाटो कायम गराउन नगर प्रहरी परिचालन गरेका थिए । अतिक्रमण गरिएका सार्वजनिक जग्गादेखि सडकसम्म साइट क्लियर गराउन नगर प्रहरी प्रभावकारी देखिएको थियो । नगर प्रहरी भर्नाको प्रक्रियामा भने धेरैजसो ठाउँमा विवाद देखिएको थियो ।

त्यसैगरी सहकारी संस्था सम्बन्धी स्थानीय नीति, कानुन, मापदण्डको निर्माण, कार्यान्वयन र नियमन गर्ने अधिकार पनि स्थानीय तहलाई प्रदान गरिएको छ । एक सय वाटसम्मको एफ.एम. रेडियो सञ्चालन अनुमति, नवीकरण, नियमन र खारेजीसहित प्रदेश कानुनको अधीनमा रही एफ.एम. सञ्चालन सम्बन्धी अन्य कार्य गर्न सकिने भन्ने अधिकार प्रदान गरिएको छ ।

माथि उल्लेख गरिएका तमाम अधिकारहरू संविधानले दिएको भए पनि स्थानीय तहले संघीय कानुनको अभावमा केही काम गर्न नै पाएका छैनन् । जस्तै, संविधानमा आधारभूत र माध्यमिक शिक्षा हेर्ने अधिकार स्थानीय तहलाई दिएको छ । तर, माध्यमिक शिक्षा भए पनि १० कक्षा हेर्ने वा १२ कक्षासम्म हेर्ने भन्ने अन्यौलता छ । शिक्षकहरूको तलब स्थानीय तहले नै निकासा गरे पनि शिक्षकको अन्तरपालिका सरुवासमेत गर्न पाउँदैनन् । शुरुमा केही स्थानीय तहले शिक्षक सरुवा गरे पनि अदालतले सरुवा बदर गरिदिएको थियो । संघीय शिक्षा ऐन संघीय संसदले नबनाइदिएको कारण स्थानीय तहले चाहेर पनि सामुदायिक विद्यालयमा केही गर्न सकेका छैनन् । विद्यालय व्यवस्थापन समितिको अध्यक्ष वडाध्यक्ष हुने प्रावधान पनि अदालतले खारेज गरिदिएपछि सामुदायिक विद्यालयप्रति स्थानीय तहको पकड बन्न सकेको छैन ।

त्यसैगरी संघीय निजामती ऐन नबनेका कारण कर्मचारी परिचालनमा पनि समस्या हुने गरेको छ । महानगरमा सचिव, उपमहानगरमा सहसचिव, नगरपालिकामा उपसचिव र गाउँपालिकामा शाखा अधिकृतले प्रमुख प्रशासकीय अधिकृतको रूपमा काम गर्छन् । त्यसको खटन पटन तथा सरुवासमेत संघीय सरकारको संघीय मामिला तथा सामान्य प्रशासन मन्त्रालयले गर्ने गर्छ । तर संघीय मामिला तथा सामान्य प्रशासन मन्त्रालयले स्थानीय तहमा प्रशासन सेवाका प्रमुख प्रशासकीय अधिकृत पठाउन नसकेको दृष्टान्त धेरै छन् ।

स्वास्थ्य, शिक्षा, कृषि, पशु, प्राविधिकतर्फका कर्मचारीहरूलाई निमित्त प्रमुख प्रशासकीय अधिकृतको रूपमा जिम्मेवारी दिएर संघीय सरकारले पठाउने गरेका कारण पनि स्थानीय तहले गति लिन सकेको छैन । त्यति मात्र होइन, धेरै जसो स्थानीय तह लामो समयसम्म प्रमुख प्रशासकीय अधिकृतविहीन हुन पुग्दा स्थानीय तहका प्रतिनिधि स्थानीय तहमा काम गर्नुको साटो महिनेपिच्छे संघीय मामिला तथा सामान्य प्रशासन मन्त्रालयमा धाउन बाध्य भएका छन् ।

कृषि, स्वास्थ्य, सिँचाइदेखि विभिन्न काम गर्नका लागि संघीय कानुनको अभाव छ । संघ सरकारले काम नगरिदिएका कारण स्थानीय तह असफल हुँदै गएको देखिन्छ । त्यसै गरी संघ र प्रदेशको साझा अधिकार रहेको हकमा प्रदेश सरकारले पनि समयमा कानुन नबनाइदिँदा स्थानीय तह हात बाँधेर बस्न बाध्य छन् ।

यसका बाबजुद स्थानीय तहमा सबैभन्दा बढी भ्रष्टाचार छ । स्थानीय चुनाव भएर जनप्रतिनिधिहरू आएपछिको ६ वर्षमा एक तिहाइभन्दा बढी जनप्रतिनिधि (प्रमुख/अध्यक्ष र वडाध्यक्ष) भ्रष्टाचारमा मुछिएको अनुमान छ । स्थानीय तहका कर्मचारीहरूसमेत जोडिएका प्रकरण हेर्ने हो भने दिनदिनै कुनै न कुनै स्थानीय तहका जनप्रतिनिधि वा कर्मचारीउपर भ्रष्टाचार मुद्दा दायर भइरहेको छ ।

अख्तियार दुरुपयोग अनुसन्धान आयोगमा बर्सेनी हजारौं उजुरी पर्नुका साथै सयौं मुद्दासमेत विशेष अदालतमा दायर हुने गरेको छ । जनतालाई सुशासनको प्रत्याभूति दिलाउने हो भने पनि सबैभन्दा पहिला स्थानीय तहमै सुशासन हुनु आवश्यक छ । मुलुक दिनप्रतिदिन आर्थिक रूपमा कमजोर बनिरहेको छ । नागरिकमा कुनै उत्साह छैन, जसरी हुन्छ, युरोप अमेरिका पुग्ने ध्याउन्नमा प्रायः लागेका छन् । युवा पुस्ता मुलुकमा बस्नै तयार छैन । जताततै निराशा नै निराशा छ । त्यसको मुख्य कारण राज्यका विभिन्न तहमा विद्यमान भ्रष्टाचार नै हो । कम्तीमा स्थानीय तहमा मात्रै पनि सुशासन कायम हुन सक्यो भने मुलुकको आर्थिक विकासमा निकै ठुलो सहयोग पुग्ने छ । जनतामा राज्यप्रति गुम्दै गएको विश्वास फर्किने छ र कम्तीमा पनि यहीँ गुजारा गरिरहेका तथा सानोतिनो पेशा व्यवसाय गरेर बसेका नागरिक स्वदेशमै रोकिने अपेक्षा गर्न सकिन्छ ।



# समाजवादका आधारहरू निर्माण गर्दै भक्तपुर नगरपालिका



✍ **दामोदर सुवाल***

भक्तपुर नगरपालिका क्षेत्रफलको हिसाबले नेपालकै सानो र पुरानो नगरपालिकामध्ये एक हो । २००६ सालमा स्थापना भएको यस नगरपालिका संघीय राजधानी काठमाडौंबाट १३ कि.मी. पूर्वमा अवस्थित ६.८८ वर्ग कि.मी. क्षेत्रफलमा फैलिएको सांस्कृतिकनगर हो । काठमाडौं उपत्यकाका आदीवासी जनजाति नेवारहरूको मुख्य बसोबास रहेको काठमाडौं, ललितपुर र भक्तपुर सहरहरूमध्ये भक्तपुर सबैभन्दा पुरानो नगर पनि हो । १२ औंदेखि १५ औं शताब्दीसम्म नेपाल मण्डलको राजधानी सहर रहेको भक्तपुर १८ औं




* सूचना अधिकारी, भक्तपुर नगरपालिका, भक्तपुर

शताब्दीसम्म एउटा छुट्टै राज्य थियो । मध्यकालीन वास्तु र सम्पदाको लागि अत्यन्त महत्वपूर्ण भक्तपुर मौलिक नेवारी जात्रा पर्व जीवन शैलीको लागि पनि एक महत्वपूर्ण नगर हो । नाचगानको राजधानीको रुपमा प्रख्यात भक्तपुर नगरपालिका मूर्त मात्र होइन अमूर्त सम्पदाहरूका लागि पनि प्रसिद्ध छ ।

१५ वर्षसम्म जनप्रतिनिधिविहीन अवस्थापछि २०७४ सालको स्थानीय तहको निर्वाचनबाट सबै स्थानीय तह जनप्रतिनिधिको नेतृत्वमा पुनः सञ्चालनमा आयो । भक्तपुर नगरपालिकामा नेपाल मजदुर किसान पार्टीका शतप्रतिशत जनप्रतिनिधिहरू निर्वाचित हुनुभयो । निर्वाचनको दौरानमा जारी गरेका घोषणा पत्र र प्रतिबद्धताअनुसार स्थानीय तहलाई क्रियाशील बनाइयो । जनप्रतिनिधिहरूले २०७२ सालको विनाशकारी भूकम्पबाट क्षतिग्रस्त सम्पदाहरूको पुनःनिर्माणलाई प्राथमिकतामा राख्नुभयो । उहाँहरूले जनताका आधारभूत आवश्यकताहरू शिक्षा, स्वास्थ्य, सरसफाई, विकास निर्माण, सम्पदा संरक्षण र सामाजिक विकासका विभिन्न गतिविधिमा विभिन्न कार्यक्रम र योजनाहरू कार्यान्वयन गर्दै जानुभयो । नेपालको संविधानले प्रदान गरेका अधिकारलाई प्रयोग गर्दै स्थानीय तहले सम्पादन गर्नुपर्ने विभिन्न क्षेत्रका लागि आवश्यक ऐन, नियम, निर्देशिका र कार्यविधिहरू तयार गर्दै नगरपालिकाको कामलाई अगाडि बढाउँदै लगियो । मितव्ययिता, आर्थिक अनुशासन र पारदर्शितालाई विशेष प्राथमिकतामा राख्दै विभिन्न प्रकाशन र प्रसारणलाई अगाडि बढाइयो । भक्तपुर नगरपालिकाले नेपालको संविधान जारी भएपछि स्थानीय तहमा निर्वाचनपश्चात नेपालको संविधान (२०७२) र स्थानीय सरकार सञ्चालन ऐन, २०७४ ले व्यवस्था गरेको कानुनी अधिकारहरूको सदुपयोग गर्दै विगत ६ वर्षमा सम्पन्न गरेका केही महत्वपूर्ण कामहरूलाई निम्नानुसार बुँदागत रुपमा यहाँ उल्लेख गर्ने प्रयास गरिएको छ ।

**शिक्षा**

भक्तपुर नगरपालिकाले “एक घर एक स्नातक” अभियानलाई पूर्णता दिने उद्देश्यका साथ २०५६ मा ख्वप उमावि स्थापना गरी शैक्षिक अभियान सुरु गरेको थियो । हाल दुई वटा इन्जिनियरिङ कलेजसहित उच्च शिक्षा प्रदान गर्ने आठ वटा शैक्षिक संस्थाहरू सञ्चालनमा छन् ।



भक्तपुर नगरपालिकाद्वारा सञ्चालित ती कलेजहरूमा देशभरिका ७ हजारभन्दा बढी विद्यार्थीहरू अध्ययनरत

छन् । भक्तपुर नगरपालिकाले न्यून शुल्कमा गुणस्तरीय शिक्षा प्रदान गर्दै आएको छ । गरिब र जेहेन्दार विद्यार्थीहरूका लागि वार्षिक चार करोडभन्दा बढी रकम बराबरको छात्रवृत्तिको व्यवस्था र गरिब विद्यार्थीहरूलाई रु.५ लाखसम्मको शैक्षिक ऋण प्रदान गर्दै आएको छ । गरिबीको कारण कुनै पनि नगरबासी उच्च शिक्षा पाउनबाट बञ्चित हुनपर्ने अवस्था भक्तपुरमा छैन । हाल करिब पाँच सय विद्यार्थीहरू नगरपालिकाको शैक्षिक ऋणमा उच्च शिक्षा हासिल गरिरहेका छन् । इतिहास, भूगोल, राजनीति शास्त्र, संस्कृति, नेपाल भाषा, अर्थशास्त्र, दर्शन शास्त्रलगायतका विषयमा उच्च शिक्षा अध्ययन गर्ने विद्यार्थीहरूका लागि स्नातक तहदेखि विद्यावारिधि तहसम्म पूर्ण छात्रवृत्तिको व्यवस्था गरिएको छ ।




भक्तपुर नगरपालिकाले नगर क्षेत्रका सामुदायिक र संस्थागत विद्यालयहरूबच शैक्षिक गुणस्तरमा प्रतिस्पर्धाको नीति लिएको छ । सामुदायिक विद्यालयहरू विगतको तुलनामा गुणस्तरमा निकै सुधार आएको छ । नगरपालिकाले छुटै परीक्षा समिति गठन गरी कक्षा ५, ८ र १० (पूर्व एसइई) को नगर स्तरीय परीक्षाको व्यवस्था गर्दै आएको छ । कक्षा १ देखि ८ सम्म स्थानीय पाठ्यक्रम बनाई लागु गरिएको छ । समय समयमा अन्तरविद्यालय खेलकुद, चित्रकला, वक्तृत्वकला प्रतियोगिता जस्ता शैक्षिक क्रियाकलाप पनि गर्दै आएको छ । पठन संस्कृतिको विकासको लागि नगर स्तरीय जनज्योति पुस्तकालयको व्यवस्था गरिएको छ । त्यसको स्तरोन्नत्ति गर्दै इ-पुस्तकालयको व्यवस्था गरिएको छ । साथै नगरभित्र रहेका सबै सामुदायिक पुस्तकालयहरूको भौतिक सुधारको लागि आर्थिक सहयोग र वडा वडामा पुस्तकालयहरूको नियमित सञ्चालन गरी पठन संस्कृतिको विकासको नीति अवलम्बन गर्दै आएको छ ।

**स्वास्थ्य**

नेपालको संविधानमा व्यवस्था भएबमोजिम देशलाई समाजवाद उन्मुख दिशामा अगाडि बढाउन भक्तपुर नगरपालिकाले स्वास्थ्यमा सर्वसाधारण जनताको सहज पहुँच पुऱ्याउन पहिलेदेखि यसमा लगानी गर्दै आएको छ । यसै क्रममा भक्तपुर नगरपालिकाले सय शैय्याको ख्वप अस्पताल सञ्चालनमा ल्याएको छ । नगर अस्पतालले हाडजोर्नी, स्त्रीरोग, बालरोग, दन्तरोग, नाक कान घाँटी, छालालगायतका विशेषज्ञ सेवा प्रदान गर्दै





आएको छ भने अल्ट्रासाउण्ड, एक्स रे, प्रयोगशालालगायतका सुविधाहरू न्यून शुल्कमा प्रदान गर्दै आएको छ। दैनिक आठ सयभन्दा बढी बिरामीलाई सेवा दिँदै आएको ख्वप अस्पतालले आ.व. २०७९।८० मा ७० जिल्लाका २ लाख २० हजारभन्दा बढी बिरामीहरूलाई स्वास्थ्य सेवा प्रदान गरेको थियो।

विश्वव्यापी महामारीको रुपमा फैलिएको कोभिड १९ रोग रोकथाम, नियन्त्रण र उपचारको लागि भक्तपुर नगरपालिकाले आवश्यक खोपको व्यवस्था, प्रचार प्रसार र संक्रमितहरूको उपचारको लागि ख्वप अस्पताल कोभिड युनिट सञ्चालन गरी कोभिड १९ बाट संक्रमित ४५५ जना बिरामीहरूलाई निःशुल्क सेवा प्रदान गर्‍यो। यसका साथै भक्तपुर नगरपालिकाले नगरबासीहरूको सहयोगमा अक्सिजन प्लान्ट स्थापना गरी सम्पूर्ण नगरवासीहरूलाई निःशुल्क अक्सिजन र निःशुल्क रगत उपलब्ध गराउँदै आएको छ। वडा वडामा चिकित्सकसहितको स्वास्थ्य केन्द्र स्थापना गरी सम्पूर्ण नगरबासीहरूलाई २० मिनेटभित्र स्वास्थ्य उपचारको सुविधामा पहुँच पुग्ने सुनिश्चितता प्रदान गर्दै आएको छ।

नेपालमै पहिलो पटक भक्तपुर नगरपालिकाले घरदैलो नर्सिङ्ग सेवा सुरु गर्‍यो र जनताको घरघरमा पुगी आधारभूत स्वास्थ्य सुविधा उपलब्ध गराउने व्यवस्था मिलाउँदै आएको छ। यस नगरपालिकाबाट दम खोकीका बिरामीहरूका लागि श्वासप्रश्वास पुनर्स्थापन केन्द्रमार्फत सेवा प्रदान गर्दै आउनुका साथै नगरपालिकाकै व्यवस्थापनमा ख्वप तिलगंगा आँखा अस्पतालबाट आँखाका बिरामीहरूलाई विशेषज्ञ सेवा प्रदान गर्दै आएको छ। नगर स्तरीय नागरिक आरोग्य केन्द्रको लागि आवश्यक औषधिको व्यवस्था गरी आयुर्वेदिक उपचार सेवा पनि प्रदान गर्दै आएको छ।

कडा रोग लागेका नगरबासी बिरामीहरूको लागि प्रतिव्यक्ति रु. १५,०००।– का दरले आर्थिक सहयोग प्रदान गर्दै आएको छ। यसका साथै प्रत्येक वर्ष यस नगरपालिकाका १० ओटै वडाहरूमा नियमित स्वास्थ्य शिविरहरू (पाठेघर र स्तन क्यान्सर, दन्त रोग, हाडजोर्नी, आँखा) सञ्चालन गरी स्वास्थ्य सुविधा प्रदान गर्दै आएको छ।

**सम्पदा तथा कला संस्कृति संरक्षण**

"पुर्खाले सिर्जेको सम्पत्ति, हाम्रो कला र संस्कृति" भन्ने भक्तपुर नगरपालिकाको नारालाई सार्थक बनाउने क्रममा २०७२ को भूकम्पले क्षति पुऱ्याइएका थुप्रै सम्पदाहरूको स्थानीय जनताहरूको सहभागिता र सहयोगमा पुननिर्माण र जीर्णोद्धार सम्पन्न गरियो। २०७२ सालको भूकम्पपछि हालसम्ममा १३४ ओटाभन्दा बढी सम्पदाहरूको पुनःनिर्माण र जीर्णोद्धार गर्ने कार्य सम्पन्न गरिसकेको छ भने दर्जनौं सम्पदाहरूको



पुनःनिर्माण र जीर्णोद्धार कार्य चालु छ। जसमध्ये वत्सला मन्दिर, ङातापोल मन्दिर, भैरवनाथ मन्दिर, बेताल मन्दिर, न्हुपुखु (रानी पोखरी) आदि जीर्णोद्धार सम्पन्न मुख्य सम्पदाहरू हुन्। नगरका अमूर्त सम्पदाहरू संरक्षणका लागि भक्तपुर नगरपालिकाले प्रत्येक वर्ष एउटा सांस्कृतिक विधाको प्रतियोगिता सञ्चालन गर्दै आएको छ। प्रत्येक वर्ष गुन्हीपुन्ही सापारुमा प्रस्तुत गरिने परम्परागत र आधुनिक सांस्कृतिक विधाहरू र घिन्ताङघिसी प्रतियोगिता गरी विजयी सांस्कृतिक समूहहरूलाई पुरस्कृत गर्दै आएको छ। नगर क्षेत्रमा रहेका सांस्कृतिक समूहहरूलाई विभिन्न अवसरहरूमा आर्थिक र भौतिक सहयोग प्रदान गर्दै सांस्कृतिकसमूहहरूको संरक्षण, संवर्धन र प्रवर्धन गर्दै आएको छ। अमूर्त सांस्कृतिक सम्पदाहरूको संरक्षण गर्न महत्वपूर्ण योगदान गर्ने सांस्कृतिक गुरुहरूलाई कार्यक्रमको आयोजना गरी सम्मान गर्दै आएको छ। पुरानो नगर क्षेत्रभित्र परम्परागत शैलीमा घर निर्माण गर्ने घर धनीहरूलाई मोहडामा प्रयोग हुने काठ, ईंटा र झिंगटीमा लाग्ने खर्चको ३५ प्रतिशत अनुदान प्रोत्साहनस्वरुप प्रदान गर्दै आएको छ। यसले नगरको पुरानो स्वरुपलाई कायम गर्न विशेष मद्दत पुगेको छ।

**खेलकुद**

भक्तपुर नगरपालिकाले स्थानीय तहको निर्वाचनपश्चात् हरेक वर्ष एउटा खेलको अन्तरनगर खेलकुद प्रतियोगिता र अन्तरविद्यालयस्तरीय खेलकुद प्रतियोगिता सञ्चालन गर्दै आएको छ। भलिबल, कराँते, एथलेटिक्स, बुद्धिचाल र खोखो खेलको अन्तरनगर खेलकुद प्रतियोगिता सम्पन्न गरिसकेको छ। नगरबासी युवा विद्यार्थीहरूका लागि नियमित रुपमा भलिबल, फुटबल, कराँते बक्सिङ्ग, टेबल टेनिस र जिम्नास्टिकको प्रशिक्षण प्रदान गर्दै आएको छ। खेलाडीहरूको प्रोत्साहनको लागि हरेक वर्ष खेलाडी सम्मान कार्यक्रम सञ्चालन गर्दै आएको छ। शारीरिक व्यायाममा प्रत्येक नागरिकको सहज पहुँच पुऱ्याउन नगरका विभिन्न २३ स्थानहरूमा खुला व्यायामशालाको व्यवस्था गरिएको छ।

**सामाजिक विकास**

भक्तपुर नगरपालिकाले नगरवासीहरूलाई स्वरोजगार प्रदान गर्न विभिन्न किसिमका रोजगारमूलक तालीम र भाषा प्रशिक्षण प्रदान गर्दै आएको छ। पाक शिक्षा, आधारभूत तथा एडभान्स सिलाइ, बुटिक, हेयर कटिङ्ग, काष्ठकला, सिलाइ मेसिन मर्मत, फोटोग्राफी, रेडियो प्रस्तोतालगायतका सिपमूलक तालीम र पर्यटन उद्योगसँग सम्बन्धित पथ प्रदर्शक, जापानी, चिनियाँलगायतका भाषाको तालीम प्रदान गर्दै आएको छ। यसका साथै कृषि सम्बन्धी कृषि प्राविधिक तालीम, बेमौसमी तरकारी खेती सम्बन्धी तालीम र कौशी खेती तालीमलगायतका तालीमहरू पनि सञ्चालन गर्दै आएको छ। भक्तपुर नगरपालिकाले नगरका वडा वडामा शिशु स्याहार सञ्चालन गरिरहेको छ भने जेष्ठ नागरिकहरूको लागि आदर निकेतन सञ्चालनको क्रममा रहेको छ।

**सुशासन तथा पारदर्शिता**

सुशासनको लागि नगरपालिकाले आवश्यक कानुनहरू निर्माण गर्दै कार्य सम्पादन गर्दै आएको छ। स्थानीय सरकार सञ्चालन ऐन २०७४ अनुसार पहिलो कार्यकालमा ११ वटा र दोस्रो कार्यकालमा तीन वटा गरी भक्तपुर नपाले १४ वटा नगरसभाहरू सम्पन्न गऱ्यो। नेपालको संविधान र स्थानीय सरकार सञ्चालन ऐन, २०७४ ले दिएको अधिकार प्रयोग गरी नगरपालिकाको आवश्यकताअनुसार नगर सभा र कार्यपालिकाबाट २५ वटा ऐन, तीन वटा नियमावली, ६ वटा विनियम, १३ वटा कार्यविधि, नौ वटा निर्देशिका र एक वटा नीति गरी हालसम्म ५७ वटा कानुन निर्माण गरी कार्यान्वयन गर्दै आएको छ।

भक्तपुर नगरपालिकाले मितव्ययिता, आर्थिक अनुशासन र पारदर्शितालाई प्राथमिकतामा राख्दै आफ्ना विकास निर्माण सम्पदा संरक्षणलगायत अन्य विभिन्न कार्यक्रम र योजनाहरू सञ्चालन गर्दै आएको छ। यसको लागि भक्तपुर नगरपालिकाले नियमित रुपमा मासिक भक्तपुर पत्रिका, पाक्षिक ख्वप पौ, अनलाइन पत्रिका भक्तपुर खबर डटकम, फेसबुक भक्तपुर म्युनिसिपालिटीमार्फत नगरपालिकाका सबै गतिविधिहरू सार्वजनिक गर्दै आएको छ। साथै महत्वपूर्ण सम्पदाहरू जीर्णोद्धार सम्पन्न गरेपछि सोको सम्पूर्ण आयव्यय र निर्णयहरू पारदर्शी गर्न सम्पदासँग सम्बन्धित पुस्तकहरू पनि प्रकाशन गर्दै आएको छ। भैरवनाथ मन्दिर जीर्णोद्धार २०७६, सम्पदा पुनर्निमाण तथा जीर्णोद्धार २०७७, ङातापोल जीर्णोद्धार २०७७, नृत्य वत्सला मन्दिर जीर्णोद्धार २०७८, न्हु पुखु (रानी पोखरी) २०७८ आदि मुख्य प्रकाशनहरू हुन्। यसका साथै भक्तपुर नगरपालिकाले ख्वप एफ.एम. सञ्चालन गरी रेडियोमार्फत पनि नगरपालिकाका गतिविधिहरू सार्वजनिक गर्दै आएको छ भने ख्वप टेलिभिजन सञ्चालनको लागि गृहकार्य भइरहेको छ।

**पर्यटन**

भक्तपुर नगरपालिकाको आन्तरिक आयको प्रमुख स्रोत पर्यटन हो। आर्थिक वर्ष २०७९/८० मा १ लाख ६७ हजार ६५२ जना विदेशी पर्यटकहरूले भक्तपुर अवलोकन गरे। ती पर्यटकहरूबाट रु. १८ करोड ४० लाखभन्दा बढी राजस्व सङ्कलन गरियो। यसमा गैरसार्क पर्यटकबाट १४ करोड ३४ लाखभन्दा बढी र सार्क राष्ट्र र चीनका पर्यटकबाट रु. ४ करोड ६ लाख पर्यटन शुल्क उठेको छ। भक्तपुरलाई पर्यटकीय गन्तव्य स्थलको रूपमा विकास गर्न भक्तपुर नगरपालिकाले पर्यटन प्रवर्धन, पूर्वाधार निर्माण, पर्यटक सेवा र सूचनामा विशेष जोड दिँदै विभिन्न क्रियाकलापहरू गर्दै आएको छ।

भक्तपुर नगरपालिकाले पर्यटकहरूबाट उठेको शुल्कबाटै भक्तपुरका सम्पदाहरूको संरक्षण, शिक्षा, स्वास्थ्य, सरसफाइ, विकास निर्माणजस्ता जनताका आधारभूत आवश्यकता पूरा गर्दै आएको छ । भक्तपुर नगरपालिकाले पर्यटकहरूलाई लक्षित गरी पर्यटक सूचना केन्द्र, पर्यटक बस पार्क, पर्यटक शौचालय, पर्यटक सूचना केन्द्रमार्फत ६ वटा भाषामा नक्सासहितको ब्रोसर, निःशुल्क इन्टरनेटसहित कम्प्युटरको सुविधा, शारीरिक रूपमा अशक्त पर्यटकको लागि ह्वील चेयर, लगेज राख्ने कोठा, मोबाइल चार्जको सुविधा, पत्रपत्रिकासहित पर्यटक विश्राम स्थलको सुविधाको व्यवस्था गर्दै आएको छ । स्थानीय पथप्रदर्शक परिचालन समिति बनाई स्थानीय पर्यटक पथप्रदर्शकहरूलाई आवश्यक तालीम दिई व्यवस्थापन गर्दै आइरहेको छ ।

भक्तपुर नगरपालिकाका समय-समयमा सन्ध्याकालीन सांस्कृतिक सम्पदा पदयात्रा, प्रभातकालीन सम्पदा पदयात्रा, स्थानीय पथप्रदर्शकहरूलाई तालीम तथा परिचालन, पर्यटन व्यवसायीहरूसँग छलफललगायतका कार्यमा जोड दिँदै आएको छ । विश्व पर्यटन दिवस, विश्व सम्पदा दिवस, पर्यटक पथप्रदर्शक दिवसजस्ता अवसरहरूमा नियमित कार्यक्रमहरू सञ्चालन गर्नुका साथै भक्तपुरको कला र संस्कृति नयाँ पुस्तामा हस्तान्तरण गर्न प्रशिक्षण गर्ने समूहहरूलाई आर्थिक सहयोग र सांस्कृतिक गुरुहरूको सम्मान कार्यक्रमसमेत गर्दै आएको छ । यस नगरपालिकाको सांस्कृतिक प्रदर्शनी केन्द्र निर्माण गर्ने तयारी गरिरहेको छ ।

पर्यटन प्रवर्धनका लागि योम्हारी प्रदर्शनी, प्रगतिशील भजन प्रतियोगिता, घरेलु उत्पादन मेला, गाईजात्रामा सांस्कृतिक प्रतियोगितालगायतका गतिविधिहरू सञ्चालन गर्दै चालू आर्थिक वर्षमा त्यसलाई निरन्तरता दिने नगरपालिकाको योजना छ ।

**सरसफाई**



सरसफाई भक्तपुर नगरपालिकाको अर्को महत्वपूर्ण कार्य हो । भक्तपुर नगरलाई नियमित रुपमा सफा राख्न घरघरबाटै कुहिने र नकुहिने फोहोर अलग अलग संकलन गर्दै आएको छ । दैनिक करिब ३० टनको फोहोर उत्पादन हुने अनुमान गरिएकोमा कुहिने फोहोरबाट सी.एन.बी.एम. प्रविधिबाट कम्पोस्ट मल उत्पादन गरी सहुलियत दरमा कृषकहरूलाई मल वितरण गर्दै आएको छ। नकुहिने फोहोर र पुनः प्रयोग गर्न मिल्ने प्लास्टिकजन्य र धातुलगायतका विभिन्न सामाग्रीहरू छुट्याइँ बाँकी फोहोरलाई सुरक्षित ढङ्गले विसर्जन गर्ने गरिएको छ । एक विद्यालय एक सम्पदा सरसफाई, एक सहकारी एक क्षेत्र सरसफाईको नीति कार्यान्वयनको साथै जनप्रतिनिधि, कर्मचारी, विद्यालय, टीम, क्लबहरूको सहभागितामा सरसफाइ कार्यक्रम पनि सञ्चालन गर्दै आएको छ ।

**निष्कर्ष**

भक्तपुर नगरपालिकामा वैज्ञानिक समाजवादका पक्षधर नेपाल मजदुर किसान पार्टीका जन प्रतिनिधिहरू कार्यरत हुनुहुन्छ । उहाँहरूले स्थानीय तहको निर्वाचनको बेला घोषणापत्रमार्फत जनतालाई दिएको वचनअनुसार काम गर्दै आउनुभएको छ । समाजवादी व्यवस्थामा जन्मदेखि मृत्युसम्म नागरिकहरूको जिम्मेवारी राज्यले लिएको हुन्छ । नेपालको संविधान र कानुनको परिधिभित्र रही ख्वप अस्पतालमा प्रसुति सेवा सञ्चालन, वडा वडामा शिशु स्याहार केन्द्रहरूको व्यवस्था र नपाअन्तर्गत सबै विद्यालयहरू सञ्चालन तथा जनताका छोराछोरीहरूलाई सस्तो र गुणस्तरीय उच्च शिक्षा अध्ययनको लागि कलेजहरूसमेत सञ्चालन गर्दै आएको छ । ज्येष्ठ नागरिकहरूको लागि आदर निकेतनको बन्दोबस्त र अन्तिम संस्कारको लागि नगरपालिकाले सुधारिएको शवदाह गृहहरू निर्माण गरी सञ्चालनमा ल्याइएको छ । यसरी भक्तपुर नगरपालिका समाजवादी विचारअनुसार जन्मदेखि मृत्यु हुँदासम्मको आवश्यक कार्य गर्दै संविधानको भावनाअनुसार समाजवाद उन्मुख राज्य विकासको लागि स्थानीय तहमा कार्य गर्दै आएको छ ।



# कोशी सरकारका प्रमुख कार्य

१. आर्थिक वर्ष २०७९/८० मा दुध उत्पादनमा प्रोत्साहन स्वरुप प्रतिलिटर २ रुपैंयाका दरले २०२७६ जना किसान (६४% महिला सदस्यहरू)लाई प्रोत्साहन रकम रु. ७ करोड ७४ लाख ४ हजार भुक्तानी गरी कृषिमा उत्पादनमा आधारित प्रोत्साहन प्रणाली विकास गरिएको ।

२. धनकुटा नगरपालिकामा लघु एवम् घरेलु उद्योगहरूलाई प्रवर्धन गर्न धनकुटा लघु एवम् घरेलु औद्योगिक ग्राम निर्माण गरी सञ्चालनमा ल्याइएको ।

३. Video Conference प्रविधिको प्रयोग गरी प्रदेश सभाले बनाउने कानुन र संसदीय समितिले गर्ने संसदीय निगरानीसमेतमा प्रदेशका सबै स्थानीय तह र १४ वटै जिल्ला समन्वय समिति, सम्बन्धित नागरिक समाज, सरोकारवालाहरू, विज्ञहरूसमेतको राय, सल्लाह र सुझाव आदन प्रदान गरी कानुनलाई सर्वसम्मत पारित गर्न मद्दत पुग्ने तथा प्रदेश सरकार, स्थानीय तहले गरेका विकास निर्माणसमेतका काममा संसदीय निगरानी पुर्‍याई गुणस्तर तथा सुशासन कायम गर्ने कार्य गरिएको ।

४. कोशी प्रदेशमा ५९ वटा ऐन, २४ नियमावली १३ निर्देशिका, ४८ कार्यविधि, १ मापदण्ड र १ गठन आदेश जारी भई लागु गरिएको ।

५. प्रदेशभित्रका स्थानीय तहहरूसँगको समन्वयलाई प्रभावकारी बनाउनका लागि प्रदेश समन्वय परिषद्को बैठक हालसम्म पाँच पटक बसी समन्वय एवम् सहकार्यलाई प्रभावकारी बनाउन आवश्यक निर्णयहरू लिएको, नवप्रवर्तन साझेदारी कोषमार्फत स्थानीय तहमा सूचना प्रविधिमैत्री सेवा प्रवाहमा सहयोग गरिएको ।

६. इलामको सूर्योदय नगरपालिकाको कन्याम डुँडेगैरा-पूर्णेडाँडा साइक्लिङ्ग ट्र्याक निर्माण गरी पर्यटन प्रवर्धनमार्फत स्थानीय बासिन्दाहरूको आयस्तरमा वृद्धिमा सहयोग ।

७. विपद् व्यवस्थापनका लागि प्रदेशभर ११ स्थानमा मुख्यमन्त्री अत्यावश्यक सेवा सञ्चालन केन्द्र स्थापना गरी विपद् व्यवस्थापनमा स्थानीय तहसँगको समन्वय र विपद् प्रतिकार्यलाई प्रभावकारी बनाइएको ।

८. सवारी चालक अनुमती पत्र तथा सवारी कर संकलन गर्ने कार्यका लागि दुई वटा यातायात कार्यालयहरू थप स्थापना तथा सवारी चालक अनुमति पत्र दिने अधिकार विकेन्द्रीकरण गरी यातायातसमबन्धी सेवा प्रवाहलाई सहज बनाइएको ।

९. प्रदेश सरकारले ४२३ किलोमिटर, १५९ वटा झोलुङ्गे पुल निर्माण, ७४ वटा मोटरेवल पुल निर्माण गरी यातायात सुविधाको पहुँच विस्तार गरीएको तथा जनता आवस कार्यक्रमामार्फत ५१७५ वटा आवास निर्माण कार्य सम्पन्न गरी आवसविहीनलाई सुरक्षित आवसको व्यवस्था गरिएको ।

१०. २०९ वटा निजी वन दर्ता, ५ वटा कबुलियती वन गठन, १५ वटा जडीबुटी भण्डारण तथा प्रशोधन केन्द्रको स्थापना तथा सामुदायिक वन उपभोक्ता समिति गठन, काइयोजना नवीकरण, सामुदायिक वनमा पर्यापर्यटन प्रवर्धन, हरितपार्क निर्माण, वृक्षरोपण साथै जडिबुटी खेती विस्तार आदिमार्फत रोजगारी सिर्जना तथा वातावरणीय सन्तुलन कायम गर्ने कार्य गरिएको ।

११. कोशी प्रदेशलाई साक्षर प्रदेश घोषणा गरिएको साथै मनमोहन प्राविधिक विश्वविद्यालयको स्थापना गरी सञ्चालनमा ल्याइएको ।

१२. १४५ वटा विद्यालयहरूमा विद्यालय नर्सिङ कार्यक्रम सञ्चालन गरिएको, प्रादेशिक अस्पताल भद्रपुरलाई २०० शैयामा र जिल्ला अस्पताल पाँचथर, तेह्रथुम र भोजपुरलाई ५० शैय्यामा स्तरोन्नति गरिएको, कोशी अस्पताल कोभिड-१९ उपचार केन्द्रलाई प्रदेशस्तरीय संक्रामक रोग तथा सघन उपचार केन्द्रका रुपमा विकास गरी बहिरङ्ग सेवामार्फत सेवा प्रवाह भइरहेको एवम् वैकल्पिक चिकित्सा पद्धतिलाई प्रवर्धन गर्न प्रादेशिक आयुर्वेद अस्पताल, लखनपुर स्थापना गरी सञ्चालनमा ल्याइएको ।

१३. कोशी प्रदेशभित्रका स्थानीय तहका विभिन्न ६८९ पदहरूमा पदपूर्तिका लागि प्रदेश लोक सेवा आयोगबाट सिफारिस भए अनुरुप उनीहरूलाई नियुक्ति गरी स्थानीय तहमा जनशक्ति व्यवस्थापन गरिएको ।

१४. कोशी प्रदेशको प्रथम आवधिक योजना २०७५/७६-२०८०/८१ निर्माण भई कार्यान्वयनमा आएको ।

१५. प्रदेश अनुसन्धान तथा प्रशिक्षण केन्द्रको स्थापना गरी २,४७६ स्थानीय तहका जनप्रतिनिधि तथा विभिन्न तहमा कार्यरत २,७७३ जना कर्मचारीहरूको क्षमता विकास गरिएको ।

१६. मिल्क होलिडेको समस्या समाधान गर्न सगरमाथा विशिष्टीकृत सहकारी संघमार्फत ३५ वटा सहकारी संस्थाहरूलाई संलग्न गराई धुलो दुध कारखाना स्थापनाका लागि सम्पूर्ण यन्त्र उपकरण खरिद भई सञ्चालनमा आएको छ ।

१७. देहायका कार्यहरूलाई प्राथमिकतामा राखिएको ।

१ लघु, घरेलु औद्योगिक ग्राम, धनकुटा, कोशी प्रदेश

२ निर्माणाधीन घिनाघाट-विराटचौक सडक, मोरङ, कोशी प्रदेश

३ अल्ट्रासाउण्डद्वारा किसानको गोठमा नै गाईको गर्भ परीक्षण, कोशी प्रदेश

४ धानको बीउ प्रमाणीकरण, कोशी प्रदेश

५ प्रदेश अनुसन्धान तथा प्रशिक्षण प्रतिष्ठानको गुरुयोजना, कलवलगुरी झापा, कोशी प्रदेश

६ अर्गानिक भुईं स्याउ प्रशोधनको तयारी फिदिम नगरपालिका, पाँचथर, कोशी प्रदेश

७ कन्याम डुँडेगैरा-पुर्णेडाँडा साइक्लिङ्ग ट्र्याक, सुर्योदय नगरपालिका, इलाम कोशी प्रदेश

# मधेश प्रदेश सरकारका
# प्रमुख उपलब्धि

**पृष्ठभूमि**

नेपालको संविधानले परिकल्पना गरेबमोजिम मुलुक संघीय संरचनामा रुपान्तरण भइसकेपछि वि.सं. २०७४ फागुन ३ गते मधेश प्रदेशको प्रदेश सरकार गठन भएको हो । नेपालको लागि नयाँ स्वरुपको शासन व्यवस्था रहेको संघीय शासन प्रणालीमा प्रदेश सरकारको स्थापना हुँदाका बखत विभिन्न चुनौतीहरूको सामना गर्नुपरेको थियो । विभिन्न मन्त्रालय तथा मातहतका निकायहरूको स्थापना, कर्मचारी व्यवस्थापन, भौतिक पूर्वाधारको विकास, सेवा सञ्चालनका लागि कानुनको अभाव लागायतका कैयौँ चुनौतिका बिच प्रदेश सरकारले नागरिकप्रतिको दायित्व तथा जिम्मेवारी निर्वाह गरिरहेको छ। प्रदेश सरकारको काम कारवाहीलाई सुशासनमैत्री बनाई सार्वजनिक सेवा प्रवाह, विकास निर्माण, कानुन निर्माण, सामाजिक सुरक्षालगायतका कार्यहरू प्रभावकारी ढङ्गबाट सञ्चालन गर्रिदै आएको छ ।

प्रत्येक वर्ष आइपर्ने विभिन्न विपद, संक्रामक रोगको प्रकोप, सेवा प्रवाहमा जनशक्तिको अपर्याप्तता, संघीय कानुन समयमै नबन्दा प्रदेश कानुन निर्माण र कार्यान्वयनमा जटिलता, जस्ता कारणले प्राप्त उपलब्धिलाई संस्थागत गर्न प्रदेश सरकारले कठिन परिस्थितको सामना गर्नुपरिरहेको छ ।

राजनैतिक उपलब्धिको रक्षा, सुदृढीकरण र विकास गर्दै आर्थिक, सामाजिक तथा साँस्कृतिक रुपान्तरणका माध्यमबाट प्रदेशका जनताको सर्वोत्तम हित र समुन्नति प्रत्याभूत गर्ने कार्यलाई प्रदेश सरकारले प्राथमिकतामा राखेको छ ।

**विशेष कार्यक्रम**

(क) छोरीलाई विद्यालय पठाई उनीहरूको वैयक्तिक विकासको अतिरिक्त सशक्तिकरणको माध्यमबाट विभेदमुक्त समाजको निर्माण र समाज रुपान्तरणको लागि प्रदेश सरकारले महिला सशक्तिकरण तथा सामाजिक सुधारका लागि "बेटी पढाऊ, बेटी बचाऊ अभियान" सञ्चालन गर्दै आएको छ । मधेश प्रदेशमा जन्मिएका छोरीहरूको सुरक्षा, शिक्षा र सशक्तिकरणका लागि बेटी पढाऊ, बेटी बचाऊ कार्यक्रम कार्यान्वयनमा ल्याइएको हो । यस कार्यक्रमअन्तर्गत हालसम्म दश हजार नौ सय चौसठी (१०,९६४) जना छोरीहरूलाई बिस वर्षपछि रु. तीन लाख पाउने गरी छोरी बीमा/मुद्दति खाता खोली प्रदेश सरकारबाट रकम जम्मा गरिएको छ ।

(ख) "मुख्य मन्त्री स्वच्छता अभियान" अन्तर्गत धार्मिक पर्यटनलाई बढावा दिन प्रदेश स्थित विभिन्न समुदायमा गौरवका रुपमा रहेको जानकी मन्दिर, रौजा मजार, छिन्नमस्ता भगवती, सहलेश स्थान,

पारशनाथ, भिसवा बौद्ध गुम्बाहरूको संरक्षण तथा सौन्दर्यीकरणको कार्य अगाडि बढाइएको छ। यस अभियानअन्तर्गत २७ वटा पोखरी एवम् सार्वजनिक/ पर्यटकीय/ धार्मिक स्थलहरूको संरक्षण तथा सौन्दर्यीकरणको कार्य सुरु भएको छ। साथै प्रदेश स्थित आठ ओटै जिल्लाका सेवा प्रवाह गर्ने सरकारी कार्यालय (मालपोत, नापी, अदालत आदि), र अन्य सार्वजनिक स्थलहरूमा ६० वटा सार्वजनिक शौचालय निर्माण, जनकपुरका उत्तरी भेग एवम् सिराहा जिल्लामा २० वटा इनार निर्माण, १०० वटा सामुदायिक विद्यालयहरूलगायत अन्य सार्वजनिक स्थलहरूमा खानेपानी सुविधा पुर्‍याउन १५० वटा ह्यान्ड पम्प (Hand Pump) जडान गरिएको छ।

(ग) मधेश आन्दोलनका शहिद परिवारलाई "एक शहिद परिवार, एक रोजगार" योजनाअन्तर्गत २७ जना सहिद परिवारलाई रोजगार उपलब्ध गराइएको छ।

**सुशासन, सेवा प्रवाह तथा कानुनी व्यवस्थाः**

(क) प्रदेशको सेवा प्रवाहलाई विधिसम्मत, सेवाग्राहीमैत्री बनाउन आवश्यक कानुन निर्माणको कार्यलाई प्रदेश सरकारले उच्च प्राथमिकतामा राखेको छ। हाल प्रदेश ऐन ५८ र प्रदेश नियमावली १९ वटा तयार भई कार्यान्वयनमा आएको छ। यसबाट प्रदेश सरकारलाई कार्यसञ्चालन गर्न मार्ग प्रशस्त हुनुका साथै संविधान प्रदत्त अधिकारको प्रयोग तथा परिपालनामा सघाउ पुगेको छ।

(ख) संघीयता कार्यन्वयनमा मधेश प्रदेश सरकारले नेतृत्वदायी भूमिका खेलिरहेको छ। सोही सन्दर्भमा संविधानले प्रदान गरेको प्रदेशको अधिकारलाई संस्थागत गर्न आवश्यक वन, सिँचाई, प्रहरी समायोजन, कर्मचारी समायोजनलगायतका विषयमा अदालतमा मुद्दा विचाराधीन रहेका छन्। यसले आगामी दिनमा अधिकार क्षेत्र तथा जिम्मेवारी बाँडफाँडमा स्पष्टता कायम हुने अपेक्षा गरिएको छ।

(ग) सार्वजनिक प्रशासनलाई चुस्त, प्रभावकारी, नतिजामुखी तथा पारदर्शी बनाई सुशासन प्रवर्धन गर्न प्रदेश सरकारले जन-लोकपाल ऐन जारी गरेको छ। निजामती प्रशासनलाई व्यवसायिक, मर्यादित र प्रभावकारी बनाउन एवम् निजामती सेवालाई सक्षम, सुदृढ, सेवामूलक र उत्तरदायी बनाउने प्रयोजनको लागि प्रदेश निजामती सेवाको गठन, सञ्चालन र सेवाको शर्त सम्बन्धी कानुनी प्रदेश निजामती सेवा ऐन, २०७७ जारी गरिएको छ। यसबाट प्रदेशको सार्वजनिक प्रशासन सञ्चालनमा सघाउ पुग्ने छ।

(घ) प्रदेशको सन्तुलित र समष्टिगत विकासका लागि आवश्यक नीति तथा रणनीतिक योजना बनाउन र नीति निर्माणमा प्रदेश सरकारलाई सहयोग गर्न प्रदेश नीति तथा योजना आयोग गठन भएको छ। उक्त आयोगले प्रदेशको पहिलो आवधिक योजना (२०६७/७७-२०८०/८१) समेत जारी गरिसकेको छ। यसले कृषिको आधुनिकीकरण, व्यासायिक कृषि प्रणालीको विकास, पर्यटकीय क्षेत्रको प्रवर्धन र भौतिक विकासका कार्यक्रम कार्यान्वयनका लागि दिशा निर्देश गरेको छ।

(ङ) प्रदेशभित्र गर्नुपर्ने विकासको आवश्यकतालाई पहिचान गरी प्रदेश स्तरीय आयोजना बैंक तयार गरिएको छ। यसबाट प्रदेशमा सञ्चालन हुने आयोजनाहरूको छनौट गर्न र बजेट सुनिश्चितता गर्न

एवम् संघीय सरकारबाट उपलब्ध हुने सशर्त, समपूरक र विशेष अनुदान माग गर्न सहज भएको अवस्था छ ।

(च) प्रदेश पार्श्वचित्र (Province Profile), २०७७ प्रकाशन गरिएको छ । यसबाट प्रदेशले जारी गर्ने नीति, रणनीति, योजना र कार्यक्रम तथ्यमा आधारित भई तर्जुमा गर्न मार्गदर्शन गरेको छ .

(छ) प्रदेशका आठ ओटै जिल्लामा कानुनी सहायता अधिकृत नियुक्ती गरी महिला हिंसा, घरेलु हिंसा, जातीय विभेदलगायतका संरचनात्मक विभेदमा परेकाहरूलाई विगत तीन वर्षदेखि निःशुल्क कानुनी सहायता प्रदान गरिँदै आइएको छ ।

(ज) प्रदेश तथा स्थानीय शासन प्रणाली र प्रक्रियाहरू एवम् अन्तर सरकार सम्बन्ध सुदृढ गरी नागरिकहरूको लागि सहकारी संघीयताका लाभहरू अभिवृद्धि गराउने र प्रादेशिक तथा स्थानीय तहको क्षमता अभिवृद्धि गरी नागरिक सेवा र विकास व्यवस्थापनलाई प्रभावकारी बनाउने प्रमुख उद्देश्यका साथ प्रादेशिक तथा स्थानीय शासन सहयोग कार्यक्रम (Provincial and Local Governance Support Programme – PLGSP) सञ्चालनमा रहेको छ। यसबाट प्रदेशका राजनैतिक नेतृत्व र कर्मचारीहरूको क्षमता अभिवृद्धि गर्ने कार्यको थालनी गरिएको । यस कार्यक्रममार्फत प्रदेश सरकारअन्तर्गत कार्यरत कर्मचारीहरू र स्थानीय तहका जनप्रतिनिधि र कर्मचारीसमेत गरी १०,१३४ जनालाई विभिन्न विषयमा तालिम प्रदान गरिएको छ। यसै कार्यक्रमअन्तर्गत नवप्रवर्तन साझेदारी कोषअन्तर्गत यस प्रदेशका विभिन्न स्थानीय तहहरूमा नौ वटा परियोजना हाल सञ्चालनमा रहेका छन् ।

(झ) स्थानीय विकास प्रशिक्षण प्रतिष्ठानअन्तर्गतको ग्रामीण विकास प्रशिक्षण केन्द्रलाई प्रदेश अनुसन्धान तथा प्रशिक्षण केन्द्रको रुपमा स्थापना गरिएको छ । सो केन्द्रबाट स्थानीय तह र प्रदेश कर्मचारीहरूको क्षमता विकास कार्यक्रम सञ्चालनमा रहेको छ ।

**कृषि, वन उद्योग तथा पर्यटन क्षेत्र**

(क) कृषि उपज सम्बन्धी तथ्याङ्क अध्यावधिक गर्न कम्प्युटर सफ्टवेयर निर्माण (httpM//p2.molmacnepal.com/) गरिएको छ । जसबाट कृषि तथ्याङ्क अध्यावधिक गर्न, योजना तर्जुमा र प्रतिवेदन तयारी कार्यमा टेवा पुगेको छ ।

(ख) प्रदेशका सबै पालिकाहरूको पशु सेवा शाखाको सुदृढीकरण गरी सहज एवम् प्रभावकारी सेवा प्रवाहका लागि प्रदेश सरकारले सहयोग दिँदै आएको छ । यसअन्तर्गत प्रदेशका १३६ वटा स्थानीय तहका लागि मेसिनरी औजार सेट (Burdizo castrator 3, Microscope 1, Surgical set 1 Centrifugal machine–1) वितरण गरिएको छ ।

(ग) किसानहरूलाई ३० हजार प्याकेट च्याउको बिउ बितरण गरिएको छ। बगर खेती कार्यक्रममा १२५ घरधुरी प्रत्यक्ष लाभान्वित भएका छन् साथै बिपन्न गरीब कृषकहरूलाई स्वरोजगारमूलक विशेष पशुपन्छी पालन कार्यक्रमअन्तर्गत ३२० कृषकहरू लाभान्वित भएका छन् । यसबाट ८२० लक्षित वर्गका कृषक परिवारहरूको जीविकोपार्जन, स्वरोजगार र आयआर्जनमा प्रत्यक्ष टेवा

पुगेको छ ।

(घ) भूमि, कृषि, पशुपन्छी, मत्स्य तथा सहकारी सम्बन्धी प्रदेश स्तरीय अभिमुखीकरण तालिममा १५५ जना कृषक/उद्यमीहरू तथा १०७ जना प्राविधिकहरूलाई विभिन्न विषयमा प्रशिक्षण दिँदै प्रविधिक ज्ञान/सिप दक्षतामा अभिवृद्धि गर्ने कार्य सम्पन्न भएको छ । यसका अतिरिक्त जिल्ला स्तरमा सञ्चालित विभिन्न तालिम गोष्ठीहरूबाट थप कृषक व्यवसायी, उद्यमीहरू प्रत्यक्ष रुपमा लाभान्वित भएका छन ।

(ङ) प्रदेशभित्र हरित प्रदेश अभियान सञ्चालन गरिएको छ । प्रदेशका आठ ओटै जिल्लामा ३७७.४ हे जमीनमा वृक्षरोपण कार्य सम्पन्न भएको छ । साथै प्रत्येक जिल्लामा हाईटेक वन नर्सरी स्थापना गरी १ करोड ४१ लाख गोटा बिरुवा उत्पादन गरी वृक्षरोपण तथा निजी जग्गा धनीसमेतलाई वितरण गरिएको छ ।

(च) "संरक्षण हाम्रो मन प्रदेशको वन प्रदेशकै धन" नारालाई प्रदेश सरकारले उच्च प्राथमिकतामा राखेको छ । यसबाट ३५१ वटा सामुदायिक वन र १७ वटा साझेदारी वनसमेतमा जम्मा ९१४० हेक्टर वन क्षेत्रमा वैज्ञानिक वन व्यवस्थापन कार्य हुँदै आएको छ ।

(छ) चुरे जोगाउ मधेश वचाउ नीति अनुरुप "समृद्धिका लागि वन परियोजना" स्वीकृत भई प्रदेशभित्रको २५ वटा पालिकामा लागु हुने गरी कार्य अघि बढाइएको छ ।

(ज) अन्तर्राष्ट्रिय रामायण सर्किट सम्मेलन सम्पन्न भएको छ। यसले रामायणकालीन धार्मिक स्थलहरूको रुट निर्माण गरी पर्यटन प्रवर्द्धन गर्ने उद्देश्यका साथ नेपाल र भारतका धार्मिक क्षेत्रका प्रबुद्ध व्यक्तित्वहरूको उपस्थितिमा जनकपुरधाममा रामायण सर्किटमा (नेपाल भारत बङ्गलादेश र श्रीलङ्का) पर्ने स्थानहरूको पहिचान तथा विकास गरी धार्मिक पर्यटन प्रवर्धन गर्न आधार सिर्जना भएको छ ।

**संगठन संरचना निर्माण र व्यवस्थापन**

(क) प्रदेश सरकारले सार्वजनिक सेवा सहज रुपमा उपलब्ध गराउन मुख्यमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयलगायत प्रदेशमा आवश्यक मन्त्रालयहरूसहित १३० निकाय तथा कार्यालयहरू स्थापना गरेको छ । प्रदेश सरकारको विभिन्न मन्त्रालय निकाय तथा कार्यालयको कूल दरबन्दी ३,१२५ कायम भएको छ ।

(ख) प्रदेश निजामती सेवा, प्रदेश प्रहरी सेवा, प्रदेश अन्य सरकारी सेवा, प्रदेश संगठित संस्थाको सेवा तथा स्थानीय तहको संगठित संस्थाको पदमा उपयुक्त उम्मेद्वारको छनौटमा स्वच्छता, निष्पक्षता र योग्यता प्रणालीलाई प्रवर्धन गरी रिक्त पदको पदपूर्ति गर्न प्रदेश लोक सेवा आयोग गठन भएको छ । यसले विभिन्न पदहरूको विज्ञापन र पदपूर्ति गर्ने कार्यको शुरुवात गरेको छ । पहिलो चरणमा इन्जिनियरिङ्ग सेवाको २४ पदहरूमा पदपूर्ति भइसकेको अवस्था छ ।

(ग) सामाजिक विकास मन्त्रालयअन्तर्गत जिल्ला स्तरीय सामाजिक विकास इकाई कार्यालय स्थापना गरिएको छ । यसबाट जनतालाई घरदैलोमै प्रदेश सरकारबाट प्राप्त हुने सेवा उपलब्ध गर्न सहज

भएको छ ।

(घ) आम संचारमाध्यम प्राधिकरण, मिडिया काउन्सिल र चलचित्र तथा लोकसञ्चार प्रवर्धन बोर्डको गठन गरी पदाधिकारीको नियुक्ति गरिएको छ । यसबाट नेपालको संविधानले प्रत्याभूत गरेको विचार तथा अभिव्यक्ति स्वतन्त्रता एवम् सञ्चार र सूचनाको हक सुनिश्चित गरी आमसञ्चार क्षेत्रलाई स्वच्छ, स्वतन्त्र, पारदर्शी, मर्यादित र व्यावसायिक बनाई लोकतन्त्रको सुदृढीकरण गर्न मद्दत मिल्ने छ ।

(ङ) संघीयतालाई प्रभावकारी रुपमा कार्यान्वयन गर्नका लागि संघीय इकाइहरूको बिचको अन्तरसम्बन्धलाई मजबुत बनाउनका लागि हालसम्म चार पटक प्रदेश समन्वय परिषद्को बैठक बसी दुई तहबिचको अन्तरसम्बन्धलाई मजबुत हुन सहयोग पुगेको छ ।

(च) मधेश प्रदेश सरकारबाट सुशासन प्रवर्धनका लागि सुझाव पेस गर्न गठित उच्चस्तरीय समितिको प्रतिवेदनलाई कार्यान्वयनमा ल्याएको छ ।

(छ) मधेश प्रदेशमा समायोजन भई र प्रदेश लोक सेवा आयोगबाट पदपूर्ति भएका कर्मचारीहरूको विवरण अद्यावधिक गर्ने उदेश्यले प्रदेश निजामती कितावखानाको स्थापना भई सञ्चालनमा आएको छ ।

**भौतिक पूर्वाधार विकास तथा विस्तार**

(क) प्रदेश सरकारले एक निर्वाचन क्षेत्र एक सडक कार्यक्रम निर्माणलाई प्राथमिकतामा राखेअनुसार प्रदेशका ६४ वटा प्रदेश सभा निर्वाचन क्षेत्रमा कम्तिमा ५ कि.मी सडक निर्माण गरी कूल ३२० कि.मी. पक्की सडक निर्माण गर्ने कार्यको थालनी गरिएको छ । यस अवधिमा प्रदेश सरकारले विभिन्न स्थानमा ५०.९५ कि.मि कालोपत्रे सडक निर्माण, ७४.९० कि.मि. पक्की सडक ढलान, १७०.१७ कि.मि. ग्राभेल सडक निर्माण, ५.५४ कि.मि. नाला निर्माण,१४ वटा कल्भर्ट निर्माण, ५९.८१ कि.मि. नयाँ कच्ची सडक निर्माण गरेको छ । प्रदेशका विभिन्न स्थानहरूमा ३० वटा पुल निर्माणको काम समपन्न भएको छ ।

(ख) प्रदेशको कृषि उत्पादन र उत्पादकत्व बढाई आम कृषकको जीवनस्तर अभिवृद्धि गर्न १६५ वटा नहर प्रणाली मर्मत सम्भार गरी सञ्चालनमा ल्याइएको छ ।

(ग) २४० वटा डीप टयुबवेल तथा ३३ वटा पावरड्रिल ट्यूबवेल निर्माण सम्पन्न भई प्रदेशको करिब ५४३० हेक्टर थप जमीनमा सिंचाइ सुविधा पुगेको छ ।

(घ) प्रत्येक जिल्लामा दुई वटा क्लस्टर सिँचाइअन्तर्गत पावर ड्रिल ट्यूबवेल निर्माण गरी प्रदेशका करिब १६०० हेक्टर खेतीयोग्य जमीनमा सिंचाइ सुविधा प्रदान गर्ने कार्यको थालनी गरिएको छ ।

(ङ) नदी कटान र डुबानबाट करिब १५०० हेक्टर खेतीयोग्य जग्गा संरक्षण र २० वटा जोखिमयुक्त बस्ती संरक्षण गरिएको छ ।

(च) २० वटा नयाँ खानेपानी योजनाको सुरुवात गरिएको छ । यस्तै ६५ कि.मि. खानेपानी पाइप लाइन विस्तार गरी स्वच्छ खानेपानीको व्यवस्था मिलाइएको छ ।

(छ) मालपोत तथा नापी कार्यालयहरूमा वैज्ञानिक तामेली शाखाको विस्तार गरी Digitalization गर्ने कार्यको लागि आवश्यक यन्त्र उपकरणहरू वितरण गरिएको छ। मालपोत तथा नापी कार्यालयहरूमा आधारभूत प्रविधिमैत्री पूर्वाधार निर्माण गर्न स्रोतसाधनको व्यवस्था गरिएको छ।

**स्वास्थ्य तथा शिक्षा क्षेत्र सुधार**

(क) प्रदेश सरकारअन्तर्गत सञ्चालित जलेश्वर, पोखरिया, भारदह र डुमरिया अस्पताललाई ५० बेडमा स्तरोन्नति गरिएको छ। यसबाट गुणस्तरीय तथा सुलभ स्वास्थ्य उपचार तथा परामर्श सेवा उपलब्ध गराउन सहज भएको छ।

(ख) प्रदेशको गौरवको आयोजनाको रुपमा सरुवा रोग तथा महामारी नियन्त्रण अस्पतालको निर्माणका लागि बाराको भिठ्‌कैयामा प्रारम्भिक कार्य शुरु गरिएको छ।

(ग) स्वास्थ्य क्षेत्रको पूर्वाधार विकास गरी स्वास्थ्य क्षेत्रमा दक्ष जनशक्ति उत्पादन गर्न मधेश स्वास्थ्य विज्ञान प्रतिष्ठान स्थापना गरी सञ्चालनमा ल्याइएको छ।

(घ) प्रदेशमा विश्वविद्यालय स्थापनाका लागि वीरगंजमा मधेश विश्वविद्यालय र सप्तरीमा कृषि विश्वविद्यालय स्थापना भई सञ्चालनमा आएको छ।

# बागमती प्रदेश सरकारका उपलब्धि

**१. प्रदेश स्थापनापश्चात प्रदेशमा सम्पन्न भएका महत्वपूर्ण भौतिक उपलब्धिहरू**

(१) मदन भण्डारी स्वास्थ्य विज्ञान प्रतिष्ठानको स्थापना,

(२) आयुर्वेद औषधि उत्पादन केन्द्रको स्थापना,

(३) प्रदेश स्तरीय एम्बुलेन्स डिस्प्याच सेन्टर स्थापना,

(४) प्रदेश स्वास्थ्य आपतकालीन कार्य सञ्चालन केन्द्रको स्थापना,

(५) बागमती प्रदेश प्रथम आवधिक योजनाको अवधिभरमा कूल १७५०० सिंचित क्षेत्र थप गर्ने गरी लक्ष्य राखिएकोमा हालसम्म करिब १५००० हेक्टर सिञ्चित क्षेत्र थप भएको ।

(६) साना स्तरका कृषक व्यवस्थित सिंचाइ प्रणाली सुदृढीकरण कार्य लक्ष्यअनुरुप हालसम्ममा ५००० हेक्टर सुदृढीकरण कार्य सम्पन्न भएको ।

(७) सरकार व्यवस्थित सिंचाइ प्रणाली भरतपुर चितवन जिल्लामा ८६०० हेक्टर सिञ्चित क्षेत्र रहेको खगेरी सिंचाइ प्रणाली सुदृढीकरण कार्य सालबसाली रुपमा भएको र नारायणी लिफ्ट सिंचाइ आयोजनाअन्तर्गत कम्पोनेन्ट ए आधुनिकीकरण कार्य सम्पन्न भएको ।

(८) प्रदेशभर ८० वटा भूमिगत डीप ट्यूववेल सिंचाइ आयोजना सम्पन्न भएको ।

(९) १४४ कि.मि. नदी तटबन्ध (Vertical Gabion Revertment समेत) निर्माण सम्पन्न भएको छ भने प्रदेशअन्तर्गत १३ जिल्लाको District Irrigation Master Plan तथा प्रदेशभित्र रहेका १६ नदीहरूको नदी व्यवस्थापन गुरु योजना तयार भएको ।

(१०) प्रदेशभित्र घण्ड खानेपानी योजना सम्पन्न भई ३८४४७६ जनसङ्ख्या खानेपानी सेवाबाट लाभान्वित भएका छन् भने एक घर एक धारा नीतिअनुरुप प्रदेश स्थापना पश्चात ८४६५० वटा धारा जडान भएको छ ।

(११) बागमती प्रदेशभित्रका ७२ वटा सामुदायिक विद्यालयलाई विद्यालय बस कार्यक्रमअन्तर्गत बस खरिदका लागि अनुदान प्रदान गरिएको,

(१२) बागमती प्रदेशका सामुदायिक माध्यमिक विद्यालयमा अंग्रेजी/गणित/विज्ञान विषयमा शुन्य दरबन्दी भएका २७० विद्यालयहरूका लागि स्थानीय तहमा वित्तीय हस्तान्तरणमार्फत सहयोग अनुदान प्रदान गरिदैं आएको,

(१३) १२ वटा रंगशाला र ३५ वटा कभर्डहल र ४३६ वटा खेलमैदान तथा खेलकुद पूर्वाधार निर्माण गरिएको

(१४) २८९ वटा सामुदायिक विद्यालयको पूर्वाधार तथा विद्यालय भवन र १७ वटा सामुदायिक भवन निर्माण सम्पन्न भएको छ भने १४९ वटा सामुदायिक क्याम्पस/ विद्यालयको सबलीकरण कार्य सम्पन्न गरिएको छ त्यसैगरी बागमती प्रदेशका सामुदायिक माध्यमिक विद्यालयहरूमा ३४० वटा घेराबार र ८६ वटा विद्यालय स्वच्छ खानेपानी निर्माण सम्पन्न गरिएको छ ।

(१५) प्रदेश तथा स्थानीय सहयोग शासन कार्यक्रमअन्तर्गत नवप्रवर्तन साझेदारी कोष कार्यक्रम मार्फत सूचना प्रविधितर्फ तीन ओटा, फोहोर मैला व्यवस्थापन तर्फ तीन वटा र स्थानीय विकास तर्फ पाँच वटा गरी ११ स्थानीय तहमा कार्यक्रम सञ्चालन गरिएको ।

(१६) ९६३ कि.मि. सडक पक्कि स्तरमा, ९३८ कि.मि. सडक ग्रावेल स्तरमा स्तरोन्नति हुनुका साथै १०४३ कि.मि. नया ट्र्याकको कार्य सम्पन्न भएको छ। स्थानीय तहको केन्द्र जोड्ने १५० कि.मि. भन्दा बढी सडक पक्कि स्तरमा स्तरोन्नति भएको छ ।

(१७) हालसम्म १०२ वटा सडक पुल निर्माणको कार्य भएको छ भने १३ वटा झोलुंगे तथा पैदल ट्रस पुलको निर्माण कार्य भएको छ ।

(१८) नेपालकै पहिलो सुरुंग; चुरियामाई सुरुङ प्रबलीकरणको कार्य सम्पन्न भएको छ ।

(१९) प्रदेश राजधानी र संघीय राजधानी जोड्ने सडक स्तरोन्नतिको कार्य भएको छ भने भिमभेदी कुलेखानी सडक खण्ड सम्पन्न ।

(२०) यस अवधिमा ५१० वटा भवन र २३३० वटा जनता आवास इकाई सम्पन्न भएको छ ।

(२१) यस अवधिमा ८७४८३२७ क्यू.फि. काठ, १४१५८०५ के.जी. जडिवुटी, ४१६५१५ के.जी खोटो तथा ६९८०६२२ गोटा जम्मा विरुवा उत्पादन भएको छ ।

(२२) ४८ वटा प्रहरी एकाइ भवनहरू सम्पन्न भएको एवम् २६ वटा निर्माणाधीन अवस्थामा रहेको छ भने नुवाकोट र काभ्रेपलाञ्चोक जिल्लामा विपद् उद्धार एवम् राहतका लागि आवश्यक सामग्रीहरू भण्डारण गर्ने गोदामघर निर्माण गरी सञ्चालनमा रहेको ।

(२३) सवारी साधन दर्ता (आ.ब. २०७४/७५-२०७८/७९ ५३८९७५ जना

(२४) व्यावसायिक तथा सिप विकास तालिम केन्द्रबाट तालिम प्राप्त जनशक्ति (आ.ब. २०७४/७५-२०७८/७९) १०४३६ जना ।

२. **प्रदेश सरकारले सम्पन्न गरेका सफल र उदाहरणीय कार्यहरू**

(१) प्रदेश लोक सेवा आयोगको गठन तथा कर्मचारी भर्ना छनौट सिफारिसको शुरूवात

(२) प्रदेश तथा प्रदेशभित्रका स्थानीय तहमा कर्मचारी व्यवस्थापन लागायतका कार्यलाई व्यवस्थित गर्ने प्रदेश निजामती सेवा ऐन, २०७९ र स्थानीय सेवा (गठन तथा सञ्चालन) ऐन, २०७९ तर्जुमा भई कार्यान्वयनमा रहेको,

(३) प्रदेश किताबखानाको स्थापना भई संघीय मामिला तथा सामान्य प्रशासन मन्त्रालयको सहजीकरणमा वैयक्तिक सूचना प्रणालीमार्फत कर्मचारी संकेत नम्बर वितरण सम्बन्धी कार्य शुरूवात भएको,

(४) घुमफिर वर्ष २०७९ को सफल कार्यान्वयन,

(५) क्यान्सर रोग लागेका विपन्न नागरिकहरूका लागि संघीय सरकारबाट उपलब्ध हुने सहुलियत रकममा थप रू. ५० हजार रकम थप कार्यक्रम,

(६) नसर्ने रोगहरूको रोकथाम, नियन्त्रण र उपचार सेवाको पहुँच वृद्धि गर्न मुख्यमन्त्री जनता स्वास्थ्य कार्यक्रम,

(७) विपन्न नागरिकहरूको लागि निःशुल्क ब्लड ब्याग कार्यक्रम,

(८) एक विद्यालय एक नर्स कार्यक्रम,

(९) प्रादेशिक अस्पताल, स्वास्थ्य केन्द्रहरूको न्यूनतम सेवा मापदण्ड सुधार कार्यक्रम,

(१०) आश्रित नागरिकहरू, सिमान्तकृत तथा लोपोन्मुख जातजाति, असाहयहरूका लागि निःशुल्क स्वास्थ्य बीमा कार्यक्रम,

(११) नवजात शिशु, मातृ मृत्युदर घटाउनका लागि आमा समूह सुदृढीकरण कार्यक्रम,

(१२) ९७.२२ प्रतिशत साक्षरतासहित मिति २०७८ असोज ११ गते बागमती प्रदेशलाई नेपालकै प्रथम साक्षर प्रदेश घोषणा गरिएको,

(१३) सवारी कर र नवीकरण शुल्कको अनलाइन प्रणालीमार्फत भुक्तानी शुरूवात गरिएको,

(१४) सवारी चालक अनुमतिपत्र वितरणको लागि सफ्टवेयरको प्रयोग गरिएको,

(१५) विपद् व्यवस्थापन प्रभावकारी बनाउन प्रदेश विपद् व्यवस्थापन कोषको स्थापना गरी पुनर्लाभ, पुनर्स्थापना, राहतका लागि स्थानीय तहको विपद् कोषमा परिचालन गरिएको,

(१६) कानुनी सहायतासम्बन्धी कार्यलाई प्रभावकारी बनाउन स्थानीय तहहरूमा न्यायिक सहजकर्ताहरूको व्यवस्था गरिएको,

(१७) प्रदेश प्रहरीको संस्थागत तथा संरचनागत सुदृढीकरणमा प्रदेश सरकारले सहयोग गरेको ।

## ३. प्रदेश सरकारबाट तर्जुमा भएका कानुनहरू

### क) ऐनहरू

| क्र. सं. | ऐनको नाम | प्रमाणीकरण र प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| १. | प्रदेश आर्थिक कार्यविधि ऐन, २०७४ | २०७४।१२।२१ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश आर्थिक कार्यविधि (पहिलो संशोधन) ऐन, २०७७ | २०७७।०४।०९ | |

| क्र. सं. | ऐनको नाम | प्रमाणीकरण र प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| २. | प्रदेश स्तरका केही सार्वजनिक लिखत प्रमाणीकरण ऐन, २०७४ | २०७४।१२।२१ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश स्तरका केही सार्वजनिक लिखत प्रमाणीकरण (पहिलो संशोधन) ऐन, २०७५ | २०७६।०१।२० | |
| ३. | स्थानीय तहका पदाधिकारी तथा सदस्यको सुविधा सम्बन्धी ऐन, २०७५ | २०७५।०१।२० | पहिलो पटक संशोधन भएको । |
| | स्थानीय तहका पदाधिकारी तथा सदस्यको सुविधा सम्बन्धी (पहिलो संशोधन) ऐन, २०७६ | २०७७।०१।०३ | |
| ४. | गाउँ/नगर/जिल्ला सभा सञ्चालन (कार्यविधि) ऐन, २०७५ | २०७५।०१।२० | |
| ५. | प्रदेश वित्तीय हस्तान्तरण ऐन, २०७५ | २०७५।०३।०५ | |
| ६. | प्रदेश आकस्मिक कोष ऐन, २०७५ | २०७५।०३।२० | |
| ७. | कर तथा गैर कर राजस्व सम्बन्धी ऐन, २०७५ | २०७५।०३।३२ | पहिलो पटक संशोधन भएको । |
| | कर तथा गैर कर राजस्व सम्बन्धी (पहिलो संशोधन) ऐन, २०७६ | २०७६।०३।२९ | |
| ८. | मुख्य न्यायाधिवक्ताको काम, कर्तव्य र अधिकार तथा सेवाको शर्त सम्बन्धी ऐन, २०७५ | २०७५।०५।२९ | |
| ९. | मुख्यमन्त्री र मन्त्रीको पारिश्रमिक तथा अन्य सुविधा सम्बन्धी ऐन, २०७५ | २०७५।०५।२९ | |
| १०. | प्रदेश प्रशासकीय कार्यविधि (नियमित गर्ने) ऐन, २०७५ | २०७५।०५।२९ | |
| ११. | प्रदेश सभाका पदाधिकारी तथा सदस्यको पारिश्रमिक र सुविधा सम्बन्धी ऐन, २०७५ | २०७५।०६।०४ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश सभाका पदाधिकारी तथा सदस्यको पारिश्रमिक र सुविधा सम्बन्धी (पहिलो संशोधन) ऐन, २०७६ | २०७६।०१।२० | |

| क्र. सं. | ऐनको नाम | प्रमाणीकरण र प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| १२. | प्रदेश सभा सचिवालय सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन, २०७५ | २०७५।०६।०४ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश सभा सचिवालय सम्बन्धमा व्यवस्था गर्न बनेको (पहिलो संशोधन) ऐन, २०७६ | २०७६।०५।१९ | |
| १३. | प्रदेश दुग्ध विकास वोर्ड ऐन, २०७५ | २०७५।०६।०४ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश दुग्ध विकास वोर्ड (पहिलो संशोधन) ऐन, २०७६ | २०७६।१०।२८ | |
| १४. | प्रदेश विपद् व्यवस्थापन ऐन, २०७५ | २०७५।०६।०४ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश विपद् व्यवस्थापन (पहिलो संशोधन) ऐन, २०७९ | २०७९।०४।१३ | |
| १५. | प्रदेश स्वास्थ्य सेवा ऐन, २०७५ | २०७५।०७।१९ | |
| १६. | प्रदेश संस्था ऐन, २०७५ | २०७५।०९।११ | |
| १७. | प्रदेश कार्य सञ्चालन कोष ऐन, २०७५ | २०७५।०९।११ | |
| १८. | प्रदेश खेलकुद विकास ऐन , २०७५ | २०७५।०९।११ | |
| १९. | प्रदेश प्राविधिक तथा व्यावसायिक शिक्षा एवम् तालिम परिषद् स्थापना र सञ्चालन गर्ने ऐन, २०७५ | २०७५।०९।११ | |
| २०. | प्रदेश सञ्चार माध्यम व्यवस्थापन ऐन, २०७५ | २०७५।०९।११ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश सञ्चार माध्यम व्यवस्थापन (पहिलो संशोधन) ऐन,२०७९ | २०७९।४।३० | |
| २१. | प्रदेश सवारी तथा यातायात व्यवस्था ऐन, २०७५ | २०७५।१०।१८ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश सवारी तथा यातायात व्यवस्था (पहिलो संशोधन) ऐन, २०७६ | २०७६।०५।१९ | |
| २२. | प्रदेश बालबालिका सम्बन्धी ऐन, २०७६ | २०७६।०२।१३ | |
| २३. | प्रदेश सहकारी ऐन, २०७६ | २०७६।०२।१३ | |

| क्र. सं. | ऐनको नाम | प्रमाणीकरण र प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| २४. | प्रदेश बीउ बिजन ऐन, २०७६ | २०७६।०२।३१ | |
| २५. | कृषि व्यवसाय प्रवर्धन ऐन, २०७६ | २०७६।०२।३१ | |
| २६. | विभूषण सिफारिस तथा सम्मान र पदक सम्बन्धी ऐन, २०७६ | २०७६।०४।०३ | पहिलो पटक संशोधन भएको । |
| | विभूषण सिफारिस तथा सम्मान र पदक सम्बन्धी (पहिलो संशोधन) ऐन, २०७९ | २०७९।०४।०९ | |
| २७. | प्रदेश जलचर संरक्षण र व्यवस्थापन ऐन, २०७६ | २०७६।०५।०४ | |
| २८. | मदन भण्डारी स्वास्थ्य विज्ञान प्रतिष्ठान ऐन, २०७६ | २०७६।०६।०२ | |
| २९. | प्रदेश राष्ट्रिय वन ऐन, २०७६ | २०७६।०६।०२ | |
| ३०. | प्रदेश लोक सेवा आयोग ऐन, २०७६ | २०७६।०६।२८ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश लोक सेवा आयोग (पहिलो संशोधन) ऐन, २०७६ | २०७६।११।१९ | |
| ३१. | प्रदेश सूचनाको हक सम्बन्धी ऐन, २०७६ | २०७६।०७।१४ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश सूचनाको हक सम्बन्धी (पहिलो संशोधन) ऐन, २०७७ | २०७७।०२।२६ | |
| ३२. | सार्वजनिक, निजी, सहकारी साझेदारी ऐन, २०७६ | २०७६।०७।१४ | |
| ३३. | प्रादेशिक व्यापार तथा व्यवसाय सम्बन्धी ऐन, २०७६ | २०७६।०७।२२ | |
| ३४. | प्रदेश औद्योगिक व्यवसाय ऐन, २०७६ | २०७६।०९।१८ | |
| ३५. | प्रदेश युवा परिषद् ऐन, २०७६ | २०७७।०१।०३ | |
| ३६. | वातावरण संरक्षण ऐन, २०७७ | २०७७।०४।०९ | |
| ३७. | अन्तर प्रदेश बासिन्दाको समान सुरक्षा, व्यवहार र सुविधा सम्बन्धी ऐन, २०७७ | २०७७।०४।१३ | |
| ३८. | प्रदेश सुशासन ऐन, २०७७ | २०७७।०४।१६ | |
| ३९. | प्रदेश प्रहरी ऐन, २०७७ | २०७७।०५।१५ | |

| क्र. सं. | ऐनको नाम | प्रमाणीकरण र प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| ४०. | प्रदेश सार्वजनिक सडक ऐन, २०७८ | २०७८।०४।१२ | |
| ४१. | प्रदेश उच्च शिक्षा ऐन, २०७८ | २०७८।१२।१४ | |
| ४२. | प्रदेश पर्यटन ऐन, २०७८ | २०७९।०१।०७ | |
| ४३. | प्रदेश अनुसन्धान ब्युरो ऐन,२०७९ | २०७९।०४।३० | |
| ४४. | स्थानीय सेवा (गठन तथा सञ्चालन) ऐन, २०७९ | २०७९।११।१८ | |
| ४५. | प्रदेश निजामती सेवा ऐन, २०७९ | २०७९।११।१८ | |
| ४६. | मदन भण्डारी स्वास्थ्य विज्ञान प्रतिष्ठान ऐन, २०७६ को साविकको व्यवस्था जगाउने सम्बन्धी ऐन, २०८० | २०८०।०२।०१ | |

## ख) नियमावलीहरू

| क्र. सं. | नियमावलीको नाम | प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| १. | बागमती प्रदेशको प्रदेश सभा नियमावली, २०७४ | २०७४।११।१४ | पहिलो पटक संशोधन भएको । |
| | बागमती प्रदेशको प्रदेश सभा (पहिलो संशोधन) नियमावली, २०७६ | २०७६।०५।१० | |
| २. | प्रदेश सरकार, बागमती प्रदेश (कार्य विभाजन) नियमावली, २०७४ | २०७४।११।१६ | |
| ३. | जिल्ला समन्वय समितिको अन्य काम, कर्तव्य र अधिकार सम्बन्धी नियमावली, २०७५ | २०७५।०७।१४ | |
| ४. | प्रदेश खेलकुद विकास नियमावली, २०७६ | २०७६।०१।३१ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश खेलकुद विकास (पहिलो संशोधन) नियमावली, २०७८ | २०७८।११।१२ | |

| क्र. सं. | नियमावलीको नाम | प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| ५. | प्रदेश सञ्चार माध्यम व्यवस्थापन नियमावली, २०७६ | २०७६।०३।०९ | चौथो पटक संशोधन भएको । |
| | प्रदेश सञ्चार माध्यम व्यवस्थापन (पहिलो संशोधन) नियमावली, २०७७ | २०७७।०४।२६ | |
| | प्रदेश सञ्चार माध्यम व्यवस्थापन (दोस्रो संशोधन) नियमावली, २०७८ | २०७८।०३।२० | |
| | प्रदेश सञ्चार माध्यम व्यवस्थापन (तेस्रो संशोधन) नियमावली, २०७८ | २०७८।०९।२७ | |
| | प्रदेश सञ्चार माध्यम व्यवस्थापन (चौथो संशोधन) नियमावली, २०७८ | २०७९।१२।३० | |
| ६. | प्रदेश सार्वजनिक खरिद नियमावली, २०७६ | २०७६।०४।०६ | खारेज भएको । |
| | प्रदेश सार्वजनिक खरिद (पहिलो संशोधन) नियमावली, २०७६ | २०७६।०६।०७ | |
| | प्रदेश सार्वजनिक खरिद (दोस्रो संशोधन) नियमावली, २०७७ | २०७७।०९।०९ | |
| | प्रदेश सार्वजनिक खरिद (तेस्रो संशोधन) नियमावली, २०७८ | २०७८।०२।२० | |
| ७. | प्रदेश पूर्वाधार विकास साझेदारी कार्यक्रम (सञ्चालन कार्यविधि) नियमावली, २०७६ | २०७६।०६।१५ | दोस्रो पटक संशोधन भएको । |
| | प्रदेश पूर्वाधार विकास साझेदारी कार्यक्रम (सञ्चालन कार्यविधि) (पहिलो संशोधन) नियमावली, २०७६ | २०७६।०८।२३ | |
| | प्रदेश पूर्वाधार विकास साझेदारी कार्यक्रम (सञ्चालन कार्यविधि) (दोस्रो संशोधन) नियमावली, २०७७ | २०७७।०६।१५ | |
| ८. | प्रदेश आर्थिक कार्यविधि नियमावली, २०७६ | २०७६।०८।०५ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश आर्थिक कार्यविधि (पहिलो संशोधन) नियमावली, २०७८ | २०७८।०३।२० | |

| क्र. सं. | नियमावलीको नाम | प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| ९. | प्रदेश स्वास्थ्य सेवा नियमावली, २०७६ | २०७६।०९।२७ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश स्वास्थ्य सेवा (पहिलो संशोधन) नियमावली, २०७९ | २०७९।०३।०२ | |
| १०. | प्रदेश सहकारी नियमावली, २०७६ | २०७६।१०।२८ | |
| ११. | प्रदेश लोक सेवा आयोग नियमावली, २०७६ | २०७६।१२।०७ | |
| १२. | मदन भण्डारी स्वास्थ्य विज्ञान प्रतिष्ठान (पदाधिकारी व्यवस्थापन तथा सेवा सुविधा सम्बन्धी) नियमावली, २०७७ | २०७७।०३।१९ | |
| १३. | प्रदेश युवा परिषद् नियमावली, २०७७ | २०७७।०४।२१ | |
| १४. | प्रदेश सुशासन नियमावली, २०७७ | २०७७।०७।१७ | |
| १५. | मदन भण्डारी स्वास्थ्य विज्ञान प्रतिष्ठान (आर्थिक प्रशासन) नियमावली, २०७७ | २०७७।०८।१८ | |
| १६. | प्रदेश भ्रमण खर्च नियमावली, २०७७ | २०७७।११।१३ | |
| १७. | मदन भण्डारी स्वास्थ्य विज्ञान प्रतिष्ठान (अस्पताल सञ्चालन तथा व्यवस्थापन) नियमावली, २०७७ | २०७७।१२।१६ | |
| १८. | मदन भण्डारी स्वास्थ्य विज्ञान प्रतिष्ठान (कर्मचारी सेवा, शर्त र सुविधा सम्बन्धी) नियमावली, ०७७ | २०७७।१२।१९ | |
| १९. | मदन भण्डारी स्वास्थ्य विज्ञान प्रतिष्ठान (शिक्षक सेवा, शर्त र सुविधा सम्बन्धी) नियमावली, २०७७ | २०७८।०१।२७ | |
| २०. | विद्युतीय माध्यमबाट यातायात क्षेत्रको सेवा प्रवाह तथा राजस्व भुक्तानी नियमावली, २०७८ | २०७८।०१।२३ | |
| २१. | प्रदेश भाडा निर्धारण/समायोजन तथा विद्युतीय माध्यमबाट भाडा भुक्तानी नियमावली, २०७८ | २०७८।०५।१० | |
| २२. | प्रदेश उच्च शिक्षा नियमावली, २०७९ | २०८०।०१।२८ | |
| २३. | प्रदेश सार्वजनिक खरिद नियमावली, २०८० | २०८०।०२।०८ | |

| क्र. सं. | नियमावलीको नाम | प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| २४. | बागमती प्रदेश सरकार (कार्य सम्पादन) नियमाली, २०७४ | राजपत्रमा प्रकाशित नभएको । | |

## ग) विनियमावली

| क्र. सं. | विनियमावलीको नाम | प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| १ | प्रदेश दुग्ध विकास बोर्ड विनियमावली, २०७६ | २०७६।०८।०५ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश दुग्ध विकास बोर्ड (पहिलो संशोधन) विनियमावली, २०७७ | २०७७।०४।२६ | |
| २ | प्रदेश सहकारी विकास बोर्ड विनियमावली, २०७८ | २०७८।११।२६ | |

## घ) निर्देशिकाहरू

| क्र. सं. | निर्देशिकाको नाम | प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| १. | प्रदेश राजपत्र प्रकाशन सम्बन्धी निर्देशिका, २०७६ | २०७६।०४।०६ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश राजपत्र प्रकाशन सम्बन्धी (पहिलो संशोधन) निर्देशिका, २०७७ | २०७७।०५।२९ | |
| २. | पाठ्यक्रम तथा पाठ्यसामग्री विकास निर्देशिका, २०७७ | २०७७।०२।२८ | |
| ३. | शैक्षिक छात्रवृत्ति निर्देशिका, २०७८ | २०७८।१०।२७ | |
| ४. | शैक्षिक परामर्श सेवा तथा भाषा शिक्षण निर्देशिका, २०७९ | २०७९।०५।०६ | |

## ङ) कार्यविधिहरू

| क्र. सं. | कार्यविधिको नाम | प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| १. | प्रदेश विपद् कोष सञ्चालन कार्यविधि, २०७५ | २०७५।१०।२४ | खारेज भएको । |
| २. | जनता आवास कार्यक्रम कार्यान्वयन कार्यविधि, २०७५ | २०७५।१२।०२ | पहिलो पटक संशोधन भएको । |
| | जनता आवास कार्यक्रम कार्यान्वयन (पहिलो संशोधन) कार्यविधि, २०७६ | २०७६।०८।२३ | |
| ३. | मागमा आधारित प्रदेश विकास आयोजना (सञ्चालन तथा व्यवस्थापन) कार्यविधि, २०७५ | २०७५।१२।२७ | |
| ४. | प्रदेश एकीकृत अनुदान व्यवस्थापन कार्यविधि, २०७६ | २०७६।०५।०४ | |
| ५. | प्रदेश निजामती कर्मचारीको पदस्थापना, सरुवा तथा काज सम्बन्धी कार्यविधि, २०७६ | २०७६।०६।०७ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश निजामती कर्मचारीको पदस्थापना, सरुवा तथा काज सम्बन्धी (पहिलो संशोधन) कार्यविधि, २०७८ | २०७८।०४।२८ | |
| | प्रदेश निजामती कर्मचारीको पदस्थापना, सरुवा तथा काज सम्बन्धी (दोस्रो संशोधन) कार्यविधि, २०७८ | २०७८।०९।१२ | |
| ६. | सङ्गठन संरचना तथा दरबन्दी व्यवस्थापन सम्बन्धी कार्यविधि, २०७६ | २०७६।०६।१५ | |
| ७. | जिल्ला समन्वय समितिलाई उपलब्ध गराइने बजेट तथा अनुदान रकम खर्च सम्बन्धी कार्यविधि, २०७६ | २०७६।०७।०५ | |
| ८. | मुख्यमन्त्री जनता स्वास्थ्य परीक्षण कार्यक्रम सञ्चालन कार्यविधि, २०७६ | २०७६।०८।२३ | खारेज भएको । |
| ९. | कोरोना भाइरस संक्रमण, रोकथाम, नियन्त्रण तथा उपचार सहयोग कार्यविधि, २०७६ | २०७६।१२।१६ | |
| १०. | एकीकृत बस्ती विकास सम्बन्धी कार्यविधि, २०७७ | २०७७।०१।०४ | |

| क्र. सं. | कार्यविधिको नाम | प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| ११. | उत्पादन तथा रोजगारी सिर्जनाका लागि सहुलियतपूर्ण ऋण लगानी कार्यविधि, २०७७ | २०७७।०६।१९ | खारेज भएको । |
| | उत्पादन तथा रोजगारी सिर्जनाका लागि सहुलियतपूर्ण ऋण लगानी (पहिलो संशोधन) कार्यविधि, २०७७ | २०७७।०८।१५ | |
| १२. | व्यवस्थापन परीक्षण कार्यविधि, २०७७ | २०७७।०८।१५ | |
| १३. | प्रदेश विशेष अनुदान सम्बन्धी कार्याविधि, २०७७ | २०७७।०८।२२ | |
| १४. | प्रदेश समपूरक अनुदान सम्बन्धी कार्याविधि, २०७७ | २०७७।०८।२२ | |
| १५. | क्यान्सर रोग लागेका विपन्न नागरिकलाई औषधि उपचारमा सहुलियत प्रदान गर्ने सम्बन्धी कार्यविधि, २०७७ | २०७७।०९।०६ | खारेज भएको । |
| १६. | वैकल्पिक ऊर्जा प्रणाली अनुदान परिचालन तथा कार्य सञ्चालन कार्यविधि, २०७७ | २०७७।१०।१५ | |
| १७. | वार्षिक योजना छनौट कार्यविधि, २०७८ | २०७८।०२।१३ | |
| १८. | विपद् खोज उद्धार तथा राहत वितरण मापदण्ड सम्बन्धी कार्यविधि, २०७८ | २०७८।०४।२८ | |
| १९. | उत्पादन तथा रोजगारी सिर्जनाका लागि सहुलियतपूर्ण ऋण लगानी कार्यविधि, २०७८ | २०७८।०६।२० | |
| २०. | एक विद्यालय एक नर्स कार्यक्रम सञ्चालन कार्यविधि, २०७८ | २०७८।०७।२९ | पहिलो पटक संशोधन भएको । |
| | एक विद्यालय एक नर्स कार्यक्रम सञ्चालन (पहिलो संशोधन) कार्यविधि, २०७९ | २०७९।०२।०५ | |
| २१. | प्रदेश पूर्वाधार, स्वास्थ्य प्रवर्द्धन तथा कोभिड पुर्नस्थापना साझेदारी कार्यक्रम (स्वास्थ्य क्षेत्र तर्फको सञ्चालन तथा व्यवस्थापन) कार्यविधि, २०७८ | २०७८।०८।०६ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश पूर्वाधार, स्वास्थ्य प्रवर्धन तथा कोभिड पुर्नस्थापना साझेदारी कार्यक्रम (स्वास्थ्य क्षेत्र तर्फको सञ्चालन तथा व्यवस्थापन) (पहिलो संशोधन) कार्यविधि, २०७८ | २०७८।०९।२९ | |

| क्र. सं. | कार्यविधिको नाम | प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| २२. | प्रदेश पूर्वाधार, स्वास्थ्य प्रवर्धन तथा कोभिड पुर्नस्थापना साझेदारी कार्यक्रम (शिक्षातर्फ सञ्चालन तथा व्यवस्थापन) कार्यविधि, २०७८ | २०७८।०८।१६ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश पूर्वाधार, स्वास्थ्य प्रवर्धन तथा कोभिड पुर्नस्थापना साझेदारी कार्यक्रम (शिक्षा तर्फ सञ्चालन तथा व्यवस्थापन) (पहिलो संशोधन) कार्यविधि,२०७८ | २०७८।०९।२९ | |
| २३. | प्रदेश पूर्वाधार साझेदारी कार्यक्रम (सञ्चालन तथा व्यवस्थापन) कार्यविधि, २०७८ | २०७८।०८।१६ | |
| २४. | प्रदेश विशिष्ट व्यक्तिहरूको सुरक्षामा खटिने सुरक्षाकर्मीलाई पोसाक सुविधा प्रदान गर्ने मापदण्ड सम्बन्धी कार्यविधि, २०७८ | २०७८।०९।१९ | |
| २५. | प्रदेश विकास कार्यक्रम (विशेष) कार्यान्वयन सम्बन्धी कार्यविधि, २०७८ | २०७८।१०।१० | |
| २६. | प्रदेशको विपन्न नागरिक एवम् आकस्मिक उपचारका लागि रक्तसञ्चार सेव (सञ्चालन तथा व्यवस्थापन) कार्यविधि, २०७८ | २०७८।११।०२ | |
| २७. | चिकित्सक तथा स्वास्थ्यकर्मी करार सेवा व्यस्थापन सम्बन्धी कार्यविधि, २०७८ | २०७८।११।०२ | |
| २८. | प्रदेशको वित्तीय सुशासन जोखिम मूल्याङ्कन कार्यविधि, २०७८ | २०७८।११।२३ | |
| २९. | सवारी चालक अनुमतिपत्र परीक्षा सञ्चालन प्रोत्साहन भत्ता सम्बन्धी कार्यविधि, २०७८ | २०७८।११।२६ | |
| ३०. | गैर नाफामूलक सामुदायिक अस्पताललाई पुँजीगत सुधार/विस्तार अनुदान (सञ्चालन तथा व्यवस्थापन) कार्यविधि, २०७८ | २०७८।११।३० | |
| ३१. | शीत भण्डार सञ्चालन तथा व्यवस्थापन कार्यविधि, २०७८ | २०७८।११।३० | |

| क्र. सं. | कार्यविधिको नाम | प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| ३२. | सवारी चालक अनुमतिपत्रको लिखित तथा प्रयोगात्मक परीक्षा स्थल (छनोट तथा सञ्चालन) कार्यविधि, २०७८ | २०७८।१२।२१ | |
| ३३. | प्रदेश सशर्त अनुदान सम्बन्धी कार्यविधि, २०७९ | २०७९।०१।१२ | पहिलो पटक संशोधन भएको । |
| | प्रदेश सशर्त अनुदान सम्बन्धी (पहिलो संशोधन) कार्यविधि, २०७९ | २०७९।०२।२४ | |
| ३४. | सडक क्षेत्रको निजी जग्गामा पर्ने घर, टहरो वा भवनको क्षतिपूर्ति निर्धारण कार्यविधि,२०७९ | २०७९।०२।०५ | |
| ३५. | मुख्यमन्त्री जनता स्वास्थ्य कार्यक्रम (परीक्षण निदान परामर्श र उपचार) व्यवस्थापन कार्यविधि, २०७९ | २०७९।०३।०२ | |
| ३६. | उत्पादन तथा रोजगारी सिर्जनाका लागि सहुलियतपूर्ण ऋण लगानी कार्यविधि, २०७९ | २०७९।०५।२३ | |
| ३७. | प्रविधि हस्तान्तरण कार्यविधि, २०७९ | २०७९।०८।२९ | |
| ३८ | किसान परिचय पत्र वितरण कार्यविधि, २०७९ | २०७९।०९।११ | |
| ३९ | सेवा करारमा प्राविधिक जनशक्ति छनौट सम्बन्धी कार्यविधि, २०७९ | २०७९।११।११ | |
| ४० | प्रदेश गोदामघर व्यवस्थापन कार्यविधि, २०७९ | २०७९।१२।२३ | |
| ४१ | सीपमूलक तालिम कार्यक्रम सञ्चालन कार्यविधि, २०७९ | २०७९।१२।२३ | |

**च**) **मापदण्डहरू**

| क्र.सं. | मापदण्डको नाम | प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| १. | वनपैदावारमा आधारित उद्योग र राष्ट्रिय वन बिचको दुरी सम्बन्धी मापदण्ड, २०७७ | २०७७।११।०६ | |
| २. | सम्मान र पदक प्रदान गर्ने मापदण्ड, २०७८ | २०७८।०३।१० | पहिलो पटक संशोधन भएको । |
| | सम्मान र पदक प्रदान गर्ने (पहिलो संशोधन) मापदण्ड, २०७९ | २०७९।०२।१३ | |

| | | | |
|---|---|---|---|
| ३. | प्रदेश आयोजनाको बहुवर्षीय ठेक्का सम्बन्धी मापदण्ड, २०७८ | २०७८।१०।२७ | |
| ४. | प्रदेश सार्वजनिक खर्चको मापदण्ड, २०७८ | २०७८।११।१८ | |
| ५. | प्रदेश आन्तरिक पर्यटन काज सम्बन्धी मापदण्ड, २०७८ | २०७८।१२।२१ | खारेज भएको । |
| ६. | आन्तरिक पर्यटन काज सम्बन्धी मापदण्ड, २०७९ | २०७९।०५।०२ | |
| ७. | मन्त्रीको सरकारी आवास मर्मत, सम्भार तथा सजावट सम्बन्धी मापदण्ड, २०७९ | २०७९।०१।०७ | |

**च)** **आदेशहरू**

| **क्र.सं.** | **आदेशको नाम** | **प्रदेश राजपत्रमा प्रकाशन मिति** | **कैफियत** |
|---|---|---|---|
| १. | प्रदेश सभाका सभामुख, उपसभामुख तथा सदस्यको पारिश्रमिक र सुविधा सम्बन्धी आदेश, २०७५ | २०७५।०२।०२ | प्रतिस्थापन भई खारेज । |
| २. | मुख्यमन्त्री र मन्त्रीको पारिश्रमिक तथा अन्य सुविधा सम्बन्धी आदेश, २०७५ | २०७५।०२।०२ | प्रतिस्थापन भई खारेज । |
| ३. | प्रदेश नीति तथा योजना आयोग (गठन तथा कार्य सञ्चालन) आदेश, २०७५ | २०७५।०२।२९ | छैठौं पटक संशोधन भएको । |
| | प्रदेश नीति तथा योजना आयोग (गठन तथा कार्य सञ्चालन) (पहिलो संशोधन) आदेश, २०७५ | २०७५।०७।१४ | |
| | प्रदेश नीति तथा योजना आयोग (गठन तथा कार्य सञ्चालन) (दोस्रो संशोधन) आदेश, २०७५ | २०७५।१२।१३ | |
| | प्रदेश नीति तथा योजना आयोग (गठन तथा कार्य सञ्चालन) (तेस्रो संशोधन) आदेश, २०७७ | २०७७।०५।१० | |
| | प्रदेश नीति तथा योजना आयोग (गठन तथा कार्य सञ्चालन) (चौथो संशोधन) आदेश, २०७८ | २०७८।०४।२८ | |
| | प्रदेश नीति तथा योजना आयोग (गठन तथा कार्य सञ्चालन) (पाँचौ संशोधन) आदेश, २०७९ | २०७९।१०।२६ | |
| | प्रदेश नीति तथा योजना आयोग (गठन तथा कार्य सञ्चालन) (छैठौं संशोधन) आदेश, २०७९ | २०७९।१२।२८ | |

| क्र.सं. | आदेशको नाम | प्रदेश राजपत्रमा प्रकाशन मिति | कैफियत |
|---|---|---|---|
| ४. | प्रदेशभित्रका अस्पतालको सञ्चालन र व्यवस्थापन आदेश, २०७५ | २०७५।०७।३० | पहिलो पटक संशोधन भएको । |
| | प्रदेशभित्रका अस्पतालको सञ्चालन र व्यवस्थापन (पहिलो संशोधन) आदेश, २०७८ | २०७८।०१।१३ | |
| ५. | प्रदेश सुशासन केन्द्र (स्थापना तथा कार्य सञ्चालन) आदेश, २०७७ | २०७७।०६।०५ | |
| ६. | प्रदेश यातायात सञ्चालन तथा व्यवस्थापन बोर्ड (स्थापना तथा कार्य सञ्चालन) आदेश, २०७७ | २०७७।०८।१८ | |
| ७. | प्रदेश किताबखाना (स्थापना तथा कार्य सञ्चालन) आदेश, २०७८ | २०७८।११।०५ | |

# तस्बिरमा बागमती प्रदेश



# गण्डकी प्रदेश सरकारका उपलब्धि

नेपालको संविधान अवलम्बन गरेको सहकारिता, सहअस्तित्व र समन्वयको सिद्धान्तबमोजिम संघीयता कार्यान्वयन गर्न गण्डकी प्रदेश सरकार प्रतिबद्ध रहेको छ। यसै सिलसिलामा सम्माननीय प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डको प्रमुख आतिथ्यतामा २०८० असार १५ गते अन्तर प्रदेश मुख्यमन्त्री बैठक सफलतापूर्वक सम्पन्न गरी संघीयतालाई सबलीकरण गर्न १७ बुँदे साझा धारणा जारी गरेको छ। सो साझापत्रमा प्रहरी समायोजन, जग्गा प्राप्ति, तीनै तहका सरकारको कार्य जिम्मेवारी र अधिकार क्षेत्र परिभाषित, वित्तीय समानीकरण अनुदानको बजेट वृद्धिलगायतका विषयहरू रहेका छन। साथै, २०८० असार १६ गते सम्माननीय प्रधानमन्त्रीको अध्यक्षतामा राष्ट्रिय समन्वय परिषद्को पहिलो बैठक पोखरामा आयोजना गर्न मुख्यमन्त्री तथा मन्त्रीपरिषदको कार्यालयले समन्वय र सहजीकरण गरेको छ।

प्रदेश गौरवको रुपमा रहेको विद्युतीय सुशासन गुरुयोजना (e–Governance Master Plan) अन्तर्गत सार्वजनिक सेवा प्रवाहलाई छिटोछरितो, मितव्ययी, पारदर्शी र प्रभावकारी बनाई प्रदेशलाई डिजिटल प्रदेशको रुपमा विकास गर्न विद्युतीय गण्डकी प्रदेश (Digital Gandaki Province) को अवधारणापत्र स्वीकृत गरी कार्यान्वयनमा ल्याइएको छ। जसअन्तर्गत मन्त्रालय/ निकाय/ कार्यालयहरूको कार्यक्रमको Milestone प्रविष्टि सफ्टवेयरमा आधारित बनाई online Tracking गर्ने अभ्यास सुरु भएको छ। साथै, सो गुरुयोजनाअन्तर्गत Data Digitization, PPIS, Online Monitoring System, web portal निर्माण कार्य सम्पन्न भएका छन् भने मातहतका कार्यालयलाई ICT तर्फ उत्प्रेरित गर्दै New Digital Application गर्ने अभ्यास लागु गरी प्रदेशको शासन र सेवा प्रवाहमा नागरिकको पहुँचलाई अभिवृद्धि गरिएको छ। यसबाट जिम्मेवार शासन (Responsive Governance) लागु हुने अपेक्षाका साथै यसले नीति तथा कार्यक्रमलाई उपलब्धिमूलक बनाई नतिजामा आधारित ढाँचा (Result Based Matrix) कार्यान्वयनमा टेवा दिने छ। गण्डकी प्रदेश अनुगमन प्रणालीको कुशल कार्यान्वयनका लागि प्रदेश सरकार मातहतका प्रत्येक मन्त्रालय तथा निकायहरूबाट हरेक महिना माइलस्टोनअनुसारको प्रगति प्रविष्टि गरी Dash Board मा समष्टि उपलब्धिको Reflection हुने पद्दति विकास गरिएको छ।

- गुनासो व्यवस्थापन सुशासनको अभिन्न अङ्ग हो। यस मान्यतालाई आत्मसात् गर्दै गण्डकी प्रदेश मुख्यमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयलगायतका विभिन्न मन्त्रालय तथा अन्य केन्द्रीय निकायमा प्राप्त हुने विभिन्न किसिमका जनगुनासो र सुझावहरूको उचित सुनुवाइ गर्न जनतासँग मुख्यमन्त्री कार्यक्रम र हेलो मुख्यमन्त्री कक्ष अवधारणा ल्याइएको छ। यसबाट जनमुखी प्रशासन

व्यवस्थाको प्रवर्धन गरी प्रदेश सरकारबाट जनताका गुनासो सुन्ने तथा पृष्ठपोषण लिई तत्काल सम्बोधन हुने अपेक्षा राखिएको छ ।

- संघीय निजामती सेवा ऐन जारी नहुँदा सेवा प्रवाहमा परेको असरलाई मध्यनजर गरी प्रदेश र स्थानीय तहका कर्मचारीको वृत्ति विकास र उत्प्रेरणालाई सम्बोधन गर्दै नतिजा प्राप्त गर्न प्रदेश निजामती सेवा ऐन, २०७९, स्थानीय सेवा (गठन तथा सञ्चालन) ऐन, २०७९ र गण्डकी प्रदेश निजामती सेवा नियमावली, २०७९ जारी गरिएको छ । यसबाट लामो समयसम्म रहेको कानुनी रिक्तता पूरा भई जनशक्ति व्यवस्थापनको वातावरण निर्माण भएको छ । साथै राष्ट्रिय किताब खानासँगको सम्झौतामा प्रदेशमा कार्यरत निजामती कर्मचारीको व्यक्तिगत अभिलेख व्यवस्थित रुपमा राख्न प्रदेश कर्मचारी सूचना प्रणाली (Province Personnel Information System–PPIS) सफ्टवयेर निर्माण गरी कार्यान्वयनमा ल्याइएको छ । कर्मचारीको व्यक्तिगत विवरण माग संकलन तथा प्रविष्टिको कार्य भइरहेको छ ।
- सुशासन, सेवा प्रवाहमा सहजता, जवाफदेहिता, भ्रष्टाचार नियन्त्रण, शासनमा नागरिकको पहुँच अभिवृद्धि जस्ता शासकीय आयामको सुधारमा गण्डकी प्रदेश क्रियाशील छ । यातायात व्यवस्था कार्यालयहरूको सेवा प्रवाहलाई प्रविधिमैत्री र छिटो छरितो बनाउन सुझावसहितको प्रतिवेदन पेस गर्न कार्यदल गठन गरी सोको प्रतिवेदनको आधारमा सवारी चालक अनुमतिपत्रको सरलीकरण, सवारी साधन चालक अनुमतिपत्रको राजश्व अनलाईन प्रणालीमार्फत तिर्न सक्ने व्यवस्था, सवारी चालक अनुमति पत्रलाई सिफ्ट प्रणालीमा सञ्चालन गरी सेवा प्रवाहलाई सुधार गरिएको छ । यातायात व्यवस्था कार्यालय सवारी, कास्कीका सम्पूर्ण फाइल ढड्डा स्क्यानिङ (Scanning) गरी विद्युतीय अभिलेखीकरण (Digitization) गर्ने कार्य सम्पन्न भई यातायात व्यवस्था सेवालाई अनलाइन (Online) प्रणालीमा लगिएको छ । यातायात व्यवस्था कार्यालयहरू सवारी चालक अनुमति पत्र कार्यालयमा आवेदकले फाराम भर्दा देखिएको समस्याको समाधानार्थ आवेदकले सजिलै फारम भर्न सक्ने व्यवस्था मिलाइएको छ । यातायात व्यवस्था कार्यालय सवारी चालक अनुमति पत्र कास्कीमा बिहान ८ बजेदेखि सेवा प्रवाह सुरु गरिएको छ ।

**अभिलेखीकरण** (Digitization) **का कार्यहरू**

- प्रदेश सरकारअन्तर्गतका कार्यालयलाई चुस्त, दुरुस्त, नागरिकमैत्री, जवाफदेही र व्यवस्थित बनाउने कार्यमा प्रोत्साहित गर्न जारी गरिएको नमुना कार्यालय छनौट मापदण्डबमोजिम 'नमूना कार्यालय छनौट' गरी पुरस्कृत गरिएको छ ।
- स्थापनादेखि हालसम्म गण्डकी प्रदेश सरकारले विभिन्न ६३ ऐन र २२ नियमावली निर्माण गरेको छ । यी ऐन/नियमावलीहरू सर्वसाधारणको पहुँचका लागि मुख्यमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय वेबसाइटमा अद्यावधिक गरी प्रकाशन गरिएको छ । नेपालको संविधानको अनुसूचीबमोजिम एकल सूचीका गण्डकी प्रदेशमा निर्माण गर्नुपर्ने ४२ वटा ऐन र सोअनुसारका नियमावलीहरू पहिचान तथा अध्ययन गरिएको छ ।

- विगतको शासन सञ्चालनको कममा प्राप्त भएको अनुभव, प्रदेशको आन्तरिक आम्दानी तथा वर्तमान राष्ट्रिय आर्थिक अवस्था र प्रदेशलाई थप चुस्त र प्रभावकारी देख्न चाहने जनताको भावनालाई सम्बोधन गर्दै वर्तमान सरकारले मन्त्रालयको सङ्ख्या १२ बाट घटाई ७ कायम गरेको छ। प्रदेशको प्रशासन सुधारका लागि कार्यदल गठन भई अध्ययनसमेत भइरहेको छ। यसले प्रदेशलाई चुस्त एवम् कार्यमुखी बनाई शासकीय क्षमता अभिवृद्धि र सेवा प्रवाहमा सुधार गर्न कार्यदिशा दिने छ।
- प्रदेश मन्त्रालयहरूको लैङ्गिक समानता तथा सामाजिक समावेशीकरण स्वमूल्याङ्कन सम्पन्न भएको छ भने पाँचवटा मन्त्रालयहरूको लैङ्गिक समानता तथा सामाजिक समावेशीकरण परीक्षण (GESI AUDIT) सम्पन्न भएको छ। शासन सञ्चालनको क्रममा प्राप्त अनुभव, लैङ्गिक न्याय, अन्तरसरकारी संयन्त्रहरूको बैठकबाट प्राप्त सुझाव, कानुन कार्यान्वयनमा प्राप्त भएका पृष्ठपोषण लगायतका पक्षहरूको आधारमा बाझिएका ३४ वटा कानुनहरूलाई केही प्रदेश कानुन संशोधन ऐनमार्फत संशोधन गरिएको छ।
- नवप्रवर्तन साझेदारी कार्यक्रम मानवीय र सामाजिक पूँजीमा लगानी गरी दिगो आर्थिक विकास प्राप्त गर्ने कार्यक्रम हो। यसले सेवाप्रवाह , सुशासन र स्थानीय आर्थिक विकाससँग सम्बन्धित क्षेत्रका नवप्रवर्तनात्मक (innovative) कार्यक्रममार्फत स्थानीय तह र प्रदेशलाई जोडेको छ । यस नवप्रवर्तन कार्यक्रमको उपलब्धि निम्नलिखित छन।

| क्र.स. | परियोजनाको नाम | स्थानीय तहको नाम | विशिष्ट र अनुकरणीय हुनाको कारण |
|---|---|---|---|
| **नवप्रवर्तन साझेदारी कोषतर्फका परियोजना** | | | |
| १ | वालिङ नगरपालिकाको Entrepreneurship, Business Incubation and Innovation (EBIC ) परियोजना | वालिङ नगरपालिका | उद्यम, व्यवसायिकता प्रवर्धन र प्रविधिको प्रयोगद्वारा उत्पादन वृद्धि, बजारीकरण, प्रविधिमैत्री सेवा प्रवाह प्रवर्धन |
| २ | प्रविधि मैत्री सुशासन र डिजिटलाइज्ड फेदीखोला | फेदीखोला गाउँपालिका | आधुनिक प्रविधिद्वारा राजमार्ग सुधार, अनलाइन सेवाप्रवाहद्वारा नागरिक सन्तुष्टि प्रवर्धन |
| ३ | आर्थिक तथा सामाजिक रूपमा पछाडि परेका नागरिकको कृषि तथा पशुपालन कार्यलाई व्यावसायिक बनाई जीवनस्तर सुधार कार्यक्रम | भिरकोट नगरपालिका | सीमान्तकृत समुदायमा पकेटक्षेत्र विकास कार्यक्रमको मोडलमा बाख्रा, बंगुर र सुन्तला खेतीद्वारा उत्पादन अभिवृद्धि र जिविकोपार्जन सुधार |

| | | | |
|---|---|---|---|
| ४ | एकीकृत डिजिटल व्यास नगरपालिका परियोजना | व्यास नगरपालिका | व्यास नगरपालिकाको एकीकृत डिजिटल प्रविधि प्रयोग गरी राजश्व अभिवृद्धि, अनलाइन सेवा प्रवाह, डिजिटल नागरिक वडापत्र |
| ५ | दिगो विपद व्यवस्थापन, जीविकोपार्जन तथा खाद्य सुरक्षा कार्यक्रम | हुप्सेकोट गाउँपालिका | जोखिमयुक्त भौगोलिक स्थितिमा रहेको वस्ती र त्यसमा पहिरोबाट पीडित सीमान्तकृत मगर समुदायलाई पुनर्स्थापना, सिप विकास, जीविकोपार्जनको कार्य । |
| ६ | स्थानीय स्तरमा विपद जोखिम न्यूनीकरण तथा व्यवस्थापन र जलवायु परिवर्तन अनुकूलन परियोजना | घरपझोंग गाउँपालिका | स्थानीय तहमा विपद् जोखिम न्यूनीकरण, जलवायु परिवर्तन अनुकूलन सिकाइ केन्द्रको सञ्चालनबाट विपद्को जोखिम न्यूनीकरणका लागि खोज, उद्धार र पूर्वसूचना प्रणालीको विकास |
| ७ | सूचना प्रविधियुक्त सेवा प्रवाह र कृषि उत्पादन तथा व्यवस्थापन प्रणाली विकास कार्यक्रम | पुतलीबजार नगरपालिका | कृषि उत्पादनको बजारीकरण, नगरपालिकाको सेवा प्रवाह (घर नक्सा पास, डिजिटल पेमेन्ट, कृषि बजार प्रणाली विकास) |
| ८ | प्रविधिमैत्री राजश्व सुधार कार्यक्रम | गण्डकी गाउँपालिका | त्रिशुली र गण्डकी नदीबाट नदीजन्य पदार्थको चोरी निकासी नियन्त्रण, राजश्व अभिवृद्धि र प्रविधिमैत्री सेवा प्रवाह गर्ने |
| ९ | पर्यटनमैत्री तथा प्रविधिमैत्री नमुना गाउँपालिका | अन्नपूर्ण गाउँपालिका | आधुनिक प्रविधिको प्रयोगद्वारा पर्यटन प्रवर्धन, गाउँपालिकाले दिने सेवा झन्झटरहित र नागरिकमैत्री हुने, बनाउने र गाउँपालिकाको राजश्व अभिवृद्धि हुने, |

| | | | |
|---|---|---|---|
| १० | स्थानीय कच्चा स्रोतको व्यापारिक उपयोग सम्बन्धी परियोजना | कालीगण्डकी गाउँपालिका | स्थानीय स्तरमा केरा खेती अभिवृद्धि र उपयोगमा नरहेको केराको थामको रेशाबाट विभिन्न हस्तकलाका सामग्री उत्पादन, बजारीकरण र आय अभिवृद्धि |
| ११ | आर्थिक विकासका लागि व्यवसायिक ओखरखेती परियोजना | गल्कोट नगरपालिका | बाँझो जग्गामा व्यावसायिक ओखर खेतीबाट उत्पादन वृद्धि गर्ने, वैदेशिक रोजगारीमा जाने युवालाई आयआर्जन र जीवन स्तरमा सुधार गर्ने |
| १२ | परम्परागत घरेलु प्रविधिमा सुधार सम्बन्धी एकीकृत उद्यम विकास केन्द्र सञ्चालन | आँबुखैरेनी गाउँपालिका | परम्परागत जातीय सिपको माध्यमबाट निर्वाह गरिरहेका जातजातिहरूको लागि आधुनिक प्रविधि र सिपको विकास गरी एकीकृत उद्यम विकास केन्द्र स्थापना, उत्पादन वृद्धि र बजारीकरणमा सहयोग |

आ.व.२०७८/७९ मा प्रदेश तथा स्थानीय शासन सहयोग कार्यक्रम (PLGSP) मार्फत नवप्रवर्तन साझेदारी कोष कार्यक्रममा प्राप्त र आ.व. ०७९।८० मा १३ वटा नगरपालिका एवम् गाउँपालिकामा यो कार्यक्रम लागु भएको छ। यस कार्यक्रमले संघ, प्रदेश र स्थानीय तहको शासनलाई प्रभावकारी बनाउन, तीन तहको सरकारको समन्वय, सहकार्य र सह अस्तित्वलाई बढावा दिँदै संघीयता सबलीकरणमा सहयोग पुऱ्याएको छ। संघ, प्रदेश र स्थानीय तहबिचको अन्तरसम्बन्धलाई सहकारिता, सहअस्तित्व र समन्वयको माध्यमबाट मूर्तरुप दिन मुख्यमन्त्री नवप्रवर्तन साझेदारी कार्यक्रम र नवप्रवर्तन साझेदारी कोष कार्यक्रमबाट सञ्चालित परियोजनाहरू कार्यान्वयन गरी नवप्रवर्तन र पुनर्पोषणको साझा अभ्यास सुरुवात गरिएको छ।

नवप्रवर्तन कार्यक्रम र नवप्रवर्तन कोषको कार्यान्वयनबाट स्थानीय तहलाई नवप्रवर्तन सुशासन (Innovative Governance) तर्फ प्रेरित गरिरहेको छ। साथै संयुक्त लगानीको ढाँचामा उत्प्रेरित गर्दै संयुक्त लगानी मोडल (Co–Financing) लागु गरी संविधानले प्रदत्त गरेको समन्वय र सहकार्यलाई प्रदेश र स्थानीय तहले साझा रुपमा कार्यान्वयन गरेको छ। यसबाट स्थानीय तहहरूमा नवप्रवर्तनमा सकारात्मक प्रतिस्पर्धा सुरु हुनुका साथै स्थानीय तहमा भएको स्रोतको न्यूनतालाई सम्बोधन भएको छ।

- संघीयता कार्यान्वयनका सन्दर्भमा प्रदेश समन्वय परिषद्को पाँचौं बैठक बसी प्रदेश र स्थानीय तहका साझा

समस्या र चुनौतीहरू पहिचान गर्दै कानुन तर्जुमा र साझा अधिकारका सूचीको कार्यान्वयनमा देखिएका समस्या तथा अन्तरतह समन्वयका सुझावलाई कार्यान्वयनका लागि नेपाल सरकारसमक्ष अनुरोध गरिएको छ। प्रदेश दिगो विकास निर्देशक समितिको बैठक बसी दिगो विकासका कार्यसूचीलाई स्थानीयकरण गर्न निकायगत जिम्मेवारी प्रदान गरिएको छ। यसले लोकतन्त्रलाई आन्तरिकीकरणमा टेवा दिएको छ।

- सुशासन "समृद्ध नेपालः सुखी नेपाली" को राष्ट्रिय आकांक्षा पूरा गर्न आधारभूत सर्त हो। गण्डकी प्रदेश सरकारले सार्वजनिक खर्चलाई मितव्ययी बनाउने, चालु खर्च कटौती गर्ने र पूँजीगत खर्च बढाउने विषयलाई प्राथमिकताका साथ कार्यान्वयन गरेको छ।
- गण्डकी प्रदेशस्थित स्थानीय तहहरूमा रहेको प्राविधिक जनशक्तिको अभावलाई केही हदसम्म सम्बोधन गर्न प्रदेश सरकारले स्थानीय तहको मागको आधारमा असार मसान्तसम्मको लागि कृषि, पशु, अमिन र सिभिल इञ्जिनियरिङ विषयमा प्रि-डिप्लोमा उत्तीर्ण गरेका प्राविधिक स्वयम्सेवक परिचालन गरेको छ। यसले स्थानीय तहमा देखिएको जनशक्ति न्यूनता र स्वयम्सेवकको क्षमता विकासमा सहयोग पुगेको छ।
- कोभिड-१९ बाट प्रभावित भई व्यवसाय बन्द गर्ने अवस्थामा पुगेका साना व्यवसायीहरूलाई व्यवसायमा टिकाई राख्ने उद्देश्यले गण्डकी प्रदेश सरकारले स्थापना गरेको व्यवसाय जीवनरक्षा कोषमा सहजीकरण तथा सहयोग गरेको छ। यस कोषबाट १,६३८ व्यवसायी लाभान्वित भएका छन्। शिथिल अर्थतन्त्रको पुनरुत्थान हुने अपेक्षा साथ स्थापना गरेको कोषबाट परिचालन भएको कर्जा कार्यक्रमको सदुपयोगिताको प्रभावकारिता सम्बन्धमा अध्ययन भई पृष्ठपोषणसमेत प्राप्त भएको छ। यसबाट वर्तमान कमजोर अर्थतन्त्रको पुनरूत्थान हुने अपेक्षा प्रदेश सरकारले राखेको छ।
- प्रदेश सरकारका विकास आयोजना र कार्यक्रमहरूको गुणस्तर तथा प्रतिफललाई सुनिश्चित एवम् सहजीकरणका लागि प्रदेश गौरव र प्राथमिकता प्राप्त आयोजनाको सघन अनुगमन गरी देखापरेका समस्यालाई समयमै सम्बोधन गर्न सरकार क्रियाशील रहेको छ। यसबाट प्रदेशमा सञ्चालित आयोजना अनुगमन गरी तोकिएको गुणस्तर कायम गर्न तथा र समयमा आयोजना सम्पन्न गरी पूँजीगत खर्च वृद्धिमा सहयोग पुगेको छ।
- सरकारले विकास साझेदारहरूसँग नियमित बैठक तथा अन्तरक्रिया गरी अन्तर्राष्ट्रिय विकास सहायताको उपलब्धिपूर्ण परिचालनमा जोड दिएको छ। यसबाट विकास साझेदारदारा सञ्चालन गर्ने कार्यक्रममा रहेको दोहोरोपनका साथै प्रदेशको अवश्यकता र प्राथमिकताबमोजिम कार्यक्रम सञ्चालन गर्ने तथा प्रदेश सरकारप्रति जवाफदेही हुने वातावरण तयार भएको छ।
- तीन तहबिच योजना कार्यान्वयनमा देखिएको दोहोरोपन र टुक्रे आयोजनाको विकृति रोक्न विगतको अभ्यासलाई सुधार गर्दै सडक पूर्वाधारतर्फ रु. ३० लाख भन्दा साना आयोजना तथा सामाजिक पूर्वाधारतर्फ रु. पाँचलाखभन्दा कम बजेट विनियोजन नगर्ने नीति लिइएको छ।
- समावेशी विकास गण्डकी प्रदेश सरकारको ध्येय हो। प्रदेश सरकारका हरेक कार्यक्रमलाई लैङ्गिक समानता तथा सामाजिक समावेशीकरणको दृष्टिबाट मूल प्रवाहीकरण गर्ने नीति प्रदेश सरकारले

लिएको छ । साथै प्रदेश सरकारको वार्षिक विकास कार्यक्रम तथा बजेटलाई लैंगिक उत्तरदायी बजेट सांकेतीकरण एवम् दिगो विकास लक्ष्यको सूचक निर्धारण गरिएको छ ।

- लिफ्टिङ खानेपानी एवम् सिँचाइ योजनाको विद्युत् महसुलमा अनुदान दिने निर्णयानुसार गण्डकी प्रदेशका लिफ्ट खानेपानी आयोजनाहरूमा विद्युत् महसुल अनुदानका लागि योग्य २४० वटा लिफ्ट योजनाहरूमा कूल १ करोड ८८ लाख २६ हजार ८ सय ८० रुपैँया अनुदान वितरण गरिएको छ । साथै गण्डकी प्रदेशभित्र एक घर एक धारा कार्यक्रममार्फत यस अवधिमा १७,३४८ घरधुरीमा निजी धारा जडान भई ९०,२०० जनसङ्ख्या लाभान्वित भएका छन् । यी जनमुखी कार्यक्रमले सर्वसाधरणको आर्थिक व्ययभारमा सहयोग पुगेको छ ।
- गाईभैंसीमा देखापरेको लम्पी स्किन रोगको रोकथाम तथा नियन्त्रणका लागि सचेतनामूलक सूचना प्रकाशन तथा प्रसारणको व्यवस्था मिलाइएको, प्रभावित क्षेत्रमा जैविक सुरक्षाका सामग्री तथा प्राथमिक उपचारका लागि औषधि उपलब्ध गराइएको, थप बजेट तथा कार्यक्रमको व्यवस्था मिलाई ५१,४०० गाईभैंसीमा लम्पी स्किन रोग विरुद्ध खोप लगाई प्रदेशभर खोप लगाइएका पशुको सङ्ख्या १,०३,२३० पुगेको छ । विपदलाई पहिलो प्राथमिकतामा राखेर गण्डकी प्रदेश सरकारले कार्यसम्पादन गर्दै आएको छ ।
- गण्डकी प्रदेशमा रहेका महिलाहरूको मातृ मृत्युदर घटाउन एवम् सुरक्षित सुत्केरीको लागि संस्थागत व्यवस्था गर्न सरकारले मातृशिशु सुरक्षाका कार्यक्रमहरू लागु गरेको छ । विशेषतः जटिलतामा रहेका गर्भवती तथा सुत्केरी महिलाहरूको हेलिकप्टरमार्फत Air Lifting गर्ने कार्यक्रमलाई प्राथमिकताका साथ निरन्तरता दिइएको छ । उक्त कार्यक्रमलाई थप व्यवस्थित रूपमा सञ्चालन गर्न गण्डकी प्रदेश सरकारले "जोखिममा परेका गर्भवती र सुत्केरी महिलाको हवाई उद्धार कार्यविधि, २०८०" स्वीकृत गरी लागु गरेको छ ।
- प्रदेशले विकास आयोजना बाँडफाँट सम्बन्धी मापदण्डका आधारमा प्रदेश गौरवका आयोजना, रूपान्तरणकारी आयोजना, नयाँ प्रमुख कार्यक्रम र बहुवर्षीय ठेक्कामा गएका अन्य आयोजनाका लागि आवश्यक रकम सुनिश्चित (Earmark) हुने गरी विषय क्षेत्रगत बजेट खाका निर्माण गरिएको छ । क्रमागत कार्यक्रम तथा आयोजनाको कार्यान्वयन अवस्था र आगामी कार्यान्वयन योजनाको आधारमा खर्च गर्नसक्ने क्षमता तथा स्रोतको आवश्यकता एवम् उपलब्धतालाई मध्यनजर गरिएको छ । कार्यान्वयनको अवस्था, आयोजना अवधि, सिर्जित दायित्व तथा खर्च गर्नसक्ने अवस्थाअनुसार क्रमागत कार्यक्रम तथा आयोजनाको पुनःप्राथमिकीकरण गरी विनियोजनको प्राथमिकता निर्धारणमा जोड दिइएको छ । रुग्ण, क्रमागत कार्यक्रम तथा आयोजनाहरूको पुनरावलोकन गरी दोहोरोपन रहेका एकै प्रकृतिका कार्यक्रम वा आयोजनालाई एक आपसमा गाभ्ने वा खारेज गर्ने गरी बजेट अनुमान गरिएको छ । नयाँ आयोजनाको लागि पूर्व तयारी, कार्य सम्पन्न भएका बहुवर्षीय ठेक्का लगाउनुपर्ने प्रकृतिका आयोजनालाई कार्यान्वयनमा लैजान आवश्यक बजेट विनियोजन हुने गरी तथा तयारी कार्य नभएका आयोजनाको लागि आवश्यक रकम विनियोजन गरी तयारी कार्य सम्पन्न गर्ने गरी बजेट लागु गरिएको छ ।
- गण्डकी प्रदेशलाई पृथ्वी राजमार्ग (कास्की, तनहुँ), सिद्धार्थ राजमार्ग (कास्की, स्याङ्जा), पूर्व पश्चिम राजमार्ग (नवलपुर) र मध्यपहाडी राजमार्ग (गोरखा, लमजुङ, तनहुँ, कास्की, पर्वत, बागलुङ) गरी

जम्मा ३९२ कि.मि. लम्बाइको राजमार्गले छोएको छ। यस प्रदेशभित्र पक्की (कालोपत्रे/ढलान) ५४०.४२ कि.मि. र ग्राभेल ५६८ कि.मि. सडक निर्माण सम्पन्न भइसकेको छ। आगामी दुई वर्षभित्र सम्पन्न गर्ने गरी ५४८.४६ कि.मि. सडक कालोपत्रे गर्न र ८१.७७ कि.मि. ग्राभेल गर्न बहुवर्षीय ठेक्का सम्झौता गरी निर्माण कार्य भइरहेको छ। सबै स्थानीय तहको केन्द्रमा सडक सञ्जाल पुऱ्याउनका लागि हालसम्म पालिकाको केन्द्रसम्म सडक नजोडिएको गोरखाको चुमनुब्री र मनाङको नार्पा भूमिका केन्द्रमा सडक सञ्जाल पुऱ्याउने लक्ष्यअनुसार विस्तृत आयोजना प्रतिवेदन तयार भई वातावारणीय प्रभाव मूल्याङ्कन सम्बन्धी कार्य भइरहेको छ। कूल सडकको आधारमा सडकको घनत्व प्रतिवर्ग कि.मि. ०.०६ कि.मि. रहेको छ।

# तस्बिरमा गण्डकी प्रदेश























प्रतिफल-५: समानान्तर र तहगत जवाफदेहिता बहन र लैंगिक समानता तथा सामाजिक समावेशीकरण मूलप्रवाहीकरण

उपलब्धि

२०७७/०८८-८२ जना
२०७८/०७९-७१ जना
२०७९/८०-७३ जना

स्वयंसेवक अभिमुखीकरण कार्यक्रम

स्थानीय तहमा स्वयम्सेवकको गतिविधि

# लुम्बिनी प्रदेश सरकारका मुख्य उपलब्धि

१. **योजना/नीतिगत, कानुनी, संस्थागत एवम् संरचनागत**

- प्रदेशको स्थायी राजधानी दाङको देउखुरीमा प्रदेश सरकारका मन्त्रालयहरू स्थानान्तरण गरी सेवा प्रारम्भ भइसकेको, प्रदेश राजधानी निर्माणअन्तर्गत मुख्यमन्त्री कार्यालयसहित सात वटा मन्त्रालय भवनहरूको निर्माण द्रुत गतिमा भइरहेको,
- प्रदेश निजामती सेवा सम्बन्धी विधेयकको मस्यौदा प्रदेश सभाबाट २०८० भाद्र २२ मा पारित गरिएको,
- हालसम्म ७२ वटा कानुन तथा एक दर्जनभन्दा बढी नियमावली निर्माण गरिएको साथै मागमा आधारित विषयगत कानुन तथा निर्देशिका तयार हुने गरेको,
- प्रदेश योजना आयोगबाट लुम्बिनी प्रदेशको १० वर्षे रणनीतिक योजना (आ.व.२०७९/८० देखि आ.व. २०९०/९१) निर्माण भई कार्यान्वयनमा रहेको ।
- पहिलो आवधिक योजना भई दोश्रो आवधिक योजनाको प्रारम्भिक तयारी भइरहेको, लुम्बिनी प्रदेशको प्रथम आर्थिक सर्वेक्षण तर्जुमा एवम् प्रकाशन गरिएको,
- प्रादेशिक कृषि विकास रणनीति मस्यौदा तयार भएको,
- नीति तथा कानुन निर्माणका विषयहरूमा एकरुपता कायम गर्न अन्तरप्रदेश छलफल र समन्वय गर्ने गरिएको,
- प्रदेशमा पूर्णखोप सुनिश्चितता घोषणा गरी विविध कार्यक्रम सञ्चालन गरिएको, प्रदेशका १२ वटै जिल्लामा ५० शैयायुक्त अस्पताल स्थापना गरिएको, दुई वटा प्रादेशिक अस्पतालहरूमा ओपिडी र जनरल शैयाको निःशुल्क व्यवस्था गरिएको, १० वटा स्थानीय तहमा स्थानीय आर्थिक विकास, सूचना प्रविधि, सेवा प्रवाह तथा लैससास सम्बन्धी नवप्रवर्तन साझेदारी परियोजना सम्पन्न भएको,
- राजधानी व्यवस्थापनका लागि राप्ती गा पा को सबै वडा, गढवा गा पा को वडा १, २ र ३ तथा शितगंगा न पा को वडा ७, ८ र ९ गरी कुल १० हजार विगा जग्गा कित्ताकाट रोक्का राखी मध्ये १ हजार विगाको ल्याण्ड पुलिङ्गको कार्य सम्पन्न हुने चरणमा रहेको ।

- प्रदेश यातायात गुरुयोजना (PTMP) को मस्यौदा तयार गरी प्रदेश लोकमार्गहरू पहिचानको कार्य अघि बढाइएको,
- प्रदेशको सडकमा नयाँ ट्र्याक निर्माण ५२६ कि.मि., सडक विस्तार (थप चौडा गर्ने काम) १,५९० कि.मि., सडक ग्राभल गर्ने काम १,२५९ कि.मि., कालोपत्रे सम्पन्न सडक ९८० कि.मि. सम्पन्न भएको । साथै कल्भर्ट-कजवे निर्माण ४,४५४ वटा, ढलान गरी पक्की सडक निर्माण ५५ कि.मि., सडक पुल १०२ वटा र झोलुङ्गे पुल ३३ वटा निर्माण भएका छन्,
- लुम्बिनी प्रदेशमा लुम्बिनी प्रादेशिक अस्पताल, लुम्बिनी प्राविधिक विश्वविद्यालय, पाल्पाको रामपुरदेखि रुकुमको जिनावाङ सम्मको सडक योजना, प्रदेश राजधानी व्यवस्थापन गरी ४ वटा प्रादेशिक गौरवका आयोजना सञ्चालनमा रहेका छन् ।
- विभिन्न क्षेत्रमा विशिष्ठ योगदान पुऱ्याउनुहुने व्यक्ति एवम् संस्थालाई प्रदेश पदकबाट विभूषित गर्ने र प्रदेश स्थापना दिवसका अवसरमा विभूषित गर्दै आइएको,
- प्रदेश लोकसेवा आयोगमार्फत भर्ना तथा छनौटले निरन्तरता पाएको छ,
- जिल्ला प्रशासन कार्यालय, स्थानीय तह, वन कार्यालय र राष्ट्रिय निकुञ्जसँग निरन्तर समन्वय गर्ने गरिएको,
- प्रदेश समन्वय परिषद्को ६ वटा बैठक सम्पन्न भई निर्णय कार्यान्वयनमा अग्रसरता दिइएको,
- अख्तियार दुरुपयोग अनुसन्धान आयोगबाट प्राप्त पत्रहरूका सम्बन्धमा आवश्यक छानविन गरी प्रतिवेदन अख्तियार दुरुपयोग अनुसन्धान आयोगमा नै पठाउने गरिएको,
- सुरक्षित आप्रवासन कार्यक्रम यस आर्थिक वर्षमा पाल्पा र अर्घाखाँचीमा लागू गरिएको छ,
- वनक्षेत्र कम भएका ३२ वटा स्थानिय तहमा "एक पालिकाः एक नमूना कृषि वन" कार्यक्रम सन्चालन भइरहेको । साथै समृद्धिमा आधारित वन सवर्धन प्रणाली सञ्चालनमा रहेको ।
- विगतदेखिको प्रदेश तथा स्थानीय तहका जनप्रतिनिधि र करार कर्मचारीको सम्पत्ति विवरण व्यवस्थापन निरन्तर भइरहेको,
- प्रदेश स्थापनाको पाँच वर्ष नामक स्मारिका, प्रदेश डायरी तथा अन्य प्रकाशन हुँदै आएको,
- प्रदेश सुशासन ऐन र नियमावली तर्जुमा गरिएको । प्रदेशमा समग्रमा सुशासन कायम गर्ने प्रयास गरिएको ।
- लुम्बिनी प्रदेशको राजधानी राप्ती उपत्यकाको गुरु योजना तलको चित्रमा देखाइएको छ ।

**आ.व. २०८०/८१ को लुम्बिनी प्रदेश सरकारको नीति तथा कार्यक्रमका मुख्य व्यवस्था**

- आगामी दुई वर्षमा दुई लाख उत्पादनशील रोजगारीका अवसर सिर्जना हुने गरी प्रदेशका ९८३ वटै वडामा सामाजिक परिचालनका माध्यमबाट “मुख्यमन्त्री आर्थिक विकास कार्यक्रम” सञ्चालन हुने ।
- विभिन्न देशका राजनेताको सहभागितामा सन् २०२३ को डिसेम्बर र सन् २०२४ जनवरीमा लोरेट र लिडर कार्यक्रम आयोजना गर्ने ।
- प्रदेश गौरवको आयोजनाको रुपमा रहेको प्रदेशको राजधानी राप्ती उपत्यका देउखुरीमा निर्माणाधीन भौतिक संरचना सम्झौता अवधिभित्रै सम्पन्न गर्न जोड दिइएको ।
- सघन व्यावसायिक उत्पादन क्षेत्र विकास कार्यक्रम सञ्चालनमार्फत साना प्रशोधन उद्योग स्थापनामार्फत स्थानीयस्तरमा रोजगारी सिर्जना हुनेछ ।
- पहाडी क्षेत्रको छरिएको बस्तीलाई एकीकृत रुपमा व्यवस्थित गर्न “एक जिल्ला एक नमुना बस्ती”को अवधारणाअनुसार काम गर्ने ।
- “बुद्ध सर्किट” विकास गर्न र कपिलवस्तुको तिलौराकोटलाई विश्व सम्पदा सूचीमा समावेश गर्न पहल गर्ने ।
- आगामी दशकलाई लुम्बिनी भ्रमण दशकको रुपमा मनाइने ।
- स्थानीय तहको नवप्रवर्तन र सिर्जनशील कार्यलाई प्रोत्साहित गर्न “मुख्यमन्त्री नवप्रवर्तन साझेदारी कार्यक्रम” सञ्चालन हुने ।
- सिङ्गो रुख रोप्ने उपकरणको व्यवस्था गर्ने ।
- प्रदेश प्रमखु शैक्षिक विकास कार्यक्रम सञ्चालन हुने ।
- संवर्धन प्रणालीमा आधारित वन व्यवस्थापन कार्यक्रम सबै जिल्लामा विस्तार गर्ने ।
- शुशिल कोइराला स्मृति लोकतान्त्रिक अध्ययन प्रतिष्ठान सञ्चालन गरिने ।

# कर्णाली प्रदेश सरकारका उपलब्धि

**१. मुख्यमन्त्री रोजगार कार्यक्रम**

कर्णाली प्रदेश समृद्धि र विकासको दृष्टिकोणले पछाडि परेको, मानव विकास कमजोर भएको, भौगोलिक दुर्गमताले पिल्सिएको इत्यादि उपमाबाट चिरपरिचित रहेको छ । कर्णाली प्रदेशमा रहेका दश जिल्लामध्ये सुर्खेत, दैलेख र सल्यानबाहेक अन्य जिल्लाका अधिकांश भूभागमा पूर्वाधार विकास गर्न त्यहाँको भौगोलिक दुर्गमता अत्यन्त बाधकको रूपमा रहेको छ । राज्यको विकास पहुँचबाट सधैँ टाढा रहनुपरेका कारण यहाँका नागरिकहरू आफ्नो जीवनयापन सहज बनाउने, आयआर्जनको लागि व्यवसाय, रोजगारी गर्न सुगम क्षेत्रमा बसाइँ सरी आउने, वैदेशिक रोजगारी विशेष गरी भारतका विभिन्न सहरमा अदक्ष कामदारको रूपमा काम गर्न जाने गरेको यथार्थ तथ्य हामी सामु छ ।

देशमा सङ्घीयता लागु भएसँगै केन्द्रीकृत रूपमा रहेको राज्यशक्ति विभिन्न प्रदेश र स्थानीय तहमा स्थानान्तरण भई राज्यको उपलब्ध स्रोतसाधनको वितरणमा केही हदसम्म न्यायोचित वितरण हुने वातावरण निर्माण भयो । फलस्वरूप प्रदेश र स्थानीय तहमा आफ्ना आवश्यकताअनुरूपका पूर्वाधार निर्माणमा आफूलाई प्राप्त स्रोतसाधनको परिचालन गर्न सकिने वैधानिक तथा संरचनागत आधार प्राप्त भयो । यसैअनुरूप कर्णाली प्रदेश सरकारले कर्णाली प्रदेशको आर्थिक-सामाजिक-सांस्कृतिक रूपान्तरणसहितको विकासलाई प्राथमिकतामा राख्दै विभिन्न प्रदेश विशेष कार्यक्रमहरू सञ्चालन गरिरहेको छ । कर्णाली प्रदेश विशेष कार्यक्रमअन्तर्गत मुख्यमन्त्री रोजगार कार्यक्रम सशर्त अनुदानको रुपमा प्रदेशका सबै स्थानीय तहमा सञ्चालनमा रहेको छ ।

आर्थिक वर्ष २०७५/०७६ देखि कर्णाली प्रदेशका बेरोजगार युवालाई स्थानीयस्तरमा रोजगारी सिर्जना गर्न, आयआर्जनका क्रियाकलाप सञ्चालन गर्ने र सामुदायिक पूर्वाधार निर्माण कार्यमा स्थानीय स्तरमा रहेका जनशक्तिलाई संलग्न गराई ग्रामीण गरिबी न्यूनीकरणमा योगदान पुऱ्याउने, सहभागितामूलक विकासको अवधारणालाई प्रवर्धन गर्ने, उत्पादनशील जनशक्तिको विकास गरी श्रम बजारमा पहुँच वृद्धि गर्ने, आर्थिक र सामाजिक उन्नतिमा सघाउ पुऱ्याउने, दिगो भौतिक पूर्वाधारहरूको निर्माण तथा विस्तार गर्ने, बेरोजगार जनशक्तिलाई बहुआयामिक ढङ्गबाट पहिचान तथा उपयोग गरी आर्थिक सामाजिक विकासमा टेवा पुऱ्याउने उद्देश्यले कर्णाली प्रदेश सरकारले मुख्यमन्त्री रोजगार कार्यक्रम सञ्चालन गरिरहेको छ ।

यस कार्यक्रम अन्तर्गत बिशेष प्राथमिकताका क्षेत्रहरू तोकिएका छन् । ती क्षेत्रहरूमा सामूहिक तथा

व्यक्तिगत फलफूल तथा तरकारी खेती, जडिबुटी खेती तथा प्रसोधन, नगदेवाली, सिंचाई कुलो निर्माण तथा मर्मत, गरिब तथा विपन्न बस्तीहरूमा सडक, खानेपानी पूर्वाधारहरूको विकास, युवा तथा शैक्षिक बेरोजगारहरूले सीप विकास तालिम पश्चात तुरुन्तै रोजगारमूलक तथा स्वरोजगारमूक क्रियाकलापमा संलग्न हुन सक्ने क्रियाकलापहरू, जोखिममा रहेका वस्तीहरूको स्थानान्तरण तथा निर्माणमा श्रम साझेदारी, बहुउद्देश्यीय जलाशय निर्माण, मानव सिर्जित तथा प्राकृतिक विपद आदिबाट सुरक्षाका लागि आवश्यक पर्ने नदी नियन्त्रण तथा वृक्षरोपणका कार्यहरू, भूतथा जलाधार संरक्षणका क्रियाकलापहरू, पर्यटन क्षेत्रको विकास तथा प्रवर्धन लगायत रहेका छन् ।

मुख्यमन्त्री रोजगार कार्यक्रमले कर्णाली प्रदेशका सबै भुगोल समेटेको छ । प्रदेशमा रहेका ७१८ वटै वडाहरूमा कम्तिमा एक आयोजना छनौट हुने, आयोजना स्थानीय वडा भेलाबाट अनुमोदन भई आउने र स्थानीय उपभोक्ता समितिमार्फत नै कार्यान्वयन हुने हुनाले यस कार्यक्रमप्रति आम नागरिकको विशेष चासो र सहभागिता रहेको छ । विकासमा सहभागिता तथा अपनत्वको अतिउत्तम नमुना यस कार्यक्रममा रहेको छ । आयोजना छनौट प्रतिवेदनलगायतका कार्यलाई अझ सरल पारदर्शी बनाउन मुख्यमन्त्री रोजगार अनलाइन प्रणाली सञ्चालन गरिएको छ । थोरै प्रोत्साहन सुबिधामा प्रधानमन्त्री रोजगार कार्यक्रमअन्तर्गत इकाईमा कार्यरत जनशक्तिलाई नै खटाइएकोले दोहोरोपना नभएको र कार्यान्वयनमा प्रभावकारिता बढेको अवस्था छ ।

यस कार्यक्रमअन्तर्गतका आयोजना स्थानीय तहबाट सिफारिस भई अनलाइन प्रणालीमार्फत मुख्यमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयमा प्राप्त हुने र कर्णाली प्रदेश विशेश कार्यक्रम सञ्चालन तथा व्यवस्थापन निर्देशिका २०७७ को दफा ९ बमोजिमको निर्देशक समितिले छनोट गरी सशर्त अनुदानको रुपमा स्थानीय तहमा पठाइन्छ । कर्णाली प्रदेशका हरेक वडामा एक आयोजनाको लागि हुम्ला, मुगु र डोल्पा जिल्लाको हकमा रु. २० लाख र अन्य जिल्लाको हकमा रु. १५ लाखका दरले यस आर्थिक वर्षको लागि वार्षिक बजेट पठाइएको छ । स्थानीय तहको बजेट यसअघिको प्रदेश सरकारको बजेट घोषणाबाट आयोजना स्थानीय तहमा जाने व्यवस्थाले स्थानीय तहलाई आफ्नो वार्षिक कार्यक्रम निर्धारणमा सहजता हुने र आयोजनाको प्राथमिकीकरण तथा स्रोतको न्यायोचित वितरणमा समेत सघाउ पुगेको देखिन्छ ।

मुख्यमन्त्री रोजगार कार्यक्रमको बजेट खर्च गर्ने विधि निर्धारण गरिएको छ । आयोजनाको प्रकृतिअनुसार ५० प्रतिशत देखि ७० प्रतिशतसम्म अनिवार्य रूपमा पारिश्रमिक वा ज्यालामा खर्च गर्नुपर्ने व्यवस्थाले आयोजनाको सञ्चालनबाट के कति रोजगारी सिर्जना भयो सहजै अनुमान लगाउन सकिन्छ भने प्रत्यक्ष रुपमा श्रमिकहरूलाई रोजगारी प्राप्त हुन्छ । श्रमिकहरूले आयोजनामा काम गरेबापतको पारिश्रमिक सम्बन्धित व्यक्तिको नाममा बैंक खातामार्फत भुक्तानी हुने प्रावधानले स्थानीय स्तरमा बैंकिङ पहुँच अभिवृद्धि हुनुका साथै पारदर्शिता प्रवर्धनमा समेत टेवा पुगेको छ ।

मुख्यमन्त्री रोजगार कार्यक्रमको कारण कति युवा जनशक्तिलाई रोजगारीको लागि विदेशिनबाट रोक्न सकियो भन्ने यकिन तथ्याङ्क प्राप्त नभएको भए तापनि यस कार्यक्रमले स्थानीय स्तरमा आर्थिक गतिविधि बढाएको

पक्कै छ। काम नगरी समय व्यतित गर्ने तथा अनुत्पादक कार्यमा लाग्ने जनशक्तिलाई विकास निर्माण कार्यमा सरिक गराएको छ। विकास निर्माणको कार्यमा सहभागिता बढेको छ। स्थानीय स्तरमा कस्ता आयोजना सञ्चालन गर्ने, हाम्रो प्राथमिकता के हो भन्ने जस्ता विषयमा सचेतना बढेको र अनियमितताप्रति जनताको खबरदारी बढेको छ।

स्थानीय आवश्यकताका पूर्वाधारहरू जस्तै; विद्यालय भवन, खानेपानी संरचना निर्माण, सडक निर्माण, सिंचाई पूर्वाधार निर्माण, पर्यटन पूर्वाधार निर्माण लगायतका संरचनाहरूको निर्माण हुनुका साथसाथै स्थानीय स्तरमा रोजगारी उपलब्ध भएको छ। पूर्वाधार निर्माणमा स्थानीय स्रोत साधनको उपयोग भएको छ। राज्यप्रति आम नागरिकको अपेक्षा बढेको छ। बेरोजगार जनशक्तिको तथ्याङ्क संकलन भइरहेको र जुन तथ्याङ्कलाई रोजगार तथा गरिबी निवारण नीति निर्माणमा बहुआयामिक प्रयोग गर्न सकिने देखिन्छ। समग्रमा प्रदेश सरकारको दीर्घकालिन सोचको रुपमा रहको समृद्ध कर्णाली सुखी कर्णालीबासीको नारालाई सार्थक बनाउन यस कार्यक्रमले केही हदसम्म सहयोग गरेको छ।

**२. मुख्यमन्त्री महिला आयआर्जन कार्यक्रम**

कर्णाली प्रदेश सरकारले आर्थिक सामाजिक रुपमा पछाडि परेका कर्णाली प्रदेशका विपन्न महिलाहरूलाई उनीहरूको सिप र क्षमता विकास गरी आत्मनिर्भर बनाउने मूल लक्ष्यका साथ मुख्यमन्त्री महिला आयआर्जन कार्यक्रम सञ्चालन गरेको छ। यस कार्यक्रमले पूँजी, सिप र दक्षताको अभावमा कुनै पनि आयआर्जनको कार्यमा सरिक हुन नसकेका ग्रामीण महिलाहरूलाई सहकारीको माध्यमबाट पूँजी र सिपमा सहयोग गर्ने यस कार्यक्रमको मूल नीति रहेको छ। विशेष गरी यस कार्यक्रमअन्तर्गत प्रदेशभरका महिला सहकारीहरूमध्येबाट उपयुक्त महिला सहकारी संस्था छनौट गरी सहकारी संस्थामा एकमुष्ट बीउ पूँजीको रुपमा रकम उपलब्ध गराउने र सहकारी संस्थाले उक्त रकमलाई संस्थाका विपन्न महिलाहरूमा उनिहरूको आवश्यकताअनुसार सुलभ ब्याजदर (वार्षिक छ प्रतिशत) मा ऋण लगानी गर्दछ। उक्त ऋण लिने सेयर सदस्यले मासिक रुपमा ब्याज र वार्षिक रुपमा साँवा फिर्ता गर्दछ। उसले फिर्ता गरेको साँवा घुम्ति कोषको रुपम रहने भएकाले अर्को महिला सदस्यले ऋणको रुपमा उपयोग गर्न पाउँदछ। ऋणबापत प्राप्त हुने ब्याज रकमको २० प्रतिशत रकम मूल बिउ पूँजी कोषमा नै जम्मा हुन्छ जसले गर्दा घुम्ती कोषको आकार बृद्धि हुँदै जान्छ। महिला सहकारी संस्थामा बिउ पूँजीको रुपमा रहेको घुम्ति कोषको रकम क्रमश अन्य सेयर सदस्यहरूमा चक्रीय रुपमा पुनः ऋण स्वरुप परिचालन हुन्छ। यसबाट महिलाहरूको वित्तीय पहुँच सहज मात्र हैन सस्तो लागतको पनि हुन्छ र उद्यमी बन्न सहयोग पुग्न जान्छ। उपर्युक्त नीतिअनुसार घुम्ती कोष परिचालन नगर्ने सहकारीले प्रदेश सरकारले प्रदान गरेको रकम तत्काल फिर्ता गर्नुपर्ने प्रावधान सहकारीसँगको सम्झौता सर्तमा राखिएको छ। यस प्रकारको कार्यक्रम नीति र कार्यविधिका कारण सरकारले एउटै समुदायमा वित्तीय पहुँचको लागि पटक पटक लगानी गर्नु पर्दैन। अनुगमन गरी राम्रो गर्नेलाई प्रोत्साहन र नराम्रो गर्नेलाई कारवाही गरे मात्र पुग्दछ।

यस कार्यक्रममा आ.व. २०७८/०७९ मा जम्मा रु. ५४ करोड ९५ लाख बजेट विनियोजन भएकोमा

१९ करोड ६९ लाख ४१ हजार रूपैया मात्र कार्यान्वयनमा आएको थियो । यो कार्यक्रम भूमि व्यवस्था, कृषि तथा सहकारी मन्त्रालयअन्तर्गत कार्यान्वयनमा ल्याइएको छ। विभिन्न महिला सहकारीहरूलाई वित्तीय पहुँचका लागि जगेडा कोषमा रु. १७ करोड ३३ लाख १५ हजार रूपैयाँ बजेट कार्यान्वयनका लागि पठाइएको छ । यस कार्यक्रमको मूलभूत विशेषतामा बजेट घुम्ती कोषको रुपमा रहने, कोष ऋण परिचालन गर्नेबाहेक अन्य विषयमा खर्च गर्न नपाइने, सहुलियत ब्याजदरमा बिपन्न महिलाहरूले वित्तीय सुबिधा प्राप्त गर्ने, समुदाय स्तरको सहकारीबाट नै सञ्चालन हुने हुँदा बजेट तथा कार्यक्रमको व्यवस्थापन तथा नियन्त्रणको कार्यमा सरकारको सञ्चालन खर्च बचत हुने, प्राप्त ब्याजको २० प्रतिशत रकम पूनःघुम्ती कोषमा जम्मा हुने कारण कोष क्रमशः वृद्धि हुँदै जाने र सरकारप्रतिको परनिर्भरता कम हुने, सरकारले सोही प्रकृतिको वित्तीय पहुँचको लागि पूनः कार्यक्रम सञ्चालन गर्नु नपर्ने, उद्देश्य विपरीत काम भएमा सरकारले जुनसुकै बखत बजेट फिर्ता लिन सक्ने, बिपन्न महिलाहरूलाई समुदाय स्तरमा सहज वित्तीय पँहुच कायम हुने आदि ।

यस कार्यक्रमबाट स्थानीय स्तरमा न्यून ब्याजदरमा पूँजी परिचालन भई आयआर्जनका क्रियाकलाहरू सञ्चालन भएका छन् । फलफूल तथा तरकारी खेती, घरेलु उद्योग, साना व्यवसाय, भैंसी पालन, बाख्रा पालन जस्ता आयआर्जनका क्रियाकलापमा सरिक हुने वातावरण निर्माण भएको छ। यस कार्यक्रमले ग्रामिण गरिबी न्यूनीकरण, महिला सशक्तिकरण, आर्थिक सचेतीकरण, आर्थिक क्रियाकलापमा बृद्धि जस्ता पक्षमा समुदायस्तरमा राम्रो छाप पार्न सफल भएको छ। सहकारीले अनुदानको रुपमा बीउ पूँजी प्राप्त गर्ने र महिलाहरूले न्यून ब्याजदरमा विना धितो ऋण प्राप्त गर्ने हुँदा समुदायमा यस कार्यक्रमको लोकप्रियता बढिरहेको छ । यस कार्यक्रम प्रति समुदायको स्वामित्व अपनत्व स्थापित भएको छ । आफ्नो लागि आफैले काम गर्ने प्रेरणा यस कार्यक्रम मार्फत समुदायका महिलाहरूले प्राप्त गरेका छन् ।

**३. सामुदायिक (छाडा) चौपाया व्यवस्थापन गर्नका गौशाला**

गाई हिन्दूको पवित्र र पुण्य जनावर भएकाले कर्मकाण्डहरूमा गाईको गोबर, गहुँत र दूधलाई अनिवार्य प्रयोग गरिन्छ ।जैविक, सांस्कृतिक, धार्मिक र आध्यात्मिक सबै रुपमा गाईलाई अत्यन्त उपयोगी मानिन्छ । नेपालमा पाईने गाईको दूध, गहुँत र गोबरलाई वैज्ञानिक अध्ययन अनुसन्धानले पनि पवित्र र शुद्ध मानेको पाईन्छ । गाईलाई नेपाली हिन्दु धर्म संस्कारमा गौमाता भनेर पुजिने गरिएको छ ।

पछिल्लो समयमा वीरेन्द्रनगर नगरपालिकामा दुध दिन छोडेको, बेत बसेका वा रोग व्याधि, घाउ चोट लागेका गाईहरूलाई गाई धनीहरूले सार्वजनिक सडकमा बेवारिसे अवस्थामा छोडिदिने गरेको अवस्था थियो । सडकमा पशु चौपाया अनियन्त्रित रुपमा छाडिदा सडक अव्यवस्थित र फोहोर भएको थियो । साथै छाडा पशुका कारण सडक दुर्घटना भई मानिसहरूले अकालमै मृत्युवरण र अङ्गभङ्ग ब्यहोर्नुपरेको समेत देखिन्छ। छाडा चौपायाका कारण किसानका अन्नबालीमा नोक्सान पुगेको थियो। सडकमा छाडिएका यस्ता गाई वस्तुहरूका कारण विभिन्न रोगहरू टीबी, भ्यागुते, नाम्ले, मेनिन्जाइटिस, इन्सेफालाइटिस जस्ता खतरनाक रोग लाग्ने र उक्त रोग जनावरको सम्पर्कबाट मानव, अन्य जनावरहरू, चराचुरुङ्गीसमेतमा सर्ने

जोखिम बढ्ने देखिन्छ ।

यस्तै प्रकारका समस्याहरूलाई मध्यनजर गरेर वीरेन्द्रनगर नगरपालिकाले सामुदायिक पशु (वेवारिसे रुपमा छाडा छाडिएका गाई गोरु) को समुचित व्यवस्थापन गरी सफा, स्वच्छ, सुन्दर र सुरक्षित सहर बनाउन "सामुदायिक पशु व्यवस्थापन कार्यविधि, २०७९" कार्यन्वयनमा ल्यायको छ । यसको प्रभावकारी कार्यान्वयन गर्न वीरेन्द्रनगर नगरपालिका र मुख्यमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय, प्रदेश तथा स्थानीय शासन सहयोग कार्यक्रममार्फत सामुदायिक पशु व्यस्थापनका लागि "सामुदायिक पशुपालन तथा पर्यावरणीय स्वच्छता/संरक्षण/संवर्धनका लागि गौशाला व्यवस्थापन परियोजना" सञ्चालनमा छ । नगरपालिका र प्रदेश सरकारको लागत साझेदारीमा सञ्चालित यस परियोजनाले भेरी नदीको समैजीघाट नजिकै सामुदायिक गौशाला निर्माण गरी सामुदायिक पशु व्यवस्थापनको काम सुरुवात गरेको छ । चौपाया व्यवस्थापनको लागि नगरपालिकाले 'सुन्दर कर्णाली गौशाला तथा सरसफाइ व्यवस्थापन बहुउद्देश्यीय सहकारी संस्था'मार्फत करिब ३०० जति छाडा चौपायालाई गौशालामा राखेर व्यवस्थापन गर्ने गरिएको छ ।

यस परियोजनामार्फत छाडा चौपायालाई हेर्नका लागि हेरालुको रुपमा चार जना स्थानीयले गौशालामा प्रत्यक्ष रोजगारसमेत पाएका छन् ।

परियोजनालाले सार्वजनिक निजी साझेदारीको अवधारणालाई आत्मसात् गर्दै "सुन्दर कर्णाली गौशाला तथा सरसफाइ व्यवस्थापन बहुउद्देश्यीय सहकारी संस्था" र केपी उद्योगलाई पा.लि.बिच सम्झौता गरी गौशालाबाट उत्पादन हुने गोबर र गहुँत बिक्री वितरण गरी आम्दानी गर्ने गरेको छ । गौशालाबाट उत्पादन हुने गोबर र मलमूत्रप्रति ट्याक्टर रु.४००० का दरले सहकारीले केपी उद्योगलाई बिक्री वितरण गर्ने गरेको छ । यसबाट प्राप्त हुने आम्दानी गौशालाको कोषमा जम्मा गर्ने गरेको छ । यसका साथै धार्मिक पर्यटन प्रबर्धन गर्न गौ-कास्ठ बनाई नजिक रहेको समाधि स्थालमा बिक्री वितरण गरी आम्दानी गर्ने योजना बनाइएको छ । गड्यौले मल उत्पादनको कामसमेत सहकारीले गरिरहेको छ । यसको बिक्री पनि गौशालाको आम्दानीको श्रोत बनेको छ । गौशालाले अक्षय कोष स्थापना गरेको छ । अक्षय कोषबाट प्राप्त ब्याजको नब्बे प्रतिशत गौशालाको सञ्चालनमा खर्च गर्ने र बाँकी दश प्रतिशत अक्षय कोषमा नै जम्मा गर्ने कारण कोषसमेत बढ्दै गई दीर्घकालिन रुपमा गौशाला आत्मनिर्भर हुने देखिएको छ । अक्षय कोषमा तीन लाख रकम जम्मा भई सकेको व्यवस्थापक बताउँछन् । सहकारीले सेयर पूंजीबाट आम्दानी हुने व्यावसायिक कार्य गर्ने र प्राप्त नाफा गौशाला व्यवस्थापनमा समेत लगाउने रणनीति लिई कार्य गरिरहेको छ । यसले गर्दा दिर्घकलिन रुपमा गाई संरक्षण, विकास, संवर्द्धन भई वातावरणको संरक्षण गर्न मद्दत पुग्ने देखिन्छ ।

गौशालाबाट निस्कने गोबर, गोमूत्रको सङ्कलन गरी प्राङ्गारिक मल, किटनाशक औषधी बनाई प्रति ३० के.जी. रू. ७०० का दरले स्थानीय बजारमा बिक्री वितरण गर्दै आएको छ । केपी व्यावसायिक सेवा प्रालिले सो मलमुत्रबाट ग्यास पनि उत्पादन गर्दै आएको छ । ग्यासबाट हाल ७ वटा अटो वीरेन्द्रनगर नगरपालिकामा सञ्चालनमा रहेका छन् । अटोले प्रति दिन रू.७०० का दरले केपी उद्योग पा.लि.मार्फत ग्यास भर्दै आएका छन् । सिएनजी ग्याँसका कारण बिग्रँदो वातावरणीय स्थिति र वातावरणीय समस्यालाई

केही हदसम्म नियन्त्रण गर्न सघाउ पुऱ्याएको छ ।

हाल गौमाताको संरक्षण तथा व्यवस्थापन सहयोगको लागि अक्षयकोष स्थापना भई सञ्चालनमा आएको छ । पछिल्लो समयमा धार्मिक चाडपर्वको अवसरमा गौमाताको संरक्षणका लगी स्वेच्छाले अक्षयकोषमा व्यक्तिगत रुपमा पैसा योगदान गर्नेको सङ्ख्या पनि बढेको छ । जसले गर्दा अक्षयकोष बढ्दै गएको छ । नगरपालिकाले पनि विभिन्न कन्सर्टमार्फत गौशाला प्रवर्धन तथा व्यवस्थापनका लागि रकम संकलन गरी अक्षयकोष वृद्धि गर्ने कार्यविधिमा व्यवस्था गरेको छ । यसको सञ्चालन "सामुदायिक पशु व्यवस्थापन कार्यविधि, २०७९" बमोजिम हुने व्यवस्था रहेको छ । यसबाट दीर्घकालिन रुममा गौशाला प्रवर्धन तथा व्यवस्थापन गर्न स्थानीय तहले स्वामित्व लिएको देखिन्छ ।

नेपालको राष्ट्रियतासँग जोडिएको जनावर गाई र आयुर्वेद चिकित्सा विधामा गाईको शुद्ध गहुँतको औषधिका रूपमा पनि प्रयोग हुने र हिन्दु धर्मावलम्बीका विभिन्न धार्मिक कार्यमा पनि गाईको गहुँत र गाईको दुधको पञ्चामृत नभई नहुने भएकोले गौमाताको संरक्षणमा परियोजनालाले सहयोग पुऱ्याएको छ । स्थानीयबासीका अनुसार छाडा चौपायाकै कारण किसानलाई खेतीपाती गर्न धेरै समस्या भएको थियो । सडकभरि छाडा चौपायाका कारण दुर्घटना बढ्दै गएको थियो हाल यो समस्या घट्दै गएको छ । गाई धनीहरूले पनि आआफ्नो थारा, रोगी व्याधि गाईवस्तुको स्याहार, सुसार औषधोपचार गर्नुपर्ने सम्बन्धमा दायित्व लिनुपर्ने र रासायनिक मलको आयात र खपत घटाई जैविक एवम् प्राङ्गारिक मलको प्रयोग बढाउनको लागि र वातावरणीय सन्तुलन कायम राख्नसमेत घाँस खेती उद्योगकै रूपमा विस्तार गरी गाईवस्तुमा आधारित परीक्षण परयिोजनाका रूपमा वीरेन्द्रनगर नगरपालिकामा सञ्चालान गरी अरु स्थानीय तहका लागि पनि अनुकरणीय कार्य गर्ने अवसरको रुपमा यो परियोजना स्थापित हुने प्रदेश सरकारबाट अपेक्षा गरिएको छ ।

# सुदूरपश्चिम प्रदेशका मुख्य उपलब्धि

**१. प्रदेश सरकारबाट तर्जुमा भएका**

(क) ऐनहरू

- सुदूरपश्चिम प्रदेश आर्थिक कार्यविधि तथा वित्तीय उत्तरदायित्व ऐन, २०७४
- स्थानीय तहका पदाधिकारी तथा सदस्यको सुविधा सम्बन्धी ऐन, २०७५
- सार्वजनिक लिखत प्रमाणीकरण (कार्यविधि) ऐन, २०७५
- स्थानीय तहको कानुन निर्माण प्रक्रिया ऐन, २०७५
- सुदूरपश्चिम प्रदेश आकस्मिक कोष ऐन, २०७५
- गाउँ सभा र नगरसभा (कार्यसञ्चालन) ऐन, २०७५
- जिल्ला सभा तथा जिल्ला समन्वय समिति सम्बन्धी ऐन, २०७५
- मुख्यन्यायाधिवक्ताको काम, कर्तव्य र अधिकार तथा सेवाका शर्त सम्बन्धी ऐन, २०७५
- वित्तीय हस्तान्तरण व्यवस्थापन ऐन, २०७५
- सुदूरपश्चिम प्रदेश कर तथा गैरकर राजस्व सम्बन्धी ऐन, २०७५
- मुख्यमन्त्री र मन्त्रीको पारिश्रमिक तथा सुविधा सम्बन्धी ऐन, २०७५
- प्रदेश सभाका पदाधिकारी तथा सदस्यको पारिश्रमिक र सुविधा सम्बन्धी ऐन, २०७५
- प्रशासकीय कार्यविधि (नियमित गर्ने) ऐन,२०७५
- सुदूरपश्चिम प्रदेशको सहकारी ऐन, २०७५
- सुदूरपश्चिम प्रदेश सुशासन ऐन, २०७५
- प्रदेश विपद् जोखिम न्यूनीकरण तथा व्यवस्थापन ऐन, २०७५
- सुदूरपश्चिम प्रदेशको प्रदेश सभा सचिव र सचिवालय व्यवस्थापन सम्बन्धी ऐन, २०७५
- प्रदेश लोकमार्ग ऐन, २०७५
- सुदूरपश्चिम प्रदेश स्वरोजगार विकास कोष ऐन, २०७५
- सुदूरपश्चिम प्रादेशिक औद्योगिक व्यवसाय ऐन, २०७५
- सुदूरपश्चिम आयुर्वेद प्रतिष्ठान ऐन, २०७६
- सुदूरपश्चिम प्रदेश लोकसेवा आयोग ऐन, २०७६

- सुदूरपश्चिम प्रदेशको कृषि तथा पशुपन्छी व्यवसाय प्रवर्द्धन ऐन, २०७६
- केही प्रदेश ऐन संशोधन गर्ने ऐन, २०७६
- निजी व्यवसाय ऐन, २०७६
- साझेदारी व्यवसाय ऐन, २०७६
- सुदूरपश्चिम प्रज्ञा प्रतिष्ठान ऐन, २०७६
- सुदूरपश्चिम प्रदेश खेलकुद ऐन, २०७६
- प्रदेश रेडियो, एफ.एम. र टेलिभिजन प्रशारण सम्बन्धी ऐन, २०७६
- सुदूरपश्चिम प्रदेश जनस्वास्थ्य सेवा ऐन, २०७६
- सुदूरपश्चिम प्रदेश अनुसन्धान तथा प्रशिक्षण प्रतिष्ठान ऐन, २०७७
- सुदूरपश्चिम प्रदेश दुग्ध विकास बोर्ड ऐन, २०७७
- प्रदेश बालबालिका सम्बन्धी ऐन, २०७७
- सुदूरपश्चिम प्रदेशको बीउ विजन ऐन, २०७७
- सुदूरपश्चिम प्रदेश वन ऐन, २०७७
- सुदूरपश्चिम प्रदेश पर्यटन ऐन, २०७७
- सुदूरपश्चिम प्रदेश वातावरण संरक्षण ऐन, २०७७
- सुदूरपश्चिम प्रदेशको पशु विकास तथा पशु स्वास्थ्य सेवा ऐन, २०७८
- दलित सशक्तिकरण ऐन, २०७८
- सुदूरपश्चिम प्रदेश आर्थिक कार्यविधि तथा वित्तिय उत्तरदायित्व ऐन, २०७९
- सुदूरपश्चिम प्रदेश निजामती सेवा ऐन, २०७९
- सुदूरपश्चिम प्रदेश प्रदेश प्रहरी ऐन, २०७९
- सुदूरपश्चिम प्रदेश सवारी तथा यातायात व्यवस्था ऐन, २०७९

(ख) **नियमावलीहरू**

- प्रदेश सरकार (कार्य सम्पादन) नियमावली, २०७४
- प्रदेश सरकार (कार्य विभाजन) नियमावली, २०७४
- सुदूरपश्चिम प्रदेशको प्रदेश सभा नियमावली, २०७४
- केही सार्वजनिक लिखत प्रमाणीकरण नियमावली, २०७४
- सुदूरपश्चिम प्रदेशको प्रदेश आर्थिक कार्यविधि नियमावली, २०७६
- सुदूरपश्चिम प्रदेश स्वरोजगार बिकास कोष नियमावली, २०७६
- प्रदेश पूर्वाधार विकास कार्यक्रम (सञ्चालन कार्यविधि) नियमावली, २०७६

- सुदूरपश्चिम प्रदेशको सहकारी नियमावली, २०७६
- सुदूरपश्चिम प्रदेश खेलकुद नियमावली, २०७७
- सुदूरपश्चिम प्रदेश सार्वजनिक खरिद नियमावली, २०७८
- प्रदेश राजपत्र प्रकाशन सम्बन्धी नियमावली, २०७८
- सुदूरपश्चिम प्रदेश वन नियमावली, २०७८
- सुदूरपश्चिम प्रदेश अनुसन्धान तथा प्रशिक्षण प्रतिष्ठान नियमावली, २०७९
- सुदूरपश्चिम प्रदेश कृषि तथा पशुपन्छी व्यवसाय प्रवर्द्धन नियमावली २०७९

(ग) **गठन आदेश, कार्यविधि, निर्देशिका, मापदण्ड, आचारसंहिता, मार्गदर्शन, काइयोजना, रणनीति, योजना**

**गठन आदेश**

- सुदूरपश्चिम प्रदेशको अस्पताल व्यवस्थापन समिति गठन आदेश, २०७५
- खप्तड क्षेत्र पर्यटन विकास तथा व्यवस्थापन समिति गठन आदेश, २०७५
- रामारोशन क्षेत्र पर्यटन विकास तथा व्यवस्थापन समिति गठन आदेश, २०७६
- सुदूरपश्चिम प्रदेश राजधानी पूर्वाधार विकास समिति (गठन) आदेश, २०७६
- प्रदेश नीति तथा योजना आयोग (गठन तथा कार्यसञ्चालन) आदेश, २०७६
- बैद्यनाथ धाम पर्यटन विकास तथा व्यवस्थापन समिति (गठन) आदेश, २०७७
- सुदूरपश्चिम प्रदेश युवा परिषद (गठन) आदेश, २०७७
- बडीकेदार क्षेत्र पर्यटन विकास तथा व्यवस्थापन समिति (गठन) आदेश, २०७७
- प्रादेशिक आयुर्वेद चिकित्सालय व्यवस्थापन समिति (गठन) आदेश, २०७८

**निर्देशिका**

- सुदूरपश्चिम प्रदेशको सार्वजनिक निकायको बैठक तथा कार्यक्रम सञ्चालन निर्देशिका, २०७५
- मुख्यमन्त्री कप अन्तर प्रदेश खेलकुद प्रतियोगिता व्यवस्थापन निर्देशिका, २०७५
- बहुवर्षीय ठेक्का वन्दोवस्त सम्बन्धी निर्देशिका, २०७५
- प्रदेश विपत् व्यवस्थापन तथा राहत वितरण निर्देशिका, २०७६
- सामुदायिक पुनर्स्थापना केन्द्र सञ्चालन निर्देशिका, २०७६
- सुदूरपश्चिम प्रदेशस्तरीय संयुक्त बजार अनुगमन निर्देशिका, २०७६
- एकीकृत छात्रवृत्ति व्यवस्थापन निर्देशिका, २०७६
- सुपथ मूल्य पसल एवम् लघु तथा घरेलु उद्योग सञ्चालन तथा प्रवर्द्धन कार्यक्रम कार्यान्वयन निर्देशिका, २०७६
- आर्थिक रुपले विपन्न नागरिक औषधी उपचार आर्थिक सहायता निर्देशिका, २०७६

- सुदूरपश्चिम प्रदेश कोरोना भाइरस (COVID-19) रोगको जोखिम नियन्त्रण, उपचार तथा व्यवस्थापन कोष (स्थापना तथा सञ्चालन) निर्देशिका, २०७६
- प्रदेश निजामती कर्मचारीको आन्तरिक भ्रमण (कार्यक्रम सञ्चालन) निर्देशिका, २०७७
- सुदूरपश्चिम प्रदेश अनुगमन तथा मूल्याङ्कन निर्देशिका, २०७८
- सुदूरपश्चिम प्रदेश खेलकुद प्रतियोगिता सञ्चालन निर्देशिका, २०७९
- सुदूरपश्चिम प्रदेश हेलो सिएम व्यवस्थापन निर्देशिका, २०७९
- सुदूरपश्चिम प्रदेश सामुदायिक वनको काठ दाउरा संकलन तथा विक्रि वितरण निर्देशिका, २०७९

**कार्यविधि**

- प्रदेश निजामती सेवा पुरस्कार कार्यविधि, २०७५
- स्वरोजगारमूलक तालिम सञ्चालन तथा व्यवस्थापन कार्यविधि, २०७५
- प्रदेश सञ्चित कोष सञ्चालन कार्यविधि, २०७५
- कृषि अनुदान कार्यक्रम सञ्चालन कार्यविधि, २०७५
- अनुदान तथा सहायता रकम निकासा एवम् कार्यक्रम कार्यान्वयन कार्यविधि, २०७५
- प्रदेश आकस्मिक कोष सञ्चालन सम्बन्धी कार्यविधि, २०७५
- डेरी तथा मासु पसल सुधार कार्यक्रम कार्यान्वयन कार्यविधि, २०७५
- सिमान्तकृत वर्ग लक्षित पशुपालन कार्यक्रम कार्यान्वयन कार्यविधि, २०७५
- आय आर्जन तथा उत्पादनमूलक कार्यमा सहकारी संस्थालाई अनुदान प्रदान गर्ने कार्यविधि, २०७५
- सुदूरपश्चिम जनता आवास कार्यक्रम कार्यान्वयन कार्यविधि, २०७५
- पशुपन्छी बजार प्रवर्द्धन कार्यान्वयन कार्यविधि, २०७५
- व्यवसायिक सीपमूलक तालिम कार्यविधि, २०७५
- प्रदेश पर्यटन विकास कार्यक्रम कार्यान्वयन इकाई सञ्चालन कार्यविधि, २०७५
- नागरिक सिमा सहायता कक्ष सम्बन्धी कार्यविधि, २०७५
- युवा लक्षित पशु विकास कार्यक्रम कार्यान्वयन कार्यविधि, २०७५
- द्वारिकादेवी ठकुरानी महिला सशक्तिकरण कार्यक्रम सञ्चालन कार्यविधि, २०७५
- कृषि यान्त्रिकरणका लागि साझेदारीमा कस्टम हाइरिग सेन्टर स्थापना तथा सञ्चालन कार्यविधि, २०७५
- सुदूरपश्चिम प्रदेशको नदीजन्य पदार्थ व्यवस्थापन कार्यविधि, २०७५
- विपद् जोखिम तथा अन्य दुर्घटनामा परेका व्यक्तिहरूको हवाई उद्धार गर्ने सम्बन्धमा व्यवस्था गर्न बनेको कार्यविधि, २०७६

- प्रदेश उच्च शिक्षा सम्बन्धी कार्यदल गठन कार्यविधि, २०७६
- सुदूरपश्चिम प्रदेशको कृषि विकास कार्यक्रम कार्यविधि, २०७६
- सुदूरपश्चिम प्रदेशको पशुपन्छी विकास कार्यक्रम कार्यविधि, २०७६
- मुख्यमन्त्री एकीकृत कृषि तथा पशुपन्छी विकास कार्यक्रम कार्यविधि, २०७६
- अनुदान तथा सहायता रकम निकासा एवम् कार्यक्रम कार्यान्वयन कार्यविधि, २०७६
- सार्वजनिक तथा सामुदायिक पुस्तकालय अनुदान कार्यविधि, २०७६
- सुदूरपश्चिम प्रदेश उपभोक्ता समिति गठन, परिचालन तथा व्यवस्थापन सम्बन्धी कार्यविधि, २०७६
- सुदूरपश्चिम प्रदेश स्वयंसेवक परिचालन कार्यविधि, २०७६
- कृषि यान्त्रिकरण अनुदान परिचालन कार्यविधि, २०७६
- सहकारी संघ संस्थालाई अनुदान प्रदान गर्ने कार्यविधि, २०७६
- कोल्डस्टोर, कोल्ड च्याम्वर र राइपेनिङ च्याम्वर स्थापना तथा सञ्चालन कार्यविधि, २०७६
- मिल्क एनालाइजर वितरण कार्यक्रम सञ्चालन कार्यविधि, २०७६
- पशुपंछी मोडेल फार्म स्थापना कार्यक्रम सञ्चालन कार्यविधि, २०७६
- सामुदायिक छाडा पशु कल्याण प्रवर्द्धन गर्ने गौशाला निर्माण तथा व्यवस्थापन कार्यविधि, २०७६
- दूध उत्पादन र बजारीकरणका आधारमा अनुदान परिचालन कार्यविधि, २०७६
- कृषिजन्य उद्योग स्थापना कार्यक्रम कार्यान्वयन कार्यविधि, २०७६
- व्यवसायिक केराखेती कार्यक्रम सञ्चालन कार्यविधि, २०७६
- व्यवसायिक प्याज खेती कार्यक्रम सञ्चालन कार्यविधि, २०७६
- अपाङ्गता प्रादेशिक निर्देशन समिति गठन कार्यविधि, २०७६
- नविन उद्यम स्थापनाका लागि अनुदान वितरण सम्बन्धी कार्यविधि, २०७७
- कानुन सूधार तथा सुझाव समिति सम्बन्धी कार्यविधि, २०७७
- करार सेवामा कृषि प्राविधिक कर्मचारी छनौट सम्बन्धी कार्यविधि, २०७७
- गर्भवती, सुत्केरी महिला र ज्यान जोखिममा परेका बिरामीलाई हवाई उद्धार गर्ने सम्बन्धी कार्यविधि, २०७७
- ईन्जिनियरिङ सेवाका प्राविधिक कर्मचारी करारमा भर्ना गर्ने सम्बन्धी कार्यविधि, २०७७
- प्रदेश पदक प्रदान गर्ने सम्बन्धी कार्यविधि, २०७७
- सुदूरपश्चिम प्रदेश पुनकर्जा सम्बन्धी कार्यविधि, २०७७
- जनआन्दोलन तथा सशस्त्र संघर्षका घाईतेहरूको निःशुल्क उपचार सम्बन्धी कार्यविधि, २०७८
- संगठन संरचना र दरबन्दी व्यवस्थापन सम्बन्धी कार्यविधि, २०७८

- सुदूरपश्चिम प्रदेश खाद्य परिषद् (गठन तथा सञ्चालन) कार्यविधि, २०७९
- सुदूरपश्चिम प्रदेश विशेष अनुदान सम्बन्धी कार्यविधि, २०७९
- सुदूरपश्चिम प्रदेश समपुरक अनुदान सम्बन्धी कार्यविधि, २०७९
- निजामती कर्मचारी आवासीय विद्यालय (सञ्चालन तथा व्यवस्थापन) कार्यविधि, २०८०
- सुदूरपश्चिम प्रदेश वादी उत्थान छात्रवृत्ति वितरण कार्यविधि, २०८०

**मापदण्ड**

- सुदूरपश्चिम प्रदेश आयोजना छनौट सम्बन्धी मादण्ड, २०७६
- सुदूरपश्चिम प्रदेश कोरोना भाइरस लकडाउन राहत मापदण्ड, २०७६
- सुदूरपश्चिम प्रदेश सरकारको सार्वजनिक खर्चमा मितव्ययिता कायम गर्ने सम्बन्धी मापदण्ड, २०७९
- सुदूरपश्चिम प्रदेश निजामती कर्मचारी सरुवा तथा काज सम्बन्धी मापदण्ड, २०८०

**आचारसंहिता**

- प्रदेश सरकार मन्त्रिपरिषद्का सदस्यको आचारसंहिता, २०७४
- मुख्य न्यायाधिवक्ताको कार्यालयको आचारसंहिता, २०७७

**मार्गदर्शन**

- वन तथा जलाधार व्यवस्थापनतर्फको कार्य सञ्चालन मार्गदर्शन, २०७५

**काइयोजना**

- कोरोना भाइरस (कोभिड-१९) रोग नियन्त्रण तथा व्यवस्थापन सम्बन्धी काइयोजना, २०७७

**रणनीति**

- सुदूरपश्चिम प्रदेशको कृषि विकास रणनीति योजना, (आ.व. २०७९/८०- २०९३/९४)
- सुदूरपश्चिम प्रदेशको प्रथम पञ्चवर्षीय योजना (आ.व. २०७८/०७९-२०८२/८३)

**२. प्रदेश स्थापनापश्चात प्रदेशमा सम्पन्न भएका महत्त्वपूर्ण भौतिक उपलब्धिहरू**

- भूमि व्यवस्था, कृषि तथा सहकारी मन्त्रालय मातहतका विभिन्न ६ वटा कार्यालयको भवन निर्माण ।
- प्रदेश वन तथा अनुसन्धान प्रशिक्षण केन्द्रको भवन निर्माण ।
- कैलाली र कन्चनपुर जिल्लामा ३ वटा कोल्ड च्याम्वर निर्माण सम्पन्न भई विभिन्न जिल्लाका अन्य १० स्थानमा निर्माणाधीन ।
- ४२ विउ भण्डारण गृह, ६ वटा राइपेनिङ्ग च्याम्बर, ६२ वटा कृषि संकलन केन्द्र, २८ वटा कृषि हाटबजार स्थल, ४ वटा कोल्ड स्टोर (आंशिक सहयोग), २६ वटा रष्टिक स्टोर, ५ वटा च्याउ बीउ उत्पादन प्रयोगशाला, १ वटा टिस्युकल्चर ल्याव,१२२ वटा सहकारी भवन

निर्माण भएका ।

- कैलालीको अत्तरिया, बझाङ्गको चैनपुर, बैतडीको पाटन, डोटीको दिपायल, डडेल्धुराको जोगवुडा, बाजुराको स्वामीकार्तिक खापर गा.पा. र कञ्चनपुरको महेन्द्रनगरमा एकीकृत कृषि बजार स्थल निर्माण भएको ।
- मुख्यमन्त्री एकीकृत बस्ती विकास कार्यक्रमअन्तर्गत बेदकोट न.पा. कन्चनपुरमा २५, दिपायल सिलगडी न.पा. डोटीमा ७, मेल्लेख गा.पा. अछाममा १७ र भजनी न.पा. कैलाली राजीबस्तीमा २५ घर निर्माण भएको ।
- कैलारी गाउँपालिका वडा नं. ७ मा आगलागी पिडित मुक्त कमैयाका लागि २७ घर निर्माण ।
- भूमिगत सिँचाई र सतह सिँचाईतर्फ सञ्चालित आयोजनाहरूअन्तर्गत पक्की कुलो १९२६ कि.मि., कच्ची कुलो ३०४ कि.मि., र २५३ वटा डिप ट्यूबेल निर्माण भै १९८९७ हेक्टर क्षेत्रफलमा सिँचाई सुविधा पुगेको छ, आ.व. २०७९÷८० मा लिफ्ट सिँचाई आयोजनाहरूलाई प्राथमिकता दिई सोहीबमोजिम प्रत्येक जिल्लामा लिफ्ट सिँचाई आयोजनाहरू सम्पन्न भई सञ्चालन भइरहेको ।
- नौगाड जलविद्युत् आयोजना, दार्चुला ९६.९७ मे.वा. को प्रारम्भिक वातावरणीय प्रभाव अध्ययन सहित विस्तृत सम्भाव्यता अध्ययनको कार्य सम्पन्न भइसकेको छ । साथै आगामी आ.व.२०८०÷०८१ देखि सार्वजनिक-निजी साझेदारीका आधारमा कार्यान्वयनको गर्ने गरी प्रक्रियासमेत थालिएको ।
- सुर्नयागाड जलविद्युत् आयोजना, बैतडी ९७.७५ मे.वा. को प्रारम्भिक वातावरणीय प्रभाव अध्ययनसहित विस्तृत सम्भाव्यता अध्ययनको कार्य भइरहेको छ । साथै आगामी आ.व. २०८०/०८१ देखि सार्वजनिक-निजी साझेदारीका आधारमा कार्यान्वयनको गर्ने गरी प्रक्रियासमेत थालिएको ।
- अपर सुर्नयागाड जलविद्युत् आयोजना, बैतडी ९७.७१ मे.वा. को प्रारम्भिक वातावरणीय प्रभाव अध्ययनसहित विस्तृत सम्भाव्यता अध्ययनको कार्य अन्तिम चरणमा रहेको ।
- नदी नियन्त्रण, तटबन्ध र पहिरो नियन्त्रणतर्फ कुल जम्मा १७४ कि.मि. नदी नियन्त्रण गरी ३३२० हेक्टर जमिनको उकास तथा जमिनको कटान रोक्ने काम भएको ।
- खानेपानी तथा सरसफाईतर्फ ८५१ वटा आयोजनाहरू (नयाँ तथा पुनर्निर्माण) सम्पन्न भई आधारभूत स्तरको सेवाबाट १,४५,८९४ र मध्यम स्तरको सेवाबाट ६२,२३० गरी कूल जम्मा २०८,१२४ जना स्वच्छ खानेपानीको सेवाबाट लाभान्वित भएका ।
- आ.व. २०७४÷७५ देखि हालसम्म यातायात पूर्वाधार तर्फ ४१४ कि.मि. पक्की सडक, ४८० कि.मि. खण्डास्मित (ग्राबेल) सडक र १४४२ कि.मि. माटे सडक निर्माण भएको, २३ वटा सडक पुल र ३४ वटा झोलुङ्गे पुल निर्माण ।
- प्रत्येक जिल्लामा एउटा पर्ने गरी ९ वटा महŒवपूर्ण सडक योजनालाई प्रादेशिक गौरवका

योजनाको रुपमा छनौट गरी निर्माण कार्यलाई उच्च प्राथमिकताका दिँदै आ.व. २०७९÷८० सम्म कुल ५९ कि.मि. पक्की सडक निर्माण सम्पन्न भइसकेको र १५८.८ कि.मि. पक्की सडक र १५१ कि.मि. ग्रावेल सडक निर्माणको सम्झौता भई निर्माण कार्य भइरहेको ।

- जनता आवास कार्यक्रमअन्तर्गत लक्षित वर्गका जनताको लागि जम्मा २६५२ वटा निजी आवास भवन निर्माण सम्पन्न भई विपन्न जनतालाई हस्तान्तरण, ५६५ वटा सामुदायिक र सरकारी भवन निर्माण भएका ।
- वैकल्पिक उर्जाको विकास र प्रवर्द्धनको लागि २ वटा (डोटी र बैतडी) सोलार मिनिग्रिड आयोजना सम्पन्न भइकेका छन् भने ३ वटा आयोजनाको विस्तृत आयोजना प्रतिवेदन तयार भई कार्यान्वयनमा जानेक्रममा रहेको ।
- हाल सुदुरपश्चिमका ४ वटा जिल्ला कैलाली, कञ्चनपुर, डडेल्धुरा र डोटीबाट सवारी चालक अनुमतिपत्र वितरण भइरहेको ।
- प्रदेश खानेपानी तथा स्वच्छता गुरुयोजना, प्रदेश सिँचाई गुरुयोजना, प्रदेश सडक गुरुयोजना तयार गर्ने कार्य भइरहेको ।
- ३४ वटा प्रदेश सभा निर्वाचन क्षेत्रमा खेलमैदानहरू निर्माण भएको ।
- ५३ वटा ४ कोठे क्याम्पस भवनहरू निर्माण भएको ।
- ७१ वटा क्याम्पसहरूमा ICT कक्ष स्थापना भएको, ९ वटा क्याम्पसहरूमा अनुसन्धान कक्ष स्थापना भएका ।
- १२३ वटा प्रसुति केन्द्र भवन, ६६ वटा शहरी स्वास्थ्य केन्द्र भवन र ६३ वटा सामुदायिक स्वास्थ्य इकाई भवन निर्माण गरी स्थानीय तहलाई हस्तान्तरण ।
- महाकाली र टिकापुर अस्पतालमा भवन निर्माण गरी १ सय शैंया थप गरिएको ।
- कैलालीको धनगढीमा प्रादेशिक आयुर्वेद चिकित्सालय स्थापना र सञ्चालन ।

### ३. प्रदेश सरकारले गरेका सफल र उदाहरणीय कार्यहरू

- मुख्यमन्त्री एकीकृत कृषि तथा पशुपन्छी विकास कार्यक्रम अन्तर्गत कृषि ज्ञान केन्द्रमार्फत १३६ र भेटेरीनरी अस्पताल तथा पशुसेवा विज्ञ केन्द्रमार्फत ८० वटा नमूना गाउँ सञ्चालन भएका ।
- ब्लक विकास कार्यक्रमअर्न्तगत कृषि तर्फ १४४ र पशुपन्छीतर्फ १२० ब्लक सञ्चालन भएका ।
- आ.व. २०७७÷&* देखि कृषि ऋणको ब्याज, भन्सार शुःल्क तथा विद्युत् महशुलमा अनुदान कार्यक्रमको सुरुवात भएको ।
- जलवायुमैत्री नमुना गाउँ कार्यक्रम सञ्चालनमा रहेको ।
- प्रदेशमा अपुग रासायनिक मल (एमोनियम सल्फेट र एस.एस.पी. साल्ट ट्रेडिङ्ग कपीरेसनमार्फत

आ.व. २०७८/७९ मा ७२०० मे.ट. र आ.व. २०७९/०८० मा ९२६.९ मे.ट. वितरण गरिएको ।

- कृषि अनुसन्धान, प्रसार र शिक्षा कार्यक्रमअन्तर्गत कञ्चनपुरको पुनर्वासमा ७४ बिगाह जमिनमा बीउ उत्पादन तथा नेपाल कृषि अनुसन्धान परिषद्सँगको समन्वयमा प्रविधि प्रदर्शन कार्यक्रम सुरुवात ।
- कृषि अध्यापन गराउने विद्यालयहरूमा विद्यार्थीको प्रयोगात्मक ज्ञान अभिवृद्धि गर्न Earn While Learn कार्यक्रम सञ्चालनका लागि कोष स्थापनामा सहयोग गरिएको ।
- बाजुरा र दार्चुला जिल्लामा स्याउ र ओखरको उच्च घनत्वको बगैँचा स्थापना भएका, ट्रपिकल एप्पल, स्ट्रवेरी, ड्रागन फ्रुट, किवीजस्ता नविनतम बालीको बगैँचा स्थापना भएका ।
- सुदूरपश्चिम प्रदेशको कृषियोग्य जमिनको तथ्याª\क अद्यावधिक गरिएको ।
- हाल प्रदेशमा दुधको उपलब्धता ८०.७९ लिटर, मासु १०.८६ के.जि. र अण्डा ४२ गोटा प्रतिव्यक्ति प्रतिवर्ष पुगेको ।
- पूर्वाधार विकासका क्षेत्रमा जनतालाई प्रदेश सरकारको उपस्थिति बोध हुने गरी कार्य भएको, खानेपानी, सडक, सिँचाई, भवन निर्माणजस्ता विकास निर्माणका कार्यहरूमा उल्लेखनीय उपलब्धी हासिल भएको ।
- प्रदेश सरकारले नौ वटा प्रादेशिक रणनीतिक महत्वका सडक योजनालाई प्रदेश गौरवका योजनाको रुपमा छनौट गरी निर्माण साथ कार्य अगाडि बढाइरहेको ।
- घोडाघोडी पन्छी अभयआरण्य क्षेत्र (Bird Sanctuary) घोषणा भई पन्छी संरक्षण कार्य भइरहेको ।
- पर्यटन गुरुयोजना तयार भएको, जलाधार क्षेत्रहरूको पहिचान र प्राथमिकीकरण भएको ।
- जटिल प्रसुति तथा जटिल दुर्घटनामा परेकाको आकस्मिक हवाई उद्दार गरिँदै आएको ।
- ९ वटै जिल्लामा हिंसा पीडित महिला र निजसँग आश्रित बालबालिका लक्षित अल्पकालिन सेवा केन्द्र सञ्चालन भएका ।
- द्वारिकादेवी महिला सशक्तीकरण कार्यक्रममार्फत महिलाहरूलाई सीप प्रदान गरिँदै आएको ।
- अछाम, कैलाली र बाजुरा जिल्लामा रोजगार मेला आयोजना गरिएको ।
- कैलालीको गोदावरी नगरपालिकामा क्षयरोग उपचार केन्द्र, स्थापना र सञ्चालन ।
- कन्चनपुरको बेलौरीमा बौद्धिक अपाङ्गता भएका बालबालिकाहरूको विद्यालय निर्माणको कार्य सुरुवात ।
- प्रदेशका प्रत्येक स्थानीय तहमा १ वटा पोर्टेबल अल्ट्रासाउण्ड र प्रति स्थानीय तह १ जना स्वास्थ्यकर्मीलाई तालिम दिइएको ।
- प्रदेशका १६ वटा निर्वाचन क्षेत्रमा सुविधा सम्पन्न उपकरण जडित एम्बुलेन्स (टाईप बि) वितरण ।

- सेती र महाकाली प्रादेशिक अस्पतालबाट टेलिमेडिसिन सेवा सञ्चालनको लागि पूर्वाधार तयार ।
- प्रदेश स्वास्थ्य प्रयोगशालामा मोलिक्युलर सेटअप तथा सेती प्रादेशिक अस्पतालमा सुविधायुक्त एम्बुलेन्स सेवा सञ्चालन ।
- मुख्यमन्त्री जेष्ठ नागरिक स्वास्थ्य कार्यक्रम, विद्यालय नर्स कार्यक्रम जस्ता कार्यक्रमको माध्यमबाट नागरिकलाई स्वास्थ्य सेवा प्रदान ।
- कोभिड कालमा टीकापुर अस्पतालमा ३५ वेडको कोभिड बाल अस्पताल सञ्चालनका साथै जिल्ला अस्पतालहरूमा १० शैय्याको कोरोना उपचार आइसोलेसन वार्ड निर्माण र सञ्चालन, कोभिड-१९ परीक्षणको लागि विभिन्न ८ स्थानमा प्रयोगशाला स्थापना एवम् सञ्चालन, प्रदेश मातहतको सबै अस्पतालहरूमा अक्सिजन प्लान्ट जडान ।

**४. प्रदेश सरकार सञ्चालनमा आइपरेका समस्याहरू**

- संघीय निजामती सेवा ऐन समयमै नआउँदा प्रदेश तथा स्थानीय सेवा सम्बन्धी ऐन तर्जुमा एवम् सोको कार्यान्वयनमा अन्यौलता कायम ।
- प्रहरी समायोजन हुन नसक्दा प्रदेशभित्रको आन्तरिक सुरक्षा व्यवस्थापनमा अधिकारसम्पन्न भुमिका निर्वाह गर्न कठिनाई ।
- न्यून आन्तरिक आयलगायतका कारण प्रदेशको आर्थिक क्षेत्र कमजोर हुँदा पूर्वाधार क्षेत्रमा लगानीको लागि स्रोत अभाव ।
- मुलतः समायोजित अधिकृतस्तरका प्रशासनिक तथा प्राविधिक कर्मचारीहरूको सङ्ख्या अनिवार्य अवकाश, राजीनामालगायतका माध्यमबाट घट्दै गएको एवम् संघबाट कामकाजमा आउने कर्मचारीको पनि छोटो अवधिमा सरुवा भइरहने प्रवृत्तिले जनशक्तिको रिक्तता विद्यमान ।
- समय समयमा देखापर्ने राजनैतिक अस्थिरता र मन्त्रालयमा राजनैतिक नेतृत्वको रिक्तताले कार्यसम्पादनलाई प्रभावित गर्ने गरेको ।
- जग्गा प्राप्तिको कठिनाइका कारण प्रदेशका भौतिक संरचना निर्माण एवम् सञ्चालनमा समस्या देखा परेको ।
- बजेट निर्माण तथा योजना छनौटमा संघीय सरकारको न्यून समन्वय, प्रदेश सरकारका सिफारिस बिना पनि पहुँचका आधारमा योजना तथा बजेट विनियोजन गर्ने अभ्यास, कतिपय स-साना आयोजनाहरू कार्यान्वयनका लागि प्रदेशमा हस्तान्तरण गर्ने गरिएको, स्थानीय तहसँग पनि बजेट निर्माण र योजना तर्जुमामा पर्याप्त छलफल हुन नसकेको ।
- संघीय सरकारबाट तीनै तहका कर्मचारीको एकीकृत अभिलेख राख्ने गरी राष्ट्रिय किताबखानाको विकास गर्न नसकिँदा प्रदेश कर्मचारीहरूको अभिलेख व्यवस्थापनमा समस्या ।
- कतिपय अवस्थामा प्रदेश सरकारलाई आवश्यक पर्ने तथ्याङ्कलगायतका सरकारी विवरणहरू

संघीय निकायबाट उपलब्ध गराउन ढिलाई वा उपलब्ध नगर्ने प्रवृत्ति ।

- प्रदेशलाई आवश्यक पर्नेभन्दा न्यून मात्रामा रासायनिक मल प्राप्त भइरहेको ।
- खेतीयोग्य जमिन र कृषकको वर्गीकरण हुन नसकेको ।
- स्थानीय सरकारबाट कार्यक्षेत्र बाहिरको कार्य गर्ने गरेको । जस्तै- ताल ठेक्का ।

**५. समस्या समाधानका लागि प्रदेश सरकारले गरेका पहलहरू**

- साझा अधिकारका सूचीमा रहेका विषयमा कानुन निर्माणका लागि संघीय सरकारसँग पहल ।
- प्रदेश सरकारलाई आवश्यक पर्ने विषय तथा अन्य सहयोगका लागि संघीय सरकारसँग आवश्यकता अनुसार पत्राचार ।
- संघ र स्थानीय सरकारसँग सरोकार राख्ने कतिपय विषयहरूमा संघ र स्थानीय सरकारसँग समन्वय र सहकार्यका आधारमा समस्या समाधान भइरहेको ।
- अपुग जनशक्तिका लागि संघीय सरकारसँग निरन्तर पत्राचार ।
- संघीय सरकारबाट प्रकाशित सूचना अनुरुप समपुरक, विशेष अनुदानतर्फका आयोजना छनौट गरी पेश, प्राकृतिक विपद्लगायत आवश्यकता अनुसारका क्षेत्रमा बजेट तथा योजना मागसहित संघीय सरकारलाई पत्राचार ।
- रिक्त पदहरूमा प्रदेश लोकसेवा आयोगबाट पदपूर्तिको कार्य प्रारम्भ गरिएको, नयाँ नियुक्ति भएका कर्मचारीको अस्थायी सिटरोल नं. दर्ता गर्ने कार्य सुरुवात भएको ।
- प्रदेशका लागि आवश्यक रासायनिक मलको कोटा एकीन गरी संघीय कृषि तथा पशुपन्छी विकास मन्त्रालयमा समन्वय गरिएको, अपुग मल साल्ट ट्रेडिङ्ग कर्पोरेसनसँगको सहकार्यमा खरिद गरी सहकारीमार्फत वितरण गर्ने गरिएको ।

